नेपाली

# उखान र टुक्काको वर्णक्रमानुसारी सूची र वाक्यांश, वाक्पद्धति, इत्यादिको कोष

## खण्ड २

ग्रन्थकार र प्रकाशक
मे. क. पुष्कर शमशेर ज. ब. राणा
(नेपाली भाषानुवाद-परिषद्का अध्यक्ष)

१९९८

प्रथम संस्करण १००० ]

मुद्रक—
रामेश्वर पाठक,
तारा प्रिंटिंग वर्क्स, बनारस।

# दोस्रो खण्डको विषय-सूची

# परिचय

विचारसारले संसारलाई पराजय गर्छ, विचारतत्त्वले नै पृथ्वीलाई सञ्चालन गर्छ। समय आफ्नो प्रगति छोड्दैन, एकनास चलिरहन्छ, समय अपरिवर्तित छ। समयले गर्दा पुराना विचारले कुहेत्रो खान्छ, नयाँ विचारको सञ्चार हुन्छ, अनि हामी भन्दछौं, "समयपरिवर्तन!"

गत महासमर र प्रचलित विश्वयुद्धको करीब २० वर्षबीचमा संसारको विचारले जति परिवर्तन खायो उति उलटपलट समयको गतिमा कुनै २०० वर्षभित्र भएको थिएन। संसारमा विश्वभ्रातृत्व र अन्तर्राष्ट्रीय एकताको जो जति लेश बाँकी थियो सो सब नामेट भयो। गाढा राष्ट्रीयता र स्वजातीयताको मुस्लो उठ्यो। यसबाट राष्ट्रीय विकाशको बलियो जग बन्दै गयो, मुलुकको उन्नति धेरै बढ्यो, व्यक्तित्वको महत्त्व चढ्यो। निश्चय पनि संसारको भौतिक वृद्धि धेरै भयो, तर आध्यात्मिक उन्नतिबाट ध्यान बिलकुल वञ्चित भएकोले शान्तितर्फ के असर परेछ देखिंदो छ, पीडित संसारले रगतको आँसुद्वारा यसको परिचय दिंदो छ।

तर अरू जे भए पनि स्वजातीय तथा स्वराष्ट्रीय विचारले राष्ट्रीय गौरवको महत्त्व जगायो। सबै जना कुन हिसाबबाट देशको शक्ति र गौरव बढ्दछ भन्ने खोजीमा लागे। यस्तो बखत मुलुकको सबभन्दा ठूलो विशेषता अर्थात् मुलुक र मुलुकमा भेद

देखाउने कुरा—भाषामा सबैको चित्त र खोजी लाग्नु स्वाभाविकै हो। हाम्रो मुलुक सानू, र अनकन्टार हिमालपर्वतको एक कुनामा भए पनि विचारप्रभावबाट बच्न असंभव थियो। आफ्नो भाषापट्टि सबैको विचार झुकेर गयो। दिव्यभाषाको विद्वान् भएकाले नेपाली भाषालाई तिरस्कारको नजरले हेर्ने प्रवृत्ति बिलाउँदै गयो। भाषाको स्थान र भावप्रकटको सीमातर्फ अनुसन्धान र तर्क गर्ने नवयुवकहरूको संख्या बढ्दै गयो।

श्री मे० क० पुष्कर शमशेर दाजीको भाषाप्रति सबभन्दा सेवा यही अंशमा अर्थात् भाषाको भावप्रकटसीमाको खोजीमा मद्दत गर्ने काममा भएको छ। विश्वव्यापी अंग्रेजी भाषा र हाम्रो भाषाको एक बृहत्कोष तयार गरी कलिलो भाषालाई एक ठूलो सहायता भयो। अहिले यो किताबबाट हाम्रो आफ्नै भाषाको भावप्रकट कसरी गरिन्छ देखाइएको छ। यस्तो किसमको सङ्कलन बहुत गाह्रो हुन्छ, कति कुरा आफूलाई थाहा नभएको हुन्छ, कति छुटेको हुन्छ, तर दाजीले जुन गाढा विचार र दुःख गरी मेहनत गर्नुभयो त्यसबाट एक परिपूर्ण पुस्तक तयार हुन गएको छ।

यस प्रयासमा भाइ श्री मे० ज० अर्जुन शमशेर जङ्गबहादुर राणाले पनि आफ्नो प्रयत्नरूपी 'उखान-संग्रह' को समर्पणद्वारा मद्दत गरी भाषाप्रति निजको फुराउँदो जोश प्रदर्शन र रुचि प्रकट गरेको देख्ता मलाई संतोष लागेको छ।

आफ्नो मनको भाव या अन्तःकरणको उमंग प्रकट गर्ने साधन भाषा हो। मनुष्यमात्रको हृदयभित्र उमंग जरूरै भएकोले सो



प्रकट गर्ने र गर्न सक्ने भाषा सबै जातिको छ। यही कुरामा त हाम्रो भाषा पनि पूरै छ भन्न अत्युक्ति हुँदैन। कसैले "शुभ बिहान" या "तिमीलाई कस्तो छ?" भन्छन् भने हामी "भात खायौ?" वा "जदौ" बाट काम लिन्छौं। खालि भौगोलिक फैलावट र वैज्ञानिक वृद्धिले आधुनिक विचार प्रकट गर्न हाम्रो भाषाले सक्तैन—हुन त "कहाँ पुगेर आयौ?" जस्तो सामान्य वाक्यको यथार्थ भाव अंग्रेजीमा प्रकट गर्न कति अप्ठ्यारो हुन्छ भन्नुपर्ने कुरा होइन। यो सब कुराको तात्पर्य क्या हो भने, हरेक भाषामा आफ्नआफ्नो व्यक्तित्व हुन्छ र सो कुरा अध्ययन गर्नैपर्दछ। हामी अंग्रेजीमा फ्रेज र इडियमहरू कति रट्दछौं, विद्यार्थीका बिजुलीले खाएका आँखाले नै संझलान् वा भोग्लान्, तर आफ्नो भाषामा यस्तो के छ हामीलाई विदित छैन। यही विचारबाट यो पुस्तक साधारण भाषाप्रेमीलाई मात्र होइन कि, विस्तृत हुँदै गएको र गराउँदै लानुपर्ने भाषाको पाठ्यक्रमलाई बहुत लाभदायक हुने देखेको छु। परिचय, प्रस्तावना, इत्यादिले भन्दा पनि आफ्नै योग्यताले यो पुस्तकको कदर हुनेछ र पाठ्य पुस्तकमा उच्च स्थान पाउनेछ भन्ने मलाई निश्चय छ।

बबरमहल, नेपाल
९८ भाद्र २ गते

श्री मृगेन्द्र शमशेर

# प्रस्तावना

नेपालमा नब्बे सालको महाभूकम्प जाँदा म यस पुस्तकको निमित्त उखान र वाक्यांशहरू संग्रह गर्न लागेको थिएँ। त्यसपछि नै अंग्रेजी-नेपाली कोषपट्टि लाग्नुपर्‍यो तापनि यसलाइ चटक छाडेको थिइनँ। श्री प्र० प्र० गो० द० बा०, मे० ज० अर्जुन शमशेर जङ्ग बहादुर राणाबाट पनि त्यस्तो संग्रह गरिबक्सेको छ भन्ने ९४ सालमा थाहा पाई मेरो संग्रह उहाँलाई टक्र्याउने इच्छा जाहेर गरी नजर गराएँ। तर वाक्यांशहरूको अर्थ खोली हाम्रा कहलिएका लेखक र कविहरूबाट उद्धरणसमेत दिने मेरो हौसला देखेर उहाँलें आफ्नो 'उखान-संग्रह' पनि मलाई नै बक्सी यो पुस्तक छपाउने खर्चसमेत प्रदान गरिबक्सेकोमा उहाँको ठूलो निगाह संझेको छु। ९६ सालदेखि नै यो ग्रन्थ छापिन शुरू भएको थियो तापनि बीचमा विघ्नबाधा पर्न आएका हुनाले चाँडो प्रकाशित हुन सकेन।

अहिले ८ वर्षमा यो ग्रन्थ पाठकवर्गको समीपमा उपस्थित गर्न पाउँदा ग्रन्थकारलाई संतोष लागेको छ, तापनि मभन्दा सुयोग्य विद्वान्हरूमध्ये कुनैद्वारा संपादित भएको भए, यो अझ परिपूर्ण हुने थियो भन्ने खोप ग्रन्थकारको मनमा रहिरहेकै छ। भला, ती विद्वान्हरू-का सुदृष्टि यस ग्रन्थमा परे ग्रन्थकार कृतकृत्य हुनेछ।

यो पुस्तकको दोस्रो खण्डलाई नेपाल-सरकार-शिक्षाविभागका तालुकवाला श्री प्र० प्र० गो० द० बा०, मे० ज० मृगेन्द्र शमशेर जङ्ग बहादुर राणा, एम० ए० बाट आद्योपान्त नजर भई धेरै ठाउँमा थपथाप गरिदिइबक्सेकोमा तथा परिचय निगाह भएकोमा ग्रन्थकार उहाँलाई निष्कपट हार्दिक धन्यवाद सादर चढाउँछ।

समितिका पण्डित चक्रपाणि शर्माबाट विशेष गरी दोस्रो खण्ड सम्पादन गर्न र प्रूफसंशोधन गर्नामा मैले प्रशस्त सहायता पाएको छु, हाकिम खड्गमान मल्लले पनि छपाउने प्रबन्ध मिलाई सारा प्रूफ हेरिदिएका छन्, उसैले ती दुवै जनाको म ऋणी छु। अन्ततः अरू जसजसले उखान वा वाक्यांशको संख्या बढाउन मलाई मद्दत गरेका छन्, ती सबैलाई म यथोचित धन्यवाद दिन्छु।

कैयन् उखानका अर्थ ठाउँठाउँबाट संग्रह गर्नुपर्ने भएकाले यस संस्करणमा उखानका अर्थ र प्रयोगहरू दोस्रो खण्डमा जस्तो गरेर दिन भ्याइनँ। अर्को संस्करणमा त्यस अभावलाई पनि दूर गर्नेछु।

स्थानान्तरले गर्दा उखानको रूप फरक पर्न जान्छ, अथवा एक ठाउँमा खूब प्रचलित भएको उखान वा वाक्यांश अर्को ठाउँमा सुनिँदै नसुनिन पनि सक्छ, अथवा एक पाखामा एक अर्थमा चलेको वाक्यांश अर्को पाखामा अर्कै अर्थमा चलन हुन सम्भव छ; भरसक सबै ठाउँको पाठभेद जम्मा गर्ने चेष्टा गरिएको छ, तापनि ग्रन्थकारलाई खोट लाउनुअगाडि पाठकबाट यो कुराको विचार रहन्यै छ। सबैबाट सहयोग पाई अर्को संस्करणमा यस्ता खोट पनि घटाउँला पुस्तकको ठेली पनि बढाउँला भन्ने ग्रन्थकारको सपना पूरा गर्नु नगर्नु पाठकवर्गको हातमा छ।

तलका पुस्तकको सहायता कृतज्ञतापूर्वक स्वीकार गर्छु:—

कवि मोतीराम भट्टको 'उखान्को बखान् र जान्ने कथाको संग्रह।' पादरी गंगाप्रसाद प्रधानको 'उखानको पोस्तक।' काजी महावीर सिंह गरतौला क्षत्रीद्वारा रचित तथा प्रकाशित 'उखान बखानको प्रवाह।' प्रो० आर० एल० टर्नर, एम० सी०, एम० ए० द्वारा संपादित 'Nepali Dictionary.'

ज्ञानेश्वर,
नेपाल
९८ भाद्र ९

ग्रन्थकार

## यो कोष संपादन गर्दा अनुसरण गरिएको नियम

वाक्यांशलाई यहाँ कुन अर्थमा लिएको छु, त्यसको बारेमा केही कुरा भन्नु अत्यावश्यक ठान्छु। हाम्रो व्याकरणमा लेखिएको छ, 'कोही अनेक पद मिली नाम विशेषण अव्यय जस्तो केही एक अर्थ मात्र बुझाउने कुरा भने पूरा नगर्ने हुन्छन्, त्यस्ता वाक्खण्डलाई वाक्यांश (phrase) भन्दछन्।' यसबाट वाक्यांशको केही हदै छैन भन्ने स्पष्टै देखिन्छ। यहाँ विशेष अर्थ भएका, लाक्षणिक अर्थमा प्रयुक्त हुने, उखान जस्तै भएर प्रचलित भएका वाक्यांश (proverbial phrase) वा नेपाली मुहावरालाई मात्र वर्णानुक्रममा राखेको छु। यसमध्ये वाक्पद्धति अर्थात् वाक्धारा पनि थोर बहुत हालेको छु।

'गर्नु' को प्रयोग गरेर हामी जुन नाम—अरू भाषाको समेत—लिएर क्रियापद बनाउन सक्छौं, जस्तो:—अध्ययन गर्नु, अपरेशन गर्नु। उसैले 'गर्नु' मिलेर बनेका धेरैजसो वाक्यांशलाई साधारण मानी यसमा स्थान दिएको छैन।

हाम्रो भाषामा धेरै नामहरू एकभन्दा बढ्ता पद मिली बनेका छन्। त्यस्ता वाक्यांशहरूमा विशेष अर्थ भएकालाई मात्र यहाँ स्थान दिएको छु, उसैले—मसी भर्ने कलम, कागे भेँडा, सेतो भालु, खरीको रूख, मदिसे बदाम, मासको दाल, हाते ब्याग, पित्तको थैली, कुखुरा भाले, बुढाको औंलो, हरियो झिंगो, सेतो ख्याक, आदि यहाँ छैनन्, तर थाङ्ने भारी, डिम्के चिउरा, दैवको लाठी, रातो मुख, आदि परेका छन्। अरू भाषामा पनि यही नियम देखिन्छ, जस्तो अंग्रेजीमा—white ant, white bear, white man, white alloy, white crow, white meat, आदिले कोषमा मात्र स्थान पाएका छन्, तर white lie वा fib, white caps, white horse, white

elephant, white magic, white feather भने वाक्यांशका कोषहरूमा पनि पाइन्छन् ।

समस्तशब्द ( गाइगोठ, गोडधुवा, कपडछान, भारीतारी, आदि ) त यहाँ नराखिने नै भए। तर हाम्रो व्याकरणको नियमले कुनै पदहरूलाई समस्तशब्द नगरी छुट्टाछुट्टै लेख्न पनि हुन्छ, जस्तोः—जानी जानी, हात्ती घोडा, आमा बाबु, इत्यादि। यस्ता शब्दलाई पनि यहाँ नहाल्ने नियम गरेको छु। फेरि कुनै समस्तशब्द वा अनुकरण शब्दलाई 'र' बीचमा हालेर पनि प्रयुक्त गर्छौं, जस्तो—हन्ड्याङहुन्डुङ, हन्ड्याङ र हुन्डुङ, आफलताफल, आफल र ताफल। यस्ता शब्द पनि यहाँ दिइएका छैनन्, तर प्रायः 'र' हालिने वा नहाली प्रयोगै नहुनेमा भने दिएको छु, जस्तो—हाड र छाला हुनु, हाम र झाम गर्नु, लापलाप र लिपलिप गर्नु ।

मेरा पुरोगामी कवि मोतीराम भट्ट, पादरी गङ्गा प्रसाद प्रधान, काजी महावीर सिंह गरतौलाहरूले उखान र वाक्यांशहरूमा भेद नगरी एकै ठाउँमा हालेका हुनाले तिनमा फरक छुट्ट्याउनालाई मलाई सजिलो भएन। उदाहरणार्थः—कमिनीको कण्ठश्री, औँला दिँदा डुडुल्को निल्ने, झिंगा मारी बोसो झिक्ने, नेपाल बसी भोट देख्ने, मरेको बाघको जुङ्गा तान्ने, हुटिट्याउँले स्वर्ग थामे झैँ, स्याखु दोब्याए झैँ दोब्याउँला, नासो पासो, इत्यादि। यसमा 'कामिनीको कण्ठश्री' जस्तालाई वाक्यांश मात्रामा त केही बाधा छैन, किनभने यो अंग्रेजीको Pandora's box जस्तै हो। तर, 'नासो पासो' त्यससंग एकदमै मिल्दैन; यो 'नासो भनेको पासो हो' वा 'जो नासो हो त्यो पासो हो' को छोटकरी रूप भन्ने स्पष्टै देखिनाले यसलाई उखानमा स्थान दिएको छु। त्यही कारणले—मरेपछि ओखती, मर्दको भारी फोक्सो, बाँदरलाई लिस्नु, बेपार अपार, नकटीको झुम्के बुलाकी, आदि उखान



ठहरिए; यी छोटकरी रूपले हाम्रो नेपाली भाषाको क्रियापद कर्ताहरू लोप गर्ने प्रवृत्तिको विशिष्टलक्षण दिन्छन्, यी सबैबाट पूरा वाक्यको अर्थ निक्लन्छ। झैँ वा जस्तो पद प्रयुक्त गरी दृष्टान्त देखाइएकालाई पनि वाक्यांश मानेको छु, झैँ वा जस्तोको पछिल्तिर क्रियापद, विशेषण, आदि रहून् वा नरहून्। उसैले हुटिट्याउँले स्वर्ग थामे झैँ, स्याखु देब्याए झैँ दोब्याउँला ( दोब्याउँलालाई दोब्याउनु पारी ), हँसिया जस्तो सोझो, आदि वाक्यांशमा परेका छन् ।

अब माथिका उदाहरणमा निल्ने, झिक्ने, देख्ने, तान्नेलाई निल्नु, झिक्नु, देख्नु, तान्नु पारेर वाक्यांशको अनुहार जुनसुकैलाई पनि हामी दिन सक्छौं, वाक्यमा प्रयोग हुँदा पनि नराम्रो सुनिंदैन, जस्तोः—मैले औंला दिंदा डुडुल्को निल्न खोज्यौ, रामजी नेपाल बसी भोट देख्छन् नाइँ। तापनि हामी यिनीहरूमध्ये कुनै कुनैलाई त उखानै मात्रामा प्रवृत्त हुन्छौं, उसैले यिनीहरूमा भेद छुट्ट्याउनालाई मैले एउटा नियम कायम गरेको छुः दुइ टुक्रा पर्‍यो भने, अर्थात् एउटा काम हुँदा अर्को काम भयो भने—उखान; एक टुक्रा मात्र छ भने, अर्थात् संलग्न एउटै काम दर्साउँछ भने—वाक्यांश। औंला दिंदा डुडुल्को निल्ने, नेपाल बसी भोट देख्नेमा 'औंला दिनु, नेपाल बस्नु' एउटा काम हुँदा 'डुडुल्को निल्नु, भोट देख्नु' अर्को काम भयो, उसैले यिनीहरू जस्ता उखान गनिए। तर झिंगामारी बोसो झिक्ने, मरेको बाघको जुङ्गा तान्नेमा एउटै संलग्न काम देखिने हुनाले कसैलाई झिक्नु आदि पारी, कसैलाई तान्ने इत्यादि नै राखी यिनीहरू जस्ता वाक्यांशमा हालिए। यो नियमले एकातिर मात्र बलियो संग नतान्ने कुनैकुनैलाई उखान वाक्यांश दुवैमा हालेको छ, जस्तोः—मरेको भोलिपल्ट दुइ दिन ।

वेदमा मात्र होइन पुराना संस्कृत ग्रन्थहरूमा पनि आजकल अश्लील ठहरिने कैयन् पद वा वाक्य पाइन्छन्। उसैले हाम्रा पुरुखाहरूले

चलाएका उखानहरूमा थोर बहुत अश्लील पद पर्नु केही अचम्मको कुरा होइन। आजकलका नाटीकुटी गर्ने समाजका आँखामा अश्लील ठहरिने पद परेको उखान राख्तै नराखूँ भने हाम्रा पूर्वजका झण्डै आधाभन्दा बढ्ता उखानले यहाँ स्थानै नपाउने भए, उसमाथि यो कोष ठहरियो। उसैले समितिको अनुमति लिई राख्नै नहुने उखानहरूलाई मात्र झिकी, हग्नु, मुत्नु, इत्यादि पद परेका उखानहरूलाई यहाँ स्थान दिएको छु। बढ्ता अश्लील भाव आउन सक्ने देखियो भने मामूली पद परेको भए तापनि नहाल्ने गरेको छु, उसैले 'ठाउँ न ठहर बूढीको रहर' जस्ता उखानहरू बाहेक गरिएका छन्।

चलेका उखान, वाक्यांश जम्मा गरेको हुनाले भिन्नभिन्न दृष्टिकोणबाट विचार गर्दा निस्केका भाव तथा एक थरीले अर्को थरीलाई गिज्याएर भनेको वचन पर्ने नै भए। यस्तामा कुनै थरीको पक्षपात नगरी सबै पक्षका उक्तिलाई स्थान दिएको छु। एक ठाउँको उक्तिलाई लिई एकजातीय आक्षेप परेको रहेछ भन्ने पाठकको मनमा नपरोस्।

धेरैजसो उखान वा वाक्यांश श्रुतिमनोहर हुने गरी बनेका छन्, उसैले कर्णकटु हुन जाला भन्ने डरले बरु व्याकरण, हिज्जे (अक्षरविन्यास) आदिमा केही अशुद्ध पर्न गए तापनि अनुप्रास, पहिलेका रूप, आदि बिग्रन नदिनालाई भरसक प्रयत्न गरेको छु। जस्तोः—एकादशी, सबैको पेट पसी; धन्जेको सन्जे, बैजेको नाक; जता मल्को, उतै ढल्को; प्रुसको फारु पो फारु, साउनको फारु त जहान मारू। हिज्जे, पदयोग, पदवियोगमा समितिले आधुनिक सुधार गर्नुअगाडि यस पुस्तकको धेरैजसो अंश छापिइसकेको हुनाले त्यसमा पहिलेकै हिज्जे इत्यादि रहेका छन्, अर्को संस्करणमा सच्याइनेछन्।

उद्धृत गर्दा प्रायः जुन पुस्तक अगाडि पऱ्यो त्यतैबाट उद्धरण हालेको छु। न कवि वा लेखकको दर्जा, कक्षा, वा कालको क्रम



बाँधेको छु, न कविता वा लेखको महत्त्व, गुण, वा श्रेणिपद्दति ध्यान दिएर सिलसिला मिलाएको छु। उद्धृत वाक्यहरू जस्ता छापिएका छन् त्यस्तै रहेका छन्, आधुनिक व्याकरण वा हिज्जेअनुसार संशोधन गरिएका छैनन्।

भाषामा ज्यादै प्रचलित भएका संस्कृत लोकोक्ति र हिन्दी उखानहरूलाई पनि स्थान दिन उचित सम्झें।

### यो कोषको प्रयोग गर्दा सहायता हुने कुरा :—

दुइ खण्ड भएका उखान वाक्यांशहरूमा कुन खण्ड अघि कुन खण्ड पछि भन्ने बारेमा मेरो पहुँचभित्रका विद्वानूहरूसंग छलफल गरी ठहरिएको क्रमलाई अनुसरण गरेको छु। उसैले दुइ खण्ड भएको कुनै उखान यस कोषमा पाइएन भने एक पटक ती खण्डको क्रम बदलेर खोज्नु आवश्यक छ। जस्तो :—'वैद्यका गलगाँड, जैसीका छोरी राँड' 'वै'मा हेर्दा पाइएन भने त्यसको क्रम बदली 'जैसीका छोरी राँड, वैद्यका गलगाँड' पारे 'जै'मा पाइन्छ; त्यस्तै—मनमा आउनु, मुखमा नआउनु।

उखान वाक्यांशहरूमा पाठान्तर दिनुपऱ्यो भने सानो कोष्ठक ( ) भित्र दिएको छु। कोष्ठकभित्र दिएका अक्षर वा पद कुन वा कतिसंग साट्ने भन्ने भ्रम नपरोस् भनी साटिने अक्षर वा पद छड्के अक्षरमा छापिएका छन्। जस्तो :—नहुने बिरुवालाइ धूलो न *मूलो* (पिना); घुच्चुक*मा*(पछाडि) गएको बुद्धि।

शुरूकै पद पाठान्तर भएकामा भने खोज्दा नपाइने हुन जाला भनी वर्णानुक्रममा आफ्ना आफ्ना स्थानमा पनि राखेको छु, तर त्यस्तामा '........*इत्यादि हेर*' राख्ने गरेको छु। जस्तो :—म भैंसी........ (मेरो पाड़ो........*इत्यादि हेर*); भईंमा........इत्यादि—= भूइँमा........*इत्यादि हेर*।

कुनै उखान वाक्यांशहरूलाई हामी कुनै पद वा खण्ड हालेर वा छुटाएर पनि भन्छौं। त्यस्ता पद वा खण्डलाई ठूलो कोष्ठक [ ] भित्र राखेको छ। जस्तो :—छाती [चरक] चिरिनु; अहिलेको जाडो, पोहरको धान [मरेको छोरो, पल्लो घरको जहान]।

धेरैजसो वाक्यांशहरूमा मूल धातु मात्र राखी प्रेरणार्थक रूप वा त्यस्तो अर्थ आउने धातु दिएको छैन, तापनि त्यस्ता रूप वा धातु प्रयुक्त हुन सक्छन्। जस्तो :—'छर्लङ्ग हुनु' मात्र छ, 'छर्लङ्ग गराउनु, पार्नु, तुल्याउनु, आदि' दिइएका छैनन्।

झैं र जस्तोलाई एकै ठाने हुन्छ, एउटा राखेकोमा अर्को पनि प्रयुक्त हुन्छ, जस्तो :—'चोरको खुट्टा काट् भने जस्तो' छ, '………भने झैं' पनि हुन सक्छ।

दोस्रो खण्ड

# वाक्यांश, वाक्पद्धति, इत्यादि



## दोस्रो खण्ड

# वाक्यांश, वाक्पद्धति, इत्यादि



**अँगार जस्तो**—कालोको उपमा दिंदा प्रयोग हुन्छ। त्यो त **अँगार जस्तो** कालो रहेछ।

**अँगालो हाल्नु**—(१)=अङ्कमाल गर्नु। बाटोमा **अँगालो हालेर** हिंड्नु छैन। (२)=पक्ष लिनु, समर्थन गर्नु। तिम्रो झगडियालाइ त ठूल्ठूलाले **अँगालो हालेका** छन् रे।

**अँधेरी रात**—रात हाम्रो भाषामा नपुंसक लिङ्गमा प्रयोग हुन्छ तापनि यो वाक्यांशमा स्त्रीलिङ्ग मानिएको छ।

**अँध्याराको जँघार [तराइ]**—=जोखिमको कुरा। भेउ नपाएको कुरामा हात हाल्नु **अँध्याराको जँघार तराइ** हो।

**अँध्यारो मुख लाउनु, हुनु, वा गर्नु**—=चेहरा मलिन पार्नु। सबै कान थाप्छन्, उर्वशी **अँध्यारो मुख लाउँछिन्।**—श्री केसर (विक्रमोर्वशी)।

**अंशे ढुङ्गो**—(१)=बराबर तौलाइको ढक, साँध सीमानाको शिला। यति जाबो कुरा भाग लाउनालाई **अंशे ढुङ्गा** चाहिन्छ र ? (२)=सालिग, ढुङ्गाको मूर्ति।

**अक(ग)डम बक(ग)डम**—(१)=अरू थोक। जुत्ता मोजा **अकडम बकडम** केही चाहिन्न, कोट भए हुन्छ। (२)=लम्बे चौडे कुरा। मैले भनेको दिने कि नदिने, म **अकडम बकडम** जान्दिन।

**अक(क)लको पुरिया**—=मूर्ख।

**अक(क)ल खियाउनु**—=मगज खर्च गर्नु। उसै भएन

भनेर हुन्छ अकल खियाउनु पर्छ ।

**अक(क्क)ल गूम हुनु**—=अन्योल पर्नु । यो मेशीन देख्ता त मेरो अकल गूम भयो ।

**अक(क्क)ल लडाउनु**—=अकल खियाउनु । यसमा अक्कल लडाउने के छ र!—श्री केसर (विक्रमोर्वशी) ।

**अकासको केतु**—=पुच्छरे तारो ।

**अकासको चरा खसाल्नु**—=उडेको चरा खसाल्नु, चलाक हुनु । कान्छालाई लाटो ठहराउँछौ, त्यो त अकासको चरा खसाल्छ ।

**अकासको फल**—(१)=देखिने तर आफूले भोग चलन गर्न नपाउने कुरा । हजुरको जस्तो सुनको घडी त हाम्रो निम्ति अकासको फल भयो । (२)=आदर्श, दुर्लभ कुरा ।

**अकासको रोग**—=पक्षवात, मूर्छा (अक्सर केटाकेटीमा हुने) । यो रोग हुँदा माथिको देउता लागेको भन्ने चलन पनि छ ।

**अकास खस्नु**—=असंभवको कुरा हुनु । भोलि तिम्रो बिहा हुनु त अकास खस्नु जस्तै हो ।

**अकास खुल्नु, उघ्रनु**—=बादल फाटी उज्यालो हुनु । अब त अकास खुल्यो मस्यौरा पार्नुपर्छ ।

**अकास पत्तालको फरक**—=जमीन अस्मानको फरक । उहिलेको जमाना र आजको जमानामा अकास पत्तालको फरक भइसक्यो ।

**अकास पत्ताल जोड्नु वा हाँक्नु**—=रङ्ग बिरङ्गको कुरा गर्नु । तिमी जस्तो अकास पत्ताल जोड्न म जान्दिन ।

**अकासमा पुग्नु**—=फुरुङ्ग पर्नु, बढ्नु । पोइले सोझो मुखले बोलायो कि तिमी अकाशमा पुगिहाल्छ्यौ नि ।

**अक्क न बक्क**—=अलमल्ल । अस्ति तिमीले त्यसो भन्दा त म अक्क न बक्क भएँ ।

**अक्षता पर सार्नु**—=बिरामी हुँदा निको होस् भनी देउदेउतालाई पूजा गर्न भए बिरामीलाइ 'छुवाएर,' भूतप्रेतलाइ मञ्छन



भए 'पुछेर' चामल छुट्याइराख्नु । साने मुट्ठ दुख्यो भनी फत्र्याक फत्र्याक पर्दा तिमीले अक्षता पुछेर पर सारेकी थियौ, दोबाटोमा फ्याक्क लायौ ?

**अक्षतापाती छुर्नु**—=पूजा गर्नु । कामले नभ्याएर अक्षतापाती पनि छुर्न पाएको छैन ।

**अगाडिको भाग हेर्नु**—=तत्कालको मात्र विचार गर्नु । तिमी अगाडिको भाग मात्र हेर्दारहेछौ भोलिपर्सि घडी दिन्छु भन्दा पनि नमानी त्यो शीशा कलम आज लिइछाड्यौ ।

**अघिपछि हिंड्नु**—(१)=साबिकमा हिंड्नु । अघिपछि हिंड्दा यहाँ दुख्तैनथ्यो । (२)=चाकरीमा हिंड्नु । उनका अघिपछि हिडने मान्छे आज कता लागेछन् !

**अघिबाटै ठूलो भाग खोज्नु**—=पछिको बाटो नहेरी पहिले नै धेरै माग्नु । थोरै मैन्हावारीमा जागीरे हो भन्दा नमानी अघिबाटै ठूलो भाग खोजेर भर्तीमा बसिस्, के गर्नू !

**अघि लाउनु**—(१)=अगाडि हिंडाउनु । दमना छोरो अघि लाएर आइरहिछ । (२)=भन्दा मरणमा पछि हुनु । पोइलाइ अघि लाएपछि मलाई कसले गन्छ र !

**अंकुशे लाउनु**—(१)=घुम्रिएको सुइरो अल्झाउनु । (२)=कडी पार्नु । मैले एउटा अंकुशे लाएर पो तिम्रो भाइले यो किताप दियो ।

**अटाई नअटाई**—=अटेसमटेस गरी ।

**अडकल काट्नु**—=अन्दाज गर्नु । धूवाँ देखेकोले त्यहाँ आगो होला भनी मैले अडकल काटेँ ।

**अडकल गीता वा पच्चू**—=लखैलख । यस्ता अड्कल पच्चूले काम बन्दैन ।

**अड्को थाप्नु**—=दुइटा अप्ठ्यारा कुराको बीचमा पार्नु । खोकी लागिरहेछ चिनी नभै भात खान्न भनेर अड्को थाप्छ हेर न !

**अड्को पड्को**—=खट्टापट्टा । अड्को पड्को तेलको धूप ।

**अड्को लाउनु**—=कूट हल गर्ने

दिनु । हर्केले लाएको अड्को बल्ल बल्ल फुकाएँ ।

**अड्डा जमाएर बस्नु**—(१)= कचहरी लाएर बस्नु । (२)= एकै थलोमा कुरा गरी धेरै बेरसम्म बस्नु । तिमी त जहाँ गयो उहीं **अड्डा जमाएर बसिरहन्छौ** ।

**अड्डी लिनु**—(१)=हठ गर्नु । यस्तो कुरामा अड्डी लिनु ठीक छैन । (२)=अटेरी भई आफ्नो ठाउँ नछोडी बस्नु । उसले कति पटक भकुरिसक्यो तैपनि रामु **अड्डी लिएर** बसिरहेछ ।

**अढैंचा (अडिँच्याहा) लाग्नु**— पेट बोकेकी आइमाईले छुँदा ५ वर्षसम्मका केटाकेटी झगडा गरिरहने र हरबखत नाक कोट्याउने भई गल्दै जान्छन् भन्ने विश्वास छ । सोही रोग लाग्नु ।

**अत्ती न पत्ती नजान्ने कथा क्या हो ?**—गाउँ खाने कथा भन्न नसक्ता सोध्नेले आफ्नो कथाको अर्थ खोल्ने वेलामा लम्बे चौडे कुराको आखिरमा भन्ने बोली ।

**अत्तो थाप्नु**—=एउटा कुराको अर्को अर्थ लगाई निहुँ खोज्नु । बहिनीको कुरा सुनेर हाँसिरहेकी थिएँ, लक्ष्मी उसलाई खिसी गर्‍यो भन्ने **अत्तो थापेर** उसै रिसाउन थाली ।

**अत्तो न पत्तो**—=थाहा सुद्धी । **अत्तो न पत्तोसँग** आइलागेको आपत् ।

**अनिकालको पाङ्दुर [कोदो]** —दुःख पर्दा सानो कुरा पनि ठूलो चीज हुन्छ भन्ने दृष्टान्त दिंदा ।

**अनुहार न दनुवारको**—= नराम्रो । छीः त्यो त कस्ता **अनुहार न दनुवारको** मान्छे रहेछ ।

**अनुहार नपरेको**—=नराम्रो (यो वाक्यांश अकरण भएर मात्र प्रयोग हुन्छ, अर्थात् राम्रोलाइ 'अनुहार परेको' भन्नु हुँदैन ) ।

**अनेक गर्नु**—=हरेक कोशिश वा उपाय गर्नु । **अनेक गरीकन** पनि काम छिनी आउँला । विष्णुचरण (सुमती) ।



**अन्त कतै, कहीँ**—यहाँ 'कतै, कहीं' अन्तलाइ जोड दिनाको निमित्त मात्र प्रयोग भएका हुन्, अन्तले मात्र पनि अर्थ दिन्छ ।

**अन्त पाउनु, लिनु**—=भित्री मन वा रहस्य बुझ्नु । तिम्रो दाइको **अन्त पाइसक्नु** छैन ।

**अन्त्य अवस्था**—=मर्ने वेला । उसले **अन्त्य अवस्थामा** स्वास्नीको मुख देख्न पाएन ।

**अन्त्य बिगार्नु**—=अगति पार्नु । तिमीले घाट नलगिदिएर मेरो **अन्त्य बिगार्न** लाग्यौ ।

**अन्धकारमा पर्नु**—(१) अँध्यारोमा पर्नु । त्यो बत्ती नचलाऊ फेरि **अन्धकारमा परौला** । (२)=अन्योल पर्नु । यो गरूँ कि ऊ गरूँ, म त **अन्धकारमा परें** ।

**अन्धेर हुनु**—=अन्याय हुनु ।

**अन्न जलले पालिनु**—=दाना पानीले बाँच्नु । सरकारकै **अन्न जलले पालिएको** छु ।

**अन्नपानीको शरीर**—=मान्छेको जीउ । **अन्नपानीको शरीर** सँधै एकनासको हुँदैन ।

**अपठ्यारोमा फलेको फर्सी**— यसो पनि नाइँ उसो पनि नाइँ भन्ने मानिसलाई प्रयोग हुने । **अपठ्यारोमा फलेको फर्सी** कहिले हात आउँथ्यो ?

**अभयदान दिनु**—मार्दिन भन्नु ( हाम्रो भाषामा अरू अर्थमा यो उस्तो प्रयोग हुंदैन ) । त्यो बोकालाई **अभयदान दिएँ** ।

**अरिङ्गालको गोला फुटे जस्तो** —धेरै मानिस धुइरिएर आइलाग्दा दृष्टान्त दिने । मेरो आङमा छोइस् कि मेरा गुठियारहरू **अरिङ्गालको गोला फुटे जस्तो** गरी यहाँ आउनेछन् ।

**अरिङ्गालको गोलामा हात हाल्नु**—=आपत्मा परिने काम गर्नु । उखड्डाको काम गर्नु **अरिङ्गालको गोलामा हात हाल्नु** हुन्छ ।

**अरू [कुरा] त्यस्तै हो, जान्दिनं**—=अरू कुरा परै रहोस् ।

**अरेको कुरा गरेको**—=सुनेको खबर मात्र भनेको । मैले देखेको त होइन नि, **अरेको कुरा गरेको** ।

**अर्काको आत्मालाइ आफ्नै**

जस्तो ठान्नुपर्छ–यहाँ आत्माको अर्थ तिर्सना हो ।

**अर्काको पेटमा पस्नु**—= अर्काको मनको कुरा जान्नु । अर्काको पेटमा को पस्न सक्छ ?

**अर्काको भित्ता टाल्ने**—= अर्काको घर सह्यार गर्न जाने (विवाह भई) । छोरीको जात अर्काको भित्ता टाल्ने त हो नि ।

**अर्थै गर्नु, हुनु**—(१) = एउटा बन्दोबस्त गर्नु, हुनु । भोलिसम्ममा बा आइपुग्नु भएन भने अर्थै गर्नुपर्ला । (२) साधारण अर्थ । तिम्रो श्लोकको त अर्थै भएन वा मैले गर्न सकिन ।

**अर्धचन्द्र दिनु, पाउनु**—= घोक्र्याउनु । कत्रो आशाले गएको ता अर्धचन्द्र पो पाइयो ।

**अलख जगाउनु**—= भीख माग्नु ।

**अलि बार**—= एक छिन । अलि बार पर्ख दिइपठाउँला ।

**अल्झाउने बिल्झाउने**—= जञ्जालमा फसाउने (बालक छोरा-छोरीको विषयमा मात्र प्रयोग हुने) । मेरा अल्झाउने बिल्झाउने कोही छैनन् ।

**अल्झो लाग्नु**—(१) = गर्भ रहनु वा छोराछोरी हुनु । सुन्यौ ? दमनालाई पनि अल्झो लाग्यो रे । (२) = अलमलको काम आइपर्नु । कहाँबाट रामुसँग भेट भइदिएकोले यो अल्झो लाग्यो ।

**अल्लारे कुरा**—= केटाकेटीको जस्तो कुरा ।

**अवतार लिनु**—= (भगवान्ले) प्राणीको रूप लिनु । आजकल भगवान्ले बुद्धावतार लिनुभएको छ ।

**अवसर चुक्नु**—= मौका गुमाउनु । अवसर चुके हातमा परेको पनि गुम्छ ।

**अवसर माफ**—= मान्य मानिसलाई मन नपर्दो वा रिस उठ्तो कुरा भन्नुअगाडिको क्षमा-प्रार्थना गर्दा प्रयोग हुने । अवसर माफ भए केही बिन्ति चढाउने थिएँ ।

**असामी उठाउनु**—= ऋणीबाट ऋण असूल गर्नु ।



**असारको पन्ध्र**—= कामको चटारो (असारको पन्ध्रमा खेत रोप्ने पहिलेको चलनबाट) । मैले त्यति किताप थन्काउन लाएको त्यसलाइ असारको पन्ध्र परि(वा भइ)रहेछ ।

**असिना पर्नु**—(१) = (नकसको खेलमा) सबै जना उड्नु । (२) साधारण अर्थ ।

**असिना [र] पसिना**—= पसिनाले तरबतर । मैले गाँस मात्र हालेको थिएँ, त्यो असिना र पसिना गर्दै आइपुग्यो । यति जाबो काम गर्नालाइ पनि तँलाइ असिना पसिना भयो ?

**अस्मान जिमीनको फरक**—= अकास पत्तालको फरक (हेर) । अर्जुन र तिमीमा अस्मान जिमीनको फरक छ, नबोल ।

## आ

**आँखा ओबानो हुनु**—= नरोएको दिन हुनु । यसको आँखा ओबानो कहिल्यै भएन ।

**आँखा कान टाठो गर्नु**—= चनाखो हुनु । आज बाजेको बेथा बढेको छ, आँखा कान टाठो गरेर बस है नानी हो !

**आँखाको कसिंगर**—= देखिनसहेको मान्छे । मत उसको आँखाको कसिंगर छु । (साधारण अर्थमा पनि) ।

**आँखाको तारा**—= बहुतै प्यारो मानिस । हाय ! मेरो आँखाको तारो अस्तायो ।

**आँखाको पुतली वा नानी**—(१) = आँखाको केन्द्र जहाँ अर्को मान्छेको सानो प्रतिबिम्ब पर्छ । (२) = प्यारो । मेरो आँखाको पुतली कांछो कहाँ गयो ?

**आँखाको विष मार्नु**—= निद्राले आँखा बिझाएको छुटाउनालाइ सुत्नु । मैले त काम गर्न सकिन, एकै छिन आँखाको विष मार्छु ।

**आँखा खानु**—= आँखा तिर्मिराइदिनु, आँखामा परिश्रम पार्नु ।

**आँखा खुल्नु**—(१) = बिउँझनु ।

आँखा खुल्नासाथ तिमीले भनेको कुरा संझें। (२)=ज्ञान हुनु। तैंले त मलाई थाङ्नामा सुताइराखेको रहेछस्, बल्ल मेरो आँखा खुल्यो। वेदान्त सुनेपछि केही न केही आँखा खुल्छ।

**आँखा गड्नु**—(१)=दुब्लाएर आँखा भित्र पस्नु। तीन पटक झाडा लाग्दैमा यिनको आँखा गडेको हेर! (२)=मन पर्नु, लोभिनु। मलाइ त्यो लुगामा खूब आँखा गडिरहेछ। यसले गर्दा बालककालैदेखि आंखा गडेको नेपाललाई विजित गर्ने भारी मौका पृथ्वी नारायण शाहाले पाए।—अम्बिका प्रसाद (नेपालको इतिहास)।

**आँखा गाड्नु**—=अर्काको माल देखेर लोभिनु। परस्त्रीमा आँखा गाड्नु ठीक होइन। चन्द्रमालाई लोकले झैं आँखा गाडेर तिम्रो मुख हेर्न लागेका छन्।—श्री केशर (विक्रमोर्वशी)।

**आँखा घोच्नु वा बिझाउनु**—(१)=निद्राले आँखा पोल्नु। हिजो राती सुत्न नपाएर मेरो आँखा घोचिरहेछ। (२)=(नदेखेकोमा रिसाई भन्ने बोली) देखाउनु (यसमा 'बिझाउनु' प्रयोग हुन्न)। ए! त्यसको आँखा घोचिदेन, त्यहींको माल पनि नदेख्ने।

**आँखा चिम्लनु**—(१)=साधारण अर्थ। आँखा चिम्लेर एउटा फूलको नाउँ संझ। (२)=मर्नु। उसको बाले त आँखा चिम्लेछ, सुन्यौ? (३)=नीच मार्नु। त्यस्ता सानातिना कुरामा तिमीले आँखा चिम्लिदिनुपर्छ। (४)=परिणामको ख्याल नगर्नु। त्यो सवार आँखा चिम्लेर घोडा दगुराउँछ।

**आँखा चिसो पार्नु**—=रुवाउनु। धेरै उपद्रो नगर्, कता तैंले बाबुको आँखा चिसो पार्छस्।

**आँखा च्यातेर हेर्नु**—=राम्ररी हेर्नु (रिसको बोली)। त्यति पनि नदेख्ने, अलि आँखा च्यातेर हेर्। तेरो तमाशा हेर्लास्!—हुन्छ, आँखा च्यातेर हेरूँला।

**आँखा छल्नु**—(१)=झुक्याउनु।



मेरो आँखा छलेर एक्का लिएछ। हिजो मेरो आँखा छलिएछ। =नदेख्ने गर्नु।""सहन नसकी सबको आँखा छलेर बुइगलमा गई दुलहीले आँखाबाट पीरको पानी बर्साई।—बालकृष्ण (कथाकुसुम)।

**आँखा जुधाउनु**—(१)=दुइजनाले पारस्परका आँखामा झिम नगरेर हेरिरहने र अघिबाट झिम गर्नेले हार्ने खेल खेल्नु। (२)=अर्थपूर्ण हिसाबले परस्परलाइ हेर्नु, मुखामुख गर्नु। मैले त्यति भन्नेसाथ दुइजना दाइ भाइले आँखा जुधाए।

**आँखा झिम्क्याउनु**—=ठट्टा वा फकाहट जताउनालाई कुरा गरेको मानिसबाहेक अरूपट्टि हेरी आँखा झिमझिम गर्नु। ठट्टा भन्ने मैले बुझिसकेको थिएँ, किनभने तिमीले कृष्णेलाई आँखा झिम्क्याएको मैले देखें।

**आँखा झिम्म [पनि] गर्न नपाउनु**—(१)=एक छिन पनि सुत्न नपाउनु। रातभर दांत दुखेर मैले आँखा झिम्म [पनि] गर्न पाएको छैन। (२)=आँखा झिम्म गर्न नहुनु। आँखा झिम्म [पनि] गर्न पाएको छैन सानीले एउटा बिधङ्स गरिसक्छे।

**आँखा झिम्म गर्न नहुनु**—=एक छिन पनि अर्कातिर ध्यान दिन नहुनु। कस्ती चकचके छोरी! यसको अगाडि आँखा झिम्म गर्न पनि हुँदैन।

**आँखा टट्टाउनु**—=निद्रा वा अरू परिश्रमले आँखा थाक्नु। हिजो राती सुत्न नपाएर मेरो आँखा टट्टाइरहेको छ। दिदी आउँछिन् भनेर भयालबाट हेर्दा हेर्दा आँखा पनि टट्टाइसक्यो।

**आँखा टलबल हुनु**—=आँसु गहभरिभन्दा बढ़ता भई चुहुनै लागेको हुनु।

**आँखा ठूलो गर्नु**—(१) केटाकेटी वा अधीनस्थ व्यक्तिलाई तर्साउन। मैले आँखा ठूलो गरिदिएँ, अनि चूप लाग्यो। (२)=आरिसे गर्नु। तिमी आँखा ठूलो गर्छौ, थोरैले पुग्दैन।

**आँखा तर्नु**—=रिस जनाउन रिस उठेको मानिसलाइ (अक्सर

आँखा ठूलो गरी) हेरेर आँखा बन्द गरी (मुन्टो बटारी) अर्कोपट्टि हेर्नु । मैले गरेको हो र ? उसै मलाई **आँखा तर्छौ !**

**आँखा दौडाउनु**—(१)=दृष्टि पुऱ्याउनु । सबैतिर आँखा **दौडाउन** सकिएन, हर्केले ठगिहालेछ । (२)=दशतिर आँखा डुलाउनु । झ्यालझ्यालतिर **आँखा नदौडाऊ ।**

**आँखा नचाउनु**—(१)=आँखा दौडाउनु(२हेर) । (२)=व्यथा र साधारण अर्थमा । हेर ! हरिमायाले फेरि **आँखा नचाउन** थाली, अब छोपूछ ।

**आँखा नदेखेर पानी पर्नु**—=नथामिकन लगातार पानी पर्नु ।

**आँखा पीरो हुनु**—=धूवाँ, पीरो रागहरूले, वा निद्राले आँखामा असर पर्नु ।

**आँखा फुट्नु**—(१) साधारण अर्थ । कोसैनेर घाउ लागेछ, कसो **आँखा फुटेन !** (२) नदेखेकोमा गालीको बोली । **आँखा फुटून्**, तखतामा रैछ कि रैनछ ! (३) देखेकोमा सरापको बोली । मैले त लुकाएर ल्याएको थिएँ कताबाट त्यसको **आँखा फुटेछ नि !** (४) रोजेकोमा पछुताउ । **आँखा फुटेर** यो फरिया किनेछु ।

**आँखा बचाउनु**—=नदेखाउनु । अरूको **आँखा** त **बचाउला,** परमेश्वरको नि ?

**आँखा बटारिनु**—(१)=निद्राले गर्दा पटल खोलै राख्न गाह्रो हुनु । (२)=पखला इत्यादिले पटल ओल्र्हनु । पण्डित बाजेको **आँखा बटारिएछ ।**

**आँखा बिग्रनु**—(१)=आँखाको शक्ति घटी टाढा वा अक्षर नदेख्ने हुनु । अचेलका केटाकेटीहरू **आँखा नबिग्रे** पनि चश्मा लाउँछन् । (२)=आँखाको आकार नराम्रो हुनु । पोहोर आँखा दुखेदेखि कान्छी दुलहीको **आँखा बिग्रेर** बिजोडा भयो ।

**आँखाभरी देख्नु**--=पछि दुर्गति देख्नु(रिसको बोली)। तैंले मलाइ गरेको कहाँ जाला र **आँखाभरी देखून्** पाउँला नि !

**आँखा भित्र पस्नु**—=आँखा गड्नु ।

**आँखामा छारो हाल्नु**—= छल्नु, ठग्नु ।.........मान्यका दुइ **आँखामा छारो हालेर** मार्नु हो ।—बालकृष्ण (प्रह्लाद) ।

**आँखामा जाली लाग्नु**—(१)=भेडो हुनु । कोतेको **आँखामा जालो लागेको** छ, स्वास्नीले जे देखायो उही देख्छ । (२)=मर्ने वेलामा आँखालाइ सेतो पत्रले ढाक्नु ।

**आँखामा पर्नु**—=प्रकाश हुनु, चिन्हिनु । मालिकको **आँखामा परेपछि** उँभो लाग्न के बेर !

**आँखामा हाले पनि नबिझाउनु**—=चौपट्ट साधु भलो मानिस हुनु । बिचरो रामु **आँखामा हाले पनि बिझाउँदैन ।**

**आँखा रसिलो हुनु**—(१)=रुघा वा जरोले । नानुको **आँखा रसिलो** छ, डिग्री हाल्नु पर्‍यो । (२)=सजल नेत्र हुनु । छोरीलाई बिदा दिँदा त बाबु चाहिंको पनि **आँखा रसिलोसम्म** त थियो ।

**आँखा लडाउनु**—=आँखा जुधाउनु (२हेर) ।

**आँखा लाउनु**—=आँखा गाड्नु (हेर) ।

**आँखा लाग्नु**—(१)=आँखी लाग्नु । (२)=निंद्रा पर्नु । **आँखा लागेको** मात्र थियो छोरो रोएको सुनेर उठें । (३)=चित्त नबुझ्नु, टीको लाग्नु । यति रोटीले त मलाइ **आँखा लाग्दैन ।**

**आँखाले हेर्न नसक्नु**—=कत्ति पनि नरुचाउनु ।

**आँखा वा आँखीभौं सन्काउनु**—=आँखीभौं चलाएर (प्रायः 'हुन्छ, भयो, गर' जताउने) इशारा गर्नु । रघुले **आँखा सन्काउनासाथ** सबै जना ममाथि आइलागे ।

**आँखा हाँस्नु**—=मुख नहाँसी आँखामात्र रसिलो हुनु । तिम्रो मुख देख्नैमा उसको **आँखा हाँसिरहेको** थियो ।

**आँखीभौं जोड्नु**—=निधारमा गाँठो पार्नु ।

**आँखी लाग्नु**—=अनिष्ट हुने गरी कुदृष्टि पर्नु । केटाकेटीलाई ज्यादा राम्रो पारेर नसिंगार, **आँखी लाग्ला ।**

**आँखी हुनु**——=डाहा गरिने हुनु। सबैको आँखी भएर बस्तु ठीक छैन ।
**आँखै आँखाले कुरा गर्नु**——= आँखाको सानले कुरा पुर्‍याउनु ।
**आँखै फुटेर गर्नु**—पश्चात्तापमा प्रयोग हुने । आँखै फुटेर सेतीलाई बिहा गरेँछु ।
**आँट दिनु**——=प्रोत्साहन दिनु । तिमीले आँट दिएपछि त्यो काम गर्न म केही मान्दिन ।
**आँतको मान्छे**——=ज्यादै मेल भएको मान्छे ।
**आँत टुट्नु**——=खान नपाएर कमजोर हुनु । दूधकट्टू हुनाले बिचराको आँत टुटेको छ ।
**आँत पाउनु**——=भित्र मनको कुरा बुझ्नु ।
**आँत पुर्नु**——=खान नपाएकोलाइ बेसरी खुवाई खाँखाँ मेटाउनु । यो घोडा साह्रै टुटेको छ आँत पुर्ने गरी जति खान्छ खानदेऊ ।
**आँतमा बल हुनु वा आँत बलियो हुनु**——=मूढे बल नभए तापनि खप्ने धान्ने शक्ति हुनु । यसले अस्ति बर्त बस्न सक्यो, दुब्लो भए तापनि यसको आँत बलियो रहेछ ।
**आँत रसिलो हुनु**——=रसदार वस्तु खाँदा घोक्रोदेखि पाकस्थली-सम्मको नली भिजेको हुनु । एक गिलाँस मही पिइदिएको त आँत रसिलो भयो ।
**आँत रूखिनु**—(१)=खान नपाएर खानाको ज्यादा तिर्सना हुनु । त्यसको आँत रूखिइ-रहेछ एक निम्ठाले टीको लाग्ने छैन । (२)=आँत सुक्नु ।
**आँत सुक्नु**——=नखाई नखाई वा गर्मीले घोक्रोदेखिको नली रुखासुखा हुनु ।
**आँधी लाउनु**——=बिंगा लाउनु । नभए नभएको कुराको आँधी लाउँछ ।
**आँसी खाऊँ कि मासी खाऊँ हुनु**——=साह्रै भोकाउनु (यहाँ आँसीको अर्थ 'आस' हो।
**आँसु काढ्नु**——=आँसु झार्नु ।
**आँसु बर्सनु**——=बरबर आँसु खसाल्नु ।
**आइतवार हुनु**——=गाह्रो हुनु । भएको कुरा पनि त चाइने ढाँट्तो रहेछ भने, खून गरेर चाइने इनकार गर्ने कत्रो आइ-



तवार भयो । ग्रन्थकार (कथा-कुसुम) ।
**आइनु न साहिनु**——=नाता न गोता । आइनु न साहिनु त्यससँग के वास्ता !
**आखत हेर्नु**——=जोखना हेर्नु ।
**आखिर कार**—=अन्त्यमा । आखिर कार त्यसो नभनी सुकूवै छैन ।
**आखिरी खेलाउनु, पार्नु**——=संकष्टमा पार्नु । रुघाले आखिरी खेलायो । कंगालीलाइ अनिकालले आखिर पारेमा पनि ज्यू मासिन जान्थ्यो ।—श्री ३ चन्द्र (अमलेख-भाषण) ।
**आगोको अगाडि नौनी वा घिउ**—लोभिने वस्तु अगाडि राख्ता लोभिनु मामूली हो भन्ने कुराको दृष्टान्त दिंदा प्रयोग हुने । खञ्चुवालाइ राख्न दिने, खाइदियो भनेर रिसाउने ? आगोको अगाडि नौनी राखेपछि पग्लन्छ ।
**आगोको बीउ वा दंसो**——=अलिकति आगो ।
**आगोको भुङ्ग्रोमा पर्नु**——=राप र तापमा पर्नु वा जागेको वेलामा पुग्नु ।
**आगो जोर्नु**——=आगो बाल्नु ।
**आगो झोस्नु**—(१)=कुरा लगाई झगडा पार्नु । आगो झोस्ने साहिंला छँदैछ झगडाको के दुःख ! (२) साधारण अर्थ । सानो घर्तीको त मुखमा आगो झोसिदिने पनि कोही छैन ।
**आगो न मुगो(भुंग्रो)**—=आगो न सागो ।
**आगो फुक्नु**——=फुकेर आगो बाल्नु ।
**आगोमा घिउ हाल्नु**—=बलेको आगो (हेर) ।
**आगो मार्नु**——=आगो निभाउनु ।
**आगोमा हाम फाल्नु, फाल हाल्नु**——=जोखिमी कुरामा हात हाल्नु ।
**आगो हुनु**—(१)=रिसले चूर हुनु । मेजर बूढा आगो भए । —गुरुप्रसाद (कथाकुसुम)। (२) =मोल ज्यादै चर्को हुनु । सुनको भाउ छोइसक्नु छैन, आगो भइरहेछ । (३)=(घोडाको बारे) साह्रै तेजी । साहिंला दाइको अबलख आगो थियो, हामीहरुले आँट्नै नसक्ने ।

**आङ ढक्क फुल्नु**—=डरले रोमाञ्चित हुनु । अँधेरी रातमा धोबी खोलाको बाटो आउन लागेको थिएँ, सरक्क गरेको सुन्दा आङ ढक्क फुल्यो ।

**आङ तात्नु**—(१)=(घोडाको बारे) अलि बेर दगुरेपछि जीउ गर्माउनु । यो घोडा आङ तातेपछि मात्र फूर्ति झिक्छ । (२)=शीताङ्गले छोड्नु । प्राणेश्वर पारेपछि बल्ल मधौरुको आङ तात्यो ।

**आङ फुक्नु**–(१)=संकोच त्यागनु, निर्धक्क हुनु । जर्नेलसाहेब राजभएको हुनाले त्यसले आङ फुकाएर कामै गर्न सकेन । (२)=जीउमा फूर्ति आउनु (जाडोहराएर) । घाम नलागेको हुनाले मेरो आङै फुकेन ।

**आङमा घाम लागेको हुनु**—किरिया हाल्दा प्रयोग हुने । तिम्रो घडी मैले छोएको मात्र पनि रैछ भने मरिजाऊँ, यी आङमा घाम लागेको छ ।

**आङमा घाम लाग्नु**—=मनमा शान्ति हुनु ।

**आङ हलुङ हुनु**-(१)=सुत्केरी हुनु । (२) साधारण अर्थ ।

**आङै ननिहुरनु**—अल्छी गरी पटक्कै काम नछुनु वा नगर्नु । कान्छा कार्की त साह्रै अल्छी रहेछ, हामी सब झार उखेलिरहेछौं उसको आङै निहुरिंदैन ।

**आची खानु**—(१) राती छिंका गर्‍यो भने संचो हुँदैन भनी केटाकेटीले त्यस बेला छिंका गर्दा 'आची खा !' भन्ने चलन छ । (२)रिसमा वा फारो गरेर केटाकेटीलाइ केही खा भन्दा बोलिने बोली । नानी तिमी बुबुमाम नखाए आची खान्छयौ त ? जति दिए पनि यसलाइ पुग्दैन अब आची खालिस् !

**आच्छु आच्छु पार्नु**—=आखिरी खेलाउनु ।

**आज आज भन्दा भन्दै दिन बिताउनु, आज आज भोलि भोलि भनी टार्नु**—=टड्ग्याउदै लानु । छ असी रुपियाँ मैले यसबाट उठाउनु, टार्दछे यसरी आज आज भोलि भनी भनी ।—बालकृष्ण (मुटुको व्यथा) ।



**आजको भोलि कहिले आउन्न ?**—आजै आजै भन्नेलाई जवाब ।

**आजको रात(दिन) काट्नु**—किरिया हाल्दा प्रयोग हुने । मैले तिम्रो बट्टाइ चोरेको भए आजको रात काट्न नपाऊँ (=आजै मरूँ) ।

**आजु खेल**—नेवारी भाषामा आजु=बाजे वा चिन्हु । यसमा आजुलाइ नछोएसम्म आजुले छोडेको मान्छेबाट बच्नुपर्छ । आजुले छोड्दा यसो भन्छन् :—एक दुइ तीन, छेपाराको झोल खाँदा गयो तेरो दिन; लामो घाँटी फाल हाल्नेको खिल, गिद्धको चोक्टा तैंले निल् ।

**आठै पहर**—=रात दिन ।

**आठो पाँचो हेर्नु**—=खनखाँचोमा थोरबहुत खर्च दिनु । धेरै दिन नसके तापनि आठो पाँचो हेरूँला ।

**आड मार्नु**—=मेख मार्नु । जेठानीले मेरो आड मारें भन्थी, आफ्नै आड मर्‍यो ।

**आतुरी खेलाउनु**—=आच्छु आच्छु पार्नु ।

**आत्मा मार्नु**—(१)=मन लागेको कुरा नखानु । अर्कोले आत्मा मारी मारी सँगालेको पैसा तैंले खान पाउँछस् ? (२)=अर्कालाइ भोक भोकै राखेर आफ्नो पेट भर्नु ।

**आत्माले खोजेको वा मागेको**—=ज्यादै तिर्सना लागेको । आत्माले मागेको कुरा खाएकोमा बिगार हुन्न भन्छन् ।

**आदि अन्त पाइसक्नु नहुनु**—=रहस्यमय हुनु ।

**आधा मासु हुनु**—=पीरमानेर दुब्लाउनु । धाईको कचकचले नानीको आधा मासु भयो ।

**आनका तान**—=ज्यादै ('फरक'सँग आउने) । तिमी र उसमा आनका तानको फरक छ ।

**आने ब्याज**—=एक महीनामा रुपियाँको चार पैसाको दरले लिने ब्याज । आने ब्याजमा १० रुपियाँ सापट दिनुहोला कि ?

**आन्द्रा बटारिनु**—=भोक लाग्नु ।

**आन्द्रा भुँडी दुहुनु, खोल्नु**-=मानिसलाइ अरू कुराले रद्द पारी उसले भन्दिन भनी आँटेको कुरा पत्तै नदिई धुत्नु (ब्वाँसाले गाई

भैंसीलाइ कन्याई कन्याई पेटको आन्द्रा भुँडी थुत्ने बानीलाइ सूचन गरी)। मानिसहरूलाई फुर्काई हुर्काई आन्द्रा भुँडी दुहुन पनि जान्दथे,………।—रुद्रराज (चप्पाकाजी)।

**आन्द्रा भुँडी देख्नु, देखाउनु**—=कुना काप्चा वा भित्री ठाउँ देख्नु, देखाउनु। यो ढोकामा पर्दा नहाले त त्यहांको मान्छेले सब आन्द्रा भुँडी देख्छ।

**आन्द्रा भुँडी फर्कला जस्तो हुनु**—=ज्यादै वाक्क वाक्क आउनु (प्रायः घीनले)। त्यसले जांड खाएको देख्ता मेरो आन्द्राभुँडी नै फर्कला जस्तो भयो।

**आन्द्रा सुक्नु**—=खाँदै नखाई वा थोरथोरै खाई खाने शक्ति हराउनु। यतिका दिनसम्म भोकभोकै बसेर तिम्रो आन्द्रा सुकिसक्यो, कताबाट भात जान्छ।

**आफल र ताफल हुनु**—=चाहिंदोभन्दा ज्यादै बढ्ता भई स्याहारिनसक्नु हुनु। यस पालोको नासपाती को खाइदेओस्! आफल र ताफल छ।

**आफ सें आफ**—=केही नगरीकन उसै, आफै। बन्दूक भरेर भित्तामा अड्याइराखेको थियो आफ सें आफ पट्क्यो।

**आफू त**—(१)=हुन त। आफू त टेबुल बलियै थियो कसरी भाँचियो होला। (२) साधारण अर्थ। आफू त सनखनै गुण्टैसमेत (उखान)।

**आफूले थुकेको थूक आफै चाट्ने**—=दिएको माल खोस्ने।

**आफ्नै धन्दामा हुनु**—=आफ्नै काम वा चासोमा व्यस्त रहनु। म आफ्नै धन्दामा थिएँ माहिला दाइ लडेको देखिनं।

**आफ्नो कपाल( टाउको )को कसिंगर अर्काको कपाल-(टाउको)मा सार्नु**—=आफूलाइ परेको गाल वा गाह्रो काम आफू पन्छिई अर्कालाइ पार्नु।

**आफ्नो करनीको फल पाउनु, चाख्नु**—=आफ्नो दोष अनुसारको सँजा भोग्नु। झ्यालखान परेकोमा आफ्नो करनीको फल पाएँ भनेर चित्त बुझाउनुपर्‍यो।

**आफ्नो कुरा माथि पार्नु, कुरा माथि पार्नु**—=धिङ्न्याहीं गरी वा नचाहिने कुरा गरेर कुरामा जित्नु। चित्त बुझे पनि [आफ्नो] कुरा माथि पार्ने तिम्रो बानी छ।

**आफनो कुरा राख्नु**—=बोलेको कुरा पुऱ्याउनु (अक्सर वचनको वास्तविक तात्पर्य पूरा नगरी)। हरिले बकस दिन्छु भनेर त एकपैसा दिएर आफ्नो कुरा राख्यो।

**आफनो गतबाट जानु**—=आफ्नो सरोकारको नहुनु। आफ्नो गतबाट गइसकेको मानिसको कुरा म सुन्दिन।

**आफ्नो टाउकाको कसिंगर पन्छाउनु** (आफ्नो कपालको…… पनि हेर)—=आफूलाइ परेको गाल वा गाह्रो कामबाट उम्कनु।

**आफ्नो टाउको बचाउनु वा जोगाउनु**—= गालबाट बच्नु।

**आफ्नो टाउकोमा पर्नु**—=अभिभारा आइलाग्नु। छोरीले घर गर्न सक्तिन कि भन्ने फिक्री नगर, आफ्नो टाउकोमा परेपछि जानिहाल्छे नि।



**आमाको काख**—न्यानो घाम अथवा सब तरहबाट निर्भय वा सब तरहको सुविस्ता पुग्ने अवस्था वा स्थानलाइ दृष्टान्त दिंदा।

**आमाले फुकेको जस्तो**—शीतल हावालाइ दृष्टान्त दिंदा।

**आरनमा बसेको कामी जस्तो**—लुगा ज्यादै मैलो भएकोमा दृष्टान्त दिने।

**आरामी लिनु**—=थकाइ मार्नु। बिङ्नै थकाइ लाग्यो, कहाँ गएर आरामी लिऊँ……।—श्री अर्जुन (स्वप्नवासवदत्ता)।

**आलु काट्ने**—=घिउ काट्ने (हेर)।

**आलु खानु**—=फेलो खानु, लड्नु, मर्नु (साधारण अर्थमा पनि)। मसँग जोरी खोज्थ्यो, शिवेले त आलु खाएछ।

**आलो घाउ**—=हालसालै परेको शोकसन्ताप (साधारण अर्थमा पनि)।

**आसको खुट्का**—=अब नपुग्ने आस लागेको कुरा। अस्ति मर्ने हरिमायाले यो औंठीको आस गरेकी थिई, के गर्नु आसको खुट्का रह्यो।

आस टुट्नु—=हरेस खानु।
आसन जमाउनु वा बाँध्नु—=एकै ठाउँमा धेरै बेरसम्म बसिरहनु। तिम्रो त जहाँ गयो उहीं आसन जमाउने बानी छ नि।
आस न त्रास—=आस पनि छैन,आस गर्दा हुने डर पनि छैन।
आस मर्नु—=आस हराउनु।
आसमाथिको त्रास—आस गर्दा सो आस पूरा हुँदैन कि भन्ने दहसत साथसाथै आउँछ, उसैले यो वाक्यांश।
आस मार्नु—=आशा गर्न छोड्नु। यस्तो हुकुम् गरि तहाँ जब बीच पाऱ्यो। मारीचले पनि तसै जिय आस माऱ्यो॥—भानुभक्त (रामायण)।
आसे राँड—=पोइ परदेशबाट फर्केला भन्ने आस गर्दागर्दै जन्म बित्न लागेकी आइमाई।
आहाल बस्नु—=(भैंसीले) पानीमा डुबेर बस्नु।

## इ

इङ्लिश टाइम—=एक मिनेट पनि फरक नखाने समय। भरखर एक हान्यो, हामी इङ्लिश टाइममा आयौं कि अएनौं त?
इज्जत आबरू—=मान मर्य्यादा।
इज्जत जानु—=इज्जत नरहनु, लाजैमर्नु हुनु।
इज्जत फाल्नु, फ्याँक्नु वा गुमाउनु—=लाजैमर्नुको काम गर्नु, आफ्नो इज्जतलाइ नसुहाउँदो काम गर्नु। यस्तो सिपालु सवार भएर पनि लड्ने, इज्जतै फ्याँकिस्!
इज्जतमा बट्टा लाउनु—=रामै-सँग इज्जत फ्याँक्नु। यस्तो बेथितिसंग चल्न लाग्यौ भने इज्जतमा बट्टा लाग्ला।
इज्जत लिनु—=हुर्मत फालिदिनु, लाजमर्नु पार्नु। चोखिनीतिको कुरामा इर्कैले बाहुनहरूको इज्जतै लियो।
इत सदा—चिट्ठी पत्र लेखिसकेपछि आफ्नो नाँउ हाल्नुअगाडि लेखिने, 'इत' अरू ठाउँमा प्रयोग भएको देखिन्न।



इति श्री—(१)=आद्योपान्त। ठूलेले मेरो घरको इति श्री सप्पै कुरा माहिला दाइलाइ भनिदिएछ। (२)=खतम। रामायणका कथाको प्रथम सरग यो हो इति श्री भयाको।—रघुनाथ (सुन्दरकाण्ड)। (३)=सर्वस्व। ठूला कान्छा भाइले बाको इति श्री पारिदिएछ।
इति संवत्—कागतको पुच्छरमा मिति लेख्दा यो सँधै अगाडि लेखिन्छ। इति संवत् १९९६ साल माघ १२ गते रोज ६ शुभम्।
इत्यलम्—यो चिठ्ठी टुङ्ग्याउँदा प्रयोग हुन्छ (=यति भए पुग्यो)।
इन्तु न चिन्तु—=होश हवास केही नभएको। जरोले छोरी इन्तु न चिन्तु भइरहिछ।
इन्द्रको बाबु चन्द्र—=सबभन्दा शक्तिमान् व्यक्ति (जोरी खोज्दा प्रयोग हुने)। तेरो त के कुरा, इन्द्रको बाबु चन्द्र आए पनि मलाई गिराउन सक्तैन!
इबी अदावत—=पुरानो रिस, दगा।
इबी लाग—=इबी अदावत।
इबी (ईख) लिनु—=दगा धर्नु।
इलम पढ़ी ढिकी जाँतो खानु—=विद्या जानेर पनि नीच काम गरेर जीवन धान्नपर्नु।
इलिक र मिलिक वा इलिक मिलिक हुनु वा पार्नु—=आफ्नो अगाडि नै आँखा छली दबिनु वा दबाउनु। पानबट्टा भुइँमा राखेर तिमीसित कुरा गर्न लागें, त्यत्तिकैमा त्यो पानबट्टा इलिक र मिलिक भयो।

## ई

ईख न अनखा—=रिस पनि छैन डाहा पनि छैन। ईख न अनखाको मान्छेलाइ भनेर के गर्नु?
ईख लिनु—=इबी लिनु (हेर)।
ईमानको कुरा—=सत्य (किरिया हाल्दा प्रयोग हुने)। ईमानको कुरा, तिम्रो किताब मैले लगेको छैन।
ईमान जमान गर्नु, हुनु—=

बोलकबोल गर्नु, पकापकी गर्नु, हुनु । हामीले ईमान जमान गरेको कुरा कहिल्यै फरक पर्दैन, बुझ्यौ ?

ईश्वरको इच्छा—=भाग्यको खेल । ईश्वरको इच्छासँग कसको के लाग्छ, आखिरमा छोरा गइहाल्यो !

ईश्वरको कानमा नपरोस् !—=परमेश्वरले घमण्ड नठानून् (आफ्नो असल भएको छ भन्दा खराब होला भन्ने डरले निस्केको) । ईश्वरको कानमा नपरोस् ! मेरा छोराछोरीलाइ अहिलेसम्म दादुरा आएको छैन ।

ईश्वर जाने—=मलाइ थाहा छैन ।

ईश्वरले थुकी छोड्नु—=(देउताले रुचाए भने आफूकहाँ लैजान्छन्, अर्थात् रोजिएको मान्छे मर्छ भन्ने चलन छ, उसैले) देउताले हरेर नलानु, नमर्नु । ईश्वरले थुकी छाडे भने आर्धौं नातिको बिहा गरुँला ।

## उ

उँधो गानो जानु—=डकार आउने अजीर्ण हुनु ।

उँधो (तलतिर) बगाएर उँभो (माथितिर) खोज्न माफिकको—=ज्यादै रिसउठ्तो, उल्टो स्वभावको ।

उँधो मुण्टो पर्नु वा हुनु—=टाउको भुन्तिर खुट्टा माथितिर हुनु । कृष्णबहादुर उँधो मुण्टो भएर लडेछ ।

उँधो मुण्टो लाउनु—=शिर नीचो गर्नु । त्यो कुरा निस्कनासाथ सेतेले उँधो मुण्टो लाइहाल्यो ।

उँभो गानो जानु—=झाडा लाग्नु ।

उँभो लाग्नु—(१)=सप्रनु । (२) साधारण अर्थ ।

उकालो पर्नु—(१)=गाह्रो पर्नु । (२)साधारण अर्थ ।

उकेरा लाउनु—(१)=जरामा माटो थुप्र्याउनु । (२)=उल्काउनु ।

उकेली फाल्नु न चपाई निल्नु—दुइ काममध्ये रोज्नुपर्दा जुन काम पनि उस्तै अप्ठ्यारो लाग्दा प्रयोग हुने । जर्साहैबले मलाइ



थारो भैंसी बक्स्यो, उकेली फाल्नु न चपाई निल्नु भयो ।

उखाल [र] पखाल हुनु—=छताछुल्ल हुनु, प्रशस्त हुनु (पनेलो वस्तु) । पानी परेन परेन हिजो राती त उखाल र पखाल भयो ।

उखु बारीमा चोर पसे जस्तो—मथमण्डी गर्दा दृष्टान्त दिने । उखु बारीमा चोर पसे जस्तै गरी जर्मनहरूले पोल्याण्डमा धुंसाखान मचाए ।

उखुम गर्मी—=असह्य गर्मी ।

उचाल्नु र पछार्नु—=कहिले बढाउनु, कहिले घटाउनु । हाम्रो कजिनीका केटीहरुलाइ उचाल्ने र पछार्ने बिधनै नराम्रो बानी छ ।

उछितो बाँझो हुनु—=नाश भएर बाँझै हुनु (अक्सर सन्तान) ।

उज्यालो मुख लाउनु वा हुनु—=खुशी भएको अनुहार लाउनु वा हुनु । चङ्गा पाउनासाथ माहिलाले उज्यालो मुख लायो ।

उट्टा लाग्नु—=उडिरहनु (नकसको खेलमा) ।

उठती पुठती गर्नु—=जग्गाको तिरो मोहीहरूबाट असूल तहसील गर्नु । मेरो बिर्ताको उठती पुठती गर्ने मान्छे यही हो ।

उठले····बसले····—=जे गर्दा पनि । मैले के एउटा शिशी फुटाएथें, उठले पाजी बसले पाजी चलिरहेछ ।

उठाएर ल्याउनु—(१)=आफ्नो समर्थनको लागि अर्को (अवसर आफूभन्दा ठूलो)लाइ उभाडेर ल्याउनु । मैले भनेको चित्त नबुझी गोथेलाइ उठाएर ल्याएछ । (२)=बिउँझाएर ल्याउनु । पढ्ने वेला भयो भाइलाइ उठाएर ल्याऊ । (३)=उपर गर्नु (कूत, बाली इत्यादि) । आज अलिकति कूत उठाएर ल्याएँ ।

उठिचिल्लि लाउनु—=उठ्न लगाउनु वा बसिनसक्नु गराउनु । आजकाल हाम्रो गाउँमा चितुवाले उठिचिल्लि लाइरहेछ ।

उठी वास—=घरवार छोडाइ । जनि गर मेरो छोराको उठी वास नगराऊ ।

उठी सुख न बसी सुख—= यसो गरे पनि सुख नहुने उसो गरे पनि सुख नहुने । त्यो किताब नदिउन्ज्याल तिम्रो भाइले मलाइ उठी सुख न बसी सुख तुल्यायो ।

उठेको जाँगर पनि [नामिदेखि] मरी मरी आउनु—=ज्यादै निरुत्साह हुनु, एकदम जोश हराउनु ।

उडी जाऊँ कि बुडी जाऊँ—=कुन रीतले दुःखबाट फुत्कूँ । घरमा बसे सासूको कचकच सुन्नुपर्ने, माइत गए भाउज्यूको वचन सहनुपर्ने—मलाइ त उडी जाऊँ कि बुडी जाऊँ भइरहेछ ।

उडेको (अकासको) चरो खसाल्नु, उड्दा चराको प्वाँख गन्नु—=अति चलाक हुनु । तिमी जस्तो उडेको चरो खसाल्न हामी जान्दैनौं ।

उडेको वा उडन्ता कुरा—= हल्लै हल्लाको कुरा, फटाहा कुरा । तिमी उडेको (उडन्ता) कुरा गर्छौ, यो साँचो कुरा होइन ।

उडेर आउनु वा जानु—= ज्यादै छिटो । त्यति काम गरी उडेर आऊ ।

उति माथि (भाँती)—=एक पटक राम्ररी वा बुझाएर । उति माथि भन्दैछु, झन् तातो पानीमा हात हाल्न जाने !

उधूम मचाउनु—=धूमधामको गडबड झिक्नु ।

उनिउँ फुल्दा ढुंगो टुसाउँदा—कहिल्यै नहुने (जस्तो) कुरालाइ प्रयोग हुने । अब मेरो बिहा त उनिउँ फुल्दा ढुङ्गो टुसाउँदा हुन्छ ।

उन्नैस बीसको फरक—= नजानिंदो फरक । नयाँ पछ्यौरा र यसमा उन्नैस बीसको मात्र फरक छ, झट्ट भन्न सकिन्न ।

उपरतली लाग्नु—=धेरै खाई झाडा बान्ताहुनु । अचाक्ली गरेर नखाऊ उपरतली लाग्ला ।

उपरमाथि थुपर-(१)=बढ्ता भएकोमा झन् थप्ने काम । कसैलाइ छँदैछैन कसैलाइ उपरमाथि थुपर ! (२)=रिसाइरहेकोमा झन् रिसाउने कुराको चुक्ली । उसै त रिसाइरहेको छ तिमी उपरमाथि थुपर लाउँछौ ।



उपियाँको छाला काटी बख्खु सिउने—=झिङ्गाको बोसो झिक्ने (कञ्जूस) ।

उमाल फुट्नु—=उम्लन थाल्नु । दालमा भरखर उमाल फुट्यो ।

उमेर खानु, टोक्नु—=वर्ष पुग्नु ।

उमेरैमा हो सबै कुरा गर्नु—उमेर खस्केपछिको विरक्ति र कमजोरीलाइ लिएर । हामी बूढाहरुलाइ त नाच हेर्ने रहर पनि छैन, उमेरैमा हो सब कुरा गर्ने ।

उम्रंदैको तीनपाते वा पातको —=केटाकेटीदेखि नै बाठो ।

उर्दीमाथिको पुर्जी—=मुखले अह्राइसकेपछिको लेखोट, ताकितामाथिको ताकिता ।

उलट पुलट हुनु—=उल्टोको सुल्टो सुल्टोको उल्टो भई फेरफार हुनु । हिजोको कुरा त उलट पुलट भएछ ।

उल्टा गरेर खुवाउनु—=मन्तरेर खुवाउनु(अक्सर पानी,दूध) ।

उल्टो आइलाग्नु—=असल कुरो गर्दा खराब आइलाग्नु ।

उल्टो उल्टो चाला गर्नु—= बिगंठ्याहा हुनु । तँ उल्टो उल्टो चाला गर्न लागिरहेछस् ।

उल्टो खुवाउनु—=कुरा लाउनेलाइ नै दोषी साबीत गर्नु ।

उल्टो पीर लाउनु—झुक्याई साथीलाइ फुस्सा कुरा हेर्न लगाएकोलाइ उसलाइ पीर लाएको भन्ने चलन छ । केही गरी झुक्याएको भन्ने थाहा पाई त्यो साथी झुक्किएन भने झुक्याउनेलाइ उल्टो पीर लाग्छ । अहँ, मास्टरजी आउनुभएको छैन, म हेर्दिनं; मलाइ पीर लाउन लागेको होला आफैलाइ उल्टो पीर लाग्यो, खुबिङ !

उल्टो र सुल्टो लोपूपा खुवाउनु —=सजाको रूपमा निधारदेखि च्यूँडोसम्म च्यूँडोदेखि निधारसम्म साहोरेर लाप्पा खुवाउनु ।

उल्ली बिल्ली खेलाउनु—= बेकूफ बनाउनु ।

उल्लुको पट्ठो—=बदमाशको घण्टा, बेकूफ ।

उही कुरा हो—=त्यसो गरे पनि हुन्छ । उसको घरमा तिमीले दाम पुऱ्याइदिए पनि

हुन्छ, उही कुरा हो ।

*उही* [एकै वा कुन] ड्याङको मूला—=उही बानी बेहोर वा प्रकारको मानिस । मलाइ के भन्छौ, तिमी पनि उही ड्याङको मूला त हौ नि ।

## ऊ

**ऊचनीच परेमा**—चिट्ठीमा सबै कुरा लेखेपछि माथि लेखेको कुरामा भूलचूक परेको छ कि भनी माफ माग्दा प्रयोग हुने । लेख्दा हरफमा ऊचनीच परेमा बालक जानी क्षमा गरिबक्सिनेछ ।

## ए

*एउटा* (एक) **आँखाले** [पनि] **देखिनसहनु**—=कत्ति पनि नरुचाउनु । त्यो घलेले जेठी स्वास्नीलाइ एउटा आँखाले देखिसहन्न ।

**एउटा नाकको प्वालभित्र हालेर अर्को प्वालबाट झिक्नु**—=भुसुना जत्ति पनि नगन्नु, नस पार्नु ।

**एउटा** (एक) **पैसा नाछराउनु**—=फुटेको पैसा……इत्यादि हेर ।

*एउटा* (एक) **बीउ आगो**—=एक फिलिङ्गो आगो ।

**एउटा हाँसको फुल फुस्यो फुस्यो**—धेरै छोराछोरीमध्ये एउटा छोराछोरी मर्दा, तर नलाग्दा, वा बदमाश हुँदा प्रयोग गरिने ।

**एउटै** *आमाबाबु* (बाबुआमा)-**को**—=उही बाबुआमाबाट जन्मेको (यससँग 'छोराछोरी' मात्र प्रयोग हुन्छ, दिदीबहिनी, दाज्यूभाइ, इत्यादि नाता प्रयोग हुँदैन) । एउटै आमाबाबुका छोराछोरीको पनि कति फरक अनुहार !

**एउटै कुरा हो**—=उही कुरा हो । आगोमा पर्नु र मर्नु, मर्नु र आगोमा पर्नु एउटै कुरा हो,—तरवार गर्धनमा परे पनि गर्धन तरवारमा परे पनि—बालकृष्ण (प्रह्लाद) ।

**एउटै पेट(भूँडी)को**—=साक्खै ।

**एउटै साँचोमा ढाले जस्तो**—=काटीकुटी उस्तै अनुहार भएको । यी दुइटीको कस्तो



अनुहार मिलेको ! एउटै साँचोमा ढाले जस्ता छन् ।

**एक एक गरी**—=एउटा एउटा पन्छाएर वा केलाएर । अब चित्त बुझ्यो ! छोडे गधे पच्चीस वर्षले, एक एक गरी फेरि उम्रे बत्तीस दन्त यी ।—बालकृष्ण (मुटुको व्यथा)। सब माल एक एक गरी खोजें त्यो बट्टा पाइनं ।

**एक एक गरी रौं गन्नु वा केलाउनु**—= रौं उखेलिने गरी लुछ्नु (गालिको बोली) ।

**एक एक थाहा हुनु**—=सबै कुरा थाहा हुनु ।

**एककाँधे बानी**—=उही एउटा मानिसले बोकेकोमा मात्र नरुने वा फुलिने (केटाकेटीकोबारे) । छिः तिम्री छोरीलाइ त एककाँधे बानी लाइछौ, मैले बोक्यो कि रुन्छे ।

**एक कान दो कान मैदान हुनु**—=एउटा मानिसले सुनेपछि अर्कोलाइ भन्यो उसले फेरि अर्कोलाइ भन्यो त्यसै गरी सबैले थाहा पाउने हुनु । त्यो कुरा मैले तिमीलाइ भनेपछि एक कान दो कान मैदान हुन्छ ।

**एक कानले सुन्नु** *एक* (**अर्को**) **कानले उडाउनु**—=सुनेका अर्ति आदेशहरु मनमा नराख्नु । मैले अस्ति भनेको कुरा संझेको छ ? एक कानले सुनिस् अर्को कानले उडाइदिइस् ।

**एक** *किसमको* (**तमासको**) **भएर आउनु**—=पहिले यसै भन्न नसकिने शारीरिक गोलमाल हुनु ।

**एक गठ हुनु वा गरेर**—=ज्यादै मेल हुनु वा गरेर ।

**एक गाँस खान र एक झुम्रो लाउन**—= प्राण धान्नेसम्मको खान र आङ ढाक्नेसम्मको लाउन । प्रभु, एक गाँस खान र एक झुम्रो लाउन मलाइ दुःख भयो ।

**एक** *गाँस*(**छाक**) **पार्नु**—(१) =एकै गाँसमा सिध्याउनु । यति जिल्फी त रामुले एकै गाँस पार्छ । (२)=सलिजैसँग जित्नु । मेरो छोरो लुरे छ तिम्रो छोराले एकै गाँस पार्छ ।

**एक** *गिलास* (**थाल, कचौरा, इत्यादि**)*पानी* (**भात, तर्कारी, इत्यादि**)—=एक गिलाँसभरी-

को पानी इत्यादि (जुन भाँडा र पदार्थमा पनि यसरी प्रयोग हुन्छ)। मैले **एक गिलाँस पानी, एक थाल भात, एक कचौरा तर्कारी, एक रिकाबी अचार** खाएँ।

**एक गुइयाँ हुनु वा गरेर**—= ज्यादै मेल हुनु वा गरेर।

**एक चुड्कीमा**—= एक छिनमा।

**एक छिन दुइ छिन**—=एक दुइ पटक तर हरेक पटक थोरै समय मात्र (एक छिन=केही बेर, थोरै समय)। **एक छिन दुइ छिन** खेल्नु भनेको बेग्लै कुरा हो तिमी दिनभर खेल्छौ।

**एक जीउ हुनु, पार्नु**—(१)= मिसिएर वा टाँसिएर एउटै हुनु, पार्नु।....तातेको तातेकै सित जोरी फलाम **एकजिउ पार्न** ठीक हुन्छ।—श्री केसर (विक्रमो-र्वशी)। हिजो सरेस लाएर जोरेको थिएँ, फूलदानको खुट्टो **एक जीउ** भएर जमेछ। (२)=ज्यादै माया बसेको हुनु। सानी र माहिला **एक जीउ एक प्राण** भएर बसेका छन्। (३)= एउटै उद्देश्य एउटै धारणा लिनु। ठस्सा भडकतिर नलागी **एक जीउ** भई सहयोगमा लाग्यौ भने × × हाम्रो यो प्यारो जन्म-भूमि नेपाल झन् उचो पदमा चढ्न जानेछ × × × ।—श्री ३ जुद्ध (भूकम्प भाषण)।

**एक ज्यान वा प्राण हुनु**—= एक जीउ हुनु (२ र ३ हेर)।

**एक झर पानी**—=केही बेर दर्कैर परी थामिएको एक पटकको पानी। **एक झर पानी** त यही रूखले पनि ओल्छ।

**एक टस्को ढोग**—=बोलचाल वा आदर सत्कारबाहेकको ठाडो ढोग। मलाइ **एक टस्को ढोग** त छैन, अरू कुरा त परै रहोस्।

**एक ट्याप टीको**—=टीकाको एक थोप्लो। तिम्रो निधारमा त **एक ट्याप टीको** पनि छैन।

**एक त**—=उसै त (स्वाभाविक रूपले)। **एक त** कालो उसमाथि अङार घसेको।

**एक थापूलामा दुइ नाम्लो लाउनु**—दुइटी स्वास्नी ल्याउँदा भन्ने बोली ('एक काममाथि अर्को थप काम लिनु'को अर्थमा पनि)।



**एक दुइ तीन**—वाचाबन्धनमा अथवा निश्चय जताउँदा प्रयोग हुने। अब म तेरो घरमा **एक दुइ तीन** आउँदिनँ।

**एक दो तीन**—धेरै जनाले केही कुरा एक्कै चोटि शुरू गर्दाको संकेत वा लिलाम खतम गर्दा भन्ने बोली। मैले **एक दो तीन** भनेपछि मात्र तिमीहरु दगुर्नु।

**एक नचल्नु**—=केही नलाग्नु। त्यसलाइ धेरै पटक संझाएँ मेरो त **एक चलेन**।

**एक नम्बरको हुनु**—=ज्यादा। शूरोमा **एक नम्बर** ठहरिएको रने अहिले भुल्का कराउँदा पनि झस्क्यो।—ग्रन्थकार (कथा कुसुम)।

**एक पेट (माना) खान लाउन**—=पेटभरी खान र साधारण लुगा लाउन। छोरीलाइ **एक पेट खान लाउन** दुःख नभए हुन्छ।

**एक पेट हुनु**—=हितचित मिले-को हुनु। पार्वती र सरस्वतीको **एक पेट** छ।

**एक बातमा**—(१)=भन्नासाथ, एक पटक भन्दैखेरि। हरिको मण्डली चङ्गा मागेको बिचराले **एक बातमा** दियो। (२)=एक छिनमा। **एक बातमा** पर्खाल नाघेर घोडा चढी कुलेलम ठोक्यो।

**एक बारको चोला (जुनी)मा**—=यस मनुष्यजीवनमा (८४ लाख जुनी लिएपछि मात्र मनुष्यचोला पाइन्छ भन्ने विश्वासको आधारमा)। **एक बारको चोलामा** पनि भने जस्तो टप लाउन पाइनँ।

**एक मन[ले] त**—=कहिले विचार गर्दा। **एक मन त** यी छोराछोरीलाइ चटक्क छोडेर जाऊँ जस्तो लाग्छ।

**एक माना**—=(साँझ सबेरको आहाराको रूपमा) खाने सर्जाम। हर्खेको **एक मानाको** पूरा बन्दोबस्त छ। केही नभए उहीं गएर कुटो कोदाली गरेर पनि **एक माना** पुगिहाल्छ।—रुद्रराज (चप्पाकाजी)।

**एक माना खान र लाउन**—=एक पेट खान....इत्यादि हेर।

**एक मुख हुनु वा गरेर**—= एउटै कुरा बोल्ने हुनु वा बोलेर। रावण् फर्किगयो ति राक्षसिहरू

(गल्तुपर्ने चीज) कोचो वा साह्रो रहनु (पकाउँदा प्रयोग हुने)। एक घण्टा पकाइसकें यो बँदेलको मासुले ऐया पनि भनेको छैन।

**ऐया पनि भन्न नपाउनु**—= भुतुक्क मर्नु। मेरा छर्राले छातीमा भेटेछ, यो भँगेराले ऐया पनि भन्न पाएन।

**ऐया बाबा**—=प्यारो गर्दा-बाहेक 'बाबा' यस्तै वाक्यांशमा रहिरहेको छ, नत्र 'बाबा सदरिया' बोलीमा प्रयोग हुँदैन।

**ऐरेलु खाए जस्तो मुख लाउनु**—= ज्यादै तीतो वस्तु खाँदा बिग्रेको मुख जस्तो अनुहार लाउनु। सन्चो छैन भने छन भन्नू, के ऐरेलु खाए जस्तो मुख लाएर बसिरहेको?

**ऐरो खेदो गर्नु**—=अति दुःख दिनु।

## ओ

**ओइरो हाल्नु**—=खानु (हेला-को बोली)।

**ओकल दोकल**—=खेल्नेहरूले दुवै हात भुइँमा राखी एक जना-ले चाहिं एक हात त्यसै गरी अर्को हातको मुड्कीले बिस्तारै बिस्तारै क्रमैसंग घुमाएर ती हातहरूमा हान्ने खेल। त्यसरी हान्दा यो भन्छन्:—ओकल दोकल कौने मरु थाला नली घोडा चढी पाकल पुकल दर्शन जोगी रायो रङ्ग राजा।

**ओखति हुन्छ भने पनि नहुनु**—छैन भन्ने कुरालाई जोड दिंदा प्रयोग हुने।

**ओछ्यान लाउनु**—=ओछ्यान पल्टाएर सुत्नालाइ ठीक पार्नु। ओछ्यान लाउनु कता छ कता सुत्नालाइ हतपत?

**ओठ टोक्नु**—(१)रिस, रुवाइ, हाँसो रोक्नालाइ। हो, उसको बा रोएन तर ओठ टोकेको देखेनौ? (२)=गंभीर विचारमा पर्नु। के के न भनुँला भनेर गएको ता ओठ टोकेर बसेका रहेछन्। (३) साधारण अर्थ। कति ओठ टोँकि-रहेको? त्यो छाला त कैंचीले पो काट्नुपर्छ।

**ओठ निचोरे दूध आउनु**—=



दूध खाँदैको बालख अर्थात् साह्रै केटाकेटी हुनु। तल्लो त्यो बक्बके ओठ निचोरे दूध आउँछ, जुँगा बटार्छ हावाको माथिल्लो ओठमा उही।—बालकृष्ण (प्रह्लाद)। ओठ निचोरे दूध आउँछ, यस्ता केटाकेटी हामीसंग कुरा गर्ने!

**ओठ मुख सुक्नु**—(१)=त्रास वा दिक्कले भरङ्ग हुनु। परदेशमा पोइ बिरामी भएको सुन्दा त ठूलीको ओठ मुख सुक्यो। (२)=भोकले आकुल हुनु। उ त बिहानैदेखि आएर ओठ मुख सुकाएर बसिरहेछ।

**ओठ लेप्ऱ्याउनु**—=तल्लो ओठ फर्काउनु। यो भावभङ्गीले तलका भाव जताउँछन्:—(१) खुशी लागेको कुरामा नकली अप्रसन्नता वा असन्तोष, (२) दिंदैन भन्ने, (३) थाहा छैन भन्ने, (४)जोरीपारीले आफूभन्दा बढ्ता लाए खाएकोमा डाहा लुकाउने नकली खिसी, (५) चिन्हेको मानिसले कक्षा नाघी लाए खाए-कोमा खिसी। छोरो पहिलो भएको सुन्दा आमा चाहिंले, मैले रानीसाहेबबाट कति बकसपात मिल्छ भनेर सोद्धा कृष्णमायाले, मास्टर आज आउँछ आउँदैन भनी सोद्धा एउटी लडकीले, बहिनीले हीराको नयाँ फूल लाएर आएकी थिईं भन्ने सुन्दा दिदी चाहिंले, अहिलेसम्म मुन्द्री झुण्ड्याउन नसक्ने घर्तिनीले बन्दी लाएर आएको देख्दा ठूलीले ओठ लेप्ऱ्याईं।

**ओठे जवाब दिनु वा लाउनु**—(१)=अर्काले भनेको कुराको असल खराब परिणामको विचार नराखी उसलाइ नाजवाब पार्ने ठाडो जवाबै मात्र दिनु। बाबु बाजेको स्थिति नाघ्न हुँदैन भन्दा 'उसो भए हामी पनि उनीहरु जस्तै असभ्य हुनुपर्थ्यो' भनी त्यसले मलाइ ओठे जवाब दियो। (२)=बेअदबीसाथ जवाब दिनु। मालिकले भनेको कुरामा ओठे जवाब दिने कस्तो सौर नभएको!

**ओह्लालो लागेको**—(१)= खस्केको, अवस्था बिग्रेको। ओह्लालो लागेको देखेर तिमी पनि मलाइ हेप्न लाग्यौ? (२) साधारण अर्थ।

# औ

**औंला, औंली**—औंलालाइ हामीले स्त्रीलिङ्ग मानेका छौं—बूढी औंला, माझी औंला, साहिंली औंला, कान्छी औंला। औंलाको ठाउँमा औंली पनि प्रयोग गर्छन्, उसैले 'चोर औंली' भन्ने गरेकोले 'चोर' पनि स्त्रीलिङ्गकै (बोलचालको) विशेषण हो भन्ने देखिन्छ (चोर औंला हेर)।

**औंलाको इशारामा वा तालमा नचाउनु**—=पूरा काबूमा ल्याउनु। आजकल रामु श्यामुको **औंलाको इशारामा नाच्छ**।

**औंला ठड्याउनु**—=थाहा पाउलास् वा पखेस् भन्नु। त्यसले औंला ठड्याउँदैमा म डराउँछु र!

**औंला पड्काउनु**—=औंलाको आँखुला भाँचेर वा तानेर आवाज झिक्नु (यसो गर्दा धेरै मानिसले संचो मान्छन्)। माहिली कजिनीको **औंला पनि पड्काइदिनुपर्छ**।

**औंला भाँच्नु**—(१)=दिन गन्नु। पति आउँछन् भनेर **औंला भाँच्तैमा** सेतीका महीनौं दिन बिते। (२)=हिसाब गर्नु। अर्काको हातमा परेको धन **औंला भाँच्नुसम्म** मात्र हुन्छ।....भनेर पनि ती सुधारको गणना गर्दा एउटा **औंला भाँचे** हुन्छ।—ग्रन्थकार (कथा कुसुम)। (३)=गन्ति गर्दा अरूलाइ प्रभाव पार्नालाइ औंला दोब्र्याउँदै जानु। छोरीको बिहेको कुरा उठायो कि **औंला भाँची भाँची** यो छैन उ छैन भन्ने गन्थन मात्र झिक्छौ। (४)=लेखोजोहो गर्नु, खरी घोट्नु। लिने कुरामा त **औंला भाँची भाँची** लिन्छौ, दिने कुरामा खै ? (५) साधारण अर्थ। पंजा खेल्दा त्यसले मेरो **औंला भाँचिदियो**।

**औंसीको चन्द्रमा जस्तो**—अँध्यारो मुख लाएकोमा दृष्टान्त। किन **औंसीको चन्द्रमा** जस्तो अंध्यारो मुख लाउँछौ ?

**औंसीको जून**—असंभव कुरालाइ दृष्टान्त दिंदा प्रयोग हुने।



**औंसी [र] पूर्णे लाग्नु**—(१)=एक पक्ष हाँसी खुशीले एक पक्ष ठुस्स परेर हिंड्नु। मैले केही भनेको छैन, किन रिसाएको ? —छिः **औंसी पूर्णे लागेको** मान्छे! (२)=छँटाउनु। पद्मिनीलाइ **औंसी र पूर्णे** लाग्छ भन्छन्।

**औसानी लाग्नु**—=गर्भ रहेको बेलामा एकदम रुचि बन्द हुनु वा कुनै खास वस्तुमा अमन हुनु (गर्भवतीको पोइलाइ पनि यो लाग्छ भन्ने धेरै जनाको विश्वास छ)। सान्छोराको पालोमा तिम्री आमालाइ रायोको सागमा **औसानी लागेको थियो**।

# क

**कङ्गालीको घरमा चोर पसे जस्तो**—परिश्रमसाथ गएकोमा केही हातलागी नहुँदा प्रयोग हुने बोली।

**कङ्गालीको भोटो जस्तो**—मायाको चीजलाइ दृष्टान्त दिंदा।

**कचहरी लाउनु, जमाउनु, वा जोर्नु**—=धेरै जना जम्मा भएर कुराकानी गर्नु। अहिलेदेखि हो मालिकले खोजेको! यिनीहरु त यहाँ पो **कचहरी जोरेर** बसिरहेका रहेछन्।

**कश्ट सेक्नु**—=कडा भई वेदना दिनु। सेक्यो शिशिरले साह्रै लोकको दुइ **कश्ट**। —लेखनाथ (ऋतुविचार)।

**कटाक्ष(कटाछे) पर्नु**—=रिसारिस पर्नु।

**कडा नजर राख्नु**—=ज्यादै चेवा चर्चा गर्नु, पूरा ध्यान दिएर खबरदारी गर्नु। त्यसमाथि **कडा नजर राख**, त्यो लामो हात गर्छ रे।

**कण्ठको प्राण भइरहनु**—=ज्यादै प्यारो हुनु। आजकल रामहरि उसको **कण्ठको प्राण भइरहेछ**।

**कता हो कता [हो]**—(१)=धेरै फरक, दाँज्नै नहुनेसम्मको। पर्वत भनेको पर्वतै हो।........ **कता हो कता हो**, हावा पानी नै असल....।—बालकृष्ण (कथा कुसुम)। (२) साधारण अर्थ। मैले तिम्रो छोरीको कोठा भेट्टा-

उनै सकिन, कता हो कता !

**कति दिनको चुरीफुरी**—=धेरै दिन नटिक्ने फूर्ति। यो कति दिनको चुरीफुरी हो र ?

**कति लामो आयु**—कुरा कुरामा जसको नाउँ उच्चारण भएको छ त्यही मान्छे टुप्लुक्क आइपुग्दा भन्ने बोली ; किनभने त्यसरी आइपुग्ने मानिसको आयु लामो हुन्छ भन्ने बूढीरूढी छ ।

**कथा हाल्नु**—=कथा सुनाउनु।

**कथा हुनु**—=(१) छेपाराको उखान हुनु। पाटन जाउँला भनेको त कथा नै भइरहेछ। (२)=नपत्याइने वा काल्पनिक कुरो हुनु (पुराना कुराको बारे)। अघिको कुरा त कथा भयो। —बालकृष्ण (मुटुको व्यथा)। (३)=कथा सुनाउने काम हुनु। अहिले हाम्रो घरमा स्वस्थानीको कथा भइरहेछ।

**कदम जानु**—=(घोडाको बारे) कदममा दगुर्नु। तिम्रो घोडा कदम जान्छ ?

**कनी कुथी**—=बल्लतल्ल। कनि-कुथिकन लेखें गन्थनै मात्र खाली।—लेखनाथ (ऋतु-विचार)।

**कन्य केटो, कन्या केटी**—=बिहा नभएको चोखो कुमार, ठिटी ('कन्ने केटो, कन्ने केटी' पनि भन्ने चलन छ। 'कन्य' हामीले जबर्जस्ती संग बनाएको 'कन्या'को पुल्लिंग रूप हो, यस वाक्यांशमा बाहेक अन्यत्र भेटिंदैन)।

**कन्सिरीको रौँ उखेल्नु**—=सँजाको रूपमा कानको जर्बुटी-नेरको रौं तान्नु।

**कन्सिरीको रौँ तान्नु वा जरक्क जर्कनु**—=रिसले रनक्क हुनु। कन्सिरीको रौँ जरक्क जर्कने कुरा गर्छ।

**कन्सुत्लो लाउनु**—=चेवा चर्चा गरेर कुरा सुनिहिंड्नु। तिम्रो कन्सुत्लो लाउने बानी सारै नराम्रो छ।

**कपाल कन्याउनु**-(१)=गर्धन-नेरको कपाल कन्याएर लाज वा धक जाहेर गर्नु। कत्तिको भयो, अस्ति जेठा बाले श्लोकको अर्थ सोध्दा कपाल कन्याउन पर्‍यो कि ? (२)=दीनता प्रकट गर्नु वा माग्नु। दुइटा रुपियाँको निम्ति को त्यससँग कपाल कन्याउँछ ! (३)=साधारण अर्थमा पनि।



**कपाल खानु**-=मगजलाइ परि-श्रम पार्नु। यो कामले मेरो कपाल खाइसक्यो।

**कपाल चढ्नु**—=कपाल दुख्नु (साधारण अर्थ)।

**कपाल दुखाउनु**—=कष्ट उठा-उनु। त्यो काम म गर्नें भएँ, तिमीले कपाल दुखाउनु-परेन।

**कपाल दुख्नु**—=झिजो लाग्नु। दाज्यूले हुन्छ भन्नुभएपछि भाउ-ज्यूको के कपाल दुख्यो ? (साधारण अर्थमा पनि)।

**कपाल फोर्नु**—=ज्यादै कोशिश गर्नु। कपालै फोरे पनि तिमी यस पाला पास हुँदैनौ। (साधारण अर्थमा पनि)।

**कपाल फ्याँक्नु**—=कपाल खौरनु (खासगरी जुठोमा)।

**कपाल बनाउनु**—(१)=केश खौरनु वा छाँट्नु। नाऊ नआइ-दिएर कपाल बनाउनै पाएको छैन। (२)=कपाल कोर्नु, घुँग्रुन्याउनु (अक्सर पुरुषको)। माथि फर्काएर कपाल बनाए-पछि त उ निकै राम्रो देखियो।

**कपाल भारी वा गरुंगो हुनु**—=कपाल दुख्नुभन्दा अगाडिको बेचैनी हुनु।

**कपाल हालाहाल गर्नु**—=गाल परेकोमा परस्परलाइ दोष लाउनु। त्यति जाबो गिलास फुटेकोमा किन कपाल हाला-हाल गर्नुपर्‍यो, मैले फुटाएँ भने भइगो नि !

**कम सें कम**—=हद्द थोरै, खास गरेर। यो घरबुनालाइ कम सें कम गजको तीन सुका त पर्ला।

**कमान बोल्नु**—=कबायदमा फौजलाइ हाँक्नु।

**कमानी (खु)स्केको**—=हावा बिग्रेको (हेर)।

**कमिनीको कंठश्री**—पाहुना आ-उने हुनाले एउटी बाहुनीले क-मिनीसँग उसको कण्ठश्री बाल-गिरी मागी लाएकी रहिछ। पाहुनाको अगाडि त्यस बाहुनीले *भात* (ठाडो घाँटी लगाई पानी) खाँदा कमिनीले भनिछ, 'बज्यै ! अलि सानो *गाँस* (घुट्का) गरेर

खानुहोस्, नत्र मेरो कण्ठश्री छिन्ला।' यसबाट नाक रहोस् भनी गर्दा उल्टो लाजैमर्नु पार्ने कुरालाइ भन्ने बोली।

**कमिलाले चिले जस्तो**—चटपटे वा चुलबुले मानिसलाइ दृष्टान्त दिने बोली।

**कंप छुट्नु**—=काम्न थाल्नु। त्यसको अनुहार देख्तैमा मलाइ कम्प छुट्छ।

**कम्मर कस्नु**—=दृढ संकल्प गर्नु। साबिकको भन्दा २, ३ दोबर महंगै भए पनि सबैले आफ्नो घर बनाउन कम्मर कसे।–श्री ब्रह्म(महाभूकम्प)।

**कम्मर खोल्नु**—=आङ जाँच्नु। तिनीहरु निस्कँदा कम्मर खोलेर छोडिदिएस्।

**कम्मर छिनेको वा छाँटिएको**—=छातीको फाँदभन्दा कम्मरको फाँद धेरै सानो भएको।

**कम्मर भाँच्नु**—(१)=नाचमा वा ढाँचा देखाउँदा कम्मर भाँच्नु। चन्द्रासखीले अलि कम्मर भाँच्न पुगेन। (२) साधारण अर्थ। कुश्ती खेल्दा त्यसरी पक्र्यौ भने उसको कम्मर भाँचिन बेर छैन।

**कम्मर समात्नु**–(१)=तिराउनाको लागि पटुका वा कम्मरनेरको लुगा पक्रेर नछोड्नु, धरपकड गर्नु। हाकुको पैसा तिमीले दिएका छैनौ, कुन दिन तिम्रो कम्मर समात्छ। (२)=पाठेघरमा केही दर्द हुनु। मेरो कम्मर समात्यो भरे त नछुने हुन्छु कि क्या!

**करङ चिलाउनु**—=पिटाइ माग्न खोज्नु। त्यसको करङ चिलाएछ क्यारे, पर्खाल नचढ् भन्दा भन्दै चढिछोड्यो।

**करङ दोब्र्याउनु वा भाँच्नु**—=बेसरी चुट्नु। धेरै जोरी नखोज्, करङ दोब्र्याइदिउँला!

**करनी हान्नु**—=जानी जानी गरेको होइन भन्ने देखाई मड्का पार्नु। थाहा थिएन भन्ने निहुँ पारी हिजो राती दले उल्लुले पालो नदिई करनी हान्यो; घरमा बिरामी थियो, के गर्नु, जानै पाइएन।

**करले गुहु आउँछ?**—प्रकृतिद्वारा हुने कुरालाइ कर गरेर हुँदैन भन्ने दर्शाउँदा प्रयोग हुने।



**कर शान्तिले**—=खुशीराजीले होइन कर परेर मात्र। बाको वचन लङ्घन गर्न भएन, करै शान्तिले मासु खाइयो।

**कराँसाको भूत**—=सँधै पिर्न आइरहने मान्छे। गरीबलाई पल्काए कराँसाको भूत बन्ने डर हुन्छ।

**करांसो कुर्नु वा ढुकनु**—=बदमाशी गर्ने इरादाले घरका मान्छे को कहाँ के गर्न लागेका छन् भनी झ्याल वा छिद्रबाहिरबाट च्याइरहनु।

**कराहोबाट भुंग्रोमा पर्नु**—=एउटा कष्ट छल्न खोज्दा झन् ठूलो कष्ट आइलाग्नु। गुरुको कान जर्काइबाट बच्न घर आएथें, बाले बेसरी खाँद्नु भयो—कराहोबाट भुंग्रामा परें।

**कर्कलाको पातको पानी झैं**—जिन्दगीको अस्थिरतालाइ दृष्टान्त दिंदा।

**कर्कलाको माछा**—=पिंधेको मास लिप्साएर बेही पकाएको कर्कलाको गाभा।

**कर्कलो बारी फाँड्नु**—=बिजाइँ विद्युत् गर्नु। मलाइ किन यसरी खेदो गरेको होला, मैले कसैको कर्कलो बारी फाँड्न गएको छैन।

**कर्जा उठाउनु**=—सापटी गएको असूल गर्नु। म हिजो कर्जा उठाउन पाटन गएको थिएँ।

**कर्जा खानु**—=रिन लिएर पचा पार्नु। अर्काको कर्जा खाएपछि नभनी छोड्छ त?

**कर्मको खोटो**—=अभागी। तिम्रो पोइ कर्मको खोटो रहेछ, के गर्छ्यौं!

**कर्म फुट्नु**—=अभागी हुनु। रानीसाहेब स्वर्ग हुँदा त उसको कर्मै फुट्यो।

**कर्मले ठगेको**—=अभागी। यस्तो कर्मले ठगेको मानिसलाइ मास्टर राखिदिएर कैले पढ्थ्यो!

**कल नपर्नु**—=मन नपर्नु। त्यो मानिस मलाइ कत्ति कल पर्दैन।

**कलम घुमाउनु**—=एउटा कुरालाइ अर्को कुरा पारी लेख्नु, जालसाजी कुरा लेख्नु। त्यो बिचारी खूब कलम घुमाउन जान्द-

छ रे।

**कलम चलाउनु**—=लेख्न जान्नु। कलम चलाउन सक्ने मानिसलाइ त के गाह्रो छ र?

**कलम धस्काउनु**—=छिटो छिटो लेख्नु। तिमीले त जाँचमा खूब कलम धस्काइरहेको देखेथें, धेरै लेख्यौ होला।

**कलमी काट्नु**—=टुप्पा छाँटेर काट्नु (अक्सर कपाल र बोट)। यो जोरन्ती काँढा कलमी नकाटेको धेरै भयो। *कलमी काटेको कपालमा चमेलीको तेल।*

**कलमी सार्नु, झिक्नु, वा बाँध्नु**—=साटा बाँध्नु। यो भोकेको कलमी सार्नुपर्‍यो।

**कलिका केटाकेटी**—=बाठा वा माया दया नभएका केटाकेटीलाइ प्रयोग हुने बोली (कलिकै बूढाले प्रयोग गर्ने)। कलिका केटाकेटी हामीभन्दा जान्ने छन्।

**कलेजा छिया छिया हुनु**—=साह्रै अफसोस वा दया लाग्नु। बिचाराको दुःख देखेर मेरो कलेजा छिया छिया भयो।

**कलेजा ठण्डा हुनु**—=शान्ति हुनु, संन्तोष हुनु। म भुटभुटिइरहेको थिएँ तिम्रो चिट्ठी पाएपछि कलेजा ठण्ढा भयो।

**कलेजा तर हुनु**—=आँत रसिलो हुनु। यो शर्वतले मेरो कलेजा तर भयो।

**कलेटी परेको**—=कक्रक्क परी कालो कालोसमेत भई सुकेको (यो ओंठको बारेमा मात्र प्रयोग हुन्छ)।

**कलेवर फेर्नु**—(१)=चोला बदल्नु। (२)=सुकिलो वा राम्रो लुगा लाउनु। आज त घलेले पनि कलेवर फेरेर आएछ ए!

**कल्स्यौली सिंगारे जस्तो**—=नखुल्ने गरी उत्ताउलो सिंगार पारेकोमा दृष्टान्त दिंदा प्रयोग हुने। छ्याकटीका पोइले स्वास्नीलाइ कल्स्यौली सिंगारे जस्तो सिंगारेछ।

**कष्ट उठाउनु**—=तकलीफ गर्नु। मेरो घरसम्म कष्ट उठाउनु होला कि?

**कसाईको अगाडि राँगो रोए जस्तो**—निठुरको अगाडि रुनु कराउनुको निस्सारतालाइ दृष्टान्त दिंदा।



**कसाई जस्तो**—रहम नभएको मान्छेलाइ दृष्टान्त दिंदा।

**कसार बटार्नु**—=खट्टेको पीठोमा तताएको खुदो हाली माडेर डल्ला पार्नु (विवाह व्रतबन्धको निमित्त)।

**कसैको लकडी न झकडी वा लक्का न धक्का वा लक्की न झक्की**—=कसैले यसो उसो भन्ला भन्ने नभएको निस्फिक्री। दाज्यूसँग छुट्टिएदेखि हामीलाइ आनन्द छ—कसैको लक्की न झक्की।

**कसैले तपाईं भनोस् [कि] नभनोस् आफै मपाइँ हुने**—=अरूले मान नगरे तापनि आफै मान खोज्ने। साँहिला कसैले तपाईं भनोस् नभनोस् आफै मपाइँ हुन्छ भन्दा तिमीले पत्याएनौ, हिजो जेठा मामाकहाँ सरासर आएर 'मलाइ मेच ल्याइदे' भन्यो।

**कसो भएर**—=के ठानेर। साँहिला दाइ त आउनु हुँदैनथ्यो आज कसो भएर आउनुभएछ।

**कहतारो थापेर हिंड्नु**—=भीखमगन्ते हुनु। तिम्रो सराप सुनेर बस्नु चाहिं ता कहतारो थापेर हिंड्नु निको।

**कहर काट्नु**—=दुःख खेप्नु। यस पाला त कहर काटेर पनि एउटा घल्चा जोर्छु।

**कहाँको (बद्माश, पाजी, इत्यादि)**—=पहिले नदेखेको, उग्र (गालिलाइ 'कहाँ'ले जोड दिन्छ)।

**कहाँ पाइ**—=कहाँ पाइएला जस्तो छ, ज्यादा चाह छ। तिम्रो छोरा सुपारी खान्छ?—कहाँ पाइ।

**कहिले अकास कहिले पताल पुर्‍याउनु वा कहिले उचाल्नु कहिले पछार्नु**—=कहिले सहाउनु कहिले हियाउनु।

**कहिले केही कहिले केही**—=एउटै किसमको वा एकैनासको नभएको। तिम्रो कुराको ठेगानै छैन, कहिले केही कहिले केही भन्छौ।

**काँक्राको चिरा जस्तो**—सल्याकसुलुक परेको गोरो राम्रो मान्छेलाई दृष्टान्त दिने बोली ।

**काँक्री बीयाँ**—=काँक्राको बीयाँ। नेपाली भाषामा जड वस्तुलाइ स्त्रीलिंग आरोप गरेको बहुतै कम देखिन्छ, त्यसरी प्रयोग हुनेमध्येको यो एउटा हो ।

**काँचै निल्नु, खानु**—(१)=धेरैको फरक गरी वा सहजैसंग जित्नु । तैंले **बुद्धिचालमा त इन्द्रेलाइ काँचै निलिस्** । (२) साधारण अर्थ । फुल **काँचै** निले खूब ताकत हुन्छ भन्छन् ।

**काँचो काफल पाँच पाथो, पाको काफल पाँच पाथी**—छिटो र शुद्ध उच्चारण जाँच्ने वाक्यांश ।

**काँचो खरमा आगो लाउला जस्तो**—नरिसाएको मानिसलाइ पनि नभएका कुरा झोसी झोसी रिस उठाउन खोज्ने मान्छेलाइ भन्ने बोली ।

**काँचो पल्टनु**—( १ )=तरकीब नपुगेर पाकेको भात फेरि काँचो हुनु । भुजा उस्तो छड्केको छैन राम्ररी भर्स्याऊ, नत्र **काँचो पल्टला** । (२)=बोक्सीको करामतले पाकेको माल फेरि काँचै हुनु (यस्तो हुन्छ भन्ने अक्सर आइमाईको पत्यार छ) । (३)=खान लागेकोमा गाल परी खाएको नखायै जस्तो हुनु । भ्याउँछु भनेर खाएको बीचैमा काम परेर—के भन्नु !—**काँच्चै पल्ट्यो** ।

**काँचो पात**—=सुर्ती ।

**काँढा उठ्नु**—(१)=(पानीको बारे) भाँडाको पानी रहेको पींध र घेरामा मिहीन दाना दाना भई फोका उठ्नु । (२)=चोसो चोसो उठ्नु । यो काँक्रोमा कति **थोरै काँढा उठेको** । (३)=मान्छेको छाला खस्रो हुनु । **काँढा उठेको** जीउ पछि मोटाउँछ रे ।

**काँढा उम्रनु**—(१)=(पानीको बारे) काँढा उठ्नु । (२)=(मानिसको छालाको बारे) रौंको जरा फुली दर्दराउँदो हुनु । ····सिरिङ्ग भएर **काँडा समेत उम्रदा** मानो कामदेवले पालुवा चडाए झैं भयो ।—श्री केसर (विक्रमोर्वशी) । जाडोले मेरो आङमा कस्तो काँढा उम्रेको, हेर ! (३)=चोसो चोसो उठ्नु । पाक लाएर **काँढा उमारेको** मसला तिमीलाई कस्तो लाग्छ ? (४)=साधारण अर्थ । यो गुलाफको बोटमा असाध्य **काँढा उम्रन्छ** ।



**काँढा मार्नु**—( १ )=(पानीको बारे) खालि चिसोपन मात्रजाने गरेर तताउनु । पानी तातो पार्नु-पर्दैन **काँढा मारेर** मात्र ले । (२)=(सिस्नु इत्यादिको बारे) काँढा झार्नु वा भाँच्नु । त्यो सिस्नुको **काँढा मारेको** रहेछ, मलाइ पोल्दै पोलेन ।

**काँढै झिके जस्तो हुनु**—=चट्टै निको हुनु । मेरो कपाल ज्यादै दुखिरहेको थियो, त्यो ओखति एक मात्रा खाने साथ **काँढै झिके जस्तो भयो** ।

**काँढो पंछिनु**—=अप्ठ्यारो काम वा मान्छे हट्नु । त्यो काम दुर्गाप्रसादले गर्न भइछन् तिम्रो त **काँढै पन्छियो** ।

**काँध चढाउनु, हाल्नु**—=पूठ दिनु । कांछाले **काँध चढाए**-पछि त्यो किन नमात्तियोस् ।

**काँध थाप्नु**—(१)=अर्कोलाइ बचाएर त्यसको गाल आफूउपर लिनु । इसले **काँध नथापि-दिएको** भए तिमी फेला पर्ने थियौ । (२)=अर्कोको झगडामा अघि सरेर बोल्नु । अर्कोको कुरामा तँलाइ कसले **काँध थापेर बोल्नू** भन्यो ?

**काँधी हान्नु वा मार्नु**—=मालिकलाइ खसाल्नालाइ उफ्रनु (घोडाको बारे) । यो घोडा **काँधी हान्छ** रे, होश गरे ।

**काँशी**—संस्कृतमा यस शब्दको अनुस्वार छैन तापनि हामी यसलाइ अनुस्वार दिएर उच्चारण गर्छौं, तर लेख्ता अनुस्वार राख्नु ठीक छैन । चेत बाबा काँशी (पनि हेर) ।

**काइतेको सवाल जस्तो**—दोहोरो अर्थ लाग्ने कुरालाइ दृष्टान्त दिंदा प्रयोग हुने ।

**काउबूढी आयो भाँडाकुँडा लुकायो**—केटाकेटीलाइ कुत्कुती लाउन टाढाबाट सबै औंलाले कुरी कुरी गर्दै हात वरवर ल्याँदै भन्ने बोली ।····पट्ट्ट चाहिं **'काउबूढी आयो भाँडाकुँडा**

लुकायो' भनेर नानीको पेटमा कुत्कुती लाएर खेलाइरहेकी ।—बालकृष्ण (कथा कुसुम) ।

**काउसो लाग्नु**—काउसोको चोप लाग्दा खूब चिल्चिलाउँछ, उसैले सकसके मानिसलाइ 'काउसो लागेको' भन्ने चलन छ ।

**काखको बालो**—=साह्रै सानो बालख । 'बालो' यो अर्थमा अन्यत्र उस्तो प्रयोग हुँदैन ।

**काखभरी स्वास्नी सुमर्नु**—=बिहे गर्नु । काखभरी स्वास्नी सुमर्ने बेला भइसक्यो अझ केटाकेटी बुद्धि गएको छैन ।

**काखी च्यापनु**—=ढाकछोप गर्नु । दुवै जनाले बिराएकोमा एउटालाइ काखी च्यापेर बोल्नु ठीक छैन ।

**काखी बजाउनु**—=खुच्चिङ गर्नु, ईख परेको मानिसको हानि देख्दा खुशी जाहेर गर्नु । यो कुरा सुने भने मेरा जोरी-पारीले काखी बजाउनेछन् ।

**कागको फुल चोर्नु**—=ज्यादै चलाक हुनु ।

**कागको बथानमा बकुल्लो बसे जस्तो**—काला मान्छेको बीचमा गोरो मान्छे बस्ता दृष्टान्त दिने ।

**कागत गर्नु**—=ऐनको रीत पुऱ्याएर लिखत गर्नु (तमसुक, कबूलियत, इत्यादि लेख्नु) । **कागत गराएर** मात्र त्यसलाइ दाम दिएस् ।

**कागलाइ घाँड़ो लाइदिएको जस्तो**—काममा खूब हाइँफाइँ गरी सबैतिर घुम्ने मानिसलाइ दृष्टान्त दिने ।

**कागले छेरे जस्तो**—=नराम्रो अक्षर लेखेको वा टीका लाएकोमा दृष्टान्त दिने ।

**कागले ननाघेको पानी**—=काग नउठ्तै अर्थात् झिसमिसमैं ल्याएको पानी (अढैंचा लागेको केटाकेटीको यो ओखति मानिएको छ) ।

**काछ लाग्नु**—=काछका दुइ-पट्टिका छाला दलिएर परस्परलाइ पाछ्नु ।

**काजीको सालो बसे जस्तो बस्नु**—=काम नगरी खाएर मात्र बस्नु ।

**काटीकुटी उस्तै वा दुरुस्त.... जस्तै**—=ज्यादै मिल्ने ('काटी-



कुटी' मात्र पनि प्रयोग हुन्छ) । यी दुइ जना **काटीकुटी उस्तै छन्** । नाक त **काटीकुटी** मेरै होइन ? हेर ।—बालकृष्ण (कथा कुसुम) ।

**काटी मारी सिध्याउनु**—=मनैमनले बित्यो, खराबी भयो भन्ने अनुमान गर्नु । वनबाट फर्कन ढीलो हुँदैमा तिमीले छोरालाइ **काटी मारी सि-ध्यायौ** ।

**काटेको बोको जस्तो**—=चटपटाउँदा दृष्टान्त दिने बोली । चमेलीको घाउ निचोर्दा त **काटे-को बोको जस्तो** गर्न लागी ।

**काट्नु जति परेपछि फेर्दैसम्म**—=गर्नु जति गरेपछि पूरासँग गर्नु । **काट्नु जति परेपछि फेर्दैसम्म** भनेर तिमीले त सारा दाँत उखलेछौ ए !

**कान उखेल्नु**—=सजाको रूपमा कान माथितिर तान्नु ।

**कान कराउनु**—=बाहिर केही आवाज नभईकन कानमा एक किसमको आवाज हुनु । यसो हुँदा यमराजले काल आइपुग्यो क भनी जोखेको भन्ने बूढिरूढि छ । उसैले त्यसो हुनासाथ भन्छन्:-पाथीको भात खाँदैछु, धार्नीको कोदाली उचाल्दैछु, हात खाली छैन, हात खाली छैन !

**कान काट्नु**—आफूलाइ निश्चय भएको कुरा घमण्ड गरी भन्दा कबूल गर्ने बोली । त्यो कुरा रहे-नछ भने मेरो कान काटिदेऊ ।

**कानको कीरा खानु**—=कान खानु (१ हेर) ।....झन् **कानको कीरा खाने** झ्याली, असाध्य नै हूल त्यो, देख्नु पर्दैन संझदै वाक्क आउँछ ।—बालकृष्ण (मुकुन्दइन्दिरा) ।

**कानको मयल झिक्नु**—=कान निमोठ्नु (साधारण अर्थमा पनि) ।

**कान खानु**—(१)=ठूलो आवाज-द्वारा कानै बन्द हुने पार्नु । **कान खाने** गरेर नकराऊ न । (२) साधारण अर्थ ।

**कान[मा झीरले] घोच्नु**—दोहोऱ्याएर सुनाउनु (एक पटक भनेको नसुनेको वा वास्ता न-गरेकोमा रिसाएर भन्दा प्रयोग हुने) । तिमीले यो कुरा अह्राएकै

छैनौ भन्छ, त्यसको कानमा झीरले घोचिद्यौ न।

**कान जर्काउनु, निमोठनु, वा मल्नु**—सँजाको रूपमा दुख्ने गरी कान बटार्नु।

**कान टट्टाउनु**—=आजित हुने गरी कान थाप्नु। तेरो कचकचले मेरो कान टट्टाइसक्यो।

**कान टाठो गर्नु, पार्नु**—=आवाज चाँडै नै सुन्ने चंख हुनु। दुलही बज्यैलाइ व्यथा लागेको छ रे, कान टाठो गरेर सुते।

**कान तात्नु, तातेर आउनु**—=रिसले रन्कनु, रन्का छुट्नु। तेरो कुरा सुन्दा मेरो कान तातेर आउँछ।

**कान थाप्नु**—अरूले के के भन्छन् भनी तीखो कान लाएर सुन्नु। अरूले कुरा गरेकोमा तलाईं कान थापी थापी कसले हिंड्नू भन्यो ?

**कान दिनु**—(१)=कान काट्नु (हेर)। आज एकादशी रहेनछ भने म कान दिउँला। (२)=ध्यान दिएर सुन्नु। मेरो कुरामा तिमी कानै दिन्नौ।

**कान न्यानो हुनु**—=शान्ति हुनु (कचकच गर्ने मान्छेको बोली केही कारणले सुन्न नपर्दा भन्ने बोली)। आज सासू माइत जानु भएकोले मेरो कान न्यानो भएको छ।

**कान पक्नु वा समात्नु**—(१)=आफ्नो भूल स्वीकार गर्नु। बिराएको कुरामा त कान पक्रिहाल्छु नि! (२)=चेतेर गर्दिनँ भन्ने प्रतिज्ञा गर्नु। आजदेखि कान पक्रें, म जुवा खेल्दिन। (३)=पन्छिनु। बरु पांच रुपियां तिर्न राजी छु, झगडादेखि कान पक्रन्छु। (४)=जबर्जस्ती। उसलाइ त मैले चिन्हेको छु यति कुरा त कान पक्रेर गराउँछु। (५)=सँजाको रूपमा। त्यो बदमाशको कान समात।

**कान फुक्नु**—(१)=केही कुरा सुटुक्क भन्नु, सूचना दिनु। सपनाहरूको धागो लिई जाल बुनीकन कल्पनावायुले कान फुकी राजकुमारका ज्ञानेन्द्रियहरूलाइ छोपेको हुनुपर्दछ।—बालकृष्ण (प्रह्लाद)। (२)=गुरुले मन्त्र सुनाउनु। गुरुले कान फुकिदिनु भएदेखि जहाँ



मरे पनि गति पर्छु भन्ने लागेको छ। (३)=बोक्सीले मन्तर गरी कानमा फुक्नु। हिजो मेरी छोरी मिझार्नीनेर बसेकी थिई, त्यस बोक्सीले कान फुकिदिइछ क्यारे अहिले सिल्ली भइरहिछ।

**कान फुट्नु**—(१)=कानको जाली फुट्नु (नसुनेकोमा वा एक थोकको अर्को थोक सुनेकोमा रिसाएर भन्ने)। त्यहीं भएर पनि मैले त्यसरी बोलाएको कस्तो नसुनेको, तेरो कान फुट्यो ? (२)=ध्यान दिएर सुन्नु (अह्राएको कुरामा चित्त नदिई अर्कोतिर लाग्दा रिसाएर भन्ने)। राम्रोसँग यहाँ कान फुट्नू, फेरि एक थोकको अर्को थोक भन्न जानलाइ ? (३)=सुन्नु (रिसाएर भन्ने)। एक छिन खेलेर पढ भनेको थिएँ, तेरो कान फुटेन ? (४)कुकुरको अगाडि 'बौलाहा' भन्दा त्यो कुकुर बौलाउँछ भन्ने विश्वास हुनाले केही गरी कुकुरको अगाडि सो शब्द उच्चारण भयो भने त्यसको मारन गर्नालाइ 'कान फुट्यो, कान फुट्यो !' भनी त्यस कुकुरलाइ सुनाउने चलन छ।

**कान बाह्रो हुनु**—=हत्तपत्त कान नसुन्ने हुनु। त्यन्रो आवाजले बोलाएर कहिले सुन्थ्यो, त्यसको कान त बाह्रो छ। (बाह्रो कान पनि हुन्छ)।

**कान भर्नु**—=सारा कुरा सुनाउनु (छुल्याइँ वा सूचनाको रूपमा)। अघिबाटै गएर धनवीरले मालिकको कान भरिसक्यो, तिमी त ढीलो भयौ।

**कान मल्नु**—=कान जर्काउनु (हेर)।

**कानमा कौडी झुण्ड्याउनु**—आफूलाइ निश्चय भएको कुरा घमण्ड गरी भन्दा कबूल गर्ने बोली (सँजाको रूपमा बेइज्जति गर्दा उहिले यसो गर्ने चलन थियो)। यो कुरा गर्न सकिन भने मेरो कानमा कौडी झुण्ड्याइदेऊ।

**कानमा झट्का लाग्नु वा पर्नु**—केही आवाज सुने जस्तो अस्पष्ट खयाल हुनु। भोलि

अड्डाको पजनी भन्ने कानमा झट्का लागेको थियो हो कि होइन कुन्नि ।

**कानमा तेल हाल्नु वा हालेर बस्नु**—=नीच मार्नु वा मारेर बस्नु । खन्निनी सुनेको नसुन्यै गरेर कति बेरसम्म कानमा तेल हालेर बसिरहिन् । —वालकृष्ण (कथाकुसुम) । यिनोहरू कानमा तेल हालेर बस्छन् ।—रुद्रराज (चप्पा काजी) । (साधारण अर्थमा पनि) ।

**कानमा धागो बाँध्नु**—=कानमा कौडी झुण्डयाउनु(हेर)।

**कानमा बतासै नलाउनु**—=टेर पुच्छर नलाएर कुरै नसुनिदिनु । मैले वरपर देखाएर तेरो दाइलाइ कति संझाएँ, कानमा बतासै लाउँदैन ।

**कानमा वा कान समातेर लानु, पुऱ्याउनु**—=संजाको रूपमा पक्राउ गरेर लैजानु । त्यो लुच्चोलाइ कानमा समातेर ठानामा पुऱ्याइदे ।

**कान लग्नु**—(१)= कानको कीरा खानु । ओहो ! के बिघ्नचिच्याएको, यसले त मेरो कानै लग्यो । (२) साधारण अर्थ । कागले कान लग्यो भन्दैमा कागसंग दगुर्नु हुन्छ ?

**कान लाउनु**—(१)=ध्यान दिनु । मेरो कुरा कान लाएर सुन्नुहोस् । (२)=छिद्रमा कान टाँस्नु । तिमोले ढोकामा कान लाएर सुनिरहेको मैले नै देखेको, के ढाँट्छौ ?

**कान समातेर मामाको घर देखाइदिनु**—=सँजाको रूपमा दुइतिरका कान समातेर जुरुक्क उचाल्नु ।

**काने काने पिच्च**—=आँखा छोपी अरूलाइ समात्ने खेल । आँखा छोप्ने मान्छे रोज्दा यो भन्छन् :—उमल डुमल खैरे पात, आशाकुटी महाद्यौ, कुकुर काटी डूम ।

**कानो कौडी नदिनु**—=केही पनि नदिनु ।

*कान्छा* (जेठा, माहिला, *इत्यादि*) **महारानी**—=यहाँ कान्छी (जेठी *इत्यादि*) महारानी हुँदैन, आदरको निमित्त कान्छा (जेठा *इत्यादि*) नै हुन्छ ।



**कांफूले बाजी**—एक हात एउटाले अर्को हात अर्कोले जितेर सट्टासट्टी मात्र भइरहने ।

**काबुली तकाजा**—=ज्यादै प्याक्प्याक्ति (काबुलीले रुपियाँ उठाउँदा धरना कस्ने बानीलाइ सूचन गरी) । अलि दिनमा दिन्छु भनिहालें नि, किन काबुली तकाजा लाउँछौ ?

**काबू काबू पार्नु, हुनु**—=कायल कायल पार्नु, हुनु ।

**काम चल्नु**—( १ )=काम भइरहनु । हाम्रो साबुनको कामसम्म चलिरहेछ । (२) =जसोतसो गरी कार्यसिद्ध हुनु । दश रुपियाँ बक्से मेरो काम चल्छ ।

**काम[कुरा] छिन्नु**–(१)=काम सिध्याउनु । मेरो काम छिनिहालूँ, अनि तिमीसित खेलुँला । (२)=वर कन्या दुवैतर्फका मान्छेले विवाह गर्ने पक्का गर्नु । आज चुनूको काम छिन्ने दिन रे !

**काम दिनु**—(१)=बाट काम हुनु । आमा-बाबू-भातृ-वर्ग-स्त्री-पुत्र सब बान्धव । आखीरमा काम दिन्नन्—हुन्छन् परपरै सब ॥—बैजनाथ (उपदेशशहस्री) । (२)=काम लाग्ने हुनु । अब यो घडीले काम दिदैंन ।

**कामधेनु [गाई]को बाटो**—=छायापथ ।

**काम पुऱ्याउनु**—(१)=प्रशस्त असर पार्नु, हद पुऱ्याएर हानि गर्नु । ऽसहको गर्जाइको गुञ्जायमानले नै हात्तिहरूको काम पुऱ्याइदिन्छ ।—श्री केसर (विक्रमोर्वशी) । (२) साधारण अर्थ । मेरो काम यी दुइजनाले जिनतिन पुऱ्याएका छन् ।

**काम बन्नु**—=कार्य पूरा हुनु । यसै बसेर केही काम बन्दैन भोक लागिरहेछ, खानेकुरा केही छैन ।—बोधविक्रम (दन्त्यकथा) ।

**काममा त बाघै हुनु**—=अरू थोकमा जे भए पनि काम गर्नामा छिटो र नथाक्ने हुनु । ठूली लक्ष्मीको सुख भने चण्डाल छ, तर काममा त बाघै छ ।

**काम लाउनु**–=काम गर्ने लाउनु (यहाँ 'गर्ने' लोप भएको छ) ।

भादगाँउलेलाइ यो काम लाऊ।

**काम लाग्नु**—=उपयोगी हुनु। ……पुरानो आफ्नु सामान समेत काम लाग्ने जति काममा लगाई ती घरहरूमा तिनिहरूको निजायति धन पनि केही न केही कसैको परेको होला। श्री ३ जुद्ध (भूकम्प-भाषण)। काम् लाग्न्या पनि छैन शास्त्रहरु ता गर्नू त भक्ति पनी।—मोतीराम (प्रह्लाद भक्ति कथा)।

**काम लिनु**—(१)=काम गराउनु। आफूसुखीहरूबाट काम लिने चलन सारा दुनियाँभर चलेको छ।—श्री ३ चन्द्र (अमलेख-भाषण)।(२)=काम चल्नु। तिमीले दिए को घडीबाट काम लिइरहेछु।

**काम विशेषले**—=कुनै काम परेको हुनाले।……त्यसका केही दिनपछि त्यो काम विशेषले विदेश गएछ।—श्री ३ चन्द्र (अमलेख-भाषण)।

**कामीको आरन जस्तो**—फोहोर ठाउँलाइ दृष्टान्त दिंदा। कामीको आरन जस्तो कोठामा किन बस्छौ?

**कामीको दुलाहा जस्तो**—पहिरन नमिलेकोमा दृष्टान्त दिंदा प्रयोग हुने।

**कामीको लँगौटी जस्तो**—ज्यादै मैलो लुगालाई दृष्टान्त दिंदा प्रयोग हुने।

**काल छेपन गर्नु**—=समय बिताउनु। हजुरबाट बक्सेको जागीरले एक तरहले काल छेपन गरिरहेकै छु।

**कालले कुत्कुत्याउनु, घेर्नु**—=मृत्युले आकर्षण गर्नु। बिचरालाइ कालले कुत्कुत्याएको रहेछ, मैले भनेको टेर्दै नटेरी शिकारमा गएर ज्यान फाल्यो।

**कालले धजा हाल्नु**—=चाँडै मर्नु (सरापमा प्रयोग हुने)। तँलाइ कालले धजा हालिहालोस्!

**कालीमाटीमा लात्तले हाने जस्तो**—हरिमुस्ले कालो नराम्रो मान्छेलाइ दृष्टान्त दिंदा प्रयोग हुने।

**कालो कुकुर**—(१)=हुँदै नभएको मान्छे। तिमीहरूले नबिगारे कालो कुकुर आएर गर्‍यो त? (२=सबभन्दा तुच्छ प्राणी प्रायः अकरणमा)। कालो कुकुर पनि तेरो चाकरी गर्न आउँदैन।

**कालो कुकुर(बादल)ले नपाएको दुःख (गोता) पाउनु**—=असाध्य गोता पाउनु। पैसा निकाल्ने भए निकाल्, होइन भने कालो कुकूरले नपाएको दुःख पाउलिस्।—रुद्रराज (रूपमती)।

**कालो धसिङ्गरे लामो लठिङ्गरे**—कालो लामघारे मानिसलाइ गिज्याउँदा प्रयोग हुने।

**कालो र नीलो मुख लाउनु**—डरले आत्तिनु वा रिसले चूर हुनु।

**कावा खानु**—=चक्का लिएर घुम्नु। कावा नखाऊ ए चील चरी आकाश ढाकेर।—सिद्धिचरण (हिमाल)। यो घोडालाइ कावा खुवाउनु पर्‍यो।

**काशी गई फाँसी**—असल काम गर्दा खराब परिणाम निक्लेकोमा प्रयोग हुने।

**काशी गएको पर्वते जस्तो**—अक्क न बक्क परेको मानिसलाइ दृष्टान्त दिंदा प्रयोग हुने।

**काशीमा मुख धोएर आउनु**—कसैको निम्ति कुनै काम असंभव वा ज्यादै गाह्रो छ भन्ने जताउँदा प्रयोग हुने। तिमीले मलाइ पाशामा हराउनालाइ त काशीमा मुख धोएर आउनुपर्छ।

**काशीवास गर्नु, हुनु**—=बूढेसकालमा वा कडा रोग लागेपछि काशीमा मर्न जानु, गएर मर्नु (अरू तीर्थमा विभक्ति लोप हुँदैन)।……आफ्नी भित्रीनीको काशीवास होस् भनी पृथ्वीनारायण शाहले तेसलाई काशी पठाये।—सूर्य विक्रम (पृथ्वीनारायण शाह)।

**किञ्चित् नलाग्नु, नखानु, नमान्नु**—=केही जति पनि नलाग्नु, नमान्नु, केही पनि नभए जत्तिकै गरी असर खप्नु, (यहाँ 'किञ्चित्' शब्द बोलचालकै पद भएर प्रयोग हुन्छ)। गोली छुटेर अभाग्यवश जनरल धीर सम्शेरलाइ चोट लागेछ तापनि वहाँले त्यो किञ्चितै मानीबक्सेन।—

पारसमणि ( नेपाली साहित्य ९ भाग) ।

**किताबको कीरो**—(१)=सधैं कितावै हेरिरहने मान्छे। (२) =किताबमा लेखेको कुरा मात्र जान्ने मान्छे। किताबको कीरो भएर काम लाग्दैन, बाहिरी दुनियाँको पनि यादखबर राख्नुपर्छ ।

**किन भनेर पो**—=भैगो किन गरूँ भन्ने विचार गरेर मात्र छोडेको हुँ। उसको बाबुलाइ त्यसको कुरा भनिन ; हुन त उसले मलाइ गर्नुसम्म गरेको छ, किन भनेर पो ।

**किन वा केलाइ चाहियो ?**— 'किन'को झर्कँदाको रूप ।

**किनारा लाउनु**—टुङ्गो लाउनु, ठेगान लाउनु । तिमीले यो कुरा किनारा लाएपछि मात्र हामी जान्छौं । (२) साधारण अर्थ ।

**किरिया खानु**—(१)=किरिया हाल्नु (यस अर्थमा उस्तो प्रयोग हुँदैन) । (२)=किरिया मिच्नु, भङ्ग गर्नु । तिमीले जानी जानी किरिया खायौ, अब तिमीलाइ किरिया लाग्छ ।

**किरिया हाल्नु**—(१)=प्रतिज्ञा गर्नु, शपथ खानु । किरिया हाल्नु बलियो मन पार्नु हो, खसाले किरियालाइ मुखको झ्यालबाट त्यो मनको जगको ईंट खलबलाउन पुग्दछ ।—बालकृष्ण (मुकुन्दइन्दिरा) । (२)=हो वा होइन भन्ने पत्यार पार्नालाइ सत्य, गाई मारी हत्या, इत्यादि भन्नु । सत्ते ! मलाइ केही पनि थाहा छैन ।····हजुरको दुवै पाउमा शिर राखेर किरिया हाल्न सक्छु ।—भीमनिधि ( सहनशीला सुशीला ) ।

**किल्किलेमा समाउनु**—कुरा पक्रेर नाजवाब पार्नु । मैले किल्किलेमा समाउनासाथ त्यसले तपाईंकै मतमा हिंड्छु भन्न थाल्यो ।

**कीरा पर्नु**—(१)=कीराहरु उत्पन्न हुने गरी कुहुनु वा पुरानो हुनु । सुकुटीमा कीरा परिसकेछ, घाममा सुकाइदेऊ । (२) =सरापमा प्रयोग हुने । कसको कीरा परेको मुख होलानी, यसरी भएका न भएका कुरा जोडेर यस्ता छुस्करलाई भन्न



शकेको ?—रुद्रराज (रूपमती) । (३)=कतैबाट खसेर वा आएर कीरा पर्नु । मेरो दूधमा कीरा परेछ ।

**कुइरी मण्डल**—=(धूलो वस्तुको) माथि उडेर कुइरो जस्तो भएको रुमलो । अगिल्तिर कुइरी मण्डल पारेर भागेका तेत्तीस करोड देवताहरु छन्,····। —बालकृष्ण (कथा कुसुम) ।

**कुकुर आयो कि स्याल आयो**—वास्तै नराखेकोलाइ सूचन गरी । कुकुर आयो कि स्याल आयो हामी गएर कसले सोधपूछ गर्छ र ।

**कुकुर काटी मीत लाउनु**—मुखैले मात्र 'तिमीसित कुकुर काटी मीत लाएको छ है !' भनी आँखा दुखेको मानिसलाइ सुनाउँदा त्यो व्यथा आफूलाइ सर्दैन भन्ने विश्वासले आँखा दुखेको मानिससँग पहिलो पटक भेट हुँदा त्यसो भन्ने चलन छ ।

**कुकुर काशी गए झैं**—(१) थोरै समय लाग्ने बाटोमा धेरै समय लाउँदा भन्ने । हर्केलाइ वैद्यकहां पठाएको त कुकुर काशी गए झैं भयो, साँझ परिसक्यो आएन । (२) ठाउँमा गएर त्यस ठाउँमा गर्नुपर्ने कुरा गर्न नसक्ने मानिसलाइ दृष्टान्त दिंदा प्रयोग हुने ।

**कुकुरको मूत चुहाउनु**—=आँसु खसाल्नु (हेलाको बोली) ।

**कुकुर ढुकुर एकै ठाउँ, कुकुर छाडी ढुकुर खाऊँ**—छिटो र शुद्ध उच्चारण जाँच्ने वाक्यांश।

**कुकुर [र] बिरालो जस्तो**—भेट भयो कि झगडा हुने मानिसहरुलाइ दृष्टान्त दिने । गोर्खा र लमजुङ्ग कुकुर बिराला झैं झगरा गरी रहे ।—सूर्य्य विक्रम (द्रव्यशाहको जीवनचरित्र) ।

**कुकुर भुके जस्तो**—भनेकोमा वास्तै नगर्दा दृष्टान्त दिने बोली। कान्छालाइ कति चोटि यो माल थन्क्या भनें टेर्दै टेरेन, मैले भनेको त कुकुर भुके जस्तै छ ।

**कुकुर मर्‍यो कि स्याल मर्‍यो**—मरेकोमा एकदम बेवास्ता जनाउँदा प्रयोग हुने । आफू भने अलपत्र परिन्छ, कुकुर मर्‍यो कि स्याल मर्‍यो केही पत्तो

हुँदैन ।—मोतीराम (भानुभक्तको जीवनचरित्र) ।

**कुकुरलाइ दिए पनि नखाला जस्तो**—मयल परेको वा कालो फोहोर भएको हात वा खुट्टालाइ हेला गरी भन्ने बोली । तेरो खुट्टा त कुकुरलाइ दिए पनि नखाला जस्तो छ ।

**कुकुरले नपाउने दुक्ख**—=अत्यन्त दुक्ख ।

**कुकुर्नीले ब्याए जस्तो**—धेरै छोराछोरी पाउने आइमाईलाइ दृष्टान्त दिंदा प्रयोग हुने ।

**कुखुरी काँ, बासी भात खाँ**—कुखुरा बास्ता केटाकेटीले वा लाइ भन्ने बोली ।

**कुखुरी तुल्याउनु**—=सँजाको रूपमा एउटा खुट्टा मात्र टेकाएर खडै गराउनु । किन गर्नु हुन्नथ्यो, त्यो दिन समाल पठाई कुखुरी तुल्याउनु भएन र !—रुद्रराज (प्रायश्चित्त) ।

**कुखुरे निद्रा**—=चाँडचाँडै खुलिरहने (कुखुराको जस्तो) ।

**कुखुरे बैंस**—=उमेर पूरा नहुंदै आउने कुरकुरे बैंस ।

**कुचो लाउनु**—=कुचाले कसिङ्गर बढार्नु ।····कुचो लाउनु, लिप्नु, पोत्नु, पानी ल्याउनु, भात पकाउनु, कैयौं काम गर्छौं, ····। —भीमनिधि (सहनशीला सुशीला) ।

**कुछु कामको नहुनु**—=केही कामको पनि नहुनु । सानीको बुद्धि कुछु कामको छैन ।

**कुञ्जी ठोक्नु**—=धोएर खुंचिएको कपडालाइ काठको मुंग्राले ठोकेर सम्म्याउनु । धोबीले मेरो टोपी कुञ्जी नठोकेर ल्याएछ ।

**कुटो कोदालो गरेर**—=खेती गरेर ('एक माना'को दृष्टान्त हेर) ।

**कुन चिडियाको नाउँ हो**—=के चीज हो (कदर गर्न एकदम नसक्ता भन्ने) । घडी भनेको कुन चिडियाको नाउँ हो यसलाइ पत्तै छैन । (थाहा नभएको कुरामा पनि प्रयोग हुने) रेडियम कुन चिडियाको नाम हो आफूलाइ त थाहैछैन ।

**कुन ड्याङको मूला**—उही ड्याङको........*इत्यादिमा* हेर । ऊ पनि कुन ड्याङको मुला होर !-रुद्रराज (चप्पा काजी) ।



**कुन नाकले**—=के नाकले (हेर) ।

**कुन मुख**—(१) बोलीको ठेगान नभएकोमा सेट्ता । अहिले भोक लाग्यो भन्न लाज छैन, अघि कुन मुखले बोल्यौ ? (२) चूक गर्नेमा लाज वा डर आरोप गर्दा भन्ने । यसरी फूलदान फोडेपछि कुन मुख लिएर मालिककहाँ जान आँटेको छ ? मेरी बाहुनीलाई भात ख्वाउने उपाय गरिदिनु पर्‍यो भनेर दाज्यूलाई कुन मुखले भन्नु ।—रुद्रराज (रूपमती) ।

**कुन सट्का**—=कति छिटो कुन बेला । त्यो मान्छे त यहीं देखेथें कुन सट्का सुईंकुच्चा लिइसकेछ ।

**कुना पस्नु**—(१)=सुत्केरी वा पहिलो पाली नछुने हुँदा बारबुर गरेर बस्नु, त्यसरी बसेका मालिकसँग छोएर निजहरु जस्तै अलग्ग बस्नु (केटीको बारे) । बालखलाइ लिई कुना तिर पसोन्, छाले बहुतै बनी ॥—पद्म प्रसाद (ठूलो कृष्णचरित्र) । सानी छोरी नछुने हुँदा पार्वती कुना पस्ली । (२) साधारण अर्थ । झारल मोटाउँछ कुना पसी ।

**कुबेरको ढुकुटी (भंडार)**—=जे खोजे पनि पाइने वा जति झिके पनि कहिल्यै नसिद्धिने धनमाल भएको ठाउँ (कुबेर धनको देउता तथा देउताहरूको कोशाध्यक्ष हुनाले) । एकोहरो खर्च लाग्यो भने कुबेरको ढुकुटी पनि रित्तिन्छ भन्छन् मानिसको त के कुरा ?—रुद्रराज (प्रायश्चित्त) ।

**कुम जोडेर**—=दाँजिएर ।···· हाम्रै सासूले दुइ दुइ ओटी सौतासित कुम जोडेर खाएकी । —बालकृष्ण (कथा कुसुम) ।

**कुम ठोक्नु**—(१)=भागी नाशी गयो भने म बुझाउँला भनी अम्भर गर्नु । दलेले कुम ठोक्छ भने म तँलाई सापटी दिन गाह्रो मान्दिन । (२) = धन्दा नमान यस कुरामा म छु भनी भरोसा दिनु । कुम ठोक्ने मान्छे पाएपछि हामीसित किन दब्थ्यो ।

**कुमति लाग्नु**—=खराब बुद्धि आउनु । कहांबाट यसलाइ

कुमति लागेर मेरो रिकापी चोरिछ, नत्र त मान्छे बैसे थिई।

**कुमालेको चक्र**—=पालैसंग घुमेर आउने दुःख, आपत्। कुमालेको चक्र सबैमाथि घुम्छ।

**कुम्नो हाल्नु**—=पोको वा भारी बोक्नु।

**कुयेंत्रो लाग्नु, जानु**—=(कपडाको) चोक्टा छुछिएर प्वाल पर्नु। मेरो नयाँ खास्टोमा कहाँ कुयेंत्रो लागेछ ! तिम्रो खास्टोमा कुयेंत्रो गएछ, हेर !

**कुरा (गीत) उठाउनु**—=त्यो शुरू गर्नु। यस्ता बडादमीको बहिनीसँग पनि विवाह गर्न कुनै राजकुमारले कुरा उठाएका छैनन्?—श्री अर्जुन (स्वप्नवासवदत्ता)। आखिरकार कपाल कन्याउँदै चंखेलाई नै कुरा उठाउनु पर्‍यो।--रुद्रराज (प्रायश्चित्त।

**कुरा ओछ्याउनु**—=गाल बचाउनालाइ विपक्षीको कुरा पर्नुअघावै आफ्नो कुरा पारी दुरुस्त हुनु। उसले कुरा ओछ्याइसक्यो अब तिमीले कुरा लाएर केही हुन्न।

**कुरा ओसार्नु, लैजानु**—=यताको कुरा उता भन्नु। यस्तो कुरा ओसार्ने मान्छेलाई हामीले राख्नु हुन्न।

**कुरा काट्नु**—(१)=आज्ञा लंघन गर्नु। मैले सात बजे खानू भनेकोमा ८ बजेसम्म नखाएपछि मेरो कुरा काटिएन? (२)=बहसले बदर गर्नु। असल कुरा काट्नु ठीक छैन।—श्री केसर (विक्रमोर्वशी)। म ईश्वर छ भन्छु, तिमी मेरो कुरा काट्न सक्छौ ? (३)=अर्कोले कुरा गर्दा गर्दै आफ्नो कुरा उठाउनु। पख ! मेरो कुरा सिध्याउन देऊ, उसै कुरा काटेर बीचमा नबोल न। (४)=पछिल्तिर बदख्वाइ गर्नु। घरमा कुरा काटेरे।—बालकृष्ण (कथा कुसुम)। (५)=गफ गर्नु (हेलाको बोली)। तिमीहरूलाई त यत्ति छ, बस्यो कुरा काट्यो अर्कालाई उडायो पुगिहाल्यो।—रुद्रराज (चप्पा काजी)।

**कुरा कोट्याउनु, उप्काउनु**—=कुरा उठाउनु।

**कुरा खानु**—=कुरा पत्याउनु,



भनेको मान्नु। साह्रै छिल्लिइसके भनेर, खेइ मेरो कुरा कसैले खाँदैनन् रे पो !—रुद्रराज (प्रायश्चित्त)। अझ पनि मान्दिनस् ? मेरो कुरा खान्नस् ?—बोधविक्रम (दन्त्यकथा)।

**कुरा खेल्नु, खेलाउनु**—(१)=मनमा नाना रङ्गको तरङ्ग उठ्नु, उठाउनु। त्यस बेला सम्म भात नपाक्नुलेनै उनका पेटमा कुरा खेल्न थाल्या।—रुद्रराज (रूपमती)।....दुवै जनाले मनमनै कुरा खेलाइरहेका थिए।—भवानी (यौवनको आँधी)। (२)=ठाउँ ठाउँमा कमेटी जम्ने गरी उताको कुरा यता यताको कुरा उता जानु, लैजानु। कुरा खेल्न दियो कि यसै गरी घर भाँडिन्छ। तिमीले उसलाइ कुरा खेलाउन दियौ।

**कुरा गर्ने बानी**—(१)=कुरा ओसार्ने वा फैल गर्ने बानी। त्यसको अरू कुरा त बेसै छ, कुरा गर्ने बानी सारै खराब छ। (२)=साधारण अर्थ। पढ्ने वेलामा कुरा गर्ने बानी छाड।

**कुरा गल्नु**—=कायल हुन संभव देखिने गरी यतिसम्म त हो भनी कुरा फुस्कनु। केर्दा केर्दा अब त त्यसको कुरा धेरै गलिसक्यो।

**कुरा चपाउनु**—=ङ्याङ्ङुङ गरेर कुरा चपाउन खोज्नु। .......बासी छाला चपाए जस्तै कुरा चपाएको हेर्नोस् न....। बालकृष्ण (मुकुन्दइन्दिरा)।

**कुरा चलाउनु**—(१)=कुरा उठाउनु। अब यो मूर्ति स्थापन गर्नलाई एउटा योग्य मन्दिर चाहिन्छ भन्ने कुरा चल्यो।—पारसमणि (नेपाली साहित्य–१भाग)। (२)=बिहे गर्न योग्य वर वा कन्या छ भन्ने कुरा (प्रायः अरूद्वारा) पुर्‍याउनु। हाम्रो जेठाज्यूकहाँ तिम्री छोरीको कुरा चलाएकी रहिछौ, होइन ?

**कुरा चुहाउनु**—=कुरा फुस्काउनु (हेर)।

**कुरा छिन्नु**—(१)=काम छिन्नु (२ हेर)। (२)=ठेगान लाउनु, झगडा मेट्नु ('छलफल टुङ्गो लाउनु' को अर्थमा)। बाजार बुझ्नू, अरूभन्दा चार आना

सस्तोमा म दिन्छु भनेर हिरण्यगर्भले कुरा छिनिदिए।

**कुरा छेड्नु**—(१)=कुरा उठाउनु। आखिरकार शर्माजीले नै कुरा छेडे।—रुद्रराज (रूपमती)। (२)=कुरा पच्कार्नु। ज्यादै रिस उठ्यो, तिम्रो दाइलाइ त्यो कुरा छेडिदिएं।

**कुरा जोत्नु**—=गफ गर्नु (रिसाएर भन्दा)। काम त्यसै छोडी यहाँ आएर कुरा जोतिरहने हो?

**कुरा जोर्नु, जमाउनु**—=नभए नभएको कुरा रच्नु। यी सब कुरा तैंले जोरेर भनेको, म एकपट याउन्नं।

**कुरा झिक्नु**—=कुरा उठाउनु। चन्द्रबहादुर निस्केपछि चतुरेले कुरा झिक्यो।—ग्रन्थकार (कथा कुसुम)।

**कुरा झोस्नु**—=चुक्ली हाल्नु। ····अब गएर महारानीलाई यो कुरा झोस्तछु।—श्री केशर (विक्रमोर्वशी)।

**कुरा तल पर्नु**—=आफ्नो कुरा खण्डन हुन दिनु। जे होस् मेरा कुरा तल पर्न दिन्न।

**कुरा पक्रनु, समाउनु, सम्मात्नु**—विपक्षीले अघि भनेको कुरा लिई विपक्षीलाइ च्याकच्याक पार्नु। सुन्छ, कुरा हाम्रो समात्तछ, निमोठेर त्यसैलाइ टुक्राटुक्रा बनाउँछ अनि फ्याँक्तछ!—बालकृष्ण (प्रह्लाद)।

**कुरा पर्नु**—(१)=जवाफसवाल वा बहस हुनु। अभिरामस्वामीसङ मेरा कुरा परे थे, स्वामीजीका विचारमा ता जगत्सिहसङ तिम्रो विवाह हुनै शक्तैन,····।—शिवप्रताप (दुर्गेशनन्दिनी)। (२)=भाम्लो उठ्नु, आपत् वा अप्ठ्यारो पर्नु। सुन्यौ? आजकल त त्यो घरमा ठूलो कुरा परिरहेछ। (३)=सुनाइनु। अस्ति राजासाहेबकहाँ कुरा पर्‍यो। (४)=राम्रो वा सुहाउने गरी कुरा मिल्नु। मर्जिना खूब कुरा पारेर भन्न सक्छे।

**कुरा पल्टाउनु, फर्काउनु**—=मनसायको वास्ता नराखी कुराको बेग्लै अर्थ निकाल्नु।

**कुरा फुट्नु**—(१)=लुकाएको कुरा खुल्नु। त्यो कुरा त आखिरमा दलेबाट पो फुट्यो। (२)=कुरा बाझ्नु।



**कुरा फुस्काउनु**—=भन्न नखोजेको कुरो प्याच्च भन्नु। अघिबाटै तिमीले कुरा फुस्काइसकेको हुनाले मैले सबै भनिदिएँ।

**कुरा बङ्ग्याउनु, बटार्नु**—=कुराको एउटा अर्थ अर्कोपट्टि वा राम्रो अर्थ नराम्रोपट्टि लानु। मैले सोझै भनेको हुँ, तिमीले कुरा बङ्ग्याउँदैमा हुन्छ र?

**कुरा बढाउनु**—=भएको कुरामा नभएको कुरा थपेर भन्नु। सानेले यति त भनेको हो, अरू कुरा हर्केले बढाएको।

**कुरा बनाउनु**—(१) नभएको कुरा जोर्नु। यसरी कुरा बनाई बनाई भन्न लागिस् भने चड्कन पाउलास्! (२)=नराम्रो कुरालाइ राम्रो पारी भन्नु। कुरा बनाउनामा त यहाँलाइ कसले भेट्छ!

**कुरा बाझ्नु**—=कुरा फरक खानु।

**कुरामा कुरा आउनु, चल्नु**—=कुरै कुरामा आउनु (हेर)।

**कुरा माथि पार्नु**—=आफ्नो कुरा माथि पार्नु (हेर)।

**कुरामा भुल्नु**—=अरू काम छाडी कुरा सुनेर वा गरेर बसिरहनु। कुरामा भुलेर त पात गाँस्नै बिर्सेछु।

**कुरामा लाग्नु**—(१)=कुरा पत्याउनु वा भनेको मान्नु। मेरो कुरामा लागेको भए तिमी अस्ति नै जागीरे भइसक्थ्यौ। (२)=कुरामा भुल्नु। तिम्रो कुरामा लागेर अस्पताल जान त भुसुक्क बिर्सेछु।

**कुरा मिलाउनु**—(१)=कुरा नबाज्ने गरी एकनासका पार्नु। कागत नगरेसम्म उनीहरुलाइ भेट गर्न नदेऊ, कुरा मिलाउलान्। शौखले शोक गराउँछ भन्ने आचार्यहरूको मत संग मेरो त बिल्लै कुरा मिल्छ....।—रुद्रराज (चप्पा काजी)। (२)=सल्लाह गरी दुवै थरलाइ सुबिस्ता हुने बन्दोबस्त गर्नु। तिमीहरु कुरा मिलाएर एक जना मेरो घरमा सुत्नू।

**कुरा रहनु, राख्नु**—=कुरा लङ्घन नहुनु, नगर्नु (प्रायः चित्त नबुझे तापनि भन्ने अर्थ जता-

...उँदा)। आखिरमा तिमीले मेरो कुरा राखिदियौ ।

**कुरा लाउनु**—=चुक्ली हाल्नु । मेरो कुरा लाएर मात्र तिमीलाइ खान पुगोस्!

**कुरा लिनु**—(१)=अर्ती मान्नु । बूढा मानिसको कुरा लिनुपर्छ । (२)=कुराको आधार लिनु । सानी छोरीले अस्तिको कुरा लिएर भनेकी हो। (३)=कुरा फुस्काउनु। त्यो त बडो जब्बर छ, त्यसबाट तिमी कुरा लिन सक्तैनौ ।

**कुराले ठिक पार्नु**—=वाक्चातुर्यले 'हो' भन्ने भान पार्नु। कुराले लोग्नेलाई कसरी ठीक पार्न सकेको ? कस्तो जाली !-रुद्रराज (रूपमती) ।

**कुरा समाउनु, समात्नु**—=कुरा पक्रनु (हेर) ।

**कुरा सुन्ने बानी**—(१)=चुक्ली हालेको कुरा जोरफोर नगरी पत्याउने बानी । सासू बज्यैको कुरा सुन्ने बानी असाध्य नराम्रो छ। (२)=ध्यान दिएर कुरा सुन्ने बानी । केटाकेटी भएर स्वास्नीमान्छेको कुरा सुन्ने बानी गर्न हुँदैन ।

**कुरा हार्नु**—=वचन हार्नु ('कुरामा हार्नु' को अर्थमा पनि कोही कोही प्रयोग गर्छन्) ।

**कुरीकुरी लाग्नु**—(१)=(मनमा) असजिलो वा पश्चात्ताप लाग्नु । साहिँला देवरलाइ भेट्ता बहिनीलाइ सोधिपठाउन बिर्सेछु, मनमा कुरीकुरी लागिरहेछ । (२)=लाज मान्नु (केटाकेटीलाइ भन्ने बोली) । नानीलाइ कुरीकुरी लाग्दो रहेछ । (३)=कुतकुती लाग्नु (केटाकेटीलाइ भन्ने) ।

**कुरीज खानु**—(१)=प्वाँख फेर्ने वर्ष दिन पिंजरामा हुनु (बट्टाइको बारे)। कुरीज खाएको बट्टाईसँग यसको केही लाग्दैन । (२)=(यसबाट) फेल भई अर्को वर्ष पनि उही क्लासमा बस्नु । बलबहादुर कुरीज खाने भएछ ।

**कुरै(रा) कुरामा आउनु**—=कुरा गर्दागर्दै निस्कनु । त्यसको कुरा हामीले झिकूँ भनेर झिकेको पनि होइन, त्यसै कुरै कुरामा आयो ।



**कुर्कुच्चा ठोक्नु(ठोकेर) भाग्नु**—=भागेर जानु । दानवहरु कुर्कुच्चा ठोकेर स्वर्गको सीमाना पार बेपत्ता भए, त्यहीं नेर सबभन्दा अगाडि पुगी महाराजको रथ अड्यो ।—बालकृष्ण (कथा कुसुम) ।

**कुर्चा खानु**—=डल्लिनु । अहिलेदेखि हो मैले कुर्चा खाएर बसेको !

**कुलेलम ठोक्नु**—(१)=बेतोडसँग भाग्नु । अनि चाइने कुलेलम ठोकूनैपट्टि लागिस्, नतीजाको खयालै गरिनस् ।—ग्रन्थकार (कथा कुसुम)। (२)=बेसरी दगुर्नु । त्यति गरेर कुलेलम ठोकेर यहाँ आऊ ।

**कुल्ला बास्नु**—=ज्यादै भोक लाग्नु (खाली पेटमा वायु भरिएर कुल्ल कराउने हुनाले) ।

**कुहिएको सुद्धी**—=बिर्सने मगज (बिर्संदा गाली गर्ने बोली)। मेरो कस्तो कुहिएको सुद्धी नि !

**कुहिनाको घाउ**—=ज्यादै प्यारो केटाकेटी ।

**कुहिराको काग**—अन्योल पर्दा दृष्टान्त दिने बोली ।····सकेनौ भने तिमीहरूले आफ्नो घरजम भन्न पाउनेछैनौ भन्ने हुकुम दिएको हुनाले यिनीहरू कुहिराको काग बनेर भर्मनाइरहेछन् ।—बोधविक्रम (दन्त्यकथा) ।

**कू दिएको बट्टाई जस्तो**—झोक्काइरहेको मानिसलाइ भन्ने ।

**कूवाको ब्याङ**—देशपरदेश नघुमेको अनभिज्ञ व्यक्तिलाइ होच्याएर भन्ने । कूवाको ब्याङ लाटीले कतै काम बिराउली, गुरुलेझ दया राखी राखी दण्ड गरे पनि कमलो दिलमा खस्रो कराँती नचलाउनू ।—बालकृष्ण (मुकुन्दइन्दिरा) ।

**के····के····**—दुवै हदलाइ मुछ्ता, धेरैको संभावना देखाउँदा, वा अभिन्नता जताउँदा प्रयोग हुन्छ । त्यो उत्पातमा असंख्य धन र, जन समेत धेरै नाश हुन गई के ठूला के साना प्रायः सबैलाइ ठूलो आपत आई परेको थियो । —श्री ३ युद्ध (भूकम्प-भाषण)। ····काजीलाई प्रशन्न गरायौ भने के बक्सिन्छ के बक्सिन्न ?—रुद्रराज (चम्पा काजी)। हाम्रो

खसमलाइ के मीठो के नमीठो, जे अघिल्तिर राखिदियो खानु-हुन्छ ।

**केको**—बढ्ता जोड दिनुपर्दा 'किन' को सट्टामा प्रयोग हुने । भर्मग्दुर तिम्रो खुश चाहने त्यस्तो दासलाई तिमीले केको रिझाउनु ?—श्री केसर (विक्र-मोर्वशी ।

**के,क्या**—यी पद 'के भने' को सट्टामा थेको जस्तो भएर वा ध्यान खिच्नाको लागि पनि प्रयोग हुन्छन् । अस्ति के राजा, बुवाको खोपीमा गएर के, पिपल्मेटको शीशी ल्याएको छु, बाबै !

**के खाई चुठ्नु**—=के गरेर काम चलाउनु ? अहिले यो किताब हरायो भने के खाई चुठ्ने ?

**के खाऊँ के लाऊँ भन्नु**—=जीविका नचल्नु । तेज भाउ भएको टाइम भए पैसा निक्कै आउने हो—आजकलको भाउ के खाउँ के लाउँ भन्नु परेन । —रुद्रराज (रूपमती) ।

**के जाति**—चाहिएको पद वा नाम नसंझँदा भन्ने बोली । वैद्यले के जातिको पानीमा के जाति हाले के जाति हुन्छ भन्थ्यो मैले त बिर्सें ।

**केटाकेटीले [र्चां मूसी] खेले जस्तो**—सानोतिनो वा फास न फुसको कामलाइ दृष्टान्त दिने ।

**के(कुन) नाकले**—=लाज सरम कहाँ हालेर । अगि मात्रै 'तैंले दिएको खान्न' भन्थिस्, अहिले के नाकले हात थापिस् ?

**के भनिउठ्ने हो**—=के दोष लाउने हो । खसम परदेश हुनु-भएको वेलामा तिमीलाइ यहाँ वास दिंदा जेठाज्यूहरू के भनि-उठ्ने हुन् ।

**के लाग्छ**—=सामर्थ्यबाहिर छ, उपाय छैन । के लाग्यो, दैवी विपत्तिलाई सहनै पर्दो रहेछ ।—श्री ३ जुद्ध (भूकम्प-भाषण) ।

**केही गरी**—=कदाचित् । केही गरी म चाँडैनै मरिहालें भने राजाले अवश्य अर्कै बिहा गर्नेछन्; अनि मेरा बालख छोराहरूको के दशा ?—बोध-विक्रम (दन्त्यकथा) ।

**केही चल्नु वा लाग्नु**—=जोर वा उद्योग लाग्नु । केही चलेन जब राक्षसको र ताहाँ । भागी गया शिवजि छेउ पुगेर वाहाँ ॥ केदारकल्प (राजीवलोचन)। मेरो माल दिन्न भनेपछि तेरो केही लाग्छ ?



**केही जति पनि नलाग्नु**—=जाबो कुरा जस्तो लाग्नु । त्यसले गाली गरेको मलाइ त केही जति पनि लागेन ।

**केही नमान्नु**—(१)=पर्वाह नगर्नु । रिस देखाएर त्यो यहाँ नआएको होला, म केही मान्दिनँ । (२)=दिक्क नमान्नु । यहाँले मलाइ बिर्सेर निम्तो नगरिबक्सेकोमा मैले केही मानिनँ ।

**केही सीप नलाग्नु**—=कुनै उपायले पनि नहुनु । ""तर केही सीप नलाग्दा उनको धोको त्यसै रह्यो र उनी साह्रै दिक्दार थिए ।—बोधविक्रम (दन्त्यकथा) ।

**कैँची कस्नु**—=मेख मार्नालाइ अव्यक्त रूपले खानपीन वा खर्च-बर्चमा निचोर्नु । मैले भनेको मानेन भनेर दाज्यूले कैँची कस्नु भएको होला ।

**कैँची काट्नु, मार्नु**—=बाहिर मेलै राखी भित्रभित्र सत्यानाश पार्ने कोशिशमा लाग्नु । चमेली-लाइ मैले त आफ्नै मान्छे ठाने-की थिएँ, उ त भित्रभित्र कैँची काटेर हिंड्दी रहिछ ।

**कैफियत तलब गर्नु**—=विव-रण माग्नु, कारण सोध्नु (अड्डा को बोली) । त्यति भएपछि अड्डाजाँचले कैफियत तलब गर्‍यो ।

**कोख खुल्नु**—=सन्तान हुनु । बुहारीको छोराछोरी भएन भएन भन्दा बल्ल बल्ल कोख खुल्यो ।

**कोख बस्नु**—=छोराछोरी पाउन छाड्नु । जेठी बज्यैको त अब कोख बस्यो क्यारे, कान्छी नानी पनि ठूली भइसकिछन् ।

**कोख राम्रो हुनु**—=राम्रा राम्रा छोराछोरी पाउनु । सरस्वती न-रात्री भए पनि कोख त राम्रो रहेछ बा !

**कोखा बस्नु, पस्नु**—=भोको भएर पेट ख्याप्प हुनु । एक दिन निराहार बस्तैमा राधिका-को कोखा बसिसकेछ, हेर !

**कोखाबाट झिक्नु**—=खाइ-

सकेपछि उड्काई बिनसित्ति खाएको भन्ने पार्नु। तिमीले खान दिएर के गर्नु र, पछि कोखाबाट झिकिहाल्छौ।

**कोखीको घाउ**—=छोराछोरी।

**कोखै बाँझो हुनु**—=छोराछोरी जन्मँदै नजन्मनु (सरापमा प्रयोग हुने)। तँ राँडीको कोखै बाँझो होस्!

**को जाने [भगवान्]**—=यस्तो होला भन्ने अघिबाटै कसरी थाहा पाउनु। अप्सराहरूको मनपरेको पनी हो, को जाने ती सुअङ्गी यसको ब्यासीमा फेलापर्लिन् कि?—श्री केसर (विक्रमोर्वशी)। को जाने भगवान्! उसले त्यस्तो मनले दिएको रैछ, मैले त सोझै मनले दिएको होला भन्ने ठानें।

**कोठाको कोठै पर्नु**—=घाट वा जमीन नभेट्टाई तलामाथि नै प्राण जानु। नत्र हरे! कोठाको कोठै पर्नु हुन्थ्यो।—रुद्रराज (प्रायश्चित्त)।

**कोठे रानी**—=कोठामा मात्र बसिरहने मान्छे (खास गरी आइमाई)। 'त्यसले धेरै कोठे रानी-हरुलाई खुला हावाको महत्त्वको कदर गर्न सिकायो'—ग्रन्थकार (कथा कुसुम)।

**को देखिस्?**—रिसाउँदा 'मलाई सानो नठान्' भनी जताउने अहंकारको बोली। मलाइ, मलाइ तैंले को देखिस्?—भीमनिधि (सहनशीला सुशीला)।

**कोपिला लाग्नु**—=कोपिला निस्कनु। यो बोटमा कोपिला लागेछ, अब त चांडैनै फूल फुल्छ।

**कोरा जवाब**—=अरू कुरा केही नभनी ठाडै हुन्न भन्ने जवाफ।

**कोरा पूजा**—=बली, हाँसको फुल, सह्रेबजीबाहेकको साधा पूजा।

**कोरा बस्नु, बार्नु**—बाबुआमाहरु मर्दा दशदिनसम्म सिएको लुगा नलाई परालमा सुती कष्ट गरेर बस्नु।

**कोल जस्तो**—=हात खुट्टा वा त्यस्तै लम्बाकार वस्तु सुनिंदा दृष्टान्त दिने बोली। गोमाको हात कोल जस्तो भएर सुनिएछ।

**कोला कोला [नानीको] सातो**



आइज—केटाकेटी झस्कँदा, लड्दा, वा अँध्यारामा लाँदा सातो नजाओस् भनी फलाक्ने बोली।

**कौडे कमारो**—=खास कमारो (उहिले कमाराको कानमा कौडा झुण्ड्याउने चलन हुनाले)।

**क्या बात**—प्रशंसा गर्दाको विस्मयादिबोधक भएर मात्र प्रयोग हुन्छ। लड्छन् द्रोण जहाँ बराबर भई क्या बात् बिरै हुन् भनी। तारिफ् द्रोणजिको गर्था खूशि भई योद्धाहरूले पनि॥—होमनाथ (विराटपर्व)।

**क्या हो, क्या राम्रो, मीठो, मज्जा, बात, *इत्यादि***—'के' को ठाउँमा 'क्या' भन्दा पाखे बोली ठहरिन्छ तापनि कुनै कुनै ठाउँमा 'क्या' सदरिया बोलीमा रहेकै छ। यहाँ के हो, के राम्रो इत्यादिको प्रयोग हुँदैन।

**क्षमा राख्नु**—=माफ गर्नु (विध्यर्थमा बाहेक यसको प्रयोग राम्रो सुनिंदैन)।

## ख्

**खँगार पार्नु**—(१)=तनाहा तुल्याउनु। जुवाले उसलाइ खँगार पारिसक्यो। (२)=जीर्ण तुल्याउनु। दलेलाइ रक्सीले खँगार पारिसक्यो।

**खडाखडीको कुरा**—=लोलोपोतो नभएको ठाडो कुरा। हुन्छ भने हुन्छ भन, हुन्न भने हुन्न, म ता खडाखडीको कुरा मात्र जान्दछु।

**खडाजङ्गी पर्नु**—=झगडा पर्नु।

**खडा जवान**—=हाजिर रहेको मान्छे। अहिले खडा जवान कति छन्, कागतमा टिप।

**खडा जवाब दिनु**—=सुन्नासाथ हुन्न भन्नु।

**खडा हाजिर**—=अहिले हाजिर रहेको। खडा हाजिर यति छन् भन्ने पनि तँलाइ थाहा छैन?

**खडेरी पर्नु, लाग्नु**—=बर्सात नभई खनजोत बन्द हुनु।

**खड्गो काट्नु**—=ग्रह इत्यादि वा दुर्घटनाबाट मर्न संभव देखिएको ठूलो दशा पार गर्नु। ज्योतिषीले भनेको यस पालीको

खड्गो काट्न सकें भने धेरै वर्ष बांच्छु रे । घोडाबाट लडेर झण्डै मरेको रे, त्यसले आज ठूलो खड्गो काट्यो ।

खत बस्नु—=घाउ खटिराको दाग रहनु । यो मलहम लाए खत बस्तैन भन्छन् ।

खतिउपति बेहोर्नु—=अंश लिंदा रिन धन सकार्नु ।

खप्पर खानु—(१)=मगजलाइ परिश्रम पार्नु । यो हिसाबले त मेरो खप्परै खायो । (२)= कपाल दुख्नु (कीराले खाए जस्तो लागेकोबाट 'खानु' प्रयोग हुन आएको देखिन्छ) । किन हो तीन दिन भयो एकनाससँग यो खप्पर खाइरहेछ !

खप्पर फोर्नु—=कपाल फोर्नु (हेर) ।

खबर गर्नु—=खोजी गर्नु । सुग्रीबले रामजाया खबर गर भनी भेजिंदामा म आजा ॥ —रघुनाथ (रामायण-सुन्दर-काण्ड) ।

खरानी उडाउनु—=हरिकंगाल पार्नु । यस्ता बदमाशहरू घरमा हुल्यौ भने चाँडै नै तिम्रो खरानी उडाउनेछन् ।

खरानी घस्नु—(१)=जोगी हुनु । अब खरानी घसेर जान मात्र बाँकी छ ।—रुद्रराज (रूपमती) । (२) साधारण अर्थ । नानीको आङमा डाबरै डाबर उठेछ, खरानी घसिदेऊ ।

खरानीमा होम गर्नु जस्तो—पुण्य नपाइने । कुपात्रलाइ दिएको दान खरानीमा होम गर्नु जस्तो हो ।

खरी घोट्नु—=सानोतिनो कुराको पनि हरहिसाब गर्नु । कसैले दाम बुझाउन ल्यायो भने कौडी कौडी खरी घोटेर असूल गर्दथे । —रुद्रराज (रूपमती) ।

खरेलले बिर्ता पाए जस्तो—के के न पाए जस्तो गरी अरू कसैलाइ छुन नदिने । एउटा चुरोट देऊन, के खरेलले बिर्ता पाए जस्तो आफै मात्र खान्छौ?

खर्च कस्नु—=किफायत गर्नु । "'त्यसका निम्तीको खर्च कस्नामा पनी बाँकी रहेको हुँदैन ।—श्री३चन्द्र (अमलेख-भाषण) ।

खर्च चलाउनु—(१)=परिआएको काम दामपैसाले नअड्काउनु । जेठो छोराले हाम्रो घरको खर्च चलाउँछ । (२)= कसैले खर्चबापत दिएको दाम मास्नु । अस्ति मैले ल्याएको खर्च पनि चलाइसक्यौ ?



खल कुट्नु—=खल प्रयोग गर्नु । यो त खल कुट्न पनि जान्दिन ।

खल गर्नु—(१)=पिँध्नु (अक्सर ओखति) । (२)=छलफल गर्नु । यस कुराको खल नगरी छाड्दिनँ ।

खलबल मच्चाउनु—=खैला बैला उठाउनु ।

खली खाएको—=दुःख सुक्ख सबै भुक्तिसकेको (वायु चढेको मानिस आगाको खलियोभित्र पसी साबुत निस्कनालाई 'खलि खानु' भन्ने हुनाले) । अड्डा अदालत चाहार्दा चाहार्दा खली खाइसकेका हुनाले तिमीले आँख्यौ भने दुष्टहरूको दोहलो उडाइदिन सक्छौ ।—रुद्रराज (प्रायश्चित) ।

खल्को हाल्नु—=आशौच सुनेपछि घरबाहिर वा घाटमा दक्षिणपट्टि फर्केर नुहाउनु ।

खल्ती भर्नु—=पाकेट गरम गर्नु (हेर) ।

खस्रो मसिनो पर्नु—=ठाकठुक पर्नु ।

खाँ खाँ लाँ लाँ (खाऊँ खाऊँ लाऊँ लाऊँ) गर्ने (भन्ने) वेला—=खान लाउनाको रहर हुने उमेर । बिचरी खाऊँ खाऊँ लाऊँ लाऊँ भन्ने वेलामा पुकुक्क भइछ ।

खाँचो लागिरहेछ !—=के वास्ताले गर्छु । अहिले नै पसल जा रे, आफ्नो काम नसिध्याएर खाँचो लागिरहेछ अब !

खाँडो जगाउनु—=विवाह गर्दा दुलहीपट्टिको जग्यमा दुलहा दुलहीको अगाडि खडा भई जान्ने मान्छेले हातमा तरवार लिएर श्री महाराजधिराजहरुको नाउँले उठान गरेर 'कुइराको टाउकोमा ढ्वाक'ले टुंग्याउने लामो कुरा फत्फताउनु ।

खाइ(यो)जीउ(जियो) गर्नु—=खानलाउनाको निर्वाह गर्नु । मैले तिमीहरुलाइ पाल्न सकिन, आफ्ना आफ्ना घर गएर खाइ(यो)जीउ(जियो) गरी बस ।

राम, तोंलाइ जहाँ बसेर—, सुक्ख हुन्छ, जोसित बसेर हुन्छ —बसेर खाई जिउ गर् ।— ग्रन्थकार (कथा कुसुम) ।

**खाइदेऊ**—(१)=लाद्दे । त्यति तालचा पनि मार्न नसक्ने, कस्तो खाइदेऊ रहेछ ! (२)=साधारण अर्थ । बिन्ति छ यति खाइदेऊ न बा !

**खाइ न पाइ**—=सित्तैं, पाउनु खानु केही छैन । खाइ न पाइको मलाइ यस्तो अबगाल !

**खाई जाडो**—=खाएपछि हुने जाडो । बाहुनालाइ खाई जाडो, अरुलाइ नुहाई जाडो ।

**खाई पल्केको**—=पाइआएको हुनाले बराबर आस गरी आउने । खाई पल्केको मान्छे आउन किन छाड्थ्यो !

**खाऊँ खाऊँ द्यौता बढ्नु**—=के पाऊँ र खाऊँ जस्तो लाग्नु । सानीलाइ जराले छोडेकोले खाऊँ खाऊँ द्यौता बढिरहेछ ।

**खाएको नपच्नु**—(१)=संतोष नहुनु, चित्त नबुझ्नु । मेरो कुरा नगरिकन त तँलाइ खाएको पनि पच्तैन । (२) साधारण अर्थ ।

**खाए मरिएला हगे सिद्धिएला भने जस्तो**—ज्यादै लोभ गर्दा दृष्टान्त दिने बोली ।

**खाक हुनु**—(१)=पोलिएर खरानी हुनु ( अक्सर लाश दाह गर्दा प्रयोग हुन्छ ) । यो खाक हुन त अझ दुइ घण्टाले मान्नेछैन । ( २ )=खरानी भैसकेर उड्न मात्र बाँकी रहनु । बखतचा पैसा सकिंदा सकिंदा खाक भइसक्यो ।

**खाग हुनु**—=खपिस हुनु (यस अर्थमा 'खाग' यस वाक्यांशमा बाहेक अन्यत्र प्रयोग हुँदैन ) । त्यो मधेस गएर खाग भइसकेको छ ।

**खाटा बसेको घाउ कोट्याउनु, उप्काउनु**—=बितिसकेको विपद संझाउनु । ( साधारण अर्थमा पनि ) ।

**खाडल खन्नु**—(१)=नोक्सान पार्नु । अस्ति जुवा खेलेर त तिमीले खाडल खनेछौ नि ? (२)=रिन काढ्नु । हाकुले त धेरै ठाउँमा खाडल खनिराखेको रहेछ । (३) (साधारण



अर्थ)=खनेर खाडल पार्नु ।

**खाडलमा पर्नु**—( १ )=ठूलो नोक्सान पर्नु । यसरी बेफूँकसँग खर्च गर्न लागिस् भने चाँडै नै खाडलमा पर्नेछस् । (२) साधारण अर्थ ।

**खानु न खर्चनु**—खर्च गर्नुको अर्थमा 'खर्चनु' यस वाक्यांशमा बाहेक अन्यत्र सदरिया बोली गर्निदैन । खानु न खर्चनुको धनले के काम लाग्छ !

**खाने कुरा**—(१)=चमेना, खाजा ( को उपल्लो कक्षामा चलेको पर्याय ) । (२)= भक्ष्य । यसलाई खाने कुरा नखाने कुराको विचारै छैन ।

**खाने पिउने**—=धन दौलत पाउने । दुःख पाउने वेलामा मैले पाएँ, अहिले खाने पिउने तँ भइस् । (२)=सम्पन्न अवस्थामा पुगेको । बिचरा टुहुराहरू बल्ल खाने पिउने भए ।

**खाने वेलामा निकाले जस्तो**—दुब्लो मान्छेलाइ दृष्टान्त दिंदा प्रयोग हुने ।

**खाने हात**—=दाहिने हात ।

**खामोस खानु**—=धैर्य गर्नु । खामोस खायी दयाले भन्छिन्, "हे नैनी भाउजू ! म अरू जस्तो नठान बुझ्यौ हे नैनी भाउजू !" लक्ष्मीप्रसाद (मुना-मदन) ।

**खाल जमाउनु**—(१)=चार जना चार दाउमा बसेर जुवा खेल्न शुरू गर्नु । (२)=धेरै जना बेकामको कचहरी जमाएर बस्नु । आफ्नो काम छाडेर यहाँ खाल जमाएर बस्न तिमीहरूलाइ डर लाग्दैन ?

**खाला जानु**—=छाला खुइलिनु । आजकाल मेरो हातको खाला जान लागिरहेछ ।

**खालास् फर्सीको झोल !**—फर्सीको झोल तुच्छ कुरा गनिएको छ तापनि यस वाक्यांशमा यसको विपरीत अर्थ देखिन्छ, किनभने यो वाक्यांश 'खालास् ठूलो भाग !' को लयमा प्रयोग गर्छौं । त्यस्तै बुद्धिले खालास् फर्सीको झोल !

**खाल्टामा चपरी हाले झैं**—थोरै खर्चले नपुग्ने कुरालाई दृष्टान्त दिने बोली ।

**खाल्टा(खाडल)मा परेको हात्तो**

—=उक्सनै नसक्ने गरी बिग्रेको मान्छेलाइ भन्ने ।

**खाल्टामा पर्नु**—=धोखा खानु।

**खित्का छोड्नु**—=खित्खित अवाज झिक्नु (हाँसोको बारे)। कंती भयो भने मैत्री शीतको कुइरा-सित । तुषारो जोरले हाँल्छ खित्का छोडेर खित्खित ॥—लेखनाथ (ऋतु-विचार) । बज्यैका यी कुरा सुनेर महाकाली फेरि खित्का छोडेर हाँल्यो र भन्यो ।—रुद्रराज (प्रायश्चित) ।

**खिस्रिक्क पर्नु**—=हतोत्साह हुनु। हरि निकै खर्च पाउँला भनेर आएको थियो, एक रुपियाँ हातमा हालिदिंदा खिस्रिक्क परेर गयो ।

**खिस्सामा हालिराख्नु जस्तो**—बखतमा काम लाग्ने मानिसलाइ दृष्टान्त दिंदा भन्ने । तल्लो घरको बूढो घर्ती खिस्सामा हालिराख्नु जस्तो छ ।

**खुट्टा उचाल्नु**—=तम्सिनु । बिहामा जान खुट्टा उचालेकी होइनस्, गएको भए कत्तिको इण्डर पाउँदी रहिछस् ?

**खुट्टा काट्नु**—(१)=हलन्त पार्नु (अक्षरलाई)। खुट्टा काटी रेफ दी, बिगारेको छन्द । जहाँ छैन बुझ्नू, गरी ढिजे बन्द ॥ —शिखरनाथ (गंगामाहात्म्य-को सवाई) । हेरी नशकनू पारी परखाल बडे बडे । नेपाली कविले खुट्टा काटेका वर्ण झैं लडे ॥—लेखनाथ (ऋतुविचार)। (२) साधारण अर्थ । चोरको खुट्टा काट्नू भन्दा खुट्टा थुत्ने (उखान) ।

**खुट्टा छाड्नु**—(१) बहसमा हार्न लागेको कुरा छाडी अर्को कुरापट्टि जानु । हेर, तिमीले खुट्टा छाड्यौ नि ! (२)=डर वा लिहाजले भनेको कुरा होइन भन्नु । तिमी बेईमान रहेछौ, मसँग हो भनेको कुरामा उसको अगाडि खुट्टा छाड्ने ? (३) =हातखुट्टा छाड्नु । यसरी खुट्टा छोडेर यो काम कसरी उतार्न लागेका छौ ? (४) साधारण अर्थ । होश गर, खुट्टा छाड्यौ कि लड्छौ !

**खुट्टा टेक्नु, टेकिनु**—(१)=थोर बहुत कमाउन थाल्नु ।····



भर्खर अड्डाखानामा खुट्टा मात्र टेकेको बखतमा यस्तो मारमा पर्नु – धन्य दिन दशा !—रुद्रराज (रूपमती) । (२) बिरामीबाट तङ्गिएपछि उभिन सक्नु । अलि दिन सुरुवा नखाएर त मेरो खुट्टा टेकिनेछैन । (३)= सानोतिनो घरबारीसम्म जोर्नु । यतिकासम्म जागिरे भएर पनि खुट्टा टेक्न सकेको छैन । (४)=बहसमा अडिनु । यस कुरामा तिम्रो खुट्टा टेक्ने बाटै छैन । (५) साधारण अर्थ । खुट्टा टेक्नै पाएको थिएन, घचेडिदिएपछि लड्दैन त ?

**खुट्टा तन्काउनु, तान्नु**—(१)= बसीबसी कुँजिएको खुट्टालाइ चलाउन टहलिनु । अनि पट्टाइ लागेर आयो, 'भएन खुट्टा तन्काउनु पर्‍यो' भनी वनमा यताउता घुमफिर गर्न लागे । —बोधविक्रम (दन्त्यकथा) । (२)=मर्नु । अस्तिसम्म बुढाथोकी हिंड्दै थियो, बिचराले हिजो खुट्टा तन्काएछ । (३) साधारण अर्थ ।

**खुट्टा निदाउनु**—=खुट्टा लाटिनु। यसो हुँदा अर्कोलाइ चिमोटेर उसले आत्था भनेपछि निको हुन्छ भनी नजीकको मान्छेलाइ चिमोट्ने गर्छन् ।

**खुट्टा पर्नु**—=पाउ पर्नु ।

**खुट्टा फर्काउनु**—=पैतला देखिने गरी माथितिर फर्काई घुँडा दोब्र्याउनु (यसरी आइमाई बसेको अलच्छिन भन्छन्)। छिः के खुट्टा फर्काएर बसेकी !

**खुट्टा बजारेर हिंड्नु**—=रिस देखाएर भ्याङ भ्याङ गरी हिंड्नु ।

**खुट्टा(पाउ) मल्नु**—(१)= खुशामद गर्नु । भए हुन्छ, न भए हुन्न दश जनाको खुट्टा मलेर हिंड्न सकिन्न । (२) साधारण अर्थ ।

**खुट्टामा बाँधे(झुण्डाए) पनि नसुहाउनु (नखुल्नु)**—= दाँज्दा साह्रै कम हुनु । तँ त मेनकाको खुट्टामा बाँधे पनि सुहाउँदिनस् ।

**खुट्टा लाग्नु**—(१)=हिंड्न सक्ने हुनु (अक्सर बिरामी वा बूढो मानिसको बारे)। तागत हुने औषधि नखाई मेरो खुट्टा

(खुट्टी) लाग्दैन क्यारे ! (२) =ढोग दिनु वा सलाम गर्नुपर्ने मानिसलाइ अनजानमा गोडाले छुनु । विष्णु विष्णु, तपाईंलाइ खुट्टा लाग्यो, खै ढोग दिउँ । (३)=हराउनु, बेपत्ता हुनु । अरु त्यस्तै हो, मेरो ताएकेको खुट्टा नलागोस् ।

**खुट्टा हाल्नु**—(१)=पस्नु । कुन साइतमा यो घरमा खुट्टा हाल्न आइछु!–रुद्रराज (चम्पा काजी)। (२)=खुट्टा जड्नु । पुतलीको खुट्टा हाल्यौ ?

**खुदो हुनु**—=हाइसञ्चो हुनु । त्यो केटीलाई निकाल्यौ भने त बलेलाई झन् खुदो हुन्छ ।

**खुले आममा**—=सबैको मुखिझेल । त्यसले मलाइ खुले आममा अपमान गऱ्यो ।

**खुवाको पेडा जस्तो**—सेतो नखिएको दामलाइ दृष्टान्त दिने बोली ।....सेतेको सुर्ती हाल्ने बासामा आठ ओटा सेता सेता डबल खुवाका पेडा जस्ता।–भीमनिधि (सहनशीला सुशीला)।

**खूब गर्नु**—=खूब असल गर्नु । अस्ति मलाई दुःख पर्दा तिमी दुइ दाजुभाइले खूब गरिदियौ । (वक्रोक्ति) केटाकेटी पाएर त्यो बिचरोलाइ पिटेछौ, खूब गऱ्यौ !

**खेत कमाउनु**—=खेतमा बाली-नाली लाउनु । यो खेत कसले कमाएको छ ?

**खेती नपाए[को] जस्तो**—दोहऱ्याई दोहऱ्याई उही काम गर्दा भन्ने । क्या हो, खेती नपाएको जस्तो आज पनि शिकार, भोलि पनि शिकार, जैले पनि शिकार !

**खेप हाल्नु**—=एक पटकको भारी बोक्नु । एक एक खेप हाले ता जम्मै माल उठिजान्छ नि ।

**खेर जानु, फाल्नु, हाल्नु**—=काम लाग्ने माल बेकाममा मिल्किनु, मिल्काउनु । खालि अस्तु फ्याँकदा, जिवातले खान्छ। गङ्गाजिमा नरही, तेसै खेर जान्छ॥–शिखरनाथ (गंगामहात्म्यको सवाई)।....त्यत्रो मेहनत सित्तिमा खेर जाने भयो ।—श्री अर्जुन(स्वप्नवासवदत्ता)। मेरो तालिम तैँले खेर फालिस्,



त्यसैले हँ स्वर्गमा वरुन पाउन्नस् भनेर उपाध्यायबाट शराप भयो।–श्री केसर(विक्रमोर्वशी)।

**खेल पर्नु**—(१)=कपटप्रबन्ध हुनु । एक् थोक् क्या त भयो अवश्य म गयाँ कुन् दुष्टका खेल् पऱ्या ॥—भानुभक्त (रामायण)। (२) साधारण अर्थ। पासामा दुइ दाज्यूभाइको खूब खेल परिरहेछ ।

**खेलाना वा खेलाँची गर्नु**—=मर्म पर्ने गरी जिस्क्याएर हाँसो गर्नु, मजा गर्नु । तिम्रो अर्कालाइ खेलाना गरी गरी रुवाउने बानी मलाइ कत्ति कल पर्दैन ।

**खेली खेली खान पुग्नु**—=काम गर्न नपर्ने सम्मको धनी हुनु । मैयाँ नानीलाइ कसैको पाउ मल्नुपर्दैन, खेली खेली खान पुग्छ ।

**खोइरो खन्नु**—=भित्र भित्र बिगार्न खोज्नु (खोइराले पिंडालुहरूको भित्र भित्र खाने रीतलाइ सूचन गरी)। पाएसम्म तैँले मेरो खोइरो खन्छस् !

**खोकी लाग्नु**—रोग लाग्नु(मा हेर)।

**खोजखबर राख्नु**—=सोधपूछ गर्दै गर्नु । पति सेवामा व्यस्त थिइन्—देवरले दुःख पाए कि भनेर खोज खबर बराबर राख्तथिन् ।—रुद्रराज (रूपमती)।

**खोजी पस्नु**—=खोजीनिती गर्नु। खोजी पसेपछि केही न केही त थाहा हुन्छ ।

**खोजी मर्नु**—=साह्रै दुःख गरी खोज्नु । सानेको टोपी खोजी मर्दा पनि पाइएन ।

**खोटो कर्म**—=अभाग । कसैलाइ दोष दिन्न आफ्नो खोटो कर्मलाइ नै दोष दिन्छु । हरे !! कस्तो खोटो कर्म ?—श्री केसर (विक्रमोर्वशी)।

**खोते थाप्नु**—=दुइ कुरामा जुन रोजे पनि अपठ्यारो पर्ने गरी अड्को राख्नु । भात खान गयो भने पनी खोते थापि थापिकन तरकारी थोर दिएर भाउज्यूले मलाई हेला गरिन् भनेर उड्कने ....। रुद्रराज (रूपमती)।

**खोलो बगाउनु**—=बेसरी खर्च गर्नु वा खेर फाल्नु । नानीको पास्नीमा पैसाको खोलो बगाइ-

दिए।—रुद्रराज (रूपमती)।

**खोसमोस नास्ति**—=खोसमोस गर्न नहुने ( लालमोहर, सनद, आदिमा पर्ने बोली )। खोसमोस नास्ति गरी पाएको बिर्तामा के झगडा उठाउँछस्?

**खैला परेकी सुत्केरी**—=अशक्त अवस्थामा परेकी सुत्केरी। खैला परेकी सुत्केरीलाइ सबैले हेरचाह गरिदिनुपर्छ।

**खैला परेको गाई**—=अवस्थाले गर्दा बन्धन परी केही काम गर्न नसक्ने मानिसलाइ दृष्टान्त दिने। अहिले म खैला परेको गाई भइरहेंछु, मबाट केही हुँदैन।

**खैला पर्नु**—=खाल्टामा पर्नु ( उपमा अर्थमा बाहेक सदरिया बोलीमा अब यसको प्रयोग हराइसक्यो )। साहु काढेर बेपारको काम उठाएको त खैला (= ठूलो नोक्सानीमा) परेछन्। खोला (आपतमा) परेकोलाइ उतार्‍यो।

**ख्याउँ ख्याउँ गर्नु**—(१)= (कुकुर) भुक्नु। यो कुकुर कति ख्याउँ ख्याउँ गरिरहन्छ। (२)=कचकचाएर खेदो गर्नु। ज्यादा ख्याउँ ख्याउँ गरिरह्यो भने नोकर टट्टाउँछन्।

## ग्

**गँगटाले समाते जस्तो**—= समातेपछि छाड्दै नछाड्ने पक्राइलाइ दृष्टान्त दिने।

**गउँत मन्तराइ**—=सुनलाइ खोल हाल्ने काम ( गउँत आफै पवित्र हुनाले त्यसलाइ मन्तरेर शुद्ध गर्नै जरूरत छैन भन्ने सूचन गरी )।

**गए गुज्रेको**—=बितिसकेको। गए गुज्रेको कुरा झिकी रन्की गर्नु फजूल छ।

**गङ्गाजल छुनु वा हातमा लिनु**—कसम खाँदा। तिम्रो एक पैसा लिएको छैन भनेर गंगाजल हातमा लिएर भन, म छाडिदिन्छु।

**गङ्गास्नान गर्नु**—=कुनै कुरा बिलकुल छोड्नु।

**गजघट्ट परेर बस्नु**—=डेग नचलेर चाहिनेभन्दा बढ्ता ठाउँ लिएर बस्नु। मान्छे आएको देखेपछि सरिदिनुपर्छ नि, गजघट्ट परेर बस्ने हो?



**गजधुम्म परेर बस्नु**—=मै हुँ जस्तो गरेर बस्नु। ओहो! तिमी त मेचमा गजधुम्म परेर बसेछौ नि।

**गजब गर्नु** (१)—=अन्याय वा हद गर्नु। दुइ दिनमा ल्याउँछु भनेर लगेको किताब वर्ष दिन भइसक्यो अझ ल्याएनौ—तिमीले त गजब गर्‍यौ। (२)=आश्चर्य लाग्दो काम गर्नु। लालेले ताशको चटक गरेको तिमीले देख्नै पाएनौ, गजब गर्‍यो।

**गज्केर पाकेको**—=आफू खूब छु भन्ने सझेर टिम्कनु। त्यति कली लाउन पाउँदैमा दमना गज्केर पाकेकी, हेर न!

**गठ बाँध्नु**—=एकै मतोका मानिसहरुलाइ एकत्रित गर्नु। ती बदमाशहरूले ठूलो गठ बाँधेका छन् भन्ने सुनेको छु।

**गढ खोल्नु**—=कुरा फुस्काउनु।

**गणेश बटार्नु**—बिहा व्रतबन्धको आरम्भमा जोडी टपरीमाथि एउटै पहेंलो कपडा ओछ्याई खुदोमा मुछेको खट्टेको पीठोका दुइटा शङ्काकार थुप्रा त्यसमा बनाई त्यही कपडामा पोको पारेर अर्को डोरीले साइतमा बाँधी मुखमा दूबो फूल इत्यादि घुसारी सिंगार्नु। यो बाँध्नालाइ दुइ जोडी सधुवा वा कन्या चाहिन्छ। दुवै पोकाबाहिर टपरीमा छोराछोरी बनाई कसारहरू हालेको हुन्छ।

**गत**—'हालत, अवस्था'को अर्थमा गतिको ठाउँमा 'गत' प्रयोग हुन्छ तापनि 'के, कुन, त्यो, यो गत, सद्‌गत'मा बाहेक अन्यत्र प्रयोग गर्न हुँदैन। राजर्षिको के गत छ नि! श्री केसर (विक्रमोर्वशी)।

**गति न गरासको**—=अनुहार वा पहिरनमा हेरिनसक्नुको। दुब्लाएर बहिनीको त गति न गरास भएछ (गति गरास केही छैन)। के गति न गरासको लुगा लाएर आएको?

**गति न पति**—=हुर्मत नरहनेसम्मको हीनावस्था। गति न पतिको लुगा लाएर पाहुनाको अगाडि आउँदा मलाइ रिस उठ्तैन त?

**गति न मतिको**—=पहिरन र बुद्धि बिग्रेको। गति न मतिको मान्छेलाइ मेरो छोरी दिन्न।

**गति पर्नु**—=मरेपछि कर्मानुसार पापधर्म भोग्न जानु। इ चारको दर्शन न गरेर मर्ने। गति पर्न शक्तैन, आर्को छैन तर्ने ॥—शिखरनाथ (गंगामाहात्म्यको सवाई)।

**गधे पच्चिसी**—=गधाको जस्तो अर्थात् मूर्ख बुद्धि हुने २५ वर्षको उमेर। रनेले गधापच्चिसी पनि नाघेको थिएन, भक्खर २२ वर्ष मात्र टोकेको थियो।—ग्रन्थकार (कथा कुसुम)।

**गफ उडाउनु, लडाउनु, वा हाँक्नु**-(१)=दिल बहलाउने (अक्सर लम्बे चौड़े) कुरा गर्नु। (२)=नभएको कुरा गर्नु। तिमी त गफ मात्र उडाउँछौ, अस्ति आउँछु भनेर आएनौ।

**गफ चुट्नु**—=गफ उडाउनु। धारामा गफ चुटिरहेकी होली अब।—रुद्रराज(रूपमती)।

**गफी बट्टाइ**—=ढँटुवा मान्छे (खूब बोल्ने तर लडाउँदा एक दुइ लात खाँदैमा भाग्ने बट्टाईबाट कुराले भने खूब काम गर्ला जस्तो देखाउने तर काम नगर्ने मान्छेलाइ प्रयोग हुने)।

**गफूफा मार्नु**—=ठूल्ठूला गाँस वा फाँको हाल्नु। कसैले पत्ता नपाउने गरी पेंडाको गफूफा मार्थिन्।—रुद्रराज (रूपमती)।

**गम खानु**—=पर्खेर विचार गर्नु। ठूला अग्ला घरहरू खडा गर्नालाई केही दिन गम खाई वर्षा पछि बनाउनु बेस होला भन्ने राय प्रकट गरेका छन्।—श्री ३ जुद्ध (भूकम्प-भाषण)। षडक्षरी मन्त्र जो, पढिकन जानू। नाभितक जलमा, पुगी गम खानू ॥—शिखरनाथ (गंगामाहात्म्यको सवाई)।

**गम पाउनु**—=अन्त पाउनु। ....उनी यस्ती असाधारण राम्री छन् कि हामीले गमै पाउँन शक्तैनौं।—श्री केसर (विक्रमोर्वशी)। बोल्नै नबोल्ने भएपो मारे. त्यस्ताको गमै पाइंदैन।—रुद्रराज (चप्पा काजी)।

**गयल पर्नु, हाल्नु**—हामी 'हाजिर पर्नु, हाजिर हाल्नु' कहिल्यै भन्दैनौं तर 'गयल हुनु,



गर्नु' पनि प्रचलितै छ। (गैर पनि हेर)।

**गरम मिजाज**—(१)=रिसाहा बानी। गरम मिजाजको मान्छेसंग ठट्टा नगर। (२)=रिस। अहिले त्यो गरम मिजाजमा छ नबोलाऊ।

**गरी खानु न मरी जानु**—(१)=काम गरेर खान पनि नसक्ने, प्राण पनि नजाने। बिचरा सेतीको आमालाइ बात लागेर गरी खानु न मरी जानु भइरहेछ। (२) ज्यादै गाह्रो भई काम गर्न नसक्ता भन्ने बोली। यसो गरे पनि हुन्न, उसो गरे पनि हुन्न, म ता आजित भइसकें—गरी खानु न मरी जानु।

**गर्ज टार्नु**—=जरूरी परेको कुरामा सहायता दिनु। आज भोलि लौ गर्ज टारि द्यूँ, पर्सि रित्तिये फेरि निस्तिये गर्नु के? हरे! बुद्धि सिद्धियो।—धरणीधर (नैवेद्य)।

**गर्धन काट्नु**-=मार्नु (आफूलाइ निश्चय भएको कुरा घमण्ड गरी भन्दा कबूल गर्ने वा जिद्दी गर्दा भन्ने बोली)। यो घोड़ा चढ्न सकिन भने मेरो गर्धन काटिदेऊ। चुरोट त म गर्धन काटे पनि छोड्न सक्तिन।

**गर्धन चिलाउनु**—=काटिन खोज्नु यो खसीको गर्धन चिलायो क्यारे, मलाइ मासु खाऊँ खाऊँ लाग्यो।

**गर्धन जानु**—=मारिनु (जिद्दी गर्दा भन्ने बोली)। गर्धन गए पनि आज म तँलाइ छोड्दिन।

**गर्धन दिनु**—=काटिनु, मारिनु (आफूलाइ निश्चय भएको कुरा घमण्ड गरी भन्दा कबूल गर्ने बोली)। तिमीले यो खाडल फड्केर नाघ्न सक्यौ भने म गर्धन दिउँला।

**गर्धन पसार्नु, फुलाउनु**—=रिसाएर ठुस्स पर्नु, नबोल्नु। २।३ छाक बुढियालाई के भात पकाउन परेको थियो गर्दन पसार्न थालिहालिन्।—रुद्रराज (रूपमती)। ('फुलाउनु' चाहिं साधारण अर्थमा पनि प्रयोग हुन्छ) सुखीका सुखको साक्षी दुःखीको दुःखको दुःख-बर्धन। कुल्कन्छ रातमा झुल्का फुलाई खूब गर्धन।—लेखनाथ (ऋतु-

विचार)।

**गर्धन [परक] बटार्नु, निमोठ्नु**—=रिस उठेको मानिस देखता रिस देखाई अर्कोपट्टि टाउको फर्काउनु। तिमीलाइ मैले के गरें र मदेखि गर्धन परक बटार्छौ ?

**गर्नु गर्नु**—=गरेर हुनेसम्म अपकार गर्नु। तिम्ले गर्नु गर्‍यौ मलाइ अहिले बिर्सी नसक्न्या क्रिया।—मोतीराम (प्रह्लाद भक्ति कथा)।

**गर्नु नगर्नु गर्नु**—=गर्ने कुरा त परै रहोस् नगर्ने कुरा पनि गर्नु, हरतरह गर्नु (असल खराब दुवै कुरामा लाग्छ)। हामीले पनि कर्मका वश परी गर्नू न गर्नू गर्‍यौं। काम क्रोध र लोभका भुँवरिमा खर्लप्प सप्पै पर्‍यौं॥ —धरणीधर (नैवेद्य)।....जसको निमित्त मैले गर्नु-नगर्नु काम गरें, आज उसैले मलाई धोका दिई विपत्तिको भयङ्कर खाडलमा ढकेली हिंडी........।—भवानी (यौवनको आँधी)। यो नानी भन्दामा मैले गर्नु नगर्नु गरेकोछु, आज मलाइ यसरी हेला गर्ने ?

**गर्ने कृति गर्नु, गर्ने नगर्ने कृति गर्नु**—=गरेर हुनेसम्म केही कुरा बाँकी नराख्नु (कृति= काम; यो शब्द यी वाक्यांशमा बाहेक अन्यत्र प्रयोग हुँदैन)। यो छोरो सपार्नालाइ मैले गर्ने कृति पनि गरें नगर्ने कृति पनि गरें।

**गर्मागर्मी पर्नु**—=झोक्का झोक्की पर्नु। अस्ति किताबको कुरामा जेठाको र मेरो गर्मागर्मी पर्‍यो।

**गर्मी उतार्नु**—(१)=सेखी झार्नु। यसको गर्मी उतार्छु म पानी सिस्नुले।—भीमनिधि (सहनशीला सुशीला)। (२)=शरीरमा घुसेको गर्मी निको पार्नु। अस्ति वैद्यलाइ देखाएको गर्मी उतार्नुपर्छ भन्यो।

**गलक्क [भएर] पाक्नु**—=फतक्क गलेर पाक्नु। मलाइ गलक्क पाकेको आँप मीठो लाग्दैन।

**गलचेप लाउनु**—=नगरी सुखै नपाउने करमा पार्नु।

**गल लाग्नु**—(१)=(वचन)नटेरे-



कोमा धोखा खानु। लड्यौ ? आज घोडा नचढ भन्दै थिएँ, मेरो वचन गल लाग्यो कि लागेन ? (२) =सुक्खा भई घाँटीमा अड्केर हिक्का लाग्नु। निस्तो भातले गल लाग्छ।

**गलहत्ती लाउनु**—=घोक्र्याएर निकाल्नु। एक चोटि भन्दा सुरुक नगए त गलहत्तो लाग्ला नि।

**गलाको हार**—=ज्यादै प्यारो व्यक्ति, जसलाइ टाढा राख्न सकिन्न। सानु कान्छो उसको गलाको हार भइरहेछ।

**गला खुल्नु**—=पूरा स्वर आउनु (गवैयाको बारे)। त्यो वस्तादको आज गला खुलेको रहेनछ।

**गला बस्नु**—=साबिक बमोजिमको भन्दा कम स्वर निक्लनु। गाउँदा गाउँदै उसको गला बस्यो।

**गला रेट्नु**—=घाँटी रेट्नु(हेर)।

**गल्लीको कुकुर(कुत्ता)**—ज्यादै हेला गर्दा प्रयोग हुने। ज्येठानीको त के भाउ थियो र! बरू गल्लीका कुक्कूरको केही आउ राखित हुन्।—रुद्रराज (रूपमति)।

**गश खानु**—=मूर्छा पर्नु, बेहोश हुनु (यो वाक्यांश छक्क पर्नुको अर्थमा प्रयोग हुन्छ)। चक्कर बहादुर काजीले गश खाए।—रुद्रराज (चप्पा काजी)।

**गहभरी आँसु**—=सजलनेत्र ('गह' यस वाक्यांशमा बाहेक एकलै प्रयोग हुँदैन)। यो नयाँ कन्दलीले.......रीसले कोश लाल भई गहभरी आँसु टलपल भएका तिनका दुई आँखा मलाई संझाउँछ।—श्री केसर (विक्रमोर्वशी)। बज्यैले गहभरी आँसु लिनुभएछ।—श्री अर्जुन (स्वप्नवासवदत्ता)।

**गहिरो बुद्धि**—=धेरै पछिसम्मको परिणामको विचार राख्ने समझ।

**गहिरो मान्छे**—=गहिरो बुद्धि भएको मान्छे।

**गहिरो रङ**—=झट्ट हेर्दा आकर्षण नगर्ने तर हेरिरहँदा झन् झन् राम्रो लाग्दै जाने किसमको रङ। यो फरिया तिमीहरू नराम्रो भन्छौ, झन् यसको गहिरो रङ छ।

**गहिरो हिस्सी**—यसमा 'गहिरो' को अर्थ माथिको जस्तै हो ।

**गह्रौं आङ हुनु**—=पेट बोकेकी हुनु ।

**गाँठ गुमाउनु**—=पूँजी हिंडाउनु ।

**गाँठो पार्नु**—(१)=मतो मिलाउनु, मेल राख्नु (अक्सर गिज्याउँदा वा रिसको बोली) । दश जनासँग गाँठो पारेर हिड्नेलाइ त्यस्तै हुन्छ । (२) साधारण अर्थ । धागोमा गाँठो नपारेर सिए फुस्कन्छ ।

**गाँडको ओखती**—खान गाह्रो मान्दा दृष्टान्त दिने बोली (गाँडको ओखती तीतो हुने हुनाले) । यो मान्छेलाइ एक छाक सिन्कीको तिहुन खान पनि गाँडको ओखती खानु जत्तिकै छ ।

**गाँस गर्नु**—(१)=ज्यादै लालच गरी अरूले माथि गाँस लग्यो माथि तल लग्यो तलै हेरिरहनु । ऊ कहिले उठ्ला र पुरामा बसुँला जस्तो गरी के गाँस गनिरहन्छस् ? (२)=खान मन नहुँदा वा अरू कारणले आलेटाले गरी खानु । खान मन छैन भने गए भइगो नि, किन गाँस गनेर बसिरहेको ?

**गाँस र वास**—=खाने सामल र बस्ने घर ।

**गाँसे लाग्नु**—=भतुवा लाग्नु । हिजोदेखि हाम्रो गाउँको सानु कान्छा यहां गाँसे लाग्न आएको छ ।

**गाइनेको घोडा जस्तो**—=साह्रै दुब्लो घोडालाइ दृष्टान्त दिने बोली ।

**गाईको *मासु*(*रगत*) खाने(नु)**—=किरिया हाल्दा प्रयोग हुने । गाईको मासु खानु भए अब खराब संगत गरौंला ।—रुद्रराज (रूपमती) ।

**गाई फुने(फुकाउने) वेला**—=दश बजेतिरको समय । गाई वस्तु फुकाउने वेला भएको थियो ।—गुरुप्रसाद (कथा कुसुम) ।

**गाई बाँध्ने वेला**—=साँजभन्दा केही अगाडिको समय ।

**गाउँ खाने कथा, जान्ने कथा**—=कूट (हल गर्न नसक्नेले सोध्नेलाइ नाउँ मात्रको गाउँ नदिएसम्म सोध्नेले आफ्नो कूटको अर्थ नखोल्ने चलन हुनाले । अत्ती न पत्ती····इत्यादि पनि हेर) । 'सानो नानीले सुर्के चन्दन लाएको' गाउँ खाने कथा हो,—यसको अर्थ 'मासको गेडा' ।



**गाजल थाप्नु**—=मोसाको थुप्राको आकारबाट छोरो हुन्छ कि छोरी हुन्छ भन्ने लक्षण थाहा पाउनालाइ वा आँखामा लाउनालाइ बत्तीको ज्वालामाथि पित्तले वा काँसको थाल घोप्टयाई धूँवाको मोसो जमाउनु । सानीले के पाउँछे गाजल थाप्नुपर्‍यो ।

**गाडा कराए जस्तो**—जुन पांग्रे वस्तु पनि तेल नपुगी वा पुरानो भई चुइँ चुइँ कराउँदा दृष्टान्त दिने ।

**गानु जानु**—=शूल हुनु ।

**गानु जाला जस्तो गर्नु**—=धेरै गाह्रो मान्नु । यो केटी अरूको काम गर्न परे त गानै जाला जस्तो गर्छे ।

**गाभ राख्नु**—=कुरा लुकाइराख्नु (यस वाक्यांशमा बाहेक अन्यत्र गाभ शब्दको प्रयोग हराइसक्यो) । एउटा कुरामा तिमीले मलाइ गाभ राख्यौ नि ।····अरेरे हांस ! किन गाभ राख्तछौ ? श्री केशर (विक्रमोर्वशी) ।

**गारो लाउनु**—=घरको भित्ता वा पर्खाल बनाउनु ।····आफ-आफैले ढुङ्गा इत्यादिको गारो लाउने,·······डकर्मीको काम गरेको देखिएकै छ ।—श्री ३ जुद्ध (भूकम्प-भाषण) ।

**गाल टार्नु, बचाउनु**—(१)=झारा तिर्नु । कुचो ला भनेको त गाल टारेर मात्रै गएछ, टेबिलको धूलो त्यसै छ । (२)=टाउको जोगाउनु । तलमाथि पर्‍यो भने त आफैले सजा खानुपर्छ, तिम्रो गाल टार्न कोही आउँदैन ।····महाराजबाट इजाजत बक्से देव देवबाट आफ्नो गाल बचाउन चाहन्छिन् ।—श्री केशर (विक्रमोर्वशी) ।

**गाल पर्नु, पार्नु**—=दोष आइलाग्नु, दोषभागी तुल्याउनु ।

**गाला चड्काउनु ठोक्नु, पड्काउनु, फोड्नु, रन्काउनु**—=लपेटाले आवाज आउने गरी गालामा हान्नु ।·······

भन्दै गाला चड्‌काउँदै झर्कन लागिन्।—रुद्रराज (रूपमती)।

गाला(मुख)मा रगत छुउन्ज्याल—=उमेर वा तागत भए सम्म। यो माया गालामा रगत छुउन्ज्याल त हो नि।

गालि खानु—=दुर्वचन सुन्नु, खप्कीमा पर्नु। अर्काको माल नचलाऊ फेरि गालि खानुपर्ला।

गिदी खानु—=मगजलाइ दखल पर्ने किसिमको शोक, सन्ताप, वा विचार पर्नु। घरको झन्झटले मेरो गिदी खाइसक्यो।

गिन्ती हुनु—(१)=हिसाब हुनु, गनिनु। यो रूखको सुन्तलाको गिन्ती भयो? (२)=लेखा हुनु। यस्तो फर्सीको हाम्रो बारीमा गिन्ती नै छैन। (३)=भाउ हुनु। दर्बारमा गिन्ती नभएको मानिसलाइ को टेर्छ?

गिरिङ खेल्नु—=घिरख खेल्नु (हेर)।

गीत गाउनु—(१)=बदनाम गर्नु। मानिसले गीत गाइसके, अझ तिमीलाइ चेत छैन। (२) साधारण

गुइयाँ पार्नु—=गांठो पार्नु (१ हेर)।

गुगुती (घुघुती) खेलाउनु—=आफू उत्तानो परी बालखलाइ जोडेका दुइ खुट्टाको काठीमाथि चढाई 'घुगुती-बासुती-नानीको आमा-कहां छ?'''''''' इत्यादि' भन्दै पीङ खेलाए जस्तो गरी तलमाथि गर्नु।

गुड्डी हाँक्नु—=धाक छोड्नु, नचाहिंदो फूर्ति लाउनु।''''गुड्डी हाँक्तैमा काम बन्ने होइन हामीले त मगज खियायौं, मुढ भिजायौं।—रुद्रराज (प्रायश्चित्त)।

गुदी हुनु—=(१) खुबी, विद्या, वा धन हुनु।''''मजस्ता क्यै गुदि न भएका पुरुषले अर्के चाल समात्ता एक प्रकारको धृष्टता ठहरिने छ।—शिवप्रताप (दुर्गेशनन्दिनी)।

गुन गाउँनु—=तारीफ गर्नु (अक्सर ठूलो मानिसलाइ)। हाम्रो सुब्बाबाजेको सबै गुन गाउँछन्।

गुन मान्नु—=कृतज्ञ हुनु, आफूलाई गरेको उपकार देख्नु। असंतुष्ट करियाले भन्दा मालिकको गुन मानी रहेका वर्ति नोकर चाकरले कस्तै पनी बढिया काम दिने हुन्छन्।—श्री३चन्द्र (अमलेख-भाषण)। ठूलो भएपछ अब भक्त भनेर मैले। हजार हात् गरिदिंदा गुन मान्छु कैहे ॥—मोतीराम (उषा चरित्र)।

गुन लाउनु—=उपकार गरिदिनु। कउन गुन लगाञा मान्नु पर्न्या हुजुलें। अझ घर पर पारी जाहि स्याला मनीले।—मोतीराम (उषा चरित्र)। तिमीले लायौ सँधैको गुन, म तिर्न शक्दिन, ज्यानको दाम तिमीले दियौ म तिर्न शक्दिन, सँधैको ऋणी, म तिर्न शक् दिन।—लक्ष्मीप्रसाद (मुनामदन)।

गुमस्ता गर्नु—=सल्लाहबात गर्नु (रिस वा गिज्याउँदाको बोली)।

गुरुमुख हुनु—=मन्त्र सुन्नु। परार राम नवमीमा मै सँग गुरु मुख भई।—गुरुप्रसाद (कथा कुसुम)।

गुर्जाको लहरो बटारिए जस्तो—=खूब बटारिएको वस्तु वा व्यक्तिलाइ दृष्टान्त दिने बोली।

गुलाफी छेड—=छुँदै नछोएको जस्तो गरी घुमाएको पेच। गुरुले मलाई त केही भन्नुभएन, स्यामुसंग कुरा गरे जस्तो गरी मलाइ गुलाफी छेड हान्नुभयो।

गुलियो चटाउनु—=लोभ देखाउनु। एक पल्ट गुलियो चटाइदिएको त निकै उफ्रन्छौ ए!—रुद्रराज (चप्पा काजी)।

गुहा[ई] बक्नु—=साक्षी भएर देखे सुनेको कुरा भन्नु।

गुहुको टीका लाउनु—=दागी हुनु, कलङ्क वा बात लाग्नु, लाउनु। तँलाइ गुहुका टीका लाउन सकिन भने मलाइ थुक भन्नू।

गुहु खाएको जस्तो मुख लाउनु—=अलपत्र मुख लाउनु (रिसको बोली)। अघि मैले भनेको नमानेर भोकै आइस् अहिले गुहु खाएको जस्तो मुख लाउनुपर्‍यो कि?

गुहु खानु—(१)=कुकर्म गर्नु।

कहांबाट यसले चोर्न पुगेछ, त्यति **गुहु नखाइदिएको** भए मालिकले तलब बढाइदिन्छु भनेका थिए। (२)=गरे भनेको कुरा होइन भन्नु। तैंले गुहु खाइदिइस्, आफूले देखेको कुरा पनि होइन भन्नु हुन्छ? (३) साधारण अर्थ। कुकुरले **गुहु खान** छोड्दैन।

**गुहु खुवाउनु**—=झूठो साबित गर्नु। ढाँटेको होइन भनेर जिद्दी गरिस्, अहिले हर्कले तँलाइ **गुहु खुवाइदियो**। (२) साधारण अर्थ।

**गुहुधाई**—=दूध भने नखुवाउने तर बालक कालदेखि नै मलमूत्र साफ गरी सह्यार सुसार गर्ने सुसारे। दूध खुवाउने चाहिंलाइ दूधधाई बा बुबुधाई भन्छन्।

**गुहु धुने हात**—=बायाँ हात।

**गुहु धोएको पानी पनि नछिराउनु**—=फुटेको पैसा पनि नदिनु। जति दिए पनि नदेख्ने मान्छेलाइ त **गुहु धोएको पानी पनि छिराउन** मन लाग्दैन।

**गुहु नआनु**—=सन्तोष नहुनु, चित्त नबुझ्नु (कसैलाइ कुनै मानिस नभई नहुने हुँदा प्रयोग हुने)। आफूलाई आनन्देको छोरो नभई **गुहु आउँदैन**, अझ अर्कालाई भन्ने!

**गुहु निस्कने गरी**—=निर्घातसँग, बेसरी (खँदाइ, गोदाइको बारे)। अस्ति कप्तान साहेबले कालुलाइ **गुहु निस्कने गरी** खाँदनुभएछ।

**गुहु पनि नदेख्नु**—(प्रायः मान्छेलाई) नदेखेकोमा जोड दिंदा प्रयोग हुने। तैंले दामोदर त के, दामोदरको **गुहु पनि देखेको** छैनस्।

**गुहु मूत खानु**—=मल मूत्र सफा गरी सह्यार सुसार गर्नु। **गुहुमूत खाएर** तिमीलाइ यत्रो पार्यौं, अब हामीलाइ छिछि दूर दूर गर्न थाल्यौ।

**गुहु र गोबरको छ्यान विचार नहुनु**—=असल र खराब छुट्याउने विवेक नहुनु। आफ्नो गुरुलाइ तल राखेर पढ्ने साथीलाइ कोठामा डाक्यौ—तिमीलाइ **गुहु र गोबरको छ्यान विचार छैन**।



**गुहै चाट्ला जस्तो गर्नु**—=अति प्यारो गर्नु।

**गुह्येश्वरीमा हात हाल्नु**—(१) भयंकर शपथ खाने रीति। (२) साधारण अर्थ।

**गेहें राख्नु**—=इबी लिनु।

**गैर**—हामी गयल नै भन्छौं तापनि पूरा लेख्ता 'गैर' लेख्ने चलन छ।

**गोजी भर्नु**—=आमदानी गर्नु, दाम पैसा जम्मा गर्नु, (साधारण अर्थमा सदरिया गनिदैन)। बेसरी **गोजी भर्न** पाएपछि किन चाकरी नगरोस् त!

**गोटा पर्नु**—=कसिसएको दिसा हुनु। मलाइ त अम्बा खायो कि **गोटा पर्छ**।

**गोटी (चक्की) खानु**—=गोटी (चक्की) मार्नु वा जित्नु।

**गोठालो लाग्नु**—=रखवारी गरी पछि पछि हिड्नु। यसरी रगरग हिंडिरहनेको को **गोठालो लाग्न** सक्छ?

**गोडा पर्नु**—=पाउ पर्नु (हेर)। उसको **गोडा परेत** प्रसन्न होइ हाल्छन् नी।—रुद्रराज (रूपमती)।

**गोडा मल्नु**—=खर्शामद गर्नु, पाउ मल्नु (हेर)। हजुर पनी नाहकमा दाज्यूको **गोडा मलेर** किन बस्ने?—रुद्रराज (रूपमती)।

**गोता खानु**—(१)=दुःख पाउनु। आज मैले हुनसम्म **गोता खाएँ**। (२)=डुबुल्की मार्नु। संसार लहरिमा धेर **गोता खाइस्**। कठै! मन मेरा तैंले बाटो ता बिराइस्॥—धरणीधर (नैवेद्य)।

**गोता जानु**—=कसैसित अनुहार वा बानी मिल्ने हुनु (यो वाक्यांशसित बाबु, आमा, बाजे, बज्यै, जिज्यू बाजे, जिज्यू बज्यै, मावली मात्र प्रयोग हुन्छन्)। बाबु **गोता गएकी** छोरी, आमा **गोता गएको** छोरो लच्छिनको हुन्छ भन्छन्।

**गोता मार्नु**—=पानीभित्र चुर्लुम्म डुब्नु, डुबुल्की मार्नु।

**गोबर [को थाप्रो]मा असिना परे जस्तो**—=कालो छ्याकटे मान्छेलाइ दृष्टान्त दिंदा। बलबन कुरूप थियो, गोबरमा असि-

ना परेको जस्तो मुख थियो…। —रुद्रराज (भारतवर्षको संक्षिप्त इतिहास—भाग २)।

**गोरखे लौही कस्नु**—=सजाको रूपमा गर्धनमा एउटा घुडिखोप्रामा एउटा बाँस तेर्स्याएर ती बाँसलाइ एकै ठाउँमा जोल्टचाई बाँधनु। अहिले पनि यस्ता उल्लूलाई लगेर गोर्खे-लौरी कसेर निर्लाम पार्न छाडेर कठैबरा भन्दछे, झिन नबिग्रोस्!—रुद्रराज (प्रायश्चित्त)। गोर्खे लौरि कसे झनो शरिर सब् खुम्च्याइ डल्लो परी। चलमल् गर्न नपाउदा अझ तहाँ बाधा हुने बेसरी॥—डिल्ली (यूरोपयात्र)।

**गोरु चुटाइ**—=उग्र पिटाइ।

**गोरु जोताइ**—=काममा खूब घोट्टा। खानुपिउनु केही छैन, गोरु जोताइ मात्र भएपछि को टिक्न सक्छ ?

**गोरु (जेठी सासूले गोरु) बेचेको साहिनु**—=कता कताको साहिनु वा सानोतिनो कुराको सम्बन्ध। केई न केई गोरु बेचेको साहिनु नाइँ! गोसाईं कुण्ड नुहाउन जाँदा त्यससित संगै वास परेको थियो उसैले आएछ।

**गोरु ब्याउनु**—=खूब फलिफाप हुनु, दिन सप्रेकोले असंभव कुरा पनि संभव हुनु। रुद्र बहादुरको भाग्य बलिरहेछ, अहिलेको बखतमा उसको गोरु पनि ब्याउँछ।

**गोरुमूते धर्को**—=नागबेले धर्सो।

**गोल जम्नु**—=धेरै जना सहमत भई एकत्रित हुनु। गोल जम्न दियो कि एक न एक उपद्रो मच्चिन्छ।

**गोल बोली**—एउटालाई नकिटी सबैलाई मुछ्ने वाक्यांश।

**गोली खानु**—(१)=गोली हानिमानु। त्यहाँ तारा हान्न लागेका छन्, उसैले गोली खान मन लागे मात्र त्यो बाटो जाऊ। (२) =गोली ओखती खानु। झोल ओखति खाएको १९ मिनेटपछि गोली खाऊ।

**गोली छुट्नु**—(१)=झुकानमा बन्दूक पड्केर गोली फुत्कनु ('किञ्चित नमान्नु' को उदाहरण हेर)। (२)=बारुद पड्केर गोली उछिट्टिई बन्दूकबाट निस्कनु। गोली छुट्नु बेर न मिर्ग ढल्नु बेर। (३)=गोली ल्याउन बिर्सनु। ज्या! गोली त घरै छुटेछ, अब यो बन्दूकले मात्र के शिकार गर्ने!

**गोली ठोक्नु, पिलाउनु**—=बन्दूकले हानेर मार्नु।…बडालाठको नाता भएर मात्र कुरा गुपचुप नभएको भए जङ्गीकोर्टले गोली ठोक्ने यस्तो कसूरसम्म आँट्ने—अत्यास कसरी वीर नेपाली फौजले पारे…।—श्री मृगेन्द्र (भानुभक्त स्मारक ग्रन्थ)।

**ग्रह सोझिनु**—=दशा सप्रनु।



## घ्

**घच्कापच्का हान्नु, लाउनु**—=पेच हान्नु।

**घटमा घाम लाग्नु**—=ज्ञान आउनु। कसको घटमा घाम लागेर आज यो गरीबलाइ चारौटा पैसा दिएछ।

**घटेरा बसे झैँ बस्नु**—=कुरेर बस्नु। घटेरा बसे झैँ बसेर खान पाइन्न।

**घडीको घर्स्याँस हुनु**—=समय बित्नै लागेको हुनु। त्यस्तो कुरा त अगिबाटै भनिदिनुपर्छ घडीको घर्स्याँस भएपछि भनेर मैले के गर्ने ?

**घडी डुब्नु**—=समय बितिसक्नु। घडी डुबिसकेपछि मोटर न बग्गी!

**घडी थाप्नु**—=हुनै आँटेको छ भन्ने जगजगी हुनु। कान्छी बुहारीले (सुत्केरी हुन) घडी थापिरहेकी छन्, माहिला दाइको बिहा त छेकिन्छ कि क्या!

**घण्टा लाग्नु**—(१)=घण्टाको आवाज आउनु। घण्टा लाग्नेसाथ हामी सबैले भात खान जानुपर्छ। (२)=त्रिपासा पच्चीसको खेलमा गोटी गएर थर्कीको घाँटीमा बस्नु। (३)=घाँडो लाग्नु।

**घण्टी दिनु**—(१)=घण्टी बजाउनु। मैले घण्टी दिनासाथ पहिलो पर्दा खसाल्नुपर्छ। (२) साधारण अर्थ। एक दिनलाइ तिम्रो घण्टी देऊ न।

**घण्टी लाग्नु**—=घण्टा लाग्नु (१)।

**घत लाग्नु**—(१)=राम्रैसँग मनमा गड्नु। अहिले भने घत लाग्ने कुरा गर्‍यौ है!—रुद्रराज (चप्पा काजी)। (२)=घत वा आशा गरेमाफिकको दाउ पर्नु। अहिले सात पटक भयो मेरो खूब घत लागिरहेछ।

**घनेरा बात**—=धेरै कुरा वा उपाय। अहिलेलाइ यति काम गर्न पाए पछिलाइ घनेरा बात।

**घमण्ड पर्नु**—=बलाबल पर्नु, मतभेद हुँदा आफ्नो आफ्नो जिद्दी नछोड्नु, (घमण्डाघमण्डी पर्नुको छोटकरी रूप)। कसैसित घमण्ड पर्‍यो कि भंडारीको बल दोबर बढ्थ्यो। बले र नारायणमा बले जेठो भन्ने कुरामा तिम्रो बासँग मेरो घमण्ड परेको छ।

**घमण्ड लिनु**—=हठ गर्नु। मालिकको दर्शन गर्न जान्न भन्ने घमण्ड नलेऊ, यस कुराले तिम्रो किमार्थ असल हुँदैन।

**घर अँध्यारो हुनु**—=घर शून्य जस्तो लाग्नु। वसन्ती दी गएदेखि त यो घरै अँध्यारो भयो। (साधारण अर्थमा पनि)।

**घर उज्यालो हुनु**—=घर रमाइलो लाग्नु। भाइहरु आइदिनाले मेरो घरै उज्यालो भयो। (साधारण अर्थमा पनि)।

**घरको आँत पाउनु**—=घरका मानिसको भित्री आनीबानी वा चर पाउनु। घरको आँत सबै पाइसकेकी····चमेलीले त टिक्न नसकेर सुईंकुचा ठोक्नु पर्‍यो भने नौला चाकर वाकर के अड्दथे?—रुद्रराज (रूपमती)।

**घर खानु**—=पोइको घरको सुक्ख दुक्ख बेहोर्नु (आइमाईको बारे)। अखिर छोरीले माइतै बसेर जीवन बिताउन हुँदैन क्यारे!—घर न खाई सुख छैन।—रुद्रराज (रूपमती)।

**घर खेत हुनु**—=सर्वस्व हुनु। ज्यादा जुवा खेलिस् भने तेरो घर खेत होला।

**घर गर्नु. गरेर खानु**—=घरको राम्रो चाँजो पाँजो मिलाएर राख्न जान्नु। यस्तो ढङ्गले ठूलीले कसरी घर गरेर खान आँटेकी छ?····आफ्नो देशमा



फर्केर आई घर गर्न परेको हुँदा अखबारमा विज्ञापन हेरी···· दरखास्त हाल्यो।—भवानी (यौवनको आँधी)।

**घर जानु**—=घरका मानिसको अवस्था पहिले हेरी निकै गलेको हुनु। बूढा कर्णेल कर्णेल्नी परलोक हुनु भएदेखि त यो घर गयो। (२)=घर मासिनु। यो सडक सोझो गरूँ भने त यी दुवै घर जान्छन्। (३)=घर जीर्ण हुनु। सच्याएर साध्य छैन अब यो घर गइसक्यो, यसलाइ भत्काएर नयाँ उठाउँछु। (४) साधारण अर्थ (यसमा विभक्ति 'मा' लोप भएको छ उसैले 'घर'को उच्चारण 'घर्' हुन्न 'घर'नै हुन्छ)। अब घर जान्छु।

**घर जुधाउनु, बझाउनु, फुटाउनु**—=घरका मान्छेहरुमा झगडा पार्नु। यस्ती कुरौटे बेस्सेलाइ राखेपछि आखिर घर नफुटाई छोड्दिन।

**घर जोर्नु**—=आफूलाई घर बनाउनु वा किन्नु।

**घर डुब्नु**—=अलपत्र पर्नु। बालख छोरीहरु थिए, भएकी बूढी पनि मर्नाले ता विचराहरुको घर डुब्यो।

**घर थाम्नु**—(१)=घरमा परिआएको काम चलाउनु। कत्रो मुश्किलले बसेकी रहिछु, कसरी घर थामेकी रहिछु।—रुद्रराज (चप्पा काजी)। (२)=घरको बोझ थेक्नु। यत्रो घर थाम्ने जग सानो हुन्छ?

**घर न द्वार**—=घरबास नभएको। घर न द्वारको मान्छेलाइ हाम्री छोरी कहिले दिन्थ्यौं?

**घर फोड्नु**—(१)=घरका मानिसमा झगडा पार्नु। बलेले सबैलाइ भाँड़ेर हाम्रो घर फोडिदियो। (२) साधारण अर्थ। आज राती चोरले बस्नेत काजीको घर फोडेछ।

**घर बनाउनु**—(१) काममा पठाएको मान्छे चाँडै फर्केर नआउँदा भन्ने बोली। दलेलाइ त्यति चुरोट लिन पठाएको अझ आएन ए, त्यहीं घर बनायो क्यारे! (२) साधारण अर्थ।

**घर बस्नु**—(१)=(आबाद नभएको जग्गामा) रैति आएर

बस्नु । हाम्रो जग्गामा अब २९ घर बसे पुग्छ । (२) साधारण अर्थ । घर बसेको दिनमा तिमीलाइ बोलाइपठाउँला । (३) = खोस्सिनु । माहिला खड्का त घर बस्नेमा परेछन् ।

**घर बिग्रनु**—(१) = घरको थितिबिति नहुनु । बूढी आमै मरेदेखि हाम्रो घर बिग्र्यो—दाल नभएर आज पनि भान्सा अड्क्यो । (२) = लोग्ने स्वास्नीको मेल नहुनु वा स्वास्नी नटिक्नु । छोराको घर बिग्र्यो, उसको अर्का बिहे नगरी भएन । (३) साधारण अर्थ । भइँचालोले गर्दा हाम्रो घर निकै बिग्र्यो ।

**घर बित्नु**— = घरमा हेरचाह गर्ने वा कामकाज गर्ने मान्छे नहुनु । भएका एउटा दाइ पनि लाहुर गएका हुनाले मेरो घर बित्यो, जागिर खाएर भएन ।

**घर भाँड्नु**— = घरका मानिसलाइ बदमाश तुल्याउनु । दाइको घर भाँडेर पुगेन र मेरो घर भाड्न आइस् ?

**घरले जा जा, वनले आ आ** भन्ने वेला हुनु— = उमेर पुगेर मर्ने वेला हुनु (अहिले वानप्रस्थाश्रममा जाने चलन छैन तापनि अघिको चलनलाइ लिएर यसो भन्ने गरिआएका छौं) ।

**घर वास उठाउनु**— = घरबाट निकाल्नु । गरीबको घर वास उठाउनुपर्ने भएकाले मेरो खेतमा कारखाना खोल्न सकेको छैन ।

**घरै उचाल्नु**— = (ठूलो अवाजले) घर थर्काउनु । कराएर घरै उचाल्छन् जस्तो पनी गरे ।—रुद्रराज (रूपमती) । अस्ति मैले एक पटक कान जर्काउँदाखेरि तैँ घरै उचालेर गोस् ।

**घरै उठ्नु**— = घरका सबै मान्छे शत्रु हुनु वा रिसाउनु । मालिकसँग मैले खर्च घटाउनुपर्छ भनेको सुनेर ममाथि घरै उठेरहेछन् ।

**घरै उल्टनु, उल्टेर आउनु वा जानु**— = घरका सारा मानिस घरै शून्य हुने गरी आउनु वा जानु । त्यहाँ फूल टिप्न गइस् भने घरै उल्टेर तँलाइ पिट्नेछन् । अस्ति तिमीहरु घरै उल्टेर नीलकण्ठ गएछौ ।



**घाँटी अँठ्याउनु, पक्रनु, समात्नु**—(१) = नाइँ नास्ति गरेर उम्कने ठाउँ नदिई च्याप्प च्याप्प पार्नु (कुराले) । पण्डित बाजेले तिम्रो घाँटी अँठ्याइदिएपछि तिमीले हो नभना सुक्ख ? त्यसरी घाँटी समातेर कुरा गर्छौ भने हामी पनि अस्तिको कुरा झिकौंला । (२) साधारण अर्थ ।

**घाँटी(घोक्रा)को नशा फुलाउनु**— = बोल्दा गालि गर्दा बल गरी चिच्याउनु वा त्यसरी चिच्याएर बोल्नु, गालि गर्नु । किन घाँटीको नशा फुलाएर बोलाउँछौ, म कान सुनिहाल्छु नि ? घाँटीको नशा फुलाएर मात्र हुन्न सोझो मुखले सम्झाए मोतीलाल बुझिहाल्छ नि ।

**घाँटीको (घिच्रा वा घोक्रा) नापो हुनु**— = वाक्क आउने गरी पेटभरी खुवाउनु । तँलाइ पसि माघे संक्रान्तिमा घाँटीको नापो हुने गरी मासु र भात खुवाउँला र भएन ?

**घाँटीको पासो**— = घोक्रा पासो (हेर) ।

**घाँटी खसखसाउनु**— = घाँटीभित्र चिल्चिलाउनु (परोक्षमा अरूले आफ्नो नराम्रो कुरा गरेमा यसो हुन्छ भन्ने ठानी आइमाईहरु फरिया, खास्टो, वा इँजारको टुप्पामा गाँठो पारी खुट्टाले सात चोटि कुल्चेर त्यसको मारन गर्छन् वा खसखसाउन नछाडेसम्म कुल्चिराख्छन् ) ।

**घाँटी ठाडो लाउनु**— = ठाडो घाँटी लाउनु ( प्रायः साधारण अर्थमा मात्र ) ।....यो मजूर गला भित्र केका बोली भएको घाँटी ठाडो लाएर बादललाइ हेरिरहेछ ।—श्री केसर (विक्रमोर्वशी) ।

**घाँटी निचोनु**—(१) = खानामा वा अरू खर्चमा कस्नु । हाम्रो बा बिराम गर्‍यो भने कुद्नुहुन्न, तर घाँटी निचोर्न भने असाध्य जान्नुहुन्छ । (२) साधारण अर्थ । यो शिकारीले बन्दूक हातबाट खसेपछि भालुको घाँटी निचोरेरै मारेछ ।

**घाँटी निमोठ्नु**—(१) = मार्नु । यो बद्वाइको घाँटी निमोठेर ले । (२) = घाँटी बटार्नु । (३) = (निर्धालाइ) अन्यायमा थिच्नु ।

**घाँटी पर्नु**— =खाँचो पर्नु । सय रुपियाँले मलाइ घाँटी परिरहेछ ।

**घाँटी बटार्नु**—(१)=रिसले वा बढेर मुन्टो परक्क बटार्नु । मोती आजकल हामीलाइ देख्ता घाँटी बटारेर हिंड्ने भइरहिछ । (२) =असजिलो हुने गरी घाँटी फर्काउनु । अगिल्तिर आएर भनन मेरो घाँटी बटारियो ।

**घाँटी भिजाउनु**— =झोल पदार्थ खानु (थोरै देखाएर भन्दा प्रयोग हुने) । एक तुर्को मही दिनुभए त घाँटी भिजाउँदो हुँ ।

**घाँटीमा पासो लाग्नु**— =पासो लाग्नु (हेर) ।

**घाँटी रेटनु, सेर्नु**—(१)= अत्यन्त कष्ट दिनु, अन्याय गर्नु । ती बालखहरुको घाँटी रेटेर तिमी रुपियाँ जम्मा गर्छौ । (२)=अहित गर्नु, विरुद्ध कारबाइ गर्नु । यस्ता घाँटी रेट्ने मित्र हुनुभन्दा शत्रु नै भलो । (३) साधारण अर्थ । उसको जेठाबा घाँटो रेटेर मर्‍यो रे ।

**घाँटी लाग्नु**— =घण्टा लाग्नु (२) ।

**घाँटीसम्म आउनु, पुग्नु**—(१) =(अबगुनले) अघाउनु । तैंले घाँटीसम्मन पुग्ने गरी मेरो बथुवाइ गरेको छस्, म कहाँ बिर्सन्छु र ! (२)=तृप्त हुनु । तिमीले सराद्धका बाहुनहरुलाइ घाँटीसम्म आउने गरी खुवाएर पठायौ ।

**घाँडो झुरिंडनु**— =घाँडो लाग्नु (१, ५) ।

**घाँडो भिर्नु, बोकनु**—(१)= पेट बोकेकीलाइ भन्ने बोली । सातजना छोराछोरी भइसके कति घाँडो भिरिरहन्छ्यौ ? (२)=भतुवा पाल्नु । आफू त के खाऊँ के लाऊँ जस्तो छ दश जना घाँडो भिर्न काम के ? (३)=झंझटको काम बोक्नु । आफ्नो प्रशस्त काम हुँदाहुँदै मीतको वचन हार्न नसकेर अर्को घाँडो भिरेर आएँ । (४) साधारण अर्थ । निकी भन्दाभन्दै पाङ्ग्रीले घाँडो भिरिमाग्न खोजी क्यारे !

**घाँडो लाग्नु**—(१)=पेट बोक्नु वा छोराछोरी जन्मनु (हेलाको बोली)। हेरन दिदी मलाइ त फेरि



घाँडो लाग्यो । (२)=भतुवा लाग्नु । भइँचालोले यसका बाबु आमा मरेछन् उसैले मकहाँ घाँडो लागिरहेछ । (३)=झंझटको काम आइलाग्नु । पल्टनको कामबाट बाँचियो भन्ने लागेको वेलामा कहाँबाट तिमीले यस्तो घाँडो लाइदियैा ! (४)= हटाइनसक्नु हुनु । जति कुटे पनि नगएर यो कुकुर घाँडो लागिरहेछ । (५) साधारण अर्थ । यो गाई चण्डाल छ, घाँडो लाएर (झुण्ड्याएर) मात्र फोइदेऊ ।

**घाँस खाने पशु (बुद्धि)**— = बुद्धि नभएको मानिसलाइ गालि गर्ने बोली । भात खाने वेलामा लौ खाऊ घाँस, तिम्रो घाँस खाने बुद्धि रहेछ भनिदिएं । —रुद्रराज (प्रायश्चित्त) ।

**घाउ पुरिनु**—(१)=दुःख बिर्सनु, दुःखबाट उत्रिनु ।........पहिलो भूकम्पका घाउ पुरिंदा नपुरिंदा तिनिहरूले मानो फेरी दोश्रो भूकम्प भए जस्तो अवस्थाको अनुभव गर्नुपर्ने होला भन्ने छाँट देखिन लाग्यो ।—श्री ३ जुद्ध (भूकम्प-भाषण) । (२) साधारण अर्थ ।

**घाउमा नून छर्नु, छर्किनु**— = दुःखमाथि दुःख थप्नु । यस्तो कुरा गरेर किन नाहकमा घाउमा नून छर्कछ्यैा रूपे ! —रुद्रराज (चप्पा काजी) ।

**घाटमा लगेका मधौरु**—(१)= बम्न लागेको धनलाइ दृष्टान्त दिंद प्रयोग हुने । टोप बहादुरलाइ दिएको पैसा त घाटमा लगेका मधौरु भयो, हात पर्नु त पल्लो फाल । (२) हार्न, बिरनै लागेको अरू कुराको दृष्टान्त दिंदा पनि यो प्रयोग हुन्छ । सयमा अन्ठान्नब्बे प्वाइन्ट पुगिसक्यो गोविन्दे त घाटमा लगेका मधौरु भइसक्यो । (उखान र वाक्यांशमा बाहेक मधौरु शब्द सदरिया गनिन छोडयो) ।

**घाट लानु**— =देहत्याग गर्ने ठाउँमा लानु ; उसैले, घाट लाने वेला हुनु— =मर्ने वेला हुनु । बूढा तेवारी सिकिस्तै भएर घाट लैजाने वेला हुन लाग्यो ।

**घाटे कुकुर जस्ता**— =अर्को मर्ला र त्यसको धनमाल

पाउँला भनेर ढुक्ने मान्छेलाइ दृष्टान्त दिने ।

घान हाल्नु—( १ )=आफ्नो अपराधमा अर्कोलाइ पार्नु । रामेले बिगारेको काममा चामेलाइ घान हालेछ । (२)= एक पटकलाइ पुग्दो परिमाण हाल्नु । अहिलेसम्ममा मकै कति घान हालिसक्यौ ?

घामको खुट्टा निस्की निस्की, बादलको खुट्टा पोल् पोल् —बदली हुँदा घाम लागोस् भनी केटाकेटीले कराउने बोली ।

घाम चढ्नु, छिप्पिनु—=घाम चर्कनु ।

घाम चर्कनु—=सूर्य्यकिरण रापिलो हुनु । हिन्दूको धरमै त येहि बुझनू सागर् र पुण्यै नदी । भेट्यामा उसमा पनी फजिरमा घाम् चर्कनै धेर् नदी॥—डिल्ली (यूरोपयात्रा) ।

घाम झुल्कनु—=(प्रायः पहिलेको कलिलो) घाम निस्कनु । झुल्क्यो घाम् जब पूर्व्वमा अलि अली राता उदाया रवी । स्नान् गर्नाकन ई दुवै गइगया स्नान्का घरैमा पसी ॥—मोतीराम (उषा चरित्र)। होईन फुपू, माथी टाइगर हिलबाट ता अर्कै घाम झुल्केको पो देखिन्छ त ।—रूपनारायण (भ्रमर) ।

घाम ताप्नु—=घाममा सेकिनु । कौसि र सडक सडकमा समेत घाम तापिरहने धेरै थिए । —श्री ब्रह्म (महाभूकम्प) ।

घाम पानी, घाम पानी, स्यालको बिहा, कुकुर जन्ती, बिरालो बाहुन—घाम लाग्दा लाग्दै पानी पर्‍यो भने केटाकेटीहरु स्यालको बिहा भयो भन्छन्, अनि त्यसो भनेर कराउँछन् ।

घाम माथि माथि पुग्नु—=साँझ हुन लाग्नु ।

घाम लाग्नु—=सूर्य्यकिरण पृथिवीमा आउनु ।....घामलाग्नाले कमल फक्र फुलेको तलाउको काखमा सखी सहित विलाप गर्दछे ।—श्री केसर (विक्रमोर्वशी) ।

घिउ (आलु) काट्ने—=धार नभएको भुत्ते (हेलाको बोली)। यस्तो घिउ काट्ने कर्दले सिसाकलम कहिले ताछिन्थ्यो !

घिउ नलाग्ने कुरा—=रस वा सार नभएको कुरा । यस्तो घिउ नलाग्ने कुरा को सुनिरहन्छ ?

घिउमा हात डुबाउनु—= मीठो मीठो खान पाउनु । बेसरी घिउमा हात डुबाउन पाइहाल्छ, मामाको घरमा त्यो किन नबसोस् त !

घिउ र भात—=हदको रोजी खाने वस्तु । अहिले पढे पो पछि घिउ र भात खान पाइन्छ, नानी !

घिन्ना नापो हुनु—=घाँटीको नापो हुनु (हेर) ।

घिरिङ्ग खानु—=गुल्टिनु ।

घि(गि)रिङ्ग खेल्नु—=कमाउने मानिसको परिश्रमको खयाल नगरी सोखसित चल्नु । अर्काको टाउकोमा त्रिरिङ्ग खेल्न पाएका छौ तिमीलाइ खर्च गर्नालाइ के छ र ? (२) =उँधो लाग्नु । माले गोरुले आज पहराबाट घिरिङ्ग खेलेछ ।



घुँडा जोर्नु—(१)=टाँसिएर बस्नु । कालुले मालिकलाइ खूब रिझाएको रहेछ क्यारे, अस्ति मालिकसँग घुँडा जोरेर बसिरहेको देखें । (२)= (भान्छा गर्दा) छोएर वा तलमाथिको खयाल नराखेर बस्नु । ल्याइतेपट्टिको रामुको सात पुस्ताको सन्तानले हामीसँग घुँडा जोरेर खान हुन्छ भन्ने शास्त्रमा छ । (३) साधारण अर्थ । ओहालो लाग्दाखेरि बद्रीनाथको घुँडा जोरिन्छ ।

घुँडा घस्नु—(१)=खूब मिहेनत वा बल गर्नु । हरे ! इ जीव आफुनै ति पापमा घुँडा घसी । गयी पसी सडी मरी कुही सके फसाफसी ॥—धरणीधर (नैवेद्य) । कान्छु खूब घुँडा घसेर पढिरहेछ । (२) साधारण अर्थ । त्यसरी घुँडा घसेर बस्छौ, उसैले पो लुगा चाँडै फाट्तो रहेछ । घुँडा घसिएको सेतो सुरुवाल, पुरानो कमीज, ........।—भीमनिधि (सहनशीला सुशीला) ।

घुँडा पखालेको झोल जस्तो— तर्कारी वा दालको तरलङ्ग परेको बेस्वादको झोल हुँदा दृष्टान्त दिने बोली । घुँडा पखालेको

झोल जस्तो दाल खाँदा खाँदा मत वाक भइसकें ।

**घुँडामा [राखेर] पोल्नु**—शिकार मार्न सक्छ भन्ने एकदम पत्यार नहुँदा भन्ने बोली । तिमीले त्यो चरा मार्न सक्यौ भने त म अहिले नै घुँडामा पोलेर खान्छु ।

**घुँडे भाग**——=भुँडे भाग( को अशुद्ध रूप ) ।

**घुइरो घुइरो कुरा (हल्ला) सुन्नु**——=कताकता—भनेको सुन्नु, भित्र भित्र चलेको हल्लाको कुरा सुन्नु (कुरा सुनाउने मानिस दिन मन नगर्दा पनि भन्ने) । हजुर मैले त पैले नै घुइरो घुइरो हल्ला त सुनेको ।—भीमनिधि (सहनशीला सुशीला) ! तिमी फेल भयौ भन्ने कुरा घुइरो घुइरो सुन्छु नि ?

**घुगुती खेल्नु**—=गुगुती खेल्नु (को अर्को हिज्जे) ।

**घुच्चुकमा ( पछाडि ) गएको बुद्धि**—=हीन बुद्धि ।

**घुच्चुकमा मुड्कीले हान्दा बुद्धि आउनु**——=सजा पाएपछि मात्र ज्ञान आउनु । सोझो मुखले भनेर मान्ने मान्छे होस् र तँ, घुच्चुकमा मुड्कीले हानेपछि मात्र तेरो बुद्धि आउँछ ।

**घुम खानु**——=(चङ्गाको बोली) उडेको वेलामा घुम्नु ।

**घुमाई घुमाईकन कुरा गर्नु**——=भन्न इच्छा गरेको कुरालाई हाँगाबिंगा जोडी लम्ब्याएर भन्नु । यस्तै कुरा सुन्न भनेरनै विमला घुमाइ घुमाइकन कुरा गरी रहेकी थिइन,........।—शिव-प्रताप (दुर्गेशनन्दिनी) ।

**घुम्टो काढनु, हाल्नु**——=घुम्टाले टाउको छोप्नु । उज्यालो हुना साथ तिनिहरुले घुमटो काढ़ी सिर नुहाये । शिव-प्रताप (दुर्गेशनन्दिनी) । त्रिशूली,कौशिकी,कृष्णा गण्डकी-हरुले शिर । लुकाये हिमको घुटो हालो टम्म उँभोतिर ॥—लेखनाथ (ऋतुविचार) ।

**घुम्टयौली नानी**—लाज अथवा दिक्क मानेर मुन्टो लुकाउने मान्छे-लाइ गिज्याउने बोली ।

**घुरानको मूला सप्रे झैँ**—हलक बढेर फस्टाएको मान्छेलाइ दृष्टान्त दिने (होच्याएको बोली)।



**घुरानमा सियो खोज्नु**——=थुप्रोमा मिसिई वा ठूलो ठाउँमा खसेर पाउन ज्यादै गाह्रो कुरा खोज्नु । यत्रो भीडमा तिम्रो साथी भेट्टाउन त असंभव छ; घुरानमा सियो खोजेर पाइन्छ ?

**घुर्की लाउनु**——=घुर्की देखाउनु। जो घुर्की लाउँछे, हप्काउँछे, त्यसको पति डर मान्दछ, जो सती रुन्छे डराउँछे झन् त्यसकै पति उसको कमलो कलेजासँग नङछुरी खेल्दछ ।—बालकृष्ण (ध्रुव) ।

**घुसुरपञ्जा लिनु**——=मर्नु । घाँटीमा सुर्काउने गाँठो परेको बिचरो भालू के टिक्तथ्यो एकै छिनमा किक्किक २ गरी घुसुर-पञ्जा लिइहाल्यो ।—बोध-विक्रम (दन्त्यकथा) ।

**घुस्यौटी (पेट) नभएको**——=मनमा कुरा अड्याउन नसक्ने । तिमी त घुस्यौटी नभएको मान्छे छौ, फेरि यो कुरा उसलाइ भनिदेउला नि ।

**घुस्यौटी भर्नु**——=हद्द थोरै मात्रामा पेट भर्नु (दिएको कुरा-मा आँखा नलाग्दा प्रयोग हुने) । त्यति चिउराले त मेरो घुस्यौटी पनि भरिंदैन ।

**घुस्यौटी सेकाउनु**——=ह्याकुलो सेकाउनु ( थोरै देखाएर भन्दा प्रयोग हुने ) । घुस्यौटी सेकाउन पनि नपुग्ने, बाजेले के आगो दिनुभएको ?

**घेरा काट्नु**——=घेरेर बसेका मान्छे इत्यादिको गिर्दाको एक छेउ छिन्नभिन्न पारी बाहिर निस्कनु ।····७० वीर पुरुषहरू-का नेता भई विस्मित भएका विमूढ दुश्मनको घेरा काट्ने बलभद्र थिए ।—श्री मृगेन्द्र ( भानुभक्त स्मारक ग्रन्थ ) । बाघले घेरा काट्यो ।

**घेरा दिनु**—(१)=घेरा हाल्नु (१) । देवताका राजा इन्द्र, स्वर्गका हुन् धनी । दैत्य आइ घेरा दिंदा, भाग्छन् उनि पनी ॥—शम्भुप्रसाद (शम्भु भजनमाला) । (२)=घेरेर धड्पकड् वा कचकच गर्नु । छुट्टीना साथ त चारैतिरबाट साहुहरूले घेरा दिंदा खेरी कुन गति होला साना बाबूको ?

—रुद्रराज (रूपमती)। (३)= घेरा हाल्नु (२, ३)।

**घेरा हाल्नु**—(१)=वरिपरि पैदल वा सवारी चढेका मानिस बस्नु। शत्रुले किल्लामा **घेरा हालिसके**। बाबलाइ **घेरा हाले** भन्ने खबर आयो। (२) =किनारा दिनु। यो ढाल बुट्टा-मा बदामी **घेरा हालेको** कत्ति खुलेको छैन। (३)=रिङ्ग डोरा काट्नु, कुँडुल्क्याउनु। अहिले जति लेखेका छौ त्यसलाइ **घेरा हाली** अरूसँग छुट्याऊ। (४) =वरिपरि बार्नु। बगैंचालाइ जोरन्ती काँढाको **घेरा हाले** साँढे पसोइन।

**घोक्राको रगत पिउनु**—ज्यादै रिसाउँदा वा धम्की दिंदाको बोली।

**घोक्रा नापो हुनु**—=घाँटीको नापो हुनु (हेर)।

**घोक्रा पासो**—(१)=नगरी नहुने अति कष्टदायक काम। कान्छा बाले लाउनु भएको काम मलाइ त **घोक्रा पासो** भइ-रहेछ। (२)=छोराछोरी। (३) =घाँटीमा लाउने कुरा (हेला गरेर भन्दा)। **घोक्रा पासो** पनि फेर्न सकिनस् ? हेरन, कति मैलो गलेबन्दी बाँधेर आएकी ! (४) साधारण अर्थ।

**घोक्रेछुत्ती लाउनु**—=घोक्र्याएर निकाल्नु।

**घोक्रो पसार्नु, फुलाउनु**—= गर्धन पसार्नु, फुलाउनु।…के बोलेको मात्र थिएँ उनी **घोक्रो पसार्न** थालिहालिन्।—रुद्र-राज (रूपमती)।

**घोक्रो (घोक्रा नसा) फुलाउनु** —=घाँटी(को नसा)फुलाउनु।

**घोचेर कुरा गर्नु**—=घच्का-पच्का हानेर कुरा गर्नु। फेरि मलाइ **घोचेर** किन **कुरा गर्नु** पर्‍यो !—बालकृष्ण (कथा कुसुम)।

**घोट्टा दिनु**—(१)=बेसरी परि-श्रम गराउनु। यस पाला छोरा-हरूलाइ **घोट्टा दिएर** पढाइ-रहेंछु, जाँचमा कसो कसो गर्छन् ! (२)=भाङ्को सर्बत खुवाउनु। जेठालाइ एक गिलास **घोट्टा दिएको** थिएँ, लाग्दै लागेन।

**घोडा कस्नु**—=घोडालाइ काठी कसी लगाम खुवाई चढ्न ठीक-ठाक पार्नु। झट्ट **घोडा कसेर** ले।



**घोडा चढ्नु**—=रक्सी धोक्नु (को ठटयौली रूप)। आज गोथे **घोडा चढेर** आएछ। (२)= उभाडिनु, मत्याइनु (हेतुक अर्थ-मा मात्र प्रयोग हुन्छ)। अघि-सम्म भैरवनाथले मंजूर गरेको थियो, अहिले कसकसले **घोडा चढाएर** ल्याएछ कुन्नि। (३)= दुइपट्टि खुट्टा खसाली माथितिर बस्नु। खत्री नातिनीलाई काँ-धमा **घोडा चढाएर** भित्र पसे …।—बालकृष्ण (कथा कुसुम)। कानालाइ पछ्यौरीसाथ मौलाले **घोडा चढ्यो**। (४) =दबाउनु, हेप्नु। एउटो कहाँकी कहाँकी लुठीले **घोडा चढ्न** खोजे पछि कति सहनु ? —रुद्रराज (रूपमती)। (५) साधारण अर्थ।

**घोडी ब्याएझैं, घोडीको ब्याउनु**—सजिलोसंग बालक जन्माउँदा दृष्टान्त दिने बोली।

**घोडे बैलाहा**—=ज्यानको माया नराखी निस्फिकीसंग घोडा चढ्ने वा दगुराउने मान्छे। भक्तवीरलाइ **घोडे बैलाहा** भन्थे, असाध्य घोडा चढ्ने।

**घोर्ले बूढा, बूढी**—=मोटो बेक-म्बा बूढा, बूढी।

**घोलेर पियाउनु**—(१)=मेहन-त नगरी नघोकी मगजमा थुपुक्क घुसाइदिनु। मास्टरले तँलाइ भनिदिन पो सक्छ **घोले(टे)र पियाउन** सक्तैन, उसैले नघोकी हुन्न। (२) साधारण अर्थ। सुत्ने बेलामा एक मात्रा औषधि दूधमा **घोलेर पियाइदेऊ**।

**घोसे मुन्टो लाउनु, गर्नु**—=उँधो मुन्टो लाउनु (लाज वा डरले)। **घोसे मुन्टो गरी** बोल्यो त्यो सशंक कुवेरले।—बालकृष्ण (प्रह्लाद)। यसरी चूप लागेर **घोसे मुन्टो लाउनू**; भइग-योनी।—रुद्रराज (रूपमती)।

## ङ्

**ङ्याक पार्नु, टोक्नु**—= एक्कासि टोक्नु। त्यो कुकुरलाइ नजिस्काऊ, **ङ्याक पार्ला**।

**ङ्याङङुङ गर्नु**—=तत नन गरी वा नबुझिने गरी अस्पष्टसंग बोल्नु। 'ङ्याङ् ङुङ् गरी

नबुझि अस्तुति हो गरेको । क्रीपा रहोस् प्रभु अनाथ उपर् हजुर्को ॥'

**ङ्याङङ्याङ डुङडुङ गर्नु**—=खाऊँ कि नखाऊँ वा गरूँ कि नगरूँ जस्तो गर्नु । नानूलाइ आज खान मन छैन क्यारे, सपासप नखाएर ङ्याङङ्याङ डुङडुङ गरिरहिछ ।

## च्

**चकली पाँ पाँ**—हात समातेर फनफनी घुम्ने खेल ।

**चक्कर खानु**—(१)=फेरो मार्नु अघिनै ज्ञानेश्वर एक चक्कर खाएर आएँ।(२)=दुबिधामा वा अलमल्ल पर्नु । मेरो मगजले चक्कर खायो, तिम्रो यो हिसाबको भूल पक्रनै सकिन । ग्रीष्मको • गरमी-भित्र घुमी खायेर चक्कर । कविको लेखनी दौड्यो वर्षा-वर्णन-खातिर ॥ —लेखनाथ (ऋतुविचार) ।

**चक्र पोलेर खुवाउनु**—=रातोदिन पकाएर खुवाउनु (पकाउँदा हात डामिने पोलिने हुनाले) । चक्र पोलेर खुवाउने भान्छेलाइ झन् एउटा पैसा पनि दिएनौ ।

**चङ्गा काट्नु**—=उडाएको बखतमा एउटा चङ्गाको धागाले अर्को चङ्गाको धागो रेटेर चुँडाल्नु ।

**चङ्गुलमा पर्नु**—=मूठीमा पर्नु (यस्तो वाक्यांशमा बाहेक अन्यत्र 'चङ्गुल' प्रयोग हुँदैन)। छोराको चङ्गुलमा परेकी आमालाइ सुक्ख हुँदैन ।

**चञ्चला श्री**—=धन (नटिक्ने हुनाले) ।

**चटक छिन्नु**—(१)=तलमाथिको भन्दा बीचको अङ्ग निकै झिनो हुनु । कंबर चटक छिनि छाति र जाङ् फुक्याका ।—राजीवलोचन (केदारकल्प)। (२)=त्यान्द्रातुन्द्रीले नअल्झिने गरी छुट्टिनु । यो खुकुरीले त यत्रो राङो चट्टक छिन्छ ।

**चटक छोड्नु**—=(१)=एकासि छोड्नु । किन हो, बखतबहादुरले हामीकहाँ आउन चटक छोड्यो । (२)=



एकदम पूरापूरसंग त्याग्नु । मासुमा झगडा परेदेखि सेतेले जेठीलाइ चटक छोड्यो ।

**चटनी पार्नु, हुनु**—=सहजैसंग क्याप्प खानु (खास गरी जुवामा पैसा) । सयसय रुपियाँ दुइपटक थापेको थिएँ, चौकाले चटनी पारिदियो ।

**चटपटी लाग्नु**—=हतपत लाग्नु । लुगा लाउनु कता छ कता डोलेको अवाज सुन्नासाथ मैयाँ नानीलाइ चटपटी लागिसक्यो ।

**चट पर्नु**—=हर्जै हुनु । कहिले चारौटा पैसाले पनि चट पर्छ ।

**चड्कन चिउरा दिनु**—=गाला पड्काउनु ।

**चन्द्रमा जस्तो**—राम्रोको दृष्टान्त दिंदा प्रयोग हुने । चन्द्रमा जस्तो मुहार छ हजुरको ।

**चन्द्रमा दाहिनु हुनु**—=जुन काममा पनि सफलता प्राप्त हुनु । अहिले उसको चन्द्रमा दाहिनु छ, उसले जे गरे पनि सदरै छ ।

**चप (चप्पन) पार्नु**—=खाइदिनु (खास गरी धनमाल) । मैले घडी बनाउन दिएको थिएं, माहिला कालिगडले चप्पन पारिदियो ।

**चपाएको निल्नु**—=गाह्रो हिस्सा जति अरूले सिध्याएपछि बाँकी काम खतम पार्नु । बस्नेतले चपाएको निल्न पाएर तैँ फूर्ति गर्छस् ।

**चमर (चँवर) हम्कनु**—=त्यो डोलाउनु । "बेतका रूखहरूले मुजुराका चँवर हम्की रहेछन्....। श्री केसर (विक्रमोर्वशी) ।

**चमेरो जस्तो**—विपक्षीहरूमध्ये जसको जित हुन्छ वा जो सप्रन्छ उसैसित लाग्ने मानिसलाइ दृष्टान्त दिने बोली (पशु र पक्षीको लडाइँ हुँदा पशुले जित्न लाग्यो 'दुग्धपेयी हुनाले म पशु हुँ' भनी उतै लाग्ने, पक्षीले जित्न लाग्यो 'उड्ने हुनाले म पक्षी हुँ' भनी त्यतै लाग्ने चमेराको कथाबाट) ।

**चरक चर्कनु**—(१)=पूरापूर फाट्नु (ऐना, काठ, इत्यादिको बारे) । बर्माले प्वाल नपारी कीला ठोक्यौ भने यो पतला फल्याक चरक चर्कन्छ (वा चिरिन्छ) । (२)=उग्र कडा हुनु (घामको बारे) । अहिले

त धाम चरक्क चर्केको छ बाहिर नडुल।

चर पाउनु—=सुईंको पाउनु। आफ्नो सुखदुःखको कसैले चर नपाओस्‌ भनेर बक बक गरेर के फाइदा ?

चरोको गूँड देखे झैं—=जुरेलीको गूँड देखे झैं (हेर)।

चर्को पर्नु—(१)=खलबल मच्चिनु, चिर्को पर्नु। छोरा बाजेले ढोकामा आई हामीसित ताश खेलेकोमा सर्दार बाजेकहाँ चर्को परिसक्यो रे। (२)=कडा वचन हुनु। तिमीले गणेशबहादुरलाइ स्वाँठ भन्दा अलि चर्को पऱ्यो।

चर्चरी थुतुनो (मुख) चलाउनु—=कत्ति नदबेर सँगसँगै लागी ठाडठाडै जवाफ सवाल गर्नु। आफूभन्दा ठूलो मान्छेको एक दुइ वचन नसही चर्चरी थुतुनो चलाउँदा एक दिन नराम्रोसँग चुटाइ पाउलिस्‌।

चर्तिकला फिराउनु—=चकचकी (रोब रवाफ) फैलाउनु। आजकल सुबेदार साहेबले गाउँमा निकै चर्तिकला फिराउन लागेका छन्‌।

चलता पूर्जा—=खूब चलाक, व्यवहारकुशल (हिन्दीबाट)। मेघ बहादुर बडो चलता पूर्जा छ, सबै मालिकहरुलाइ रिझाउन सकेको छ।

चलेको भाउ—=बजारमा बसेको दर। यो पेटी म तिमीलाई चलेको भाउमा दिन्छु।

चल्ती सवारी—=राजधानीबाट बाहिर जाँदाको यात्रा (प्रायः राजाखलकको बारे)। चल्ती सवारीमा मुकाम हुने ठाउँको फिरिस्त उहाँलाई चाहिएको छ।

चल्ला काढ्नु—=कुखुरा माऊले फुलबाट बच्चा निकाल्नु।

चश्मदीद साक्षी—=आँखैले देख्ने गुहाई।····खून करणी मुद्दाहरुमा चश्मदीद—देखिजान्ने—साक्षी र प्रमाण चाइने पाउन कठिनै पर्छ।—ग्रन्थकार (कथा कुसुम)।

चाँचूँको (गर्ने) कुरै नहुनु—=नाइँनास्ति गर्ने वा बोल्ने बाटै नहुनु। तिमीले तिर्छु भनेको यतिका दिन भइसक्यो अब त चाँचूँ गर्ने कुरै छैन।



चाँद ढल्काउनु—=दर्जा पाउनु (नेपालको उपल्लो दर्जामा हीरा वा सुनको तल्लो दर्जामा चाँदीको चाँद हुनाले)।····हाम्रा बालाई काला अक्षर भैंसी बराबर थियो र तापनि हीराको चाँद ढल्काउनु भई हाल्यो।....।—रुद्रराज (चप्पा काजी)।

चाँदमारी गर्नु—=गोली इत्यादिले ताकेको ठाउँ वा जीवजन्तुलाई लगाउनु वा मार्नु। गिद्धलाई चाँदमारी गर्ने जसको नाम खोदिएको काँड़ पाएको थियो; सरकारको घेरै नै ढव छ।—श्री केसर (विक्रमोर्वशी)।

चाँद मार्नु—=तारो हान्दा गुल्जाइमा लगाउनु। मैले दुइ चोटि चाँद मार्दा तिम्रो गोली भित्री घेरासम्म मात्र पुग्यो।

चाँदीको जुत्ताले हान्नु—=दाम घूस दिएर मुखमा बुजो लाउनु (हिन्दीको नकल)। रेख बहादुरलाइ चाँदीको जुत्ताले हाने पनि गयल परेकालाई हाजिर गरिदेला भन्ने त देख्नुपर्दैन।

चाउ चाउ लाग्नु—=कौतूहल, सगसगी वा खुलदुली लाग्नु। उसको अँध्यारो मुख देख्तैमा मलाइ चाउ चाउ लाग्यो।

चाकरको पनि चुकर—=नोकरको पनि नोकरी गर्ने मान्छे। आफ्नो मतलब साध्य गर्नाको लागि कहिले कहीं चाकरको पनि चुकर हुनुपर्दो रहेछ।

चाकरी खुल्नु, खुला हुनु, बन्द हुनु—=मालिकबाट चाकरीमा आए हुन्छ, नआउनू भन्ने सबैलाइ वा कुनै खास मान्छेलाइ उर्दी हुनु। आज पानी परेको हुनाले चाकरी बन्द छ, घर जाऊँ। दुर्गासिङलाइ हिजोदेखि चाकरी खुल्यो रे।

चाख मान्नु—=चाहना वा श्रद्धा गर्नु, स्वाद वा रस लिनु। पढेलेखेका मात्र होइनन्‌ कि एक अक्षर पनि कनी कुथी पढ्नु पर्नेले समेत यो पुस्तक चाख मानी पढ्दछन्‌।—श्री मृगेन्द्र (भानुभक्त स्मारक ग्रन्थ)।

चाना पखालेको कुरा—=छेउ न टुप्पाको वा रस न बसको कुरा। कृष्णदेव मधेस गइसक्यो

भन्दैछु, अहिले उसलाइ भनेर घोडा मागेर ल्याउँछु यां गर्छु त्यां गर्छु भनेर के चाना पखालेको कुरा गर्छ यो !

**चामल खुवाउनु**——=माल हराउँदा त्यहाँ उपस्थित भएका मानिसहरुलाइ मन्तरेको चामल चपाउन लाउँछन्। त्यो थुक्ता चोर्ने चाहिंको मुखबाट रगत आउँछ भन्ने चलेको छ, तर हकीकतमा अगिबाटै डराएर चोरेको माल सुट्टुक्क ल्याएर राखिदेओस् भन्ने मनसाय हो। मेरो यूँको औंठी हरायो, सबैलाइ चामल नखुवाई छोड्दिन।

**चार आँखा हुनु**——=देखादेखी हुनु, मुखामुख हुनु। जुन घडी चार आँखा भएको थियो, त्यस वेलादेखिनै त्यही मुहार झलझली सम्झँदो छु।—रुद्रराज (रूपमती)।

**चार जनाले के भन्छन् (भन्लान्)?**——=लोकापवादको ख्याल गर। तिमीले तीन दिनसम्म गायब भएकी विमलालाई घर ल्याउन खोज्दा कसैले रोक्न सक्तैनन् सही तर चार जनाले के भन्छन्?

**चार दाम ठेकी राख्नु**——=नयाँ जग्गा कमाउनालाइ बैनाको रूपमा जग्गाधनीलाइ दस्तूर दिनु।

**चार दिनको**——=क्षणिक, थोरै समयको। हामी चार दिनको पाहुनाले तेरो मेरो भनी किन झगडा गर्नु? चार दिनको जीन्दगी पाई नगर गुमान।—शम्भुप्रसाद (शम्भु भजनमाला)।

**चार धाम**——=तीर्थयात्राको हदको रूपमा रामेश्वर, जगन्नाथ, द्वारका, वद्री। हरि! हरि!! त्यसो भए त रुपियाँले चार धामको पुण्य जूवाकै खालमा भेट्टाये।—लेखनाथ (लक्ष्मीपूजा)।

**चार पैसा कमाउनु, नाफा गर्नु**——=थोड बहुत आमदानी गर्नु। चार पैसा नाफा गरुँला भनेर काम गर्नु, यति पनि भएन भने गरीबले के खाने?

**चार पैसाको सो[ह]मत**



किन्नु—बेसोमती वा पाखे मान्छेलाई गिज्याउँदा वा गालि गर्दा प्रयोग हुने। होइन भाउज्यू, धारागडिको पसलमा ४ पैसाको सोमत किन्न पठाएर ख्वाइ दिनु होस् न।—रुद्रराज (रूपमती)।

**चार प्रहर रात**——=एक रात (थोरै देखाएर भन्दा)। चार प्रहर रात पनि सुखसँग सुत्न नपाउने ठाउँमा त हामी बस्तैनौं।

**चार भञ्ज्याङ**——=राजधानी (नेपालको राजधानीलाई रिङ्गै पहाडै पहाडले घेरेको हुनाले)।···· यहाँ चार भञ्ज्याङ् भित्र र, पहाड मध्येशको समेत जङ्गल खोली दिई दुनियाँका निमित्त लख्खन् रूपैयाँको काठ पात् बेदाममा छोडियो।—श्री ३ जुद्ध (भूकम्प—भाषण)।.... चार भनज्याङ नै काटि पो शकिन् कि,....। भीमनिधि (सहनशीला सुशीला)।

**चाल चल्नु**——=चलाकी खेल्नु। ····अब अर्कै चाल चल्नु पर्छ भन्ने निश्चयगरी यारमण्डलीले काजीलाई बटेरबाज तुल्याउने निश्चय गर्‍यो।—रुद्रराज (चप्पाकाजी)।

**चाल पाउनु**—(१)=कदर जान्नु। भ्यागुताको जहाँ वास उहीं कमल फुल्दछ। तर त्यो चाल पाउन्न हिलैमा मात्र भुल्दछ॥—लेखनाथ (ऋतुविचार)। माल पाएर चाल पाए पो हुन्छ। (२)=थाहा पाउनु। जर्साहेब भित्रेनभित्रेको मैले चाल पाइन। (३)=सुइँको पाउनु। दिन् मध्यान्ह भयो तसै बखतमा आया ति राक्षस् पनी। मान्याँ काल् कन चाल् न पाइ अघि झं होम् नाश् गरौंला भनी॥—भानुभक्त (रामायण)।

**चाल मारेर**——=खुट्टाको आवाज नझिकी सुस्त सुस्त।....पछिल्तिरबाट चालमारेर आएर कमल जस्ता हातले मेरा दुई आँखा छोपिदेछिन्..।—श्री केसर (विक्रमोर्वशी)।....अनि मेरो घरैभित्र लुकेर दिनमा बसौं, रातमा चाल मारेर भुल्का जस्तै भई घुमौं।—बालकृष्ण (मुकुन्द इन्दिरा)।

चाल मारीकन पछिल्तिरबाट ढकेलिदिएँ धान गोड्न लागेकी सन्तीको गोडामा घोप्टिन पुगे। —रुद्रराज (प्रायश्चित्त)।

**चासो पर्नु**—=प्रयोजन हुनु, वास्ता पर्नु। कोही भन्ने छौ अरुलाई के **चासो पर्‍यो**, यसको प्रयास स्वयं जगदीश्वरलाइ नै पर्दछ।—बालकृष्ण (कथा कसुम)।

**चास्स चुस्स भन्नु**—=बिझ्ने गरी भन्नु। अर्कालाइ **चास्स चुस्स** भन्ने बानी नगर।

**चाहको मोल**—=चाहना गरेको पक्षमा दिइने मोल। मालको मोल त थोरै छ यो खालि **चाहको मोल** हो।

**चाहे जेसुकै**—'चाहे' ले खालि जेसुकैलाई जोड दिन्छ। दुनियाले **चाहे जे सुकै** भनून् ;....।—भवानी (यौवनको आँधी)।

**चिची माम हुनु**—=ज्यादै सजिलो कुरा हुनु (ह्याएर भन्दा) पाशा खेल्नु **चिची माम** होइन बाबु!

**चिट्ठा खुल्नु**—=चिट्ठाको गोला थुतिनु। भाग्य-युद्ध-चिट्ठा कार्त्तिक २ गते खुल्छ रे।

**चिट्ठा हाल्नु**—=चिट्ठाको टिकट किन्नु। **चिट्ठा** हालिरहे एक दिन न एक दिन अवश्य पर्छ भन्ने कुमारीको विश्वास छ।

**चिडिया फसाउनु**—(१)=धनी मानिस वा आफ्नो काम निकल्ने मानिसलाइ हात पार्नु। अलिकति पैसाको मुख हेर्न लाग्यौ भने त **चिडिया फसाउन** गाह्रो हुन्छ। (२)=राम्री युवतीलाइ हात पार्नु। कान्छा काजीले **चिडिया फसाउने** काइदा जान्नुभएकै रहेनछ।

**चित कि पट**—=उत्तानुपट्टि लिने कि घोप्टो (दुइ जनाको हक छुट्ट्याउँदा, बाजी ठोक्ता, इत्यादि दुइपट्टि फरक चिह्न भएको वस्तु उफारी संजोगमा भर पार्दा प्रयोग हुने बोली)। तिमीले रोजेकोमा मलाइ चित्त बुझ्दैन **चित कि पट** गरौं, भाग्यजोग्यले जसलाइ पर्ला।

**चित्त कुड्याउनु**—=मन भाँच्नु। धेर कुरामा कृष्णमायाले हाम्रो **चित्त कुड्याएकी** छ।



**चित्त चोर्नु**—=मोहित पार्नु। कृष्णले गोपिनीहरुको **चित्त चोरे**, उसैले तिनलाइ उनीहरु चित्तचोर भन्थे।

**चित(मन) ठेगानमा नहुनु**—(१)=मन चञ्चल हुनु। तिम्रो **चित्त ठेगानैमा छैन**, कसरी हिसाब बुझ्छौ? (२)=हडबडाउनु, विचलित हुनु। बालाइ आराम छैन भनेको सुनेदेखि मेरो **मन ठेगानमा छैन**।

**चित्त थाम्नु**—=मन थाम्नु (हेर)।....चार वर्सको बालकलाई पनी कत्ती दया नराखी मालिकले विक्री गरीदिनलाग्दा **चित्त थाम्न** शकिन।—श्री ३ चन्द्र (अमलेख-भाषण)।

**चित्त दुख्नु, दुखाउनु**—(१)=आफन्त वा माया लाग्ने मानिसलाइ पर्दा दिक्क लाग्नु, माच्ने पार्नु। बुढियाको **चित्त दुख्न** पनी दुख्नु पर्ने नै हो।—रुद्रराज (रूपमती)। आफ्नो छोराछोरीलाइ अरूले गालि गरेको सुन्दा जसको पनि **चित्त दुख्छ**। कृष्णमायाले एक हातमा आँसु एक हातमा गाँस गरेकी देख्ता मलाइ पो **चित्त दुख्यो**, छोरा चाहिं कस्तो चण्डाल रहेछ। (२)=माया गर्नु, जतन गर्नु (यस अर्थमा 'दुखाएर' मात्र प्रयोग हुन्छ)। नौली भए यो भाँडा फुटाइसक्थी, हीरा **चित्त दुखाएर** काम गर्छे। (३)=अन्याय परेको सम्झी सुर्ता गर्नु, ननिको मान्नु। राजाको यो कडा हुकुम सुन्दा सबको **चित्त** साह्रै **दुख्यो**।—बोधविक्रम (दन्त्यकथा)। बिराम गरेकामा मालिकले कुट्ता तिमीले **चित्त दुखाउनु** हुँदैन। (४)=अफसोस हुनु, तुल्याउनु। उसका समक्षमा आफुले लेखेको नै शुद्ध छ भनी मैले मनेको भए उस्को **चित्त दुख्ने** थियो।—उनीहरुको **चित्त दुःखाउन** पवित्र मन्दिरहरु भत्काउँदै उनैका सामग्रीले मस्जिद बनाउन लाए।—वासुदेव (भारतवर्षको इतिहास)। (५)=थकथकाउनु। नगद नारायणको बेफ्वाँकमा खर्च हुँदा अलि चित्त पनि दुख्नैनै भयो।—रुद्रराज (चप्पा काजी)।

**चित्त फाट्नु, तोडिनु**—=मेल भएका मानिसमा तोडिम हुनु। त्यसरी मिलेका साथीका के कुरामा चित्त फाट्यो?

**चित्त बुझाउनु**—आफ्नो चित्त आफैले वा अर्काको चित्त बुझाउनु (अर्थलाई तल्लोमा हेर)। तिनीहरूले परस्परमा खड़बड़ पर्न आएको कुरामा जसरी हुन्छ मिलाइदिने छन्, त्यसमा तिमीहरूले चित्त बुझाउनुपर्दछ, नालिस सुनिने छैन।—श्री ३ जुद्ध (भूकम्प-भाषण)। मेरो चित्त स्वामीजीले बुझाइदिनुभो।—प्रेमराज (ससुराली)।

**चित्त (मन) बुझ्नु**—(१)=ठीक हो भन्ने लाग्नु। चिह्नयौं अक्षर? छातीको भूगोलभर राज्य त्यो रण्डी कै छ, सहै बाँच्यौं? अब चित्त बुझ्यो? हरे, रण्डीका दासकी दासी तिमी!—बालकृष्ण (मुकुन्द इन्दिरा)। तर शास्त्रमा लेखियाकोछ भन्दैमा राम्रो सँग चित्त बुझ्दैन।—जयपृथ्वीबहादुर (तत्त्वप्रशंसा)। (२)=पुग्नु, सन्तुष्ट हुनु। सबको चित्त बुझोस् कदापि न परोस् यो रीस भोटोमहाँ।—चक्रपाणि (श्री मछिन्द्र नाथको कथा)। दक्षिणमा अहमदनगर, बीजापुर र गोलकुण्डाका मुसलमानहरु शिया हुनाले औरङ्गजेबकोई राज्य नष्ट न गरी चित्त बुझेन।—वासुदेव (भारतवर्षको इतिहास)। मासु पुगेन भनेको अब एक रिकापी दिए चित्त बुझ्दैन? (३)=शान्ति हुनु, दिक्क हराउनु। सधैंको उही भित्ता, सधैंको उही खाटले कसरी तेसको चित्त बुझ्दछ, तसर्थ नर्सले हर एक युक्ति गरेर पनी तिनको चित्त प्रसन्न राख्ने काम गर्नू पर्छ।—राममणि (सह्यार-सुसार-संभार)। आफन्त मरेकै दिनमा जतिको संधै दिक्क लागे कसरी निर्वाह गर्नु? दिन पर दिन चित्त बुझ्दै जान्छ (यही अर्थमा मात्र 'मन बुझ्नु' प्रयोग हुन्छ, १, २मा हुँदैन)।

**चित्ता खानु**—(१)=उतानो पर्नु वा उतानो परेर पछारिनु। लाखेचाले प्रसादसिङको चिउँडोमा कसेर एक मुड्की दिनासाथ प्रसादसिङ ५ हात पर गई चित्ता खायो (वा चित्ता खाएर पछारियो)। (२)=मूर्छा पर्नु वा मूर्छा परे तुल्य हुनु। आमा मरेको संचार सुनेदेखि राममाया खानु पिनु छोडेर चित्ता खाइरहिछ। (३)=हिस्स पर्नु (को अत्युक्ति)। साना साना पुरिया पनि छन् कि भनेर कतिले यसो कर्के नजर लगाएका थिए, नदेख्दा चित्ता खाए।—रुद्रराज (चप्पा काजी)।



**चित्रे बादल**—=नीलो भूइँमा चित्रो जस्तो देखिने गरी डोरा डोरा परेर रहेको बादल।

**चित्लाङको मूला**—सबभन्दा मीठो मूला ठहरिएको छ।

**चिन्ता गर्नु**—(१)=सुर्ता लिनु। उपाय बाँकी हुँदाहुँदै चिन्ता गर्नु उचित छैन। (२)=(झाँक्रीले) रातभरी ढ्यांग्रो ठटाई देउता बोलाएर गडेको बेथा निको पार्ने जोहो गर्नु। मेरी छोरीलाइ त चिन्ता नगरी निको हुन्न रे, अब एउटा कालो कुखुरो नखोजी भएन।

**चिप्रा लाग्नु**—=चिप्रा निस्कनु। मथुराको आँखामा चिप्रा लागेछ, अरूले चिप्रे भन्लान् सफा गर।

**चिप्लेटी खेल्नु**—=चिप्लो ओह्रालोमा चिप्लेर झर्ने खेल ('ओह्रालोमा लड्नु' को गिज्याउने बोली पनि)। बाटामा काई परेको रेहेछ होश गरेर हिंड, नत्र चिप्लेटी खेल्लाऊ।

**चिप्लो मुख भएको**—=लोलोपोतो पार्न जान्ने। तिम्रो जस्तो चिप्लो मुख भए कसाग्नी बूढीबाट एक दुइ मोहर झराइछोड्थें, के गर्नु सकिएन!

**चिप्लो वा चिल्लो घस्नु**—=लोलोपोतो पार्नु, कुराले ठिक्क पारी हितैषी भन्ने भान पार्नु। ···चिप्लो घसी घसी आफ्नो मतलब गांठ्न पास थिए।—रुद्रराज (चप्पा काजी)। मुनियां चिल्लो घस्न यस्तो जान्दथी कि उसको कुरा सुनेर दुइ चार जना लाटासुधा रद्द परिहाल्थे।

**चिभे नकटो**—=आइमाईको हूलमा बसेको एकलो ठिटालाइ

भन्ने बोली । हामीहरुको बीचमा चिभे नकटो भएर किन बस्छौ ?

**चिम्टा जस्तो मुख**—=टप्प टप्प कुरा पक्रने बानी । चिम्टा जस्तो मुख गर्नुभन्दा काम देखाउनु वेस ।

**चिम्टा जस्तो हात**—=खिच्चृ गर्ने बानी । घर गर्नेले कहिले कहिले चिम्टा जस्तो हात नगरी कसरी फारो हुन्छ ?

**चियो (चेवा) बस्नु**—=चेवा गरेर ढुकिरहनु । किन्नरीलाई सान्चाको चियो बस्नु भनेको छु ।

**चिरञ्जीवी [भए]**—=आफूभन्दा सानो मान्छेले ढोग दिंदा वा केटाकेटीले रातीबाहेक ('आची खा' हेर) छिंका गर्दा भन्ने बोली ।

**चिर्को पर्नु**—=चर्को पर्नु (१) ।

**चिलाइ मार्नु**—(१)=चिलिचिलाएको हराउने पार्नु । अलि कन्याइदेऊन, चिलाइ नै मरेन । (२)=पिट्नु । मैले भनेको नटेरेर बसिरहेको छस्, अहिले तेरो चिलाइ मार्दा थाहा होला ।

**चिल्ली राँड**—=छोरा भएकी विधवा ।

**चिसो पस्नु, लाग्नु**—(१)=शंका उठ्नु । छोरीको चालामाला देखेर अलि चिसो त पसेको थियो ।—रुद्रराज (रूपमती) । राजकुमारको यो ववन सुन्दा योगीको मनमा केही चिसो पस्यो,....।—बोधविक्रम (दन्त्यकथा) । (२) साधारण अर्थ ।

**चिहान पुर्नु**—=मर्नु (सरापमा) । यस्तो ठाउँमा किन चिहान पुर्न आउनु पर्‍यो !—बालकृष्ण (कथा कुसुम) । यस वेलासम्म कहाँ गएर चिहान पुरिरहेको थिइस् ?

**चिह्ना मिलाउनु**—=बिहा गर्ने केटा र केटीको ग्रह दशाले परस्परलाई हानि गर्छ गर्दैन भनी दुइ जनाको चिह्ना भिडाउनु ।

**चिह्ना हेर्नु, देखाउनु**—।=जन्मपत्रिका हेरेर ग्रह दशा विचार गर्नु, गर्न लाउनु । आ, बरु ज्वाईंहजुरलाई मेरो सानेको चिह्ना देखाउनुपर्‍यो ।—प्रेमराज (ससुराली) ।



**चिह्न न जान्नु**—=जान पहिचान नभएको, अज्ञात । अर्काकी छोरीलाई चिन्हु न जान्नु यस्ता ठाउँमा ल्याएर अलपत्र पार्ने ?—गुरुप्रसाद (कथा कुसुम)।

**चीँ मूसी चीँ खेल्नु**—केटाकेटीहरू रिङ्गै बसी सबैका दुवै हात जोल्टिने गरी एउटाको घोप्टो हातमाथि अर्कोले, अर्कोको घोप्टो हातमाथि अर्कोले क्रमैसंग खपट्याएर छालामा बिस्तारै चिमोठेर समाती अग्लो पारी सबै मिलेर भन्नु, 'चीं मूसी चीं तामा टुसा घरघर मूसा ओकले (आफ्ने) बजिया कान समात' (अनि यसो भन्दै माथितिर जसजसको हात छ पालै पालोसंग एक पटकमा एउटा हात फुस्काएर हात परेको साथीको कान समात्ने, सबैको पालो पुगेपछि न्वाइँ न्वाइँ गरी सबै लड्ने गर्छन्) ।

**चुँइकी लाउनु, फिराउनु, पिटाउनु**—=नोटिस दिनु, झ्याली पिटाउनु, (अब अक्सर उपमा अर्थमा मात्र प्रयोग हुने) ।.... यो अधम चरालाई खोज्नू भनी मैले भनेको भनेर चुइकी फिराइदेऊ ।—श्री केशर (विक्रमोर्वशी) । 'चोरको पत्ता लाउनेलाई हजार रुपियाँ इनाम मिल्नेछ' भन्ने सारा राज्यभरी चुइँकी पिटियो ।—बोधविक्रम (दन्त्यकथा) ।

**चुइयाँको खुट्टाबाट बोसो निकाल्ने**—=झिंगाको बोसो झिक्ने, अत्यन्त लोभी ।

**चुकली हाल्नु, लाउनु**—=कुरा लाउनु । जो लाउँछ चुकली, उही जान्छ फुकली (उखान) । चुकली कान्छी मुमाको यो उसैलाइ म लाउँछु दुखेको यो उसैलाइ सुम्सुम्याउन लाउँछु ।—बालकृष्ण (ध्रुव) ।

**चुड्की मार्नु**—=चुड्की बजाउनु । कसैले गीत गायो कि सानु चुड्की मारी मारी ताल दिन्छ । (हाइ गर्दा यमराजका दूत धपाउनालाइ भन्छन्, तर हकीकतमा आँको आँ नै रहला भनी अन्यत्र ध्यान खिच्नाको लागि यसो गर्ने चलन छ) मालिक खलकले हाइ गरिबक्सँदा चुड्की बजाउनुपर्छ ।

**चुप लाग्नु**—(१)=चुप हुनु,

नबोल्नु। **चुप लाग,** भयो आज, झगड़ा किन गर्दछौ? विवाद व्यर्थ हो हामी आज्ञामा जब हिंड्दछौं।—बालकृष्ण (ध्रुव)। (२)=नचाहिने कुरा गर्नु (अक्सर बूझ पचाएर भनेकालाइ)। **चुप लाग,** तिमीले पनि त अस्ति ६०००। बैठ्यायौ नि, उसलाइ मात्र के भन्छौ ?

**चुरा फुटाउनु**—पोइ मर्दा स्वास्नी चाहिंको चुरा फुटाउने चलन हुनाले यो वाक्यांशले पोइ मरेको सूचन गर्छ। सौताको रिसले **चुरा फुटाउने** स्वास्नीलाइ घरबाट निकाल्छन्।

**चुरुक्क चुहिनु**—=(पतला हुँदा झाडा) अलिकति फुस्कनु। अहिले पनि साहिंलाको झाडा **चुरुक्क चुहिएछ,** आज त्यसलाइ भात खान नदेऊ।

**चुरोट (तमाखु) खानु**—हामी यो खानु नै भन्छौं, पिउनु भन्दैनौं।

**चुरो मर्नु**—=भातमित्रको कनिका नरहने गरी पाक्नु। भर्खर भान्सा पसेको थियो, भातको **चुरै मरेको होइन।**

**चुर्लुम्म डुबनु**—=सतहमा न-देखिने गरी जम्मै डुब्नु (उपमा अर्थमा पनि प्रयोग हुन्छ)। तिम्रो विछोडको सन्नाटामा **चुर्लुम्म डुबेको** मैले हेचण्डी! भाग्यले गर्दा मरिसिकेकाले होस पाए झैं तिमीलाई फेरी पाएँ। —श्री केसर (विक्रमोर्वशी)।

**चुल्ठो जोर्नु**—=(विवाहमा) दुलही भित्र्याएपछि जिउँती कोठामा सासू बुहारीको त्यही विधिको निमित्त छुट्याइराखेका चुल्ठाको टुप्पा जोरी त्यसमाथि घिउको धारा लाउनु।

**चुसेर मिल्काएको जस्तो**—ज्यादै दुब्लो मान्छेलाई दृष्टान्त-दिंदा प्रयोग हुने।

**चहुने घैला जस्तो**—=धेरै काल नटिक्ने (जिन्दगीलाइ दृष्टान्त दिंदा प्रयोग हुने)।

**चूक घोप्ट्याएको जस्तो**—=ज्यादै अन्धकारलाइ दृष्टान्त दिंदा प्रयोग हुने। भित्र **चुक घोप्ट्याएको जस्तो** अन्धकार थियो।—ग्रन्थकार (कथा कुसुम)।



**चूक जस्तो**—=हद अमिलोको दृष्टान्त दिंदा प्रयोग हुने।

**चूक मुताउनु**—=ज्यादै कायल पार्नु। कसको हात हाल्ने ताकत थियो? सबैलाई **चूक मुताए**-की थिइन्।—रुद्रराज (रूपमती)।

**चूल्हे निम्तो,** (लेख्ता) **चूल्है निमन्त्रणा**—=घरको जहानै (विस्तृत अर्थमा नोकर चाकर-समेत)लाई निम्तो। हरिको बिहेमा त हामीलाइ **चूल्हे निम्तो आउला हगि बा?**

**चूल्हेमा आगो नबल्नु**—=खान नपाउनेसम्मको तनाहा हुनु। बिचरा नाक्तेको **चूल्हेमा आगो नबलेको** आज तीन दिन भयो रे।

**चेक काट्नु**—=फलानालाइ यति दाम दिनू भनी बंकलाइ पूर्जी लेख्नु। मसित यहाँ दाम छैन, तँलाइ दश रुपियाँको **चेक काटेर** दिन्छु।

**चेक गर्नु**—(१)=झुक्याएर वा छड्के जाँच गर्नु। कालिगड-हरुलाइ बराबर तिमीले **चेक गर्ने** गर। (२)=बिरियो कि भनी (हिसाब इत्यादि) दोहो-र्याएर हेर्नु। यो नोट मैले गन्दा बहत्तर थान भयो, तिमीले एक पटक **चेक गर।**

**चेत कुहिएको**—(१) बिर्संदा भनिने। आर्यघाटमा नुहाएर आउँदा थैली टिप्न बिर्सेछु, कस्तो **चेत कुहिएको!** (२)=भित्र चुरो कालो भएको (मूलाको बारे)। अस्ति तिमीले दिएको मूलाको **चेत कुहिएको** रहेछ, खानै पाइएन।

**चेत बाबा काशी**—=कायल-कायल। एउटा चिह्न नै लगाएर छाडिदिऊँ कि **चेतबाबाकाशी** गरेर फुकाइदिऊँ?—रुद्रराज (प्रायश्चित्त)। अघिको गाउँ तिर जान **चेत बाबा काशी** भएको त्यो श्यालले अब बसाइँ सर्ने विचार गर्‍यो।—बोधविक्रम (दन्त्यकथा)।

**चेष्टा बदलिनु**—(१)=चाल फरक हुनु। भोलि पल्टदेखि रविलालको **चेष्टा बदलिदै** गयो। —रुद्रराज (रूपमती)। (२)=व्यापार इन्द्रिय वा शरीरसम्बन्धी परिवर्तित हुनु। आजदेखि बिरामीको **चेष्टा बदलिएको** छ।

**चेहरा बिग्रनु**—(१)=नूर गिर्नु। मलाइ त त्यसले चोरेकै जस्तो लाग्यो, नत्र किन त्यसरी **चेहरा बिग्रन्थ्यो**। (२)=अनुहार बदलिनु। ज्वरो आएदेखि कालेको **चेहरा** नै **बिग्रेको** छ।

**चैतका गोठाला**—छिहिलिने, चल्ने, अश्लील ठट्टा गर्नेलाई दृष्टान्त दिने (चैतमा गाईवस्तुलाई बाली नालीबाट बचाउने टन्टा गोठालालाई नपर्ने हुनाले)।

**चैते घिउ**—पहाडतिर चैतमा घिउ पाइँदैन, बूढा बूढा 'चैतमा घिउ खोज्ने, बाटामा निहुँ खोज्ने' भन्छन्, उसैले कुवेलाको चीजलाइ दृष्टान्त दिने।

**चैते पानी छल्नु**—(१) बिहापछिको पहिलो चैत सासू बुहारीले एकै पनेरा वा धाराको पानी खाएको फाप्तैन भन्ने चलन हुनाले, (२) पहाडका मानिस नेपालमा आउँदा वा नेपाल खाल्डाका मानिस मधेस जांदा चैतको पानीले जरो आउने हुनाले चैते पानी छल्छन्।

**चैते बाँदर जस्तो**—(१) खपटे सुसुपाल मान्छेलाइ दृष्टान्त दिंदा प्रयोग हुने। (२) चैत्रमा बाँदर जन्मनु खराब हुनाले उपध्याहालाइ भन्ने।

**चैते मह**—=ज्यादा लाग्ने मह (फूल फुल्ने समयको हुनाले)।

**चैन काट्नु, मार्नु, उडाउनु**—=सुक्ख भोग्नु। जे **चैन काट्नु** कान्छा कर्साहेबकै पालामा काटियो बा!

**चोखिमाटी खन्नु**—व्रतबन्ध, विवाह आदिको पूर्वाङ्गको दिनमा यज्ञको होम गर्ने चौकीको माझमा हाली चोख्याउनाको निम्ति साइतमा जात मिल्दा जोडी कन्याले सुन र चाँदीको कोदालीले माटो खन्नु।

**चोखे फयाँक्नु, फाल्नु**—(१) चोखे नलागोस् भनी प्रायः खाने मालको थोरै अंश कसैलाई दिनु वा मिल्काउनु। दशजनाले देखेको माल अलिकति **चोखे फयाँकेर** मात्र नानीलाई खुवाउने गर्। (२) ज्यादै थोरै दिंदा दृष्टान्त दिने। हेरन, **चोखे फयाँके** जस्तो गरी यति थोरै दिएको!

**चोखे भाग**—=चोखे फाल्नाको निमित्त पर सारिएको।......लौ अब श्रृङ्गार गर्न लागिबक्सेका वाहाँका मलम मालाहरूको **चोखे भाग** लिने भाई हुनजान्छु।—श्री केसर (विक्रमोर्वशी)।

**चोखे लाग्नु**—अरूले देखेर लोभिएको माल खाँदा पेटलाई बेफाइदा हुन्छ भन्छन् उसैले यो वाक्यांश। उनकी मुखिनीले भने अझपनि छोराले अलिकति भात खान छोड्यो भने '**लौ चोखे लाग्यो**' भनेर जन्तर बँधाउथिन्,....।—रुद्रराज (चप्पा काजी)।

**चोचोमोचो मिलाउनु**—=मनमा जे भए पनि जोसित पनि दुरुस्त भएर कुरा गर्नु। चन्द्रबहादुरको पनि खासी छ, कृष्णबहादुरको पनि उत्तिकै खासी छ—शिवप्रसाद जस्तो **चोचोमोचो मिलाउन** सक्ने मान्छे मैले कोही देखिनं।

**चोट खानु, पाउनु**—=धोखा खानु, खराब नतीजा भोग्नु। शम्भु तैंले शम्भुको, आशा नगर्दा एक्रति। हाय! **चोट्** खाइस् ठूलो; कस्ले भनोस् कस्ले गरोस्॥—शम्भुप्रसाद (शम्भु भजनमाला)।

**चोट खाली जानु**—=पटक बिरिनु। हरिको एक **चोट खाली जाँदैन**, जत्ति पटक गुलेली हान्यो उति चरा मर्दछ।

**चोट [पटक] लाग्नु, पर्नु**—=अङ्ग भङ्ग वा घाउ हुनु ('चोट लाग्नु, पर्नु' मात्र मानसिक वेदनाको अर्थमा पनि प्रयोग हुन्छ)। तर मचाएर चाहने हान्दा त्यो अवाजले तिमीहरु बिम्झौला भन्ने डरले निर्धक्क संग हान्न पाएन, उसैले धेरै **चोट** चाहने लाउनु पर्‍यो।—ग्रन्थकार (कथा कुसुम)। घोडाबाट लडे पनि तिम्रो छोरालाइ केही **चोट पटक लागेन**।

**चोटा र कोठा गर्नु**—=एक एक गरी घरभरी चाहार्नु (प्रायः खोजी गर्दा)। सानू रूप लिई पसी सब शहर् हेर्दै विचार् खुप् गरी। रावणको दरवार् विशेष् गरि ढुँड्या **चोटा र कोठा गरी**।—भानुभक्त (रामायण)।

**चोथालो चलाउनु**—=(आफू भन्दा ठूलो मानिससँग) सँगसँगै लागी बाझ्नु। अचेल यो छोइ-

सक्नु छैन, मैले गालि गर्‍यो कि **चोथाले चलाइहाल्छे ।**

**चोथाले बढ्‌ता हुनु**—=मुखाले हुनु। **चोथाले** अलि **बढ्‌ता** छ मेरो, दाम दिंदादिंदै मैले गाली गरें,...........।—बाल कृष्ण (मुटुको व्यथा)।

**चोर आँखाले हेर्नु**—=आफूले हेरेको मानिसले नदेख्ने गरेर छली छली हेर्नु। मैले माहिली नानीसित ताश खेल्दाखेरि तिमीले **चोर आँखाले हेरेको** मलाइ एक एक थाहा छ।

**चोर औंलो**—केटाकेटीहरु औंला भाँची भाँची यसो भन्छन्—दसैं आयो (१), खाउँला पिउँला (२), कहाँ पाउँला (३), चोरी ल्याउँला (४), दुष्ट पापी पर सरी बस् (५)। उसैले कान्छी औंलाबाट गन्दा चौथो औंलाको 'चोर' नाउँ रहेको हो। 'चोर्नी औंला' नभनी 'चोर औंलो' भन्ने चलेको हुनाले यो औंलो चाहिं पुलिङ्ग जस्तो देखिन्छ तापनि बोलचालमा विशेषण वा सर्वनामको लिङ्गपट्टि ध्यान नदिने हाम्रो बानी हुनाले (जस्तो :—कालो गाई, हाम्रो मुमा, इत्यादि) चोर नै रहेको हुनुपर्छ, किनभने 'चोर औंली' भन्छौं (औंला, औंली *पनि हेर*)।

**चोर काठाको मुख डढे जस्तो**—खराब काम गर्दा गर्दै त्यसको नतीजा पाएकोमा दृष्टान्त दिने बोली।

**चोरको खुट्टा काट् भने जस्तो**—=बिराएको मनिसले अर्काले सोझै मनले भनेको एउटा कुराको अर्कै अर्थ संझी आफ्नो बिराम थाहा पाएछ भन्ने भ्रममा परी आफसे आफ कायल हुँदा वा उतसिंदा दृष्टान्त दिने बोली। बिनीलाइ 'आज सुकिलो खास्टो ओढिछस्' भनेको त **चोरको खुट्टा काट् भने जस्तो** भएछ—उ त 'मेरो खाष्टो नसुकेसम्म तपाईंको खाष्टो ओढेको' पो भन्छे ए! (उखानमा पनि 'चोरको खुट्टा काट....*इत्यादि*' हेर)।

**चोरको सरदार**—=मुख्य चोर, साह्रै खलिपा चोर।

**चोर बाटो**—=गुप्त मार्ग। भन्सार बचाउनालाई बदमाशहरूले



**चोर बाटोबाट** माल ल्याउँछन् रे।

**चोरमाथि चकार लाग्नु**—=एउटाले चोरेको माल अर्कोले टप्काउनु। मेरो घडी चोर्ने मान्छे पत्ता लागे पनि माल हात परेन, **चोरमाथि चकार लागेछ।**

**चोर लाग्नु**—=चोरी हुनु। आज राति कटकबहादुरको घरमा **चोर लागेछ।**

**चोरले खाए झैं खानु**—यताउति पल्याकपुलुक हेर्दै ठूलठूला गाँस गरी खाँदा दृष्टान्त दिने।

**चोला बदल्नु, फेर्नु**—(१)=मर्नु। वरालपुत्रीलाई आमाले **चोला बदलेको** खबर सुन्दा पहाडै आएर बज्रे जस्तो भयो।—रुद्रराज (रूपमती)। (२)=मर्दा चित्त बुझाउने बोली (चौरासी लाख जुनि घुम्छ भन्ने विश्वासमा टेकी)। नरोऊ तिम्रो छोरीले **चोला बदलेको** मात्र हो। (३)=चोलो फेर्नु। मान्छेको अगाडि मैला चोला लाएर बस्ने हो, त्यति **चोला फेरेर** आउन सकिनस्?

**चोसो पसार्नु**—=रिसले घुसघुसति फुल्नु। हेर्दैन् त भर्खर भात छडकन लागेको-पण्डितनी बज्यै १२ हातको **चोसो पसारेर** पाठ गर्न लागेकी!—रुद्रराज (रूपमती)।

**चोकी काट्‌नु**—(१)=भान्छाको छातछूत बचाउनाको लागि डोरो कोरी छुट्ट्याउनु वा चौकी उठाउनु। (२)=चौकीहरुलाइ छलेर चोर बाटोबाट जानु।

**चैारासी लाख जुनी**—=हाम्रा ऋषिमुनिको हिसाबले पृथ्वीको प्राणी जीवजन्तुको किसिमको गन्ती। एउटा मानिसले यी सब जुनी लिनुपर्छ भन्ने लेखिएको छ।

**चैारासी व्यञ्जन**—=धेरै किसिमको परिकार (उहिलेको हद चौरासीसम्म रहेछ कि?)। ····राजालाई भित्र दरबारमा लगी **चैारासी व्यञ्जन** तयार गरी टक्र्याइन्।—बोधविक्रम (दन्त्यकथा)।

**च्याँखे थाप्नु**—(१)=(जुवामा) खाल नबसी दाउ हान्नेलाइ खुवाउन वा तिराउनाको लागि पैसा राख्नु। (२)=लाभ

उठाउन सकिएला भन्ने आशाले खेलो गर्नु। सलाईको कारखानामा २ सय रुपियाँको च्याँखे थापेको छु कसो होला ?

**च्याँखे धर्ना कस्नु, हाल्नु, बस्नु**—=आफूले मागेको कुरा नपाउञ्जेल अड्डी लिएर अर्काकहाँ बसिरहनु। जित नारायन अहिलेसम्म च्याँखे धर्ना कसिरहेछ, त्यसको एउटा रुपियाँ फ्याँकिदेऊ।

**च्याँख्ला चपाउनु**—=कठिन काममा हात हाल्नु। अविवेकीको नोकरी गर्नु च्याँख्ला चपाउनु हो।

**च्याँख्ला तोड्नु, फोड्नु**—(१)=मर्मसम्म दखल पर्ने गरी सजा दिनु। धेरै उम्लेर नहिंड् च्याँख्ला फोडिदिउँला। (२)=तुजूक तोड्नु। फूलपातीको च्याँग्रो घिस्स्याउँदा मेरो च्याँख्लै तोडियो।

**च्याँ च्याँ र म्याँ म्याँ**—=रुवाबासी। एकै बेहान केटाकेटीहरूलाइ च्याँ च्याँ र म्याँ म्याँ गरी किन लुगा फेराइदिनुपर्‍यो ?

**च्याङ्ग्रापट्टी (च्याम्पटी) खेले जस्तो**—ढङ्ग नपुग्दा ( अक्सर पासा, बुद्धिचाल, इत्यादि खेलमा नजान्दा ) दृष्टान्त दिने बोली। यति गोटी चाल्न पनि जान्दो रहेनछ, यो त च्याङ्ग्रापट्टी खेले जस्तो पो भयो।

**च्याङ्ग्राबाती लुगा**—=धुजा धुजा गरी फाटेको लुगा।

**च्याङ्ग्रे धर्ना कस्नु**—=कुन वेला सस्तो पाइएला भनेर कुरिरहनु ( च्याङ्ग्रा सस्तो होला र किनुँला भनी फूलपातीको दिन कुर्ने हुनाले )।

**च्यात्त छाड्नु**—=चटक्क छाड्नु, ह्वात्त बिलकुलै त्याग्नु। काम गर्दा विघ्न पर्‍यो भनेर बिचमै सब। च्यात्तै छाडेर जो वस्छ सोही हो कुल-घातक॥ —बैजनाथ (उपदेश-शहस्त्री)।

**च्यापुको नापो**—=घाँटीको नापो (अघाउन्जेल)।

**च्यापुको भर पर्नु, च्यापुले माटो खानु**—=घोप्टो परेर पछारिनु। बाइस्कल ज्यादा नबढाऊ च्यापुले माटो खाला।

**च्यापु फोर्नु**—झगडा गर्दा धम्की दिने बोली।



## छ्

**छक खानु, पर्नु**—=अचम्म मान्नु। जे होस्, तपाईंको मन देखेर म छक्क खान्छु !—ग्रन्थकार (कथा कुसुम)।

**छकडी न पौ बारह**—=नाफा न नोकसान अथवा हार न जित।

**छक्क पर्नु**—=छक पर्नु। बाटामहाँ बहुत वर्ष पछी झलक्क। देखी अहो ! हजुरलाइ परें म छक्क।—लेखनाथ (सत्यकलिसम्वाद)।

**छक्का पंजा [गर्न] जान्नु, हुनु**—=बठ्याइँ जान्नु, छटेल हुनु। गुलाफ छक्का पंजा केही जान्दिन। हाम्रो पण्डित बाजेमा छक्का पंजा छैन।

**छ जोगी बार बाहुन्, तोन लाँक्रा उखु सिङ्गा सिङ्गै खाऊन्**—'छ' र 'बार' मा श्लेष छ। छ=(१) छ जना, (२) छन्; बार=(१) बाह्र जना, (२) बाबु अनि।

**छट्ट वा छटक्क काट्नु**—=चटक्क छिन्ने गरी काट्नु। उसले त यो खुकुरीले यत्रो मोटो हाँगालाइ पनि छट्ट काट्यो।

**छड्के आउनु**—(१)=झुक्याएर हाजिरी लिने मान्छे आउनु। आज छड्के आउँदा तिमी कहाँ थियौ ? (२)=छेकारो काटेर आउनु।

**छड्के जाँच**—(१)=झुक्याएर गरेको हेर विचार वा हाजिर। आज हाम्रो अड्डामा छड्के जाँच भयो। (२)=मुख्य जाँचभन्दा अलगको बीचको टिपुवा जाँच(परीक्षा)।

**छत्रछायामा बस्नु**—=राज्य-शासनको आश्रयमा रहनु। उ वेला यदि चाहेको भए मैले जगल्लय हुन्थ्यो पाको खरानीमा, अहिले तँ डराउंछस मेरो यो छत्रछायामा बसेर ?—बालकृष्ण (प्रह्लाद)।

**छन्द न बन्दको**—(१)=छाँट काँट नमिलेको। बहादुरले छन्द न बन्दको घर बनायो। (२)=सिलसिला नमिलेको। छन्द न बन्दको लेखलाइ शारदाले कसरी छापोस् !

**छरी काट्नु**—=कपाल काट्नु।

**छर्लङ्ग रात काट्नु, जानु**—=

आँखा झिम नगरेर अर्थात् ननिदाएर रात व्यतीत गर्नु, हुनु। ('रात' अगाडि पनि प्रयोग हुन्छ) त्यो रात त्यसै छर्लङ्ग गयो, ओछ्यान बिझायो, छातिमा केले थिचेझैं लाग्यो आकाश रछायो।—लक्ष्मीप्रसाद (मुना-मदन)। आज मैले तिमीले दिएको उपन्यास हेरेर छर्लङ्ग रात काटें (यसबाट दिनसित पनि प्रयोग गर्छन्)।

**छर्लङ्ग हुनु**—(१)=(पानी इत्यादिको बारे) धमिलोपन हराउनु। छानेपछि त यो पानी छर्लङ्ग भएछ। (२)=बादल हट्नु। अघि पानी पर्ला जस्तो भएको थियो, अहिले त छर्लङ्ग भएछ। (३)=राम्ररी बुझ्नु। यो एउटा पदको अर्थ लाग्नासाथ श्लोकैको माने छर्लङ्ग भयो।

**छाँगाबाट खसे जस्तो हुनु, लाग्नु**—=छाडाबाट...इत्यादि (हेर)। ती छाँगाबाट खसे जस्ती भइन्।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथा-संग्रह)।

**छाँद हाल्नु**—(१)=भुतुक्क भएर लहसिनु। शंकरे त उस्तो वास्ता गर्दैन, सानी नै छाँद हाल्न जान्छे। (२)=हातले फेरो मार्नु (प्रायः गोडामा)।.... गोडामा छाँदहालेको मलाई मिल्काएर, पछुताउन लागे जस्ती देखिन्छिन्।—श्री केसर (विक्रमोर्वशी)।

**छाक छोड्नु**—=एक छाक नखानु (जूठो पर्दा मात्र प्रयोग हुन्छ, अरूमा 'एक' नहाली हुँदैन)। आज छाक छोड भोलि खल्को हाल। तिमीलाइ अजीर्ण भएछ भरेको एक छाक छोडिदेऊ, निको हुन्छ।

**छाक टार्नु**—=साँझ सबेरको खाने सर्दाम जिनतिनसँग जुटाउनु। आजकल बुढाथोकीलाइ त छाक टार्न पनि धौ धौ छ रे।

**छाडा(छाना)बाट खसे जस्तो हुनु, लाग्नु**—पहिले केही शंकै नभई अकस्मात् नराम्रो कुरा सुन्दा, डरलाग्दो कुरा झलक्क देख्ता, वा झल्यास्स संझँदा खंग्रङ्ग परेकोलाइ दृष्टान्त दिने। पहिलो हुन्छु भन्ने लागेकोमा फेल भएको सुन्दा,



नानीलाइ इनारनेर छोडेर आएको झल्यास्स संझँदा, पछिल्तिर पाँच हात पर बाघलाइ झलक्क देख्ता छाडाबाट खसे जस्तो लाग्यो।

**छाडा छोड्नु**—=मनलागि गर्न दिनु, जेजे गर्छ गर्न दिनु। छाडा छाडेको केटाकेटी सप्रँदैनन्। छाडा छाडेको गोरु।

**छातीको ढाल**—=निर्धक्क, सुन्याइँ। घरौँला भीमको चाल गरौँला छातिको ढाल॥—चक्रपाणि (स्तोत्रावली)।

**छाती खोल्नु**—(१)=मनको कुरा पोख्नु। आफन्त देखेर तिमीलाइ छाती खोलें। (२) साधारण अर्थ। छाती खोल, डाक्टरले जाँच्ने रे!

**छाती[चरक्क] चिरिनु**—=ठूलो मानसिक वेदना हुनु। अहिले साँचिकै छुटिएर डेरा पनी खोजेर मालताल पनी ओसारी सकेको देख्ता बुढीको छाती चिरिएर आउथ्यो।—रुद्रराज (रूपमती)। भाई! सुनी-नशकना इ कुरा सुनेर। मेरो चरक्क चिरियो सब छाति हेर॥—लेखनाथ (सत्यकलिसम्वाद)। यहाँको दिलको वेदना संझेर छाती त्यसै चरक्क चिरिन्छ।—रुद्रराज (प्रायश्चित्त)।

**छाती ठूलो गर्नु**—=औदार्य प्रकट गर्नु। भोज दिनु जति परेपछि छाती ठूलो गर्नुपर्छ।

**छाती ठोक्नु**—(१)=म छु धन्दा नमान भनी आश्वासन दिनु, कुम ठोक्नु। पैसा बग्ला कि भनी किन डराउँछौ, भक्तेले छाती ठोकिहालेको छ नि। (२)=छाती पिट्नु (को कम प्रचलित रूप)। जो घोर पाप गरियो!अघि हिन्दुमाथी। त्यै पापको फल मिल्यो भनि ठोकि छाती॥ लागे सबै ति पछुताउन मात्र खाली।—लेखनाथ (सत्यकलिसम्वाद)। छोरा बौलाउँदा आमा चाहिले छाती ठोकी नीलै पारिन्।

**छाती ढक्क फुल्नु**—=अञ्झटमा खुशीको कुरा सुन्दा मुटुमा असजिलो हुनु। म बारीमा कोदालो खनिरहेको थिएँ, नानीचाले चिट्ठा पर्‍यो भनेको सुन्दा छाती ढक्क फुल्यो।

छाती पिट्नु—=अलाप विलापको रूपमा हातले छातीमा हान्नु (यसबाट 'साह्रै अलाप विलाप गर्नु' भन्ने अर्थ पनि आउँछ ; साँच्चिकै हातले छातीमा नहाने पनि)। जब रोटी खाग भयो होला भन्ने लागेथ्यो अनि उठेर आगोमा रोटी खोज्दा डढिसकेको देख्दा छाती पिटेर रुन लाग्यो।—बोधविक्रम (दन्त्यकथा)।····(छाती पिटेर) यो मन मान्दैन नि मान्दैन।—भीमनिधि (सहनशीला सुशीला)।

छाती पोल्नु—=छातीभित्र परपर गर्नु (अक्सर पिरो बस्तु खाँदा वा अमलपित्तले)। गोलभेंडाको अचारमा खुर्सानी धेरै हालिदिएछ, छाती पोल्यो। किन होला आज मेरो छाती पोलिरहेछ।

छाती फर्काउनु, फुलाउनु—(१) रवाफ, फूर्ति, वा खुशी जताउँदा। रविलालले पनी साहुहरूलाई पन्छ्याउन पाएकोले छाती फर्काएर हिंड्न लाग्यो।—रुद्रराज (रूपमती)। थीस्यूसले छाती फर्काएर जवाब दिए····।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)। नयाँ गहनाको नाम सुन्दैमा हीराको छाती पाँच हात अल्गो भएर फुलिहाल्यो ।—चन्द्रलाल (विषवृक्ष)। लडाइँमा जित्यौ भने तकमा झलाझल पारी छाती फर्काएर आउलौ। (२)=निस्फिक्री हुनु। आफूले नचुकेसम्म सबैको अगाडि छाती फर्काएर हिंडिन्छ। (३) साधारण अर्थ। छाती फर्काएर हिंडे स्वास्थ्यलाइ फाइदा हुन्छ भन्ने कसैको भनाइ छ।

छाती फाट्नु, चिरिनु—=मनमा ठूलो वेदना हुनु, साह्रै दिक्क लाग्नु, (अक्सर अरूको दुःख देखेर)। हरिमायाको दुःख देखेर मेरो छाती चिरियो।

छाती फुकाउनु—(१)=नडराउनु वा निर्धक्क हुनु ('मन वा दिल फुकाउनु' को कम प्रचलित रूप ; यो अक्सर 'हिंड्नु'सँग आउँछ)। सासु ससुरा बाचुन्जेल उनीहरूकै अधीनमा परियो छाती फुकाएर हिड्न पाइएन। —रुद्रराज (चप्पा काजो)। (२)=ठूलो औदार्य प्रकट गर्नु। तिनले छाती फुकाई गरीबहरूलाइ पैसा बाँडे।

छातीमा मुड्कीले हान्नु—(१)=छातीमा पिट्नु। पोइको खबर सुन्नासाथ काली छातीमा मुड्कीले हानेर रोई। (२)=मन कडा गर्नु (प्रायः खर्च गर्ने कुरामा)। उत्तराले आफ्नो छातीमा मुड्कीले हानेर प्रिय पति अभिमन्युलाइ बिदा दिइन्।

छातीमा रौँ उम्रनु, उम्रेको हुनु—सुर्‍याइँ वा शक्तिको चिन्ह (=ताकत हुनु ; जोरी खोज्दा प्रयोग हुने)। तेरो छातीमा रौँ उम्रेको भए यो कुरा मालिककहाँ लैजा ! (महाभारतको लडाइँमा मरेर जन्मन आएको मानिसको छातीमा रौं हुन्छ भन्ने चलेको हुनाले त्यस्ता मानिसलाई वीर भन्छन्, त्यतैबाट यो वाक्यांशको उत्पत्ति भएको हो)।



छातीमा लाउनु—(१)=प्रेमपूर्वक अङ्कमाल गर्नु। लम्पसार परेका भरतलाइ उठाएर रामचन्द्रले छातीमा लगाए। (२)=प्रेमसाथ हृदयमा छुवाउनु (चिठी आदिको बारे प्रयोग हुन्छ)।

छानाबाट खसे झैं हुनु—=छाङाबाट·······इत्यादि हेर। परन्तु जब सानी बुहारीको व्यवहार देख्तथिन् उनका मुटुले ठाउँ छोड्थ्यो—छानाबाट खसेकी जस्ती हुन्थिन्।—रुद्रराज (रूपमती)।

छानु लाउनु—(१)=छाना हाल्नु। (२)=काम टुंग्याउनु। हाम्रो नापीमा त छानु लाइसक्यौँ, तिम्रो कामको के खबर छ?

छाप काट्नु—=छाप लाउने औंठी बनाउनु।

छाप मार्नु—=लाहा छाप लगाई बन्द गर्नु। छाप मारेको बाकस।

छापा पिट्नु—=देशदेशान्तरसम्म (प्रायः अखबारद्वारा) हल्ला फिजाउनु।

छापा मार्नु—=एक्कासि हमला गर्नु।·······दुश्मनको सुराक लगाई रातमा छापा मारी···

मुख्य जर्नेललाई दुम लुकाई सुईंकुच्चा ठोक्ने अत्यासे कसरी वीर नेपाली फौजले पारे यो पनि भानुभक्तले प्रफुल्लित हृदयले जरूर सुनेका होलान् ।—श्री मृगेन्द्र (भानुभक्त स्मारक ग्रन्थ) ।

**छायाँ पर्नु**—(१)=ओझेल पर्नु। तितौरामा छाया परेछ, उता सारिदेऊ। (२)=भूत प्रेत लाग्नु। कान्छीको सानो छोरालाइ छायाँ परेकै जस्तो लाग्यो। (३)=टक पर्नु। भित्तामा कहाँबाट छायाँ परेछ ?

**छारकाप्रो हाल्नु**—(१)=आँखा छारो हाल्नु। सीतेले त छारकाप्रो हालेछ, तरकारी त काँचै छोडिदिएछ। (२)साधारण अर्थ। अस्ति शूल भएर छारकाप्रो हालेको थिएँ चाँडैनै कम भयो।

**छारष्ट पार्नु**—(१)=भ्रष्ट पार्नु, नाश पार्नु। (२)=आबरू लिने गरी झाँट्नु। अस्ति सबैका अगाडि मोतीलालले कृष्णेलाइ छारष्ट पार्‍यो।

**छार्तोस्नि दिनु, ठोक्नु**—=कुलेलम ठोक्नु (अक्सर घोडा चढेर)। (२)=भाग्नु। त्यसै बीचमा बाघको पञ्जाबाट उम्कनालाई छारतोस ठोकेर आएको एउटा भालूको सन्मुख राजा परेछन्।—बोधविक्रम (दन्त्यकथा)। कुट्नालाइ हस्ते जुरुक्क उठ्नासाथ सानेले छार्तोस दियो।

**छाला काढ्नु**—=टाउकोदेखि खुट्टासम्मको सग्लो छाला शरीरबाट झिक्नु। सुलतानले जिउँदै यसको छाला काढ्न लाए र यसको मासु पकाएर यसका कुटुम्बीहरु कहाँ पठाई दिए।—वासुदेव (भारतवर्षको इतिहास)।

**छाला टाँग्नु**—(१)=टाउकोदेखि खुट्टासम्मको छाला काढ्नु (रिसको बोलीमा)। यो कमारीको छाला टाँग्छु! (२)=काढेको छाला भूइँका छेस्काका किला ठोकी तन्काएर सुकाउनु। बोकेको छाला त्यहाँ टाँगिदिएस्।

**छिः भन्नु**—=थुक्क भन्नु।

**छिड्के(के) हान्नु, लाउनु**—=छिड्के दाउ लाउनु। भकुण्डो



खेल्दा छिड्के हान्न पाइन्न (छिड्के हान्नुभन्दा छिड्के लाउनु बेस)।

**छिद्र खोज्नु, भेट्टाउनु**—(१)=सानातिना दोष वा चूक खोज्नु वा भेट्टाउनु। त्यसरी छिद्र खोजेर हिंडेदेखि जसको पनि भेट्टाइन्छ। (२) साधारण अर्थ। मिट्ठुले ढोकाको छिद्र खोजिरहेको मैले देखेथें।

**छिपाको ध्याम्पो फुट्नु**—छिपाको ध्याम्पो फुट्ता उनीहरुले एउटा हल्ला नमचाइहुन्न भन्ने प्रथा छ, उसैले नपत्याइसक्नाको अनौठो हल्ला उठ्यो कि हामी 'छिपाको ध्याम्पो फुट्यो होला' भन्छौं।

**छिपिएको कुभिण्डो, बोके**—=कम उमेरको तर बूढो जस्तो कुरा गर्ने बालक।

**छी छी दूर दूर गर्नु, हुनु**—=ज्यादै घिनाउनु वा हेला गर्नु, नफ्रत गर्नु, गरिनु। झूठो बोल्नेलाइ सबैले छी छी दूर दूर गर्छन्।

**छुक लाग्नु, हुनु**—=फाप्नु, लच्छिन लाग्नु, हुनु, (खास गरी जुवामा दाम पैसाले)।....स्वास्नीमान्छेले दिएको मोहर पैसा चौपट्ट छुक लाग्छ भन्छन्।—भीमनिधि (सहनशीला सुशीला)। तिम्रो मुख हेरेर चाकरीमा गएको छुक लाग्यो पान सय बकस पाएँ।

**छुचुन्द्रे ताँति**—ज्यादै नजीक नजीक भएर हिंडेको एक लहरे लामलाइ भन्ने (छुचुन्द्राहरु पुच्छर पुच्छर समाती लामो ताँति लागेर हिंड्ने हुनाले)। गल्लीमा सिपाहीहरुको छुचुन्द्रे ताँति आइरहेछ, छेउ लागौं।

**छुच्चो मुख**—=अर्कोलाइ मर्म पारी भन्ने बानी। धाईदीको छुच्चो मुख छ, तिनको अगाडि केही भन्न हुन्न।

**छुट्टी हुनु, गर्नु, पार्नु**—=नाश हुनु, गर्नु, पार्नु, ('छुट्टी हुनु' चाहिं 'पाठशाला इत्यादिमा बिदा हुनु' को अर्थमा पनि प्रयोग हुन्छ)। छुट्टि भयो, छुट्टि भयो; सङ्गमनीयमणि दौंतरीको हुनसम्म मन परेको थियो, ........।—श्री केसर (विक्रमोर्वशी)। पांच मिनेट मात्र आइपुग्न ढिलो भएको भए छुट्टि

झैशक्ने रैछ ।—भीमनिधि (सहनशीला सुशीला) । यस् रामले सकल बन्धु र पुत्र मार्‍यो । सूरा अनेक् विरहरू पनि छुट्टि पार्‍यो॥–भानुभक्त (रामायण) ।

**छुत्ती खेल्नु**—(१) = तल र माथि भएर हल्लनु । 'आन्द्रा लागे **छुत्ती खेल्न** तिग्रा लागे काम्न, सक्तिन महाराज पत्थरकला थाम्न ।' (२) = परस्परलाइ छुने खेल खेल्नु ।

**छुरा जस्तो [लाग्ने] मुख हुनु** — = चर्चरी मुख चलाउने बानी हुनु । आफ्ना मुखले, **छुरा जस्तो मुख छ** अनि नकुटेर के गर्नु ?—गुरुप्रसाद (कथा कुसुम) ।

**छुरा रगत**— = निक्खरा रगत । उसको झाडामा **छुरा रगत** आयो ।

**छुलछुलति मुत्नु**—डरले (उसैले = कायल कायल हुनु) । माष्टर देख्यो कि कान्छो **छुलछुलति मुत्छ** ।

**छुवाछूत**— = छूत अछूत(को अनौठो सन्धि) ।

**छूत लाग्नु**— (१) = सांसर्गिक दोषमा पर्नु । त्यो घरमा जाइदिनाले तिमीलाइ पनि चोरीको **छूत लाग्यो** । (२) = मर्नु (रोगको बारे) । त्यो घरमा हैजा छ रे, त्यहाँ नजाऊ **छूत लाग्ला** ।

**छेउको सियो माझमा आउनु** — = आखिरमा तहमा आउनु । अघि दिँदै दिन्न जा भन्थ्यौ, अहिले त दिनैपर्‍यो—**छेउको सियो माझमा आयो कि आएन ?**

**छेउ न टुप्पाको कुरा**— = डोको न डालाको वा अर्थ न बर्थको कुरा । भइँचालो आएको त धेरै मान्छे दगुरेर रे—के **छेउ न टुप्पाको कुरा** गरेको !

**छेउ लाग्नु**—(१) = मन पर्न छोड्नु, पाखा लाग्नु । सेते त आजकल **छेउ लागेछ** कर्सीबले माथि डाक्नुहुँदो रहेनछ । (२) साधारण अर्थ । जथाभावी छरी पानी जुवाको हरुवा सरी । धुँमिन्छ **छेउ लागेर** कालो मेघ घरी घरी ॥—लेखनाथ (ऋतु-विचार)।

**छेक न छन्दको**— = छन्द न बन्दको (हेर) ।

**छेकारो काट्नु, मार्नु, हाल्नु**



—(१) = मूल बाटो छाडी छड्के छोटो बाटोबाट अगाडि पुग्नु । खड्का पछि पछि आउँदै छ भनेको त **छेकारो मारेर** मभन्दा अघि पुगिसकेछ । (२) = अघिबाटै आफ्नो कुरा ठाउँमा पुर्‍याई अर्काको काम बिथोलिदिनु । गणेशेकहाँ मेरी छोरीको कुरा छिनिएला छिनिएला जस्तो भएको थियो, कहाँबाट धनेले **छेकारो हानिदिएछ** ।

**छेड हान्नु**— = घच्का पच्का हान्नु, घोच्नु । यो सब बनाउनाको अभिप्राय एक्लाक्लीलाई **छेड हान्नु** थियो ।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथा-संग्रह) ।

**छेपाराको उखान वा कथा**—भोलि भोलि भन्दाभन्दै टङ्गिरहेको काम ( छेपाराले सधैं राती जाड़ो हुँदा भोलि त घर नबनाई छोड्दिन भन्ने, भोलि पल्ट भयो घामको न्यानो पाई घर बनाउन बिर्सिरहने कथा बाट ) । असारदेखि माहिला मामाकहाँ जाउँला भनेको **छेपाराको कथा** भइरहेछ ।

**छेपाराको मुढो कटाइ**—माथिकै जस्तो ( उस्तै कथा, खालि घर बनाउनाको सट्टा मुढो काटी धुनी बाल्न बिर्सने )।

**छेपाराले मुढो** *समाए* **(ताके) जस्तो**—शक्तिबाहिरको कुरालाई आँट्ता दृष्टान्त दिने ।

**छेराउटीले लान नसकेको**— = हैजा लागी मर्न नसकेको (सराप्ता प्रयोग हुने) । **छेराउटीले लान नशकेकी** बुढ़ी, देखिस्, भए नभएको वदनाम गर्दा खेरी कस्तो स्वाद पाइने रहेछ ?—रुद्रराज (रूपमती) । मोरालाई **छेरौटीले लान न सकेको** ।—गुरुप्रसाद (कथा कुसुम) ।

**छेस्यो**— = भो लौ ! ( पाखे बोली ) । मैले तिम्रो द्वाइलाइ ढाकाको टोपी दिउँला भनेको त '**छेस्यो !**' पो भन्यो ए !

**छेलो हान्नु**— = प्रतियोगितामा गहौं ढुङ्गो वा अरू कुरा हुत्याउनु । **छेलो हान्नामा** भँडारीलाइ पाईकन अरू छैन ।

**छेस्को हाल्नु**— = अर्काको सो-

झिएको कुरामा बिग्रने एक दुइ वचन च्वास्स भन्नु, भाँजी हाल्नु । मैले तपाईंको के बिगार गरिदिएको थिएँ र आज मेरो कुरामा छेस्को हालिदिनुभयो ?

**छैंटीको बल झिक्नु**—=भएभरको शक्ति प्रयोग गर्नु (सक्तैन भन्ने जताउन प्रयोग हुन्छ, यसभन्दा 'न्वारानको बल झिक्नु' बढता प्रचलित छ)। यो ढुङ्गो उचाल्न तिमीले त छैंटीको बल झिक्नुपर्छ (अर्थात् सक्तैनौ)।

**छोइनसक्नुको हुनु वा छोइसक्नु नहुनु**—=ज्यादै बढेको हुनु, ढुप्पिएको हुनु। पल्टनमा भर्ना भएदेखि हीरा छोइसक्नु छैन।

**छोई छिटो हाल्नु, हाल्नुपर्नु**—=(जात जनाउँदा) छोइयो भने पानीका छिटा नहाली छोइने मान्छे नचोखिनु (जस्तो दमाई, कामी, सार्की इत्यादि) ।....यी पानी नचल्ने छोई छिटो हाल्ने जातका लुगा पनि नधुने........। ऐन (पांचौ भाग)।

**छोटो बुद्धि**—=सानो वा नीच बुद्धि ('लामो बुद्धि' कहिल्यै प्रयोग हुँदैन)। रिस् राग् छोडि, सबको भलाइ गर्नु ब्यबहारको मुख्य कामहो भन्या मेरो छोटो बुद्धिमा लाग्यो,....।—जयपृथ्वीबहादुर (तत्त्वप्रशंसा)। छोटो बुद्धिको मानिससँग व्यवहार गरे इज्जत लिन्छ।

**छोप लाग्नु**—=पुग्नु (अकरण अर्थमा मात्र प्रयोग हुन्छ)। आम्दानीले छोपै लागेन।—रुद्रराज (चप्पा काजी)। निम्ठो मानाको भातले त नौलीलाइ छोपै लाग्दैन।

**छोप्राकीले फूलपाती हेरे झैँ**—मामूली कुरालाइ पनि छक्क मानेर हेरी पाखेपन जताउँदा दृष्टान्त दिने (छोप्राकमा बस्नेहरूले गोरखा दरबारको फूलपातीको तमाशा खूब चाखले अचम्म मानेर हेर्नें हुनाले)।

**छ्यूँ काढ्नु**—=छिंक्का गर्नु।

**छ्वालीको घोडा चढ्नु**—=खराब परिणामको ख्याल नराखी अरूले भड्काएकोमा लाग्नु (छ्वालीको घोडाले बोझ थाम्न नसकी चढ्ने मान्छे भूइँमा थचारिने हुनाले)। उसको कुरामा लागेर छ्वालीको घोडा चढिथिस्, अहिले त्यतिका रुपियाँ नोक्सान हुँदा स्वाद पाइस् कि ?



## ज्

**जँघारको लहुरे**—=दुःखमा काम दिएको तर काम सकिएपछि बिर्सिने कुरा (जँघार तर्दा सहारा दिएको लहुरो काम सकिएपछि फ्याकिने हुनाले)। त्यही कांटाले गरेर इनारबाट आफ्नो घडी निस्क्यो, अहिले त्यसैलाइ जँघारको लहुरो गराएर तिमीले बारीमा छाडिदियौ।

**जकडबंद गर्नु**—(१)=राम्रो गरी आफ्नो अधीनमा ल्याउनु। उसका हस्ताक्षरको कागत गराएर जकडबंद गरेको छु, शिवेले चाँ चूँ गर्न सक्तैन। (२)=नउम्कने गरी कसेर बाँध्नु। यस बदमाशलाइ जकडबंद गरेर छिंडीमा जाक।

**जगत् हँसाउनु**—=दुनियाँले पतित वा बेकूफ ठानी गिल्ला गरिनु। कुल न घरानको मान्छेलाइ छोरी दिएर जगत् हँसाउँछौ ?

**जगनी धूलो**—=पिंधेको नून खुर्सानी (पिरो धूलो अचारलाइ पनि यसो भन्छन्)। भोक लागेको वेलामा जगनी धूलोसित पनि एक माना चाँवलको भात चट पार्छु।

**जग बस्नु, बसाल्नु**—(१)=शुरूको बन्दोबस्त, मिलाउनु, आरम्भको रोहो बसाल्नु, बस्नु। बाल्मीकि रामायणको उल्था गर्ने कामको बल्ल आजदेखि जग बस्यो। (२) साधारण अर्थ। वसुन्धराको घरको जग बसाल्ने रे।

**जगर फुलाउनु**—(१)=रिसले घुसघुसति परेर फुल्नु। घरमा स्वास्नीसित झगडा गरेर आउने, हामीदेखि के जगर फुलाउँछौ ? (२) साधारण अर्थ। बँदेलले जगर फुलायो, छुटेर आउला ढोका बन्द गर।

**जगल्टा केलाउनु**—(१)=

जगल्ट्याउनु, झगडा वा सजाको रूपमा कपाल लुछ्नु । म भए-देखि **जगल्टा केलाएर** भत्या-ङबाट खुर्सुराई दिन्थें ।—रुद्रराज ( रूपमती ) । (२)=नुहाए-पछि लट्टा परेको कपाल फुका-उनु ( हेला वा रिसमा ) । यो जैरीको **जगल्टा केलाइरहेको** थिएँ, कहाँबाट खाष्टो डढेछ ।

**जङ चल्नु, चलाउनु**—=रिस उठ्नु, जङ्ग्याउनु ।·····दुष्ट मा-निसले देवताहरूलाई **जङ चलाइदिएको** हुनाले जूपिटरले ·····सबै पानी जम्मा गरेर बर्सा-एका थिए ।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह ) ।

**जङ्गल जानु**—=झाडा फेर्न जानु। बिहान उठी **जङ्गल** **गएर** आएको मात्र थिएँ माहिला बा टुप्लुक आइपुग्नु भयो । (साधा-रण अर्थमा पनि) ।

**जंजालमा पर्नु, फस्नु**—=व्यवहारले घेरिनु, गृहस्थीको झंझटमा पर्नु । आफुलाई झन् झन् झंझट र **जञ्जालमा फँसे-को** देखे ।—रुद्रराज ( भारत-वर्षको संक्षिप्त इतिहास) ।

**जंजीर हाल्नु**—=(जग्गा जमीन) जंजीरले नाप्नु । हाम्रो बंडामा तिमीलाइ चित्त बुझ्दैन भने **जंजीर हालौं** ।

**जटा नरिवलको पगरी**—=त्यो नरिवल राख्ने वस्त्र ।

**जड उखाड्नु**—=समूल नाश गर्नु, नामेट गर्नु । भाई ! भयेनकि कुनै तपमा प्रवृत्त ? दासत्वको **जड उखाडनका** निमित्त ॥—लेखनाथ ( सत्य-कलिसम्वाद ) ।

**जड भेट्टाउनु**—=मुख्य कुरा पत्ता लाउनु । उसले तिम्रो **जड भेट्टाइसक्यो**, के जोरी खोज्छौ ?

**जता (जतना) लाख**—=लात्ती-कुत्ती, प्रशस्त । असारमा हरियो मकै **जतना लाख** पाइन्छ ।

**जतिको(का) तति**—=जति थियो उति ( यस वाक्यांशमा 'त्यति'को प्राचीन रूप 'तति' रहिरहेकोछ, त्यसको सट्टामा त्यति प्रयोग गर्दा हाम्रो वाक्पद्धतिमा मिल्दैन ; तस्तो, तस्तै पनि त्यही किसिमका हुन् ) । मेरो त अहिलेसम्म **जतिको तति** नै छ,



अघि ४०। ५०। रुपियाँ बल्झेको थियो फेरि गयो ।

**जति ज्यू ज्यू गर्‍यो उति जीउ खानु**—=जति नम्रता देखायो उति दुःख दिनु । **जति ज्यू ज्यू गर्‍यो उति जीउ खान्छ**, अब त म त्योसित किमार्थं दब्दिन ।

**जथवा तथवा**—=जथाभावी, मनपरी (प्रायः गालि गर्दा) ।

**जनै छोएर (समातेर) किरिया हाल्नु**—=कडा सपथ खाने तागाधारीको रीति । **जनै छो-एर किरिया हालि हालें** । —बालकृष्ण (मुकुन्द इन्दिरा) ।

**जनै पाउनु**—=तागाधारी जातमा गनिनु । काल्लु बाबुसाहेबको ल्याइतेपट्टिका छोराले **जनै पाए** ?

**जन्तर लाउनु, बाँध्नु**—(१)= ढुनामुना वा भूतप्रेतबाट बचा-उनालाइ मन्त्र लेखेको कागत वा बूटी इत्यादि खोलमा हाली घाँटीमा विधिपूर्वक झुण्ड्याउनु । ओखलढुङ्गाको झांक्रीले हाम्री बूढीलाइ **जन्तर लाइदिएदे-खिन्** काम्ने बेथा हरायो । (२) =प्यारो कुराको रूपमा छातीमा झुण्ड्याइराख्नु (प्रायः यो र तलको अर्थमा बीचमा 'बनाएर' थपिन्छ) । प्यारी, तिम्रो चिठी-लाइ **जन्तर बनाएर लाइराखेको** छु। (३)=संझनुपर्ने वा हराउन नहुने कुराको रूपमा खोलमा हाली छातीमा झुण्ड्याइराख्नु वा खूब जतनसंग राख्नु । अहिले अह्राएका कुराको **जन्तर बनाएर लाइराख**, फेरि बिर्सेलौ । बूढी बज्यै, यो रसीदको **जन्तर लगाइराख्नुहोस्**, हराए त पैसा भुस्सिन्छ ।

**जन्ती पर्सनु**—=जन्ती आइपुगे-पछि दुलहीका बाबु दाइभाइ इत्यादिले दुलहालाइ फूलअक्षता छर्दै प्रदक्षिणा गर्नु ।

**जन्मदै तीन पातको**—=ज्यादै बितपाते वा बाठो । तिम्री छोरी त **जन्मदै तीन पातकी** रहिछ ।

**जन्म लिनु**—=जन्मनु । आइ-माई भनेको त्यस्तैले **जन्म लिनु** पर्दछ ।—रुद्रराज (रूपमती) ।

**जबान ( जमान ) दिनु**—=प्रतिज्ञा गर्नु, वचन दिनु ।

जमान दिएपछि फरक गर्नु हुन्न।

**जबान फीका गर्नु, हुनु**—=प्रतिज्ञा भङ्ग गर्नु। भोलि ४ बजे आउँछु भनेका छौ, जबान फीका हुन नपाओस्।

**जमानी पर्नु, हुनु**—=तलमाथि परेको खण्डमा बुझाउन अम्भर गर्नु (पत्यारवालाले)। अर्काको जमानी पर्नुभन्दा आफूले रिन काढ्नु निको।

**जमीन अस्मानको फरक**—=ज्यादै फरक। पहिलेको रने र अहिलेको रनेमा जमीन अश्मानको फरक थियो।—ग्रन्थकार (कथा कुसुम)।

**जमीन गल्नु**—(१)=स्वास्नीमान्छे चाहिं कायल हुनु। जमीन गलेपछि तेरो इनकारको माने लाग्दैन। (२) साधारण अर्थ। जमीन गल्ने गरेर पानी नै पर्न सकेको छैन।

**जमीन लिनु**—=(कुश्तीमा) घोप्टो परेर अड्डी लिनु। काना पहलमानले जमीन लिएपछि चीत पार्ने चौपट्ट गाह्रो।

**जम्का भेट हुनु**—=एक्कासि ह्वासङ्ग्वासति भेट हुनु ('हुनु' को ठाउँमा 'गर्नु' कहिल्यै प्रयोग हुन्न। जुठेघर्ती ढोकाबाट पनि निस्कनु घरबिदामा गएको सेते पनि ठिक्क आँगनमा पुग्नु जम्का भेट हुन्छ।—भीमनिधि (सहनशीला सुशीला)।

**जम्बू मन्त्री**—=(किस्साहरूमा 'जम्बू मंत्री' स्यालको नाउँ हो) अर्काको कुरामा बठ्याइँ झिकेर बोल्ने मान्छे (गिल्लाको बोली)। सानेको कुरामा भीमे जम्बू मन्त्री भएर बोल्न आएको थियो।

**जयपुरी मानिस**—=पुरानो ढाँचाको मान्छे।

**जय बिजय [केही] नबोल्नु**—=असल खराब वा हो होइन केही नभन्नु, समालोचना नगर्नु। रने जय विजय केही न बोली विचारी पट्टि एक टक लगाइ रहेको थियो।—ग्रन्थकार (कथा कुसुम)। दुवै थरी आफन्तको झगडामा साक्षी बस्नुपर्‍यो के गर्नु ? म त कसैको जय बिजय बोल्दिनं।

**जय मनाउनु**—=समृद्धि वा विजय चाहनु।.........नूनको सोझो चिताई सरकारको जय मनाई हरेक कुरामा बुद्धि पुर्‍याई काम गर्ने हुनाले उनको ठूलो नाम थियो।—रुद्रराज (चप्पा काजी)।



**जरी बूटी खन्नु**—=जरो खन्नु (१ हेर)।

**जरै समात्नु, भेट्टाउनु**—=मुख्य कुरा भेट्टाउनु (अक्सर वक्रोक्ति)। मलाइ चोर बात लाउन मेरो खल्ती खोतलेर जरै भेट्टाउनुभयो, हैन के ?

**जरो आउनु**—=ज्वरले पक्रनु ('रोग लाग्नु' मा पनि हेर)। तीर्थ गर्दै आएको, साह्रै बेरामी छु, जरो आई रहेछ,"'।—गुरुप्रसाद (कथाकुसुम)।

**जरो उत्रनु**—(१)=ज्वर ओह्र्‍लनु, कम हुनु। तेस पछि परदेशीको जरो अलि उत्र्‍यो।—गुरुप्रसाद (कथा कुसुम)। (२)=दबेको ज्वर बाहिर देखिनु, फुट्नु। यो ओखतीले हाडभित्र घुसेको जरो उत्रन्छ।

**जरो खन्नु**—(१)=भित्र भित्रबाट धोका दिनु, गुप्त हिसाबले बिगार गनापट्टि लाग्नु। त्यस्ता भला ईश्वरको इच्छा तँ न गन्ने। गर्लास् र नि आफ्नु जरो आफैं होलास् खन्ने।—धरणीधर (नैवेद्य)। (२)=साधारण अर्थ। जरा खनेर खोलाले खसाले तीरका रुख। छोटाको आड लागेर मिल्दैन कसै सुख।—लेखनाथ (ऋतुविचार)।

**जरो फुट्नु**—=जरो उत्रनु (२ हेर)।

**जरो हाल्नु, गाड्नु**—(१)=एकै ठाउँमा बस्नु। दश बजे गएको मान्छे सात बजिसक्यो अझ आएन, धनेले त त्यहाँ जरै हाल्यो क्यारे ! (२)=धेरै वर्ष टिक्नु। एउटै मालिककहाँ जरो गाडेर बसे आखिरमा नसम्झिछोड्दैनौ। (३)=साधारण अर्थ।.....तिनका पाखुराहरू पातला हाँगा भए औ तिनलाई त्यस्तरी दगुर्न मदत दिने गोड़ाहरूले जमीनमा जरा हाले।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथा संग्रह)। यो बिरुवाले जरो हालिसकेछ।

**जवानी चढ्नु**—=बैंस आउनु। कान्छालाइ **जवानी चढि-सक्यो।**

**जवाब तलब गर्नु**—=जवाब माग्नु वा कारण सोध्नु (अड्डा-खानाको बोली)।

**जसले पायो उसले, जो पायो उही, जे पायो उही वा सोही**—=भेद नराखी जसले पनि, जो पनि, जे पनि; हरे-कले, हरेक जना, हरेक चीज। **जसले पायो उसले** भनेको कुरा पत्याउन हुँदैन। **रुघा लागेको छ, जे पायो उही नखाऊ।**

**जसो होला होला, जसो जसो होला**—=(गाह्रो कुरा आँट्ता भन्ने बोली) परिणाममा जे भए पनि सहुँला। **जसो होला होला वैद्यकै ओखति खुवाउँछु।**

**जस्ताको तस्तो**—(१)=पहिले जस्तो थियो, अहिले त्यस्तै। त्यसैले पो महाराजबाट अँगालो-हालिबक्सने बित्तिकै **जस्ताकी तस्ती** भइहालें।—श्रीकेशर (विक्रमोर्वशी)। हामीले देखेदेखि यो बूढो **जस्ताको तस्तै** छ, अलिकति पनि अनुहार बदलि-एको छैन। (२)=सारसौंदो, साबुत। अब वैज्ञानिकहरूलाई कुन प्रकारले भाषालाई **जस्ता-को तस्तै** टाढा रहेका ठाउँ-हरूमा पठाउन सकिएला भन्ने चिन्ता थियो।—जितेन्द्र (आ-धुनिक आविष्कार)। उमेरमा चोट पटक लागे तापनि, थोरै दिनमा **जस्ताको तस्तो** हुन्छ। (३)=साँचो साँचो कुरा, खसोखासको कुरा। एक कुरा नछाडेर **जस्ताको तस्तै** भन्न सक्छ।—रुद्रराज (प्राय-श्चित्त)। आफूले देखे सुनेको कुरा कसैको मुलैजा नराखी **जस्ताको तस्तो** भन्। (४)=वास्तविक कुरा (जोखना हेर्दा वा अरूले दोष लाउँदा परमेश्वरलाइ पुकार्ने बोली)। सतोसत् हे परमेश्वर, दूधको दूध, पानीको पानी **जस्ताको तस्तो** आओस्! (तस्तो को निमित्त 'जतिको तति' हेर)।

**जस्तालाइ तस्तै**—=जस्तो मा-निस छ उस्तै व्यवहार। **जस्तालाइ तस्तै** गर्नुपर्छ, आज त्यो बदमाशलाइ भोकै डल्ल्याऊ। ('तस्तै'को निमित्त 'जतिको तति' हेर)।



**जहाज डुब्नु**—(१)=जहान छोराछोरी कङ्गाल हुनु वा तिनले दुःख पाउनु। बहादुर घले अहिले घोडाबाट लडेर मरेको भए उसको **जहाजै डुब्थ्यो।** ....त्यो **जहाज** जहानको **डुब्न** लाग्यो ढली आफै, समुद्र जति शान्त होस् हिल्दैन उसको छाती जहाज जब चिर्दछ?—बालकृष्ण (मुकुन्द इन्दिरा)। (२)=भएभरको पूँजी बरबाद हुनु। त्यो काम बिग्रयो भने मेरो **जहाजै डुब्छ।**

**जाँड खाएको सार्की जस्तो**—(१) धन्याङ मन्याङ गरी हिंड्दा दृष्टान्त दिने। (२)=जथाभावी फोहोर बोल्ने। राम्रो बोली भनेको छैन, सधैं **जाँड खाएको सार्की जस्तो।**

**जाँतो पिंध्नु**—=पिंध्ने गरी जाँतो चलाउनु। सानु छोराले **जाँतो पिंध्**ेको देखेको छैन।

**जागा हुनु**—(१)=बिउँझनु (उच्च कक्षाको आदरको बोलीमा)। अहो! महाराज! **जागा भइ-बक्सियो?**—श्री अर्जुन (स्वप्न-वासवदत्त)। (२)=बिउँझै हुनु। उपियाँले सुत्न नदिएको हुनाले तिमीले बोलाउन आउँदा म **जागै थिएं।**

**जागीर खानु**—=जागीरे हुनु, तलब खाने गरी भर्ना हुनु।

**जाग्राम(न) बस्नु**—=रातभर जागो रहनु (धर्मकार्यमा)। हैन, हामी स्वास्नीमान्छे, स्वा-स्नीमान्छे, आज नारानको पूजा **जाग्रम बसेका।**—भीम-निधि (सहनशीला सुशीला)। शिवरात्रीमा हामी **जाग्राम बस्छौं** (जाग्राम रहन्छौं कहिल्यै हुँदैन; 'जाग्राम गर्नु' चाहिं हुन्छ)।

**जाग्राम(न) हुनु**—=रातभर निद्रा नपर्नु वा कामविशेषले सुत्न नपाउनु (धर्मकार्यमा प्रयोग हुँदैन)। आज राती सानुलाइ संचो भएन, हाम्रो त **जाग्रामै भयो।**

**जाडो काट्नु**—=हिउँद महीना बिताउनु। **काट्यो** जगतले **जाडो** धैर्य-शस्त्र लिईकन। रङ्ग-

का निहुँले रक्त बहन्थ्यो नत्र यो किन ? ॥—लेखनाथ (ऋतु-विचार)।

**जात आउनु, जानु**—भूलचूक परी आफ्नो जातविरुद्ध काम गरेकोमा व्रत गोदानादि कार्यले शुद्ध हुँदा जात आउँछ, आफ्नो जातले पाइनआएको काम गर्दा जात जान्छ।·······तेस् वेला जापानबाट युरोप जाने दस्तुर थिएन, कोहि गये पनि हिन्दु जस्तै जात गये जस्तो संझन्थे ····। जय पृथ्वी बहादुर (शिक्षा-दर्पण)। आ, त्यस्तो पनि नहुने—जात गैहाल्छनि।—प्रेमराज (ससुराली)।

**जात काट्नु**—=कुनै कारणले जातबाट बाहेक गर्नु, गराउनु। मैले खास छेत्रीकी छोरीको हातबाट भात खाएको छु, मेरो जात को काट्न सक्छ ?

**जात झिक्नु**—=धर्माधिकारले विधिविधान गरी वा भताहाले भात खाइदिई जातबाट हटक भएको मान्छेलाइ पहिलेकै ठाउँमा उकाल्नु। तिम्रो जात नझिकीकन तिमीले छोएको खान्न।

**जात फाल्नु, फ्याँक्नु**—=जानी जानी जातले पाइनआएको काम गर्नु। जात फाल्नु गहतको झोलमा (उखान)।

**जात लिनु**—=(अर्काको) जात जाने पार्नु। मेरी बाहुनीलाई कसाइनी भनेर मेरो जात लिन खोज्ने भएकी;····।—रुद्रराज (रूपमती)।·······ओ बामन ! आइज तेरो जात लिन्छौं; यति भनी उनीहरूले मलाई समातेर कुखुराको पुलाऊ खुवाइदिए।—शिवप्रताप (दुर्गेश-नन्दिनी)।

**जात्रा देखाउनु** (१)=अरूहरूले देख्ने वा थाहा पाउने गरी सजा गर्नु (प्रायः रुनें उफ्रनेसम्म पारी)। म जाने थिएँ आजै गएर उसको जात्रा देखाइदिने थिएँ।—रुद्रराज (चप्पा काजी)। तर ती मानिसहरूले फेरि त्यसै गरी रूखो बोलीमा 'गइनस् भने हामी तेरो जात्रा देखाउनेछौं' भनेर धम्काए।—खड्गमान (ग्रीस र रोमको दन्त्य-कथासंग्रह)। (२) साधारण अर्थ। भरे छोराहरूलाई जात्रा देखाउन पाटन लाने भएको छु।

**जात्रा हुनु**—(१)=माथिको जस्तो सजा हुनु। आज त्यसको जात्रा हुन्छ यो पनि सुनाइदेऊ।—भीमनिधि (सहनशीला सुशीला)। (२) साधारण अर्थ। बिस्केटको जात्रा भादगाउँमा हुन्छ।

**जान देऊ**—(१)=छाडिदेऊ (साम्य गर्दा वा चित्त बुझाउँदा प्रयोग हुने)। जानदेऊ, एउटा फुल फुट्यो त फुट्यो अर्को किन्न पठाउँला। (२) साधारण अर्थ। खै, मलाइ जान देऊ।

**जानपत्याइँ लाउनु**—=खूब जान्ने छु भन्ने देखाउनु (अक्सर अधि सरी काम बिग्रँदा गिल्ला गर्न प्रयोग हुने)। झन् यसले जानपत्याइँ लाएर लालटीनको चीम फुटाइदियो।

**जानी बुझी**—=जानी जानीकन, थाहा पाउँदा पाउँदै।

**जान्नु न तान्नु**—नजानेको कुरामा अघि सर्नेलाइ भन्ने बोली। जान्नु न तान्नु घचेटिमाग्नु (उखान)।

**जान्ने कथा**—=गाउँ खाने कथा (हेर)।

**जान्नेमाथि तान्ने हुनु**—=जान्ने मान्छेभन्दा पनि बढ्ता वा अधिसरा भएर काम गर्नु वा बोल्नु। मैले तेरो भाइलाइ छकाउन चरी भाग्यो भन्दा जान्नेमाथि तान्ने भएर तँलाइ कल्ले बोल्न लायो ?

**जान्ने हुनु**—(१) गरेको भनेको आदि मन नपर्दा प्रयोग हुने। यस्तो मैलो लुगा लाएर पाहुनाको अगाडि तँलाइ जान्ने भएर कल्ले आउनू भन्यो ? (२) साधारण अर्थ। रात्री पढे पो दाज्यूभाइको अगाडि जान्ने हुन पाइन्छ।

**जाबे भुत**—=केही बेर रहने बिमिरा वा डाबरै डाबर (जाबीले पुछी सो जाबीलाई सिलौटो वा जाँतोले थिचिराखेपछि हराउने हुनाले)।

**जार हान्नु**—=जार काट्नु।

**जाल जमाउनु, रच्नु**—=कपट-प्रबन्ध मिलाउनु (साधारण अर्थ, अर्थात् 'जाल बुन्नु, बनाउनु' को अर्थमा कहिल्यै प्रयोग हुँदैन)। तिनीहरुले मलाइ ठग्नालाइ

**जाल** जमाएका मात्र हुन् ।

**जाल तोड्नु**—=माया वा कपटप्रबन्ध नाश गर्नु (साधारण अर्थमा प्रयोग हुंदैन) । असत्को **जाल सब् तोडी**, लगाऊँ राममा प्रीती ॥—शम्भुप्रसाद (शम्भु भजनमाला) ।

**जाल फैलाउनु, बिछाउनु**—=कपटप्रबन्धले जताततै ढाक्नु (साधारण अर्थमा पनि प्रयोग हुन सक्छ) । उसले दशै दिशा **जाल फैलाइसकेको** छ, अब हाम्रो केही चल्दैन ।

**जाल हाल्नु**—=(पानीमा) जाल फ्याँक्नु (कपटप्रबन्धको अर्थमा यो वाक्यांश प्रयोग हुँदैन) ।

**जिउँदा मानिसको फेला पर्नु**—=लायक मर्दसंगको व्यवहारमा पर्नु । **जिउँदा मानिसको फेला परेका** रहेनछौ, बाबु !

**जिउँदै गाड्न माफिकको**—=नमर्दै जमीनभित्र पुर्न सुहाउँदो (ज्यादा रिस उठ्ता भन्ने बोली) । कस्तो **जिउँदै गाड्न माफिकको** उपद्र्याहा रहेछ !

**जिउँदै मरे दाखिल, तुल्य, जस्तो, समान**—(१)=कसैले वास्ता नराख्ता वा नगन्दा भन्ने बोली । छोराको बिहेमा सारालाइ डाक्ता मलाइ संझेनौ, तिमीले त मलाइ **जिउँदै मरे दाखिल तुल्यायौ** ए ! (२)ज्यादै विह्वल, लज्जित, वा अपमानित हुँदा भन्ने बोली । तिमीले खाएको विष हो भने मलाई त्यही अमृत हुने छ बुझ्यौ—तिमी भइनौ भने मलाई **जिउँदै मरेको जस्तो** हुँदैन र ।—रुद्रराज (चम्पा काजी) ।

**जिउँदै मर्नु**—=लोकको निमित्त केही काम नलाग्नु । ज्यूँदै **मर्**याको भनि नाम् त कस्को ? उद्यम विना वित्तछ काल जस्को । —भानुभक्त (प्रश्नोत्तर पच्चासिका) ।

**जिभ्रामा गड्नु**—=स्वाद संझिरहनु । तिमीले पोहर पठाएको काँक्राको अचार **जिभ्रामा गडिरहेछ** ।

**जिभ्रा[को टुप्पै]मा झुण्डिनु**—=(स्वाद) जिभ्रामा गडिरहनु । सानी नानीले पारेको गोलभेंडाको अचार त **मेरो जिभ्राको टुप्पैमा झुण्डिरहेछ** ।

**जिभ्रो काट्नु**—(१)=(तर्सँदा, अचम्म मान्दा, मनाही जाहेर गर्दा, इत्यादि) मुखबाहिर जिभ्रो झिकी दाँतले किच्नु (जति भाव गाढा हुन्छ, उति किचाइको जोड बढ्छ) ।········मित्र पसेर लामो **जिब्रो काटिन्** ।—बालकृष्ण (कथा कुसुम) । काजीले **जिब्रो काटे**—····।—रुद्रराज (प्रायश्चित्त) । सवालक्ष मानिस अन्दाजि हुन्थे । मुखको **जिब्रो काडि** ओःहो भनि घुम्थे ॥—शिखरनाथ (गंगामाहात्म्यको सवाई) । छोरा चाहले जेठाज्यूको टोपी समात्न जाँदा आमा चाहिँले **जिभ्रो काटी** । (२)साधारण अर्थ । पुन्टे लड्दा **जिभ्रो काटिएछ** ।

**जिभ्रो काढ्नु**—=जिभ्रो काट्नु (१) । शिवले विष झैं सारा चर्को गर्मी पिईकन । थाल्यो कि विजुली—**जिभ्रो काढी** मेघ मडारिन ? ॥—हसनाको बडो हस्के देखी उत्ताउलो-पन । कुनामा केवरा लाग्यो **जिभ्रो काढी** लजाउन ॥—लेखनाथ (ऋतु-विचार) ।

**जिभ्रो चपाउनु**—=कुरा चपाउनु ।

**जिभ्रो झिक्नु**—(१)=जिभ्रो काट्नु (१) । (२)=जिभ्रो थुत्नु (को अर्को रूप) । सरकारी कुरामा जथाभावी बोल्दा तिम्रो **जिभ्रो झिक्लान्**, होश गरे ।

**जिभ्रो टोक्नु**—(१)=मर्नु । गोविन्देको बाले त **जिभ्रो टोकेछ** । (२)=अचम्म मान्नु । मैले त्यत्रो घोडा चढेको देख्ता त बाले **जिभ्रो टोक्नुभयो** । (३)=साधारण अर्थ (खाँदा जिभ्रो टोकियो भने मासु खान पाइन्छ भन्ने चलन छ) । ओहो ! मैले त **जिभ्रो टोकें**, मासु खान पाइन्छ कि क्या ! बाइस्कलबाट लोट्ता बीरेको **जिभ्रो टोकिएछ** ।

**जिभ्रो फड्कार्नु**—(१)=प्रष्ट गरेर बोल्नु । तिम्रो कुरै बुझिएन, अलि **जिभ्रो फाड्कारेर** बोलन । (२)=अमिलो पीरो खाँदा जिभ्रो पट्काउनु ।

**जिभ्रो समात्नु**—(१)=कुरा पक्रेर नाजवाब पार्नु । तिमी त **जिभ्रो समात्ने** कुरा मात्र गर्छौ ।—भीमनिधि (सहन-

शीला सुशीला)। (२) साधारण अर्थ। तिमी घोडाको जिभ्रो समात, म औषधि खन्याउँछु।
**जिभ्रो सह्याल्नु**—बोल्दा होश गर्नु। जिभ्रो सह्यालेर बोल्। —लेखनाथ (लक्ष्मी-पूजा)। जिब्रो सह्यालेर बोल्नू।—रुद्रराज (रूपमती)।
**जिम्मा लाउनु, लिनु**—=हेरविचार गर्न सुम्पनु, अम्भर गर्नु। प्रभो, यो अनाथ संतान जिम्मा लाउने मानिस न पाउँदा दुःख र वेदनाका ज्वाला-मा जली रहेकी छु। आउनु भो, छोरो जिम्मा लिनु होस्।—गुरुप्रसाद (कथा कुसुम)।
**जिल खानु**—=जिल्लाराम पर्नु।
**जिली न गाँठीको**—=छेउ न टुप्पाको (हेर)।
**जिल्ला उड्नु**—(१)=ठट्टै ठट्टामा छकाएको कुरा पत्याई जिल्लिने काम हुनु। अहिले एक जिल्ला उड्यो। (२)=टलक हराउनु। टेबिलको पालिशको जिल्ला उडिसकेको छ के नयाँ भनेर धाक लाउँछस्!
**जिल्ला खानु**—जिल्लाराम पर्नु।
**जिल्ला (जिल्द्) हाल्नु, बाँध्नु**—पुस्तकको बचाउको निमित्त बाहिरपट्टि थोर बहुत बाक्लो कागत टाँस्नु अथवा सिउनु। केटाकेटीदेखि नै उनलाई किताबको जिल्ला हाल्ने काम-मा लाइदिए।—जितेन्द्र (आधु-निक आविष्कार)।
**जीउ अमिलो हुनु**—=ज्यादा कचकचले वाक्क हुनु। एक पटक बिराएको कुरा सधैं बोकिरहनु-हुन्छ, मेरो जीवै अमिलो भइ-सक्यो। (२)=जीउ थिलथिलो हुनु। यो नानी कति चलिरहन्छ मेरो जीउ नै अमिलो पारि-सक्यो।
**जीउ घोट्नु**—=जीउ दल्नु।
**जीउ छाड्नु**—=लाज शरमको ख्याल नराख्नु। तिमी त अति जीउ छाडेर हिंड्छ्यौ; अवि लोग्नेमान्छेहरुको अगाडि तिम्रो खाष्टो कहाँ पुगेको थियो, थाहा छ?
**जीउ जोगाउनु**—(१)=गाल, दुक्ख, वा सँजाबाट उम्कनु। पुनु जीउ जोगाउन साह्रै जान्दछ, मैले कुट्न खोजेको त भाग लगाई



लगाई नाच्न थाल्यो। (२)=प्राण बचाउनु। यसलाइ बाघले झण्डै छोपिसकेको थियो खूब जीउ जोगायो। हूलमूलमा जीउ जोगाउनू, अनिकालमा बीउ जोगाउनू (यो उखानमा १,२ दुवै अर्थ लाग्छ)। (३)=सतीत्व वा कुमारीत्व बचाउनु।
**जीउज्यान लडाउनु**—=शरीर वा प्राणको परवाह नगर्नु। मालिकको यस्तो आशय पाए पछि अब किन चुप लागूँला रे, जिउज्यान लडाएर भए पनि हाजिर नगराई छाड्दिन। —रुद्रराज (चप्पा काजी)।
**जीउज्यानले भेटेसम्म**—=सकेसम्म। तिम्रो काममा जीउ-ज्यानले भेटेसम्म मेहनत गर्नेछु।
**जीउ दल्नु**—=ज्यादै शारीरिक परिश्रम गरेर काम गर्नु। हामी-हरू जीउ दल्ने मात्र हौं, अक-ल झिक्ने त उही सकस हो।
**जीउ दिनु**—=शरीर घोट्नु। तिम्रो निम्ति जीउ दिन पो सकिन्छ, नोक्सानै सहन त सकिन्न।
**जीउधन सरकारको**—आत्म-समर्पणको बोली। मैले हराएको छैन बिराएको छैन, जीउधन सरकारकै हो; जे गरिबक्-सिन्छ।
**जीउ नचल्नु**—(१)=जाँगर नउठ्नु, अल्छी लाग्नु। काम गर्नु त धेरै थियो, खै जीउ नै चलेन। (२)=ज्यादै थाक्नु। हिजो शिकारमा गएको आज त जीवै चलेन ए। (३)=बुढ्याइँले हातखुट्टा बस्नु। हाम्री बूढी बज्यैको त अब जीउ चल्दैन।
**जीउ फाल्नु**—(१)=शरीरको साह्यार संभार गर्न छोड्नु। जरो आइरहेछ अमिलो खान्छ्यौ, तिमीले यसरी जीउ फाल्न लाग्यौ भने उमेर गएपछि धोका पाउँछ्यौ। (२)=प्राण त्याग्नु। पार्वतीको निम्ति सेतेले जीवै फ्याँक्यो।
**जीउ भारी हुनु**—(१)=गर्भ रहनु। यिनको त जीउ भारी भए जस्तो लाग्छ नि? (२)=बेचैन हुनु। जरो आउन लाग्यो क्या रे, आज मेरो जीउ भारी

छ । (३)=मनमा अशान्ति हुनु । फोहर ठाउँ देखेर मेरो जीउ भारी भयो ।

**जीउ भिजाउनु**—(१)=(ठाउँमा) जिन्दगी नै गुजार्नु । यो घरमा नोकरी गर्दा गर्दा जीउ भिजाइसकें, हिजो आएको मान्छे जान्ने म नजान्ने भएँ । (२)=तन्मय हुनु, खूब चित्त दिनु । मीनबहादुर बडो असल मान्छे छ, जे काम लाए पनि जीउ भिजाएर गर्छ । (३) साधारण अर्थ । यत्रो ठूलो पानीले किन जीउ भिजाउँदैनथ्यो ?

**जीउमा घामै लागेको नहुनु**—=मनमा पीर पर्नु । छोरा बिरामी भएको सुनेदेखि मेरो जीउमा घामै लागेको छैन ।

**जीउमा भिजाउनु**—=छाला-भित्र पुऱ्याउनु (तेल वा मालिस घस्ता) । जीउमा भिज्ने गरी तेल घसिदे ।

**जीउ मार्नु**—=आफ्नो जीउलाइ साह्रै कष्ट दिनु, मन रोक्नु । जीउ मारी मारी लुगा सँगालेर कसलाइ पोख्न आँटेकी छौ ?

**जीउमा लाग्नु**—=शरीरलाइ पुष्ट पार्नु । खाने वेलामा झगडा गरे जीउमा लाग्दैन भन्छन् । (आदरमा 'गात' हुन्छ) टाइम टाइममा ज्युनार भएदेखि गातमा पनि लाग्छ ।—भीमनिधि (सहनशीला सुशीला) ।

**जीउ मास्नु**—=मान्छेलाई बेचेर कमारा कमारी तुल्याउनु । कंगालीलाई अनिकालले आखिर परेमा पनी ज्यू ह्नासिन जान्थ्यो ।—श्री ३ चन्द्र (अमलेख-भाषण) ।

**जीउ लाग्नु**—=मोटाउनु । मोटाउने वेलामा पानी मात्र खाए पनि जीउ लाग्दो रहेछ ।

**जीउ लिनु**—(१)=मोटाउनु । कान्छाले जीउ नै लिन सकेन । (२)=हत्या गर्नु । जीउ लिनेलाइ भन्दा वचन दिनेलाइ पाप लाग्छ । (३)=कुमारीत्व हरण गर्नु ।

**जीउ साँच्नु**—=जीउलाइ परिश्रम पर्न नदिनु । जीउ साँचेर मीठो खान पाइँदैन ।

**जीउ हल्का (हलुङ्गो) हुनु**—=प्रसव हुनु । जेठी बुहारीको जीउ हल्का हुने कुन महीना



हो ? (२)=शरीर चंगा हुनु । बेथाले छाड्यो क्यारे, आज त मेरो जीउ निकै हल्का छ । (३)=मनमा शान्ति हुनु । छोरीलाइ बिहा गरेर पठाएदेखि मेरो जीउ हल्का भइरहेछ ।

**जीउ होम्नु**—=जीउको माया नराखी लाग्नु । जीउ राखी धर्म गर्नुपर्छ, पाएँ भन्दैमा जीवै होम्न खोज्नु हुँदैन ।

**जीविका चलाउनु**—=आफ्नो र जहान बच्चाको जीउ पाल्ने वृत्ति गर्नु ।·····यी सबैमा प्रायः ३०० मानिसले उचित तालिम पाइ जिविका समेत चलाउँदै छन् ।—पारसमणि (नेपाली साहित्य—भाग ५) ।

**जुँगाको रेखी बस्नु**—=भर्खर जुँगा (वा जुङ्गा) आउन थाल्दा कालो डोरो देखिनु ।....जुङ्गाको रेखीसमेत न बसेको पतला ओठले हिस्सी पर्ने अनुपात र अन्तर छानी छानी ठाउँ लिएका थिए ।—ग्रन्थकार (कथा कुसुम) ।

**जुँगाको सास्ती**—=फोस्रो सेखी गराइ (सेखी गर्दा जुँगा मुसार्ने बानीबाट) । आखिरमा तिम्रो हातबाट झिंगो मर्नेछैन, खालि जुँगाको सास्ती मात्र हो ।

**जुँगा खौरनु**—आमा बाबु मर्दा मात्र जुँगा खौरने चलन हुनाले यो वाक्यांश पनि 'कानमा कौडा झुण्ड्याउनु' जस्तै गरी प्रयोग हुन्छ । छिः छिः त्यति मैले गर्न सकिन भने त क्या, यी जुँगा खौरिदिन्छु !

**जुँगामा ताउ दिनु, लाउनु**—=खूबै ठूलो काम गरें भने झैं गरी जुँगा मुसार्नु ।

**जुँगा मुठार्नु**—=जुँगा छोटो छोटो पारी काट्नु ।

**जुँगा मुसार्नु**—=(१)=दङ्ग पर्नु, खोजेकै जस्तो पाउनु । ढिंडोमा डल्लाए त म जुँगा मुसार्छु, किनभने अस्तिदेखि मलाइ ढिंडोको तिर्सना लागिरहेको थियो । (२)=फूर्ति, सेखी देखाउनु । अहिले जुँगा मुसार्छौ पछि सकेनौ भने लाज होला । (३)=जुँगा तह्लाउनु ।

**जुँगा हेरी भाग लाउनु**—=मुख हेरी भाग लाउनु (हेर) । 'मुख हेरी भाग ला, तेरो जुँगामा

आगो ला' भन्ने उखानका पद गोलमाल पारेर यो वाक्यांश निक्लेको हो, उसैले 'मुख हेरी भाग लाउनु' नै शुद्ध रूप हो।

**जुग फुट्नु**—=(पासाको खेलमा) जोडा गोटी छुट्टिनु।

**जुग बस्नु, मिल्नु**—=(त्यही खेलमा) गोटी जोडी भएर रहनु।

**जुग बुड्नु**—(१)=धेरै काल बित्नु। हात्तीको पेट भित्र जुग बुड्यो जुग बुड्यो भन्दै ख्यार ख्यार गरिरहेको सुनेर महादेवले भने।—बोधविक्रम (दन्त्यकथा)। यही ढोकामा चाकरी गर्दा गर्दा जुग बुडिसक्यो, एउटा गहना पनि जोर्न सकिन। (२)=धेरै बेर हुनु (अत्युक्ति गरी)। त्यति पानी लिन गएको पनि जुगै बुडिसक्यो ए!

**जुत्ता खानु**—=जुत्ताले पिटिमाग्नु। फेरि यस्तो गरिस् भने जुत्ता खालास्!

**जुत्ता सहनु**—=लात वा चुटाइपिटाइ खप्नु। पाउँला, खाउँला, लाउँला भनेर त तिम्रो जुत्ता सहेर बसेको।—भीमनिधि (सहनशीला सुशीला)।

**जुन हाँगामा समात्यो उही लाछिनु**—=जसको आधार लिएर बसेको छ उही बिग्रनु। बलबहादुर कर्णेल पनि मरेछन्—चिम्सेले जुन हाँगा समात्यो उही लाछिन्छ; अभागी रहेछ, मोरो।

**जुनी फेर्नु**—(१)=मर्न लागिसकेकोमा बाँची सारसौंदोभन्दा मोटोघाटो बेस स्वास्थ्यको हुनु। पछि हुँदा २ त मरि सकेकालाई ल्याएर सुसुकों गरेर जुनीनै फेराइदिइन्—श्याबास!—रुद्रराज (रूपमती)। (२) धेरै दिनमा सुकिलो वा 'राम्रो लुगा लाउँदा पनि प्रयोग हुन्छ। (३)= चोला बदल्नु (१, २)।

**जुरे चील जस्तो**—=भुत्लेर जुरो जस्तो भई चुस्स रौँ उठेकोमा दृष्टान्त दिंदा भन्ने बोली।

**जुरेलीको गुड देखे जस्तो**—=केही कुरामा पल्केर आइरहँदा दृष्टान्त दिने बोली।

**जुवा फुक्नु**—=तोकिएको समयभित्र जुवा खेल्न हुन्छ भन्ने सरकारबाट झ्याली पिटिनु। जुवा फुक्नु भन्दा कैयन्



दिनदेखिन् खालेहरूले उनलाई निम्तो दिएका हुन्थ्यो।—रुद्रराज (चप्पाकाजी)।...कोजाग्रतको जुवा फुकेको दिन डिट्ठा चन्द्रबहादुर.......स्वास्नी छोराछोरी बटुली झिङे दाउ खेल्न लागेको थियो।—ग्रन्थकार (कथा कुसुम)।

**जुवारी खेल्नु**—=दुइ जनाले जवाफ सवाल गरी गीत गाउनु। कालुको बा र मेरो जुवारी खेल्दाखेल्दै माया प्रीति बसेको थियो।

**जुवारेको किरिया**—पत्यार मान्न नसकिने प्रतिज्ञालाइ भन्ने बोली। तेरो वचनलाइ मैले त जुवारेको किरिया संझेको छु।

**जूका [को मुख] जस्तो गर्नु**—=लेना भएका मानिसहरुले एकै चोटि पेला दिनु। मेरो तलब आयो भनेको सुन्नासाथ साहूहरू जूकाको मुख जस्तो गरेर आए।

**जूका ढाडिए जस्तो**—मसिनो डोरो चाहिनेमा मोटो भयो भने भन्ने बोली, जस्तो जूका ढाडिए जस्ता आँखिभौं।

**जूठो चूलो गर्नु**—=भान्छा उठेपछि जूठो सोहोर्ने लिप्ने काम गर्नु। स्वास्नी चाहीं जूठो चुलो गर्दै सिलोक सुन्दैगर्थी।—गुरुप्रसाद (कथा कुसुम)।

**जूठो पुरा**—पुराले नै अर्कोले खाई बाँकी रहेको भन्ने अर्थ दिन्छ (पुरा खाने केटी), उसैले 'जूठो' बढ्ता शब्द देखिन्छ तापनि चोखो पुरा हुन सक्ने हुनाले त्यससँग छुट्ट्याउनालाइ 'जूठो' शब्द दिनुपर्‍यो।

**जूठो बार्नु**—=आशौच मनाउनु।

**जूठो मुख गर्नु**—=(खान मन नलागे पनि) खाएँ भन्नेसम्म पार्नु ('मुख जूठो पार्नु' को बढ्ता चलतीको रूप)।...जेभए पनि भोकभन्दा इज्जत नै ठूलो हो भनी ठानेर लाटाले जुठो मुख मात्र गरेर भान्साबाट उठेछ।—बोधविक्रम (दन्त्यकथा)।

**जूठो लाग्नु**—(१)=आशौच बार्नपर्नु। कोही फुपूको छोरो मरेको जुठो कति दिन लाग्छ भनेर सोद्धथे।—रुद्रराज (रूप-

मती) । (२)=जूठो हालेको चीज (प्राय: भात) टाँसिनु वा घसिनु । तिम्रो बाहुलामा जूठो लागेछ मुसारेर आऊ ।

**जूनकीरीको राँको**—सानो कुरालाइ ठूलो पार्दा वा ठान्दा प्रयोग हुने (=रायोको पर्वत)। व्यभिचारिणीलाइ जूनकीरीकै राँको हुन्छ ।

**जूनको टक**—=जूनको उज्यालो । कोठाभित्र जूनको टक पसेको थियो ।

**जून लाग्नु**—=चन्द्रमाको किरण पृथ्वीमा पर्नु । बदली हुनाले जुन लागेको थिएन ता पनि बाटो हिंड्न सक्ने सम्मको उज्यालो थियो ।—ग्रन्थकार (कथा कुसुम) ।

**जे जे पर्छ (र्ला), सोही सोही टर्छ (टर्ला)**—=जसो जसो हुन्छ (होला) (आँट गर्दा निस्फिक्रीपन जाहेर गर्ने बोली) ।

**जे जे होला [होला]**—=परिणाममा जे भए तापनी मन्जूरै छ । जे जे होला होला वेसरी अमिलो साँधेर नखाइछोड्दिन ।

**जेठी सासू**—(१)=सासूकी जेठी जेठानी वा दिदी । (२)=स्वास्नीकी दिदी ।

**जेठी सासूले गोरु बेचेको साहिनु**—गोरु बेचेको… *इत्यादि हेर ।*

**जेठो बाठो**—=अरूभन्दा उमेर छिपिएको हुनाले बढ्ता बुद्धि भएको । एउटा छोरा सम्मको कुरा न हो, ज्येठी बाठी घर त उसकै हो—लौ कसो ?—बालकृष्ण (कथा कुसुम) ।

**जेठो भाग**—=सबभन्दा ठूलो भाग, जेठाक ।

**जे परी परी**—=जे जे होला ।

**जे पायो उही वा सोही**—जसले पायो उसले (हेर) ।

**जे भने पनि सक्छु**—(१)=मेरो कुरा झूठो ठहरियो भने जुन कुराको हानि पनि सहन तयार छु (आफ्नो कुराको सत्य प्रतिपादन गर्दा प्रयोग हुने) । म जे भने पनि सक्छु आज एकादशो हो । (२) साधारण अर्थ । म जे पनि हाँक्न सक्छु, बग्गी, मोटर, उड्ने जहाज, तिमीले जे भने पनि सक्छु ।



**जे भो भो**—=बितिसकेको कुरालाइ छाडिदेऊ ।

**जे होला होला, होली होली**—=जे जे होला होला (को बढता प्रचलित रूप) ।

**जै (=जय) देउ(देव)**—यो रूपमा प्रयोग हुँदैन, अपभ्रंश रूप 'जदौ' मात्र उहिले प्रयोग हुन्थ्यो, आजकल सानो जातले मात्र सलाम गर्दा 'जदौ साहेब !' भन्छन् ।

**जैसीको घरको घर्ती होला जस्तो**—कुरै कुराले मात्र ठिक्क पार्ने, काम गर्न भने अल्छी मान्छेलाइ दृष्टान्त दिने (यहाँ जैसी=ज्योतिषी ; उसैले ज्योतिषीको देखासिकी गर्ने हुनाले) ।

**जोइल जानु**—=घरज्वाइँ हुनु (आजकल यसको प्रयोग हराउन लाग्यो) ।

**जोखना हेर्नु**—=कुनै चीज (चामल, जोर बिजोर, आदि) द्वारा शुभाशुभ विचार गर्नु, ज्योतिष हेर्नु । कतापट्टिको नाक खुला छ भन्ने जांचेर पनि जोखना हेर्छन् । तेह्र ओटा काँक्रो काटेर जोखना हेरी—पाँच ओटी छोरी, आठ ओटा छोरा, तै पनि मनको ताप हराएन—छोरी भयो भने !—बालकृष्ण (कथा कुसुम) ।

**जोखिम उठाउनु**—=नोकसान हुन धेरै संभव भएको कुरा गर्नु । हतियार नलिई जङ्गलमा पस्नु ठूलो जोखिम उठाउनु हो ।

**जोगा मेसोले**—=संजोगले, भाग्य जोग्यले, मेलोमेसोले ।

**जोगीको तुम्बा**—(१)=भएभरको पूँजी । (२)=रित्तो भाँडा (किनभने जोगीको पानी हाल्ने तुम्बा धेरैजसो खाली हुन्छ) ।

**जोडका तोड**—=तँभन्दा म के कम भन्ने खयाल । त्यत्रो जखूभग्गासंग जोड़का तोड़ संग लड्न कम तारीफको कुरा होइन ।—रुद्रराज (चप्पा काजी)। मालिकसंग तिमीले जोडका तोड गरेर पुग्न सक्तैनौ ।

**जोड गर्नु**—=जोर गर्नु (हेर) ।

**जोड चल्नु, लाग्नु**—=बल पुग्नु, दैया चल्नु, हक खोज्न पाउनु, (अक्सर अकरणमा ; 'जोड लाग्नु' चाहिं यो अर्थमाभन्दा 'दाउ लाग्नु' को अर्थमा प्रयोग गर्नु बेस) । मालिकसित

हाम्रो जोड चल्दैन वा लाग्दैन (=केही चल्दैन)। ठूलो मानिससंग जोड लागेर कहिल्यै पुग्दैन!

**जोडी बाँध्नु**—=जोडा मिलाउनु। २।२ जनाको जोडी बाँध अनि दुइ कसानले आलोपालो गरी रोज्छन्।

**जो पायो उही**—जसले पायो उसले (हेर)।

**जो भयो सो भयो**—=जे भो भो। जो भयो सो भयो, बिर्स, नयाँ जन्म भयो अब, हरिया पातले फेरि सुकेको वन ढाकियो, जवानी कोपिला हाँसे सुगन्धी सासमा चली।—बालकृष्ण (मुकुन्द इन्दिरा)।

**जो मर्जी**—ठूलो मानिसलाइ चिट्ठी लेख्ता हरेक लेखांशको अन्तमा यो वाक्यांश लेखी धर्सो तान्नुपर्छ।

**जोर वा जोड चल्नु**—=बल पुग्नु। तिम्रो राज्य गराउँला अब उपर् जोर् चल्छ तेस्को कहाँ।—भानुभक्त (रामायण)। भयङ्कर गङ्गाजिको, स्वरूप जल्थ्यो। गङ्गाजिका अगाडी, कस्का जोर चल्थ्यो॥—शिखरनाथ (गंगामाहात्म्यको सवाई)। मालीक संग हाम्रो के जोड चल्दछ?—रुद्रराज। (चप्पा काजी)।

**जोरी खोज्नु**—=निहुँ खोज्नु, बलाबल गर्ने इच्छा प्रकट गर्नु। यिनीहरू सँग जोरी खोज्न कसैको दैया थिएन।—रुद्रराज (रूपमती)।………दशाले कुत्कुत्यायेर निर्बोध दाउदखाँले दिल्लीश्वर अकबरसङ जोरी खोज्यो।—शिवप्रसाद (दुर्गेशनन्दिनी)। ….पहलवानले जोरी खोज्दा ………जनरल धीर सम्शेरबाट कुश्ती लडेर त्यसलाइ पछारी बक्सियो।—पारसमणि (नेपाली साहित्य—९ भाग)। जोरी खोज्छस् त?

**ज्ञान जान्नु**—=अरूले नसिकाई नअहाई आफ्नै बुद्धिले देख्नु। ज्ञान जानेर आउँछे भने घर छंदैछ, लिन त पोढ़े भए जाउँला।—गुरुप्रसाद (कथा कुसुम)।

**ज्यानको सौदा**—=प्राण जानेसम्मको खतरा। आज यसरी मेरो ज्यानको सौदा हुनलाग्दा पनी एक वचन नबोलेर टुलु २ हेरि रहन शक्नु हुन्छ भने अब मलाई केको आश!—रुद्रराज (रूपमती)।



**ज्यान गए पनि**—=प्राणै जान्छ भने पनि (ढिपी गर्दा प्रयोग हुने)। ज्यान गए पनि तिमीले भनेको मान्दिन।

**ज्यान दिनु**—(१)=सकभर कोशिश गर्नु। हरिबहादुरले ज्यान दिएर पढेअनुसार पहिले भएछ। (२)=प्राण त्याग्नु। आफ्नू मुलुक र बादशाहकानिति ज्यान दिन तत्पर रहनू।—जयपृथ्वीबहादुर (शिक्षादर्पण)।

**ज्यान पिटाउनु**—=मरी मेट्नु। धन जन घर सुख चाकरि भन्दा किन भुलि ज्यान पिटाउँछौ हाय! हरी॥—शम्भुप्रसाद (शम्भु भजनमाला)।

**ज्यान बचाउनु**—(१)=आँखा छली वा अरू उपायले उम्कनु। झण्डै तारा हान्नेमा हालिसकेको थियो बल्ल बल्ल ज्यान बचाएर आएँ। (२)=आफ्नो प्राण बचाउनु। अनिकाल परे ज्यान बचाउनै धौ धौ पर्छ। त्यसो नभन्, कतै मर्नु पर्ला भनी डराउँदै मशानमा लुकी आफ्नो प्यारो ज्यान बचाउँछु लुते स्याल, कुनै गर्छन् भ्रूणहत्या गनी गनी'''।—बालकृष्ण (मुकुन्द इन्दिरा)। (३)=अर्काको प्राण बचाउनु। हामीले ज्यान बचाउन सक्यौं भने ठूलो धर्म हुन्छ।

**ज्यान लिनु**—=मार्नु।''''भैगो त तेरो ज्यान म लिन्न, तर तेरो अङ्गमा एउटा दाग सम्मता न लगाइ छोड्दिन भनी उसको दाहिने तिघ्रामा मेरो त्रिशूलको डाम लाइदिएँ।—बोधविक्रम (दन्त्यकथा)।

**ज्यान हतकेलामा राख्नु**—=आफ्नो जिन्दगीको परवाह नगर्नु। उसलाई खुशी पार्न'''' जङ्गबहादुरले''''''''ज्यान हत्केलामा राखी लखनौमा भेट्टाएको चीज मोतीको माला थियो त्यही ल्याएर पहिराइदिए।—रुद्रराज (चप्पा काजी)।

**ज्याला [बनी] गर्नु**—=ज्याला

लिने गरी काम गर्नु। म कतै जागीरे भएको छैन, ज्याला गरेर खाइरहेछु।

ज्यालामा नमिलेको डूम जस्तो —सबैसँग ठाकठुक मात्र परिरहने मानिसलाइ दृष्टान्त दिंदा प्रयोग हुने।

ज्यूँका त्यूँ, ज्यौँका त्यौँ—=अघि जस्तो थियो उस्तै। अहिलेसम्म दूध ज्यौँका त्यौँ छ, जम्दैन क्यारे। (२)=सारसाउँदो, साबुत। भाइको भाँचिएको खुट्टो ज्यूँका त्यूँ भयो।

ज्यू गर्नु—=ढोग दिनु (केटाकेटीलाइ वा ले भन्ने बोली)। जेठा बालाइ ज्यू गर, नानी।

ज्यू ज्यू गर्नु—=जे जे भन्यों उही उही मान्नु, मानिता गर्नु। यसरी सबले ज्यू ज्यू गर्दा खेरा पनी वरालपुत्री ठग्को मस भइनन्।—रुद्रराज (रूमपती)।

ज्वाला छुट्नु—(१)=खूब रिस उठ्नु। त्यो कुरा सुन्दा मलाइ त [रिसको] ज्वाला छुटेर आयो। (२)=आगाको लपका उठ्नु। ज्वाला छुटसक्यो दाउरा नथप।

## झ

झक(ख) मार्नु—(१)=मनोवेग रोक्नु, प्रयत्न गर्न छाड्नु। फष्ट क्लासमा पुगिसक्यौ, अब एक वर्षलाइ किन झक मार्छौ? (२)=गाह्रो मान्नु। छ रुपियाँ दिइहाल्यौ अब एक सुकामा किन झक मार्छौ? (३)=लाचार हुनु। झकै मारेर यस पाला साइकल किनिदिएँ।

झगडा बोक्नु—(१)=वारीस हुनु। (२)=साधारण अर्थ। तिनका मत अनुसार कर्जामा गयेको रुपैयाँ आफु आउँदा झगड़ा बोकी ल्याउँछ।—विश्वेश्वर (कथा कुसुम)।

झझल्को (झल्को) लाग्नु—(१) =व्यक्ति वा वस्तुलाइ देख्दा वा को स्वर सुन्दा अर्कैको भान पर्नु। कान्छी बहिनीलाइ देख्ता त मलाइ आमाको झझल्को लाग्यो। (२)=नभएको वस्तु वा व्यक्तिलाइ आँखाको



कुनाबाट देखे जस्तो वा को स्वर सुने जस्तो भ्रम हुनु। किन हो किन, मलाइ दुइ तीन पटक माहिला बाको झझल्को लाग्यो, आज यहाँ आउनुहुन्छ कि क्या।

झटारो हान्नु—(१)=मानोस् कि नमानोस् बुझोस् कि नबुझोस् एक पटक भनिसम्म दिनु। राम्रोसँग कुरा बुझाएर भनिदिनुपर्छ, झटारो हानेर मात्र हुँदैन। (२)=लठ्ठी आदिले टाढाबाट हानी पठाउनु। रिस उठ्यो भने साहिंलाको जे जे पायो उसैको झटारो हान्ने बानो छ।

झनक झन्कनु—=रिसले रनक हुनु (झनकसँग अरू क्रियापद प्रयोग गर्दा हाम्रो वाक्पद्धतिमा मिल्दैन)।

झन् अस्ति—=अस्तिभन्दा एक दिनअगाडि। अस्ति त दुलही ल्याएको भइगो नि, झन् अस्ति पो जन्ती गएको।

झन् साह्रो—विपरीत अर्थ दिने झनको ठाउँमा प्रयोग हुने। भोलि चाँडै आइज है भनेको त झन् साह्रो आउँदै आइदिएन।

झमक्क साँझ वा रात पर्नु—=पूरा पूरा सन्ध्या हुनु वा रात पर्नु। (खालि 'झमक्क'ले पनि यो अर्थ दिन्छ, जस्तोः—तिम्रो कुरामा लागेर टाइम गएको पत्तै पाइन, झमक्क भइसकेछ)। जान्छु म जान त, परन्तु वहाँ म आज। पुग्दीन निश्चय, परेछ झमक्क साँझ।—लेखनाथ (सत्यकलि-सम्वाद)।

झम्के बुलाकी—=नाकमा लाउने झम्का भएको मुन्द्रो (अरू ठाउँमा 'झम्के' को सट्टा प्रायः झम्कावाल र झुम्के प्रयोग हुन्छ॰)।

झम्म (भयाम्म) छोप्नु—(१) =अमल लाग्दा जस्तो लठ्ठ पर्नु (निद्रा नपुगेर वा शरीरको गोलमालले)। आज मेरो जीउ ठीक छैन, झम्म छोपिरहेछ। (२)=टिनो भएर ढाक्नु। यो घरलाइ उत्तर र पश्चिमपट्टि सल्लाका रूखले भयाम्म छोपेका छन्।

झरीको भत्यार—= कसरी बुत्याऊँ भने जस्तो हुनु (पानी पर्दा पाहुनाहरूले नखाइदिने

हुनाले)। आजकलको जागीर झरीको भत्यार छ।

**झलझलि संझनु, देखनु**—=बराबर याद हुनु। ती राजहंस गमनाकन देखतै छु; दाँत्को झलक् कन म झल्झलि संझदो छू॥—पतञ्जलि (चौरपञ्चाशिका)। जुन घडी चार आँखा भएको थियो, त्यस वेलादेखिनै त्यही मुहार झलझली सम्झँदो छु।—रुद्रराज(चम्पा काजी)।

**झाँको झार्नु**—=शेखी झार्नु (सदरिया बोलीमा प्रायः प्रयोग हुँदैन)। बिन्ति हजुर; त्यसलाइ यहाँ ल्याएर बेस्करी झाँको झारिदिबक्सियोस् न।—भीमनिधि(सहनशीला सुशीला)।

**झाँक्री बसाल्नु**—=धामीलाइ चिन्ता गर्न लाउनु। छोरीको बेथा निको भएन, झाँक्री बसाल्ने भएको छ।

**झाँक्रो फिंजाउनु**—=(आइमाईले) कपाल नबाटेर फुकै छोड्नु। कैकेयी महारानी रिसले झाँक्रो फिंजाएर लडीबडी खेलिन्।

**झाडा फेर्नु**—'झाडा गर्नु' हाम्रो वाक्पद्धतिमा नराम्रो ठहरिन्छ, फेरि 'दिसा गर्छु' हुन्छ 'दिसा फेर्छु' हुँदैन।

**झाडा लाग्नु**—=पातलो दिसा धेरै पटक हुनु ('केही कुरामा गुहु लाग्नु वा टाँसिनु'को अर्थमा यो वाक्यांश प्रयोग गर्नु हुँदैन)। आजकल मलाइ दूध खायो कि झाडा लाग्ने भइरहेछ।

**झाराको खेतालो**—=गालसम्म टार्ने मान्छे। त्यति पनि चित्त लाएर काम नगर्ने, तिमी त झाराको खेतालो भयौ।

**झारा तिर्नु, मेट्नु**—=गरिस् गरें जस्तो गरी चित्त नलाएर काम गर्नु। जहरमानले त दराजको वरिपरि सेतै राखी झारा तिरेर गएछ। (अघिल्लो चाहिं साधारण अर्थमा पनि प्रयोग हुन्छ)।

**झिंगाको (मारी) बोसो झिक्नु**—=ज्यादै कञ्जूसी वा लोभ गर्नु। भक्तबहादुर झिंगाको बोसो झिक्छ, तिमीलाइ के खर्चपात देला!

**झिंगा टँसाइ**—=अह्राएको कामभन्दा एक सिन्का बढ्ता नछुने काम (गुरुले दिएको पाठमा अल्छी शिष्यले झिंगा टाँसी चिन्हु लाउने हुनाले)। के झिंगाटँसाइ गर्छौ? भ्याएसम्म काम गरे खेर जाँदैन।



**झिंगा धपाउनु**—(१)=पछि पछि लागेर चाकरी गर्नु (हेलाको बोली)। ठूलो कोठामोचेको झिंगा धपाएर हिंड्न त भ्याउँथिस् यति कुचो लाउन भ्याइनस्? (२) साधारण अर्थ। झिंगा धपाएर मात्र बैठकको झ्याल थुनेस्।

**झिंगा भन्कनु**—=थुप्रै झिंगा आएर बस्ने अवाज झिकेर उड्ने गर्नु। त्यस्तरी झिंगा भन्केका घिन लाग्दोकुरा खाँदा अघिल्ला साल कसरी २१३ दिन भित्रै कैयन् मानिस हैजाको शिकार वनिसकेका थिए, उनीहरूलाई पत्तै थिएन।—रुद्रराज (चम्पा काजी)।

**झिंगा लड्ला जस्तो गरी**—=ठुन्न र चिप्लो हुने गरी (प्रायः घोडा र गाईवस्तु मोटाएकोमा प्रयोग हुने)। यो राम्ररी घोडा पाल्दो रहेछ, यसको घोडा झिंगै लड्ला जस्तो गरी मोटाएको छ।

**झिंगाले पछाडि पाखुरा निमोठे झैँ, झिंगाले पाखुरा खैँचे झैँ**—मुख पर्न नसक्ने, पछिल्तिर गालि गर्ने धम्की देखाउने मान्छेलाइ दृष्टान्त दिने बोली।

**झिंगा हम्कनु**—=झिंगा बस्न नदिने गरी मखौरा इत्यादि डोलाउनु। मालिकले ज्युनार गर्दा एउटा सफा रुमालले झिंगा हम्कने गर।

**झिंगे दाउ खेल्नु**—=मान्छेपीछेको दाम वा पैसा भूइँमा फिंजी जसको पैसामा झिंगा बस्छ त्यसैले सबैको पैसा लिने खेल खेल्नु। ·······डिट्ठा चन्द्रबहादुर ·······चाड सम्म मनाउनालाइ स्वास्नी छोराछोरी बटुली झिङे दाउ खेल्न लागेको थियो।—ग्रन्थकार (कथा कुसुम)।

**झिङा**—=झिंगाको अर्को हिज्जे।

**झिलिक्क आगो देख्नु**—=रिसले वा ठक्कर लागी आगाको फिलिङ्गो देख्नु। त्यसले तेरो

बाबुको टाउको भनेको सुन्दा झिलिक्क आगो देखेँ, अनि केही पनि थाहा पाइनँ।

झिल्ली उडाउनु—=गफ हाँक्नु। मुकुन्दले एउटा झिल्ली उडाइदियो; त्यस्तो कुरामा तिमीले पत्यार मान्नु हुँदैन।

झिल्ली झार्नु—(१)=केही चमत्कार वा कुद्रत देखाएर पुरस्कारको रूपमा केही प्राप्त गर्नु। (२)=उत्सव पर्वहरु उठाएर केही प्राप्त गर्नु। उनलाई वाहवाहीमा उडाउँथे, जसरी हुन्छ झिल्ली झार्दथे।—रुद्रराज (चप्पा काजी)।

झीरमा उनेको वा झीरको मासु [उनेको] जस्तो—वचन लाएर घोचिरहँदा पिरलो मानेर भन्ने बोली। हजुरकी ज्येठानीकी बुहारीको मात्रै के भाग्य भन्नु खोइ पण्डितनी बज्यै—देवरानीले रातदिन झिरको मासु उनेको जस्तो गरिरहीछन्।—रुद्रराज (रूपमती)।

झुल्के घाम—भर्खर सूर्य उदाउँदाको कलिलो घाम। झुल्के घाममा बाटो लागेको मध्याह्नमा ससुराली पुगेँ।

झूत वा झुत्ती खेल्नु—=खूब आकर्षित हुनु। त्यसैले हो क्यारे? आजकल उस्तो झुत्ति खेलेको पनि देखिदैन।—रुद्रराज (चप्पा कार्जा)। केही बेरपछि ती सबै आपस आपसमा झुत्ती खेलेर यस्तरी लड्न थाले कि एकै छिनमा सारा मैदान····लाशले ढाकियो।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)।

झूल कस्नु—=झूलको तलतिरको किनारा लम्पट वा डसनामनि घुसार्नु। झूल रात्रो संग कस, बेलैमा लामखुट्टे धपाऊ भनेर सधैं घोक्तो छु।—रुद्रराज (प्रायश्चित्त)।

झूसे बारुलो—=झूस हुने जातको बारुलो (भारेभुरे मानिसको अर्थमा पनि प्रयोग हुन्छ)। कस्ता कस्तालाइ निभाइसकें यो झूसे बारुलोलाइ म के गन्थें!

झोक चल्नु, उठ्नु, चलाउनु—=रिस उठ्नु, जङ्गयाउनु। बाहिरका कसैले आफूलाई त्यसरि होच्याई केही भने तिमीलाई



कत्तिको झोक चल्ला?—श्री ३ चन्द्र (अमलेख-भाषण)। वस् केही नचलेर दुःखि भइयो झोक् उठ्छ ऐह्रे अती॥—मोतीराम (उषा चरित्र)। मलाइ झोक नचला अहिले सिस्नु लिन पठाउँला।

झोलीको देउता—=दानपात्र, जहिले जे दिए पनि लिने। भाञ्जा भाञ्जी भनेको झोलीको देउता हुन्, एउटा कोटको दशौटा कोट दिए पनि हुन्छ।

झोली भर्नु—=खूब आमदानी गर्नु। कान्छा काकाको बिहामा त काइँला ज्वाइँले पो झोली भरेछन्।

भयाइँ पर्नु—=अप्ठेरो मौका पर्नु, अनौठो कुरा पर्नु। आज एउटा भयाइँ पर्‍यो—मेरो पछाडि कान्छा राजा उभिइबक्सेको मलाइ थाहा थिएन, भ्वान्सिङले उहाँलाइ सलाम गर्दा त मैले पो सलाम फर्काएछु।

भयाम्म छोप्नु—=झम्म छोप्नु (हेर)।

भयाली पिट्नु, पिटाउनु—(१)=जताततै फयल गर्नु। यो अनविश्वासी छ, अस्ति मैले योसित एउटा कुरा गरेको थिएँ ठाउँ ठाउँमा भयाली पिटेर हिंडेछ। (२)=झ्याली बजाएर घोषणा गर्नु, गराउनु।...यो रौं भएकी युवतीलाई कसैले ल्याउन सक्यो भने भारी इनाम मिल्नेछ भन्ने झ्याली पिटाए।—बोधविक्रम (दन्त्यकथा)। यी बदमाशहरू झ्याली पिटिसकेपछि पनि जुवा खेलिरहेका थिए।

## ट्

टकटका राँड—=छोराछोरी नभएकी विधवा।

टकटको बाँधेर (लाएर) हेर्नु—=आँखा झिम्म नगरेर हेरिरहनु, टोलाएर एकनास हेरिरहनु। पल्टन हिन्दुस्थान जाँदा तिनीहरूका स्वास्नीले टकटकी बाँधेर हेरिरहे।

टक बस्नु, बसाल्नु—=मनमा अङ्कित भएर रहिरहनु, मनको प्रवृत्ति जम्नु, जमाउनु। परिबन्दैले—बुझिस् बाबु! मुद्दा सुन्नेको ब्रह्ममा चाइने एउटा कुराको टक बसालिदिन्छ।—

ग्रन्थकार (कथा कुसुम)।

**टक मार्नु**—(१)=दाम पैसा इत्यादि छाप्नु। खजानाको अभावपूर्ति गर्न उनीहरूले तात्कालिक आफ्नो **टक मारी** द्रव्याभाव छुटाउने युक्ति रचे।—श्री मृगेन्द्र (भानुभक्त स्मारक ग्रन्थ)। रुपियाँ पैसा **टक मार्ने** यंत्रको संग संगै छाप तथा यस प्रकारका केही अरू सानासाना वस्तुहरू पनि बन्न लागिसकेका थिए,....। –जितेन्द्र (आधुनिक अविष्कार)। (२)=(आँखा, बत्ती, आदिको) ज्योति मन्द पार्नु। यो भित्ताको रङले मेरो आँखाको **टकै मारिदियो**।

**टक्रक्क बस्नु**—टुकुक्क बस्नु (मा हेर)।

**टण्टलापुर घाम**—=ज्यादै चर्को घाम।

**टनटन र फनफन**—=रिस वा घुर्की देखाउँदाको (अक्सर नबोली) टमटम परेर ओहोरा दोहोरा हिंड्ने काम। केको **टनटन र फनफन** हो? आफूलाइ मन परेको हुनाले त्यो चुरा दिन सकिनँ।

**टपटपी टिप्नु**—(१)=छिटोछिटो टिप्नु। अवाज सुनेर त्यो चोरले सुन्तला **टपटपी टिपिरहेको** वेलामा म पुगें। (२)=सुन्नासाथ नकल गर्नु (कुरा)। सानु छोरा आजकल जे भन्यो **टपटपी टिप्ने** भइरहेछ।

**टप्पु खानु**—=फ्याँकेको वा लडेको वस्तु वा व्यक्ति जमीनमा लागेर उछिट्टिनु। म पाँच चोटि **टप्पु खाने** गरेर ढुङ्गा फ्याक्न सक्छु। (२)=उड्दा उड्दै बाजी खानु। त्यो परेवा कसरी **टप्पु खान्छ**, हेर त।

**टप्पु हान्नु**—=बीचैबाट टप्काएर लैजानु। मैले बन्दोबस्त गरिराखेकी केटीलाइ चामेले **टप्पु हानेछ**।

**टसबाट मस हुनु, गर्नु** (हिन्दीबाट हालसालै आएको वाक्यांश)—(१)=डैग चल्नु, चलाउनु। यो पेनु त **टसबाट मस** पनि भएन। (२)=असर पर्नु, पार्नु।....तर मलाई तिमी **टसबाट मस** पनि गर्न सक्तिनौ।—खड्गमान (काशीनाथ)।

**टहटह**—यो शब्द 'घाम' संग पनि



प्रयोग गर्छन् तापनि 'जून' संग मात्र खुल्छ। **टह टह जून** लागे पछि बत्ति फेरी दोहरा किन?....। श्री केसर (विक्रमोर्वशी)।

**टाँक लाउनु**—=टाँक घरमा टाँक छिराएर बन्द गर्नु। जाडो भयो, म त कोटको **टाँक लाउँछु**।

**टाँका मार्नु**—=राम्ररी सिउनु-अगाडि अडिने जुक्ति मात्र गरेर लामो लामो फड्का गरी सिउनु। सिइसकेपछि **टाँका मारेको** धागो किन नथुतेको?

**टाँसो लाग्नु**—(१)=चाहना नभए तापनि करैसँग लिनपर्नु (वस्तु)। तपाईंको निम्ति दुक्ख गरेर ल्याएको भनेर धनेले त्यो भोटे आलु मलाइ **टाँसो लायो**। (२)=थाप्लो लाग्नु। हिजोको कपड़ा प्वाल परेको हुनाले हजुरले लिनुभएन, साहूले पनि फिर्ता लिएन, मलाइ पेर **टाँसो लाग्यो**। (३)=चाहना नगरीकन आइलाग्नु (मानिस)। म पशुपति जान लागेकी थिएँ, सानी पनि **टाँसो लागी**।

**टाउकाको बोझ हटाउनु, हट्नु**—=अभिमारा वा (प्रायःगाह्रो) काम सिद्ध्याउनु वा पन्छाउनु, झंझट दूर हुनु। बल्ल छोरीको बिहा गरिदिएर **टाउकाको बोझ हटाएँ**। (साधारण अर्थमा उस्तो प्रयोग हुँदैन)।

**टाउकामा चढ्नु**—(१)=मातिएर हेप्नु। बदमाश केटाकेटीलाइ सोझो मुखले बोलायो कि **टाउकामा चढिहाल्छन्**। (२)=दिमागमा चढ्नु। त्यसको **टाउकामा** एउटा अनौठा खयाल **चढिरहेछ**। तिम्रो कुरा मेरो **टाउकामा चढ्दैचढेन**।

**टाउकामा टेक्नु**—=अधीनस्थ व्यक्तिले हेप्नु।········बाबु पनि पुल्पुल्याउने आफूले जन्माएको छोरो पनि स्वास्नीलाई आफ्नी आमाको **टाउकामा टेकाएर** राख्ने····। | बालकृष्ण (कथा कुसुम)। एउटी छोरी भनेर **टाउकामा टेकाएर** राखिदिएका थिए; सम्हाल्नैलाई मुश्किल पर्‍यो।—रुद्रराज (रूपमती)।

**टाउकामा नाच्नु**—=(अर्काको) कमाइमा मनपरीसंग मोज काट्नु, टाउकामा गिरिङ्ग खेल्नु।

अहिले अर्काको टाउकोमा नाच्न पाएका छन् ।—रुद्रराज (रूपमती) ।

**टाउकामा पर्नु**—(१)=अभिभारा बोक्नु, जवाफदेही वा जिम्मेवारी हुनु । हाकिम सवारीमा गएपछि सब काम तिम्रो टाउकामा पर्छ । (२)=(दोष)लाग्नु, माथि बज्रनु । उसको मनमा पाप उब्यो; लाहुरेलाइ मारेमा दोष रनेको टाउकोमा चाइने परिहाल्छ, पोको सड्काएको सड्कायै हुन्छ ।—ग्रन्थकार (कथा कुसुम) ।

**टाउकामा भूत सवार हुनु**—=धुन सवार हुनु ।

**टाउकामा लिनु**—=जिम्मा वा अभिभारा लिनु, (प्राय: गाह्रो) काम गर्छ भन्ने वचन दिनु । दश जनाको काम टाउकामा लिएपछि कसरी सुक्ख हुन्छ त ?

**टाउकाले टेकेर**—=साह्रै आग्रहसाथ । अलिकति बढ्ता महीनावारी दिन्छु भन्यौ भने जित बहादुर टाउकाले टेकेर आउँछ ।

**टाउका[मा] हाल्नु**—(१)=जवाफदेही तुल्याउनु, सुम्पनु । सबै काम मेरो टाउका हालेर तिमी के काम गर्छौ नि ? (२)=दोष लाउनु । आफू घड़ी फुटाल्ने हाइ सञ्चोसँग मेरो टाउकामा हाल्न कसरी सकेको !

**टाउको खानु**—(१)=मगज खानु । यो हिसाबले मेरो टाउकै खाइसक्यो । (२)=अघि लाउनु (मार्नुको अर्थमा) । यस चण्डाल्नीले पोइको टाउको खाइसकी अब कसको खाने हो ।

**टाउको दिनु**—=डिको दिनु(२)।

**टाउको दुख्नु**—=कपाल दुख्नु (साधारण अर्थमा सदरिया बोली गर्निदैन) ।

**टाउको निमोठ्नु**—=मार्नु (अक्सर चरा चुरुङ्गीलाइ) । यो कालिजको टाउको निमोठेर ल्याऊ ।

**टाउको निहुरनु, निहुराउनु**—(१)=ढोग दिनु । हेरन, सासू आउँदा देखेको नदेखे जस्तो गरेर बसिरहेकी!—टाउको निहुराउनाको गाह्राले होला । (२)=दब्नु । आफूले बिराएको छैन, के भनेर तिनीहरूदेखि टाउको निहुराउँछु ! (३) साधारण अर्थ । ढोका होचो छ, टाउको निहुराउनुपर्छ ।

**टाउको फुटाउनु, फोर्नु**—(१)=हद परिश्रम गर्नु । घाम नझुल्कुञ्ज्याल सम्म कसैले कस्तै टाउकै फोरे पनी कोठाबाट निस्कने हो र ?—उनको निंदै टुटतैनथ्यो ।–रुद्रराज (रूपमती)। (२) साधारण अर्थ ।

**टाउको बचाउनु, जोगाउनु**—=गाल नपार्नु, निर्दोषी रहनु । काम गाह्रो छ, पूरासँग गर्न नसके पनि आफ्नो टाउकोसम्म त बचाए ।

**टाउको लाग्नु, पर्नु**—=अर्काको नासो हराए मासेमा भर्ना दिनुपर्नु । खोजी मर्दा पनि पाइएन त्यति रुपियाँ टाउकोलाग्यो, अब ।

**टाउको हलुङ्गो हुनु**—(१)=टाउकाको बोझ हट्नु । (२)=कपाल दुख्न कम हुनु । मेन्थल लाएदेखि टाउको अलि हलुङ्गो छ । (३) साधारण अर्थ । पगरी फुकालेपछि त टाउको क्या हलुङ्गो भयो ।



**टाकुराको पहार**—=खूब प्यारो लाग्ने वा जाँगरिलो मान्छे ।

**टाकुरोको पार**—=कहिले गरेर नसकिने धन्दा ।

**टाङ पसारेर सुत्नु**—(१)=चैनसँग दिन बिताउनु । दश हजार जितेदेखि मरेचा कोते टाङ पसारेर सुतिरहेछ । (२)=निश्चिन्त भएर सुन्नु । जाँच सिद्धिएपछि त टाङ पसारेर सुतन, कसले के भन्छ र!

**टाट हुनु**—=हरिकङ्गाल हुनु । कोही पाइ हालियो भने पनी जात खानदान भन्नु मात्रै हुन्थ्यो, टाट भै सकेका घरमा भूटी भाङ न भएका फेला पर्थे । —गुरुप्रसाद (कथा कुसुम) ।

**टाट उल्टिनु**—=भए भरको रुपियाँ पैसा डुब्नु । खेलो गर्दागर्दै रघुनाथ बाबुको टाट उल्टिएछ ।

**टाटी टिक्न नपाउनु, नदिनु**—=एक छिन पनि सुबिस्ता लिन नपाउनु, नदिनु । त्यो

मान्नेले आनन्दमुनिको घरमा **टाटी टिकून पाएन,** आउनासाथ लघारिदिए ।

**टाढा किन जानु**–(१) = यहींको वा नजीककै कुरा विचार गर्नु । **टाढा किन जान्छौ** तिम्रो छोरैको पनि त त्यस्तै बानी छ । (२) साधारण अर्थ । **टाढा किन जान्छौ** तिम्रै घरनेर असल दही बेच्छ, थाहा छैन ?

**टाढाको कुरा**—(१) = भविष्यको कुरा । सानु छोराले जागीर पाउनु त **टाढाको कुरा** छ, त्यसमा टेकेर हुँदैन । (२) = निकै गाह्रो काम । तिमीले कालुलाई पछार्नु त **टाढाको कुरा** छ । (३) साधारण अर्थ । म बिरामी भएको कुरा बालाइ नलेख, परदेशमा **टाढाको कुरा** सानै भए पनि ठूलो लाग्छ ।

**टाढा देख्नु**— = परचक्री ठान्नु । मेरा शत्रुले तिमीलाइ कुरा लाए क्यारे, आजकल तिमीले मलाइ **टाढा देख्न** लाग्यौ ।

**टामटुम गर्नु**— = परिश्राट नगरी थोरै खर्च वा परिश्रमले ठीकठाक पार्नु । ४ वटा बाहुन बोलाइए—**टाम टुम गरेर** काम सिद्धयो ।—रुद्रराज (रूपमती) ।

**टिकट काट्नु**— = रेल, नाच, आदिको टिकट किन्नु । **काटी टिकट्** भजन्को, सत्‌को जमाइ आसन् । हेर्दै तँ जा तमाशा, देखिन्छ भारी भारि ॥—शम्भुप्रसाद (शम्भु भजनमाला) ।

*टिकन बजी* **(टिगनीको)चिउरा** — = अवल दर्जाको मीठो चिउरा ।

**टिक्की लाग्नु**— = जीविका वा वृत्ति चल्नु । यस्तो गरीब ठाउँमा मेरो के **टिक्की लाग्ला?**

**टिप्ता टिप्ता रगत आइसक्नु**— धेरै सागपात टिप्ताखेरि निषेध जताउने बोली । आज पनि बारीकै साग, भोलि पनि बारीकै साग—**टिप्ता टिप्ता रगत आइसक्यो,** कति साग टिप्ने ?

**टिप्पा लिनु**— = दोहोलो पार्नु । बक्सारेले **टिप्पा लिइरहंछ,** चुंक गर्न हुँदैन मालिककहाँ पुऱ्याइहाल्छ ।

**टीकाको ठेउवा**— = कैय्यन् दिनमा एक पल्ट देखिने वा आउने मान्छे (ठेउवा चरा टीकाको दिनमा मात्र देखिन्छ भन्ने कहावतबाट) । गजेन्द्रमान **टीकाको ठेउवा** जस्तो छ, मैले नदेखेको त महीनौं भयो ।

**टीकाको पाइतो**—(१) = विजयादशमीको प्रस्थान । (२) = अघिपछि भने जस्तो साइत नपाएको खण्डमा असल साइत पार्नालाइ टीकाको साइतमा सारेको चामल, दाम, पोशाक, इत्यादिको पोको ।

**टीकाको साइत**—सबभन्दा असल साइत ।

**टीका टिप्पणी गर्नु, हुनु**— (१) = परिपाठ लाउनु, समालोचना गर्नु । त्यो ऐना रघुवीरले फुटालेको हो होइन यति मात्र भन्, तैंले **टीका टिप्पणी गर्नुपर्दैन** । (२) साधारण अर्थ । मलाइ **टीका टिप्पणी भएको** 'रघुवंश' चाहिन्छ ।

**टीको पुछिएको निधार**— = अभागी कर्म । **टीको पुछिएको निधारलाइ** जहाँ गए पनि हेलै छ ।

**टीको लाग्नु**— = हद थोरै मात्रामा पुग्नु (अक्सर अकरण भएर प्रयोग हुन्छ) । यति रोटीले त घिमिरे बाजेलाइ **टीको लाग्दैन** ।

**टुँडिखेलमा बाच्छा फुकाए जस्तो**—चल्ने उफ्रने केटाकेटीलाइ दृष्टान्त दिने बोली ।

**टुँडिखेलमा सुर्तीको बासा फुकाए जस्तो**—अरूले माग्दा माग्दा केही कुरा एक छिनमै बाँडेर सिद्धिंदा दृष्टान्त दिने बोली ।

**टुइँके हाड भाँच्नु**— = पुट्ठाको हाड भाँचिने गरी कुट्नु (सजा दिने धम्कीको रूपमा) ।

**टुक्का जोर्नु**— = कथा जोर्नु । यो गोतामे ज्यादै गफी छ, बस्ताबस्तै **टुक्का जोडिदिन्छ** ।

**टुक्का मिलाउनु**— = अनुप्रास मिलाउनु । 'घण्टाघर घनन' को अर्थ छैन, खालि 'एक वचन भनन' सँग **टुक्का मिलाएको** हो ।

**टुकुक बस्नु, टकक बस्नु**— टुकुक बस्नुको अर्थ हगासनमा बस्नु हो, टकक बस्नुको अर्थ चाहिं केही चीज टम्म नमिलेर चाहिंदो सतहभन्दा उचालिएर

रहनु हो; उसैले यी दुइ वाक्यांश-को बेग्लाबेग्लै अर्थ छन्। झार चिसो छ टुकुक्क बस।! यो गजुर त्यो छाताको होइन क्यारे, किनभने टक्रक बस्यो, मिलेन।

**टुङ्गो लाउनु**—=ठेगान लाउनु। तीन घण्टासम्म छलफल भए पनि तिम्रो मुद्दाको टुङ्गो लागेन।

**टुट्टा पर्नु, लाग्नु**—=नोकशान हुनु। तर उसलाई यो काममा टुट्टा पऱ्यो।—जितेन्द्र(आधुनिक आविष्कार)।

**टुपी काट्नु**—(१)=जोगी हुनु। यिनीहरू देखेर म त आजीत भइसकें, कुन दिन टुपी काटेर हिंड्छु। (२) साधारण क्षर्थ। धने सुतिरहेको वेलामा कान्छो उपद्रयाहाले भलिभाँतिसंग टुपी काटिदिएछ।

**टुप्पादेखि(बाट) पलाउनु**—=कम कक्षाको मान्छे कुनै कारणले पैसा कमाई वा दर्जा पाई एकदम ठूलो हुनु। घरानियाँ मान्छेको र टुप्पैदेखि पलाएको मानिसको बुद्धि २१४ बातमै पहिचान्न सकिन्छ।

**टुप्लुक्क आइपुग्नु**—=मौकैमा अकस्मात् आइपुग्नु। बिस्मा नले पुन्नारानको नाउँ मात्र लिएको थियो उसकी स्वास्नी टुप्लुक्क आइपुगी।

**टेढो आँखा गर्नु**-(१)=टाउको नफर्काएर आँखाको कोसबाट हेर्नु। दुलही आउँदा दुलहाले टेढो आँखा गऱ्यो। (२)=आँखा तर्नु (रिसले)। ममाथि किन त्यस्तो टेढो आँखा गर्छौ?

**टेढो आँखाले पनि नहेर्नु**—एकदम अनादर गर्नु। सुब्बा बाजेकहाँ दर्शन गर्न गएका थियौं, हामीलाइ त टेढो आँखाले पनि हेर्नु भएन।

**टेर पुच्छर लाउनु, टेर लाउनु**—(१)=भनेको मान्नु, आज्ञा पालन गर्नु, (प्रायः अकरण भएर)।········पूजा गर्दछु, सेवा गर्दछु, भन्दा खेरि पनि कत्ति टेर पुच्छरै नलाउने, उल्टो बिलना मात्र गरेर बस्ने।—रुद्रराज (प्रायश्चित्त)। (२)=बास्ता वा लिहाज गर्नु। किन? मेरो कुरा-लाई टेड्पुच्छरै नलाएर स्वा-



स्नीतिर मुख फर्काएर पो बस्यो। —श्री केसर (विक्रमोर्वशी)।

**ट्रेन छुट्नु**—=रेल प्रस्थान हुनु। ट्रेन छुट्न अब पाँचै मिनट छ। —रूपनारायण (अमर)।

**टोक्नु न बोक्नु**—=खान वा छाड्न पनि नसकिने लान पनि अप्ठ्यारो किसिमको घाँडो। बीचमा मोटर बिग्रिदिए टोक्नु न बोक्नु भयो।

**टोखाली चाकु**—=सबभन्दा असल चाकु (टोखाको त्यस्तो हुन्छ भन्ने ठहरिएको हुनाले।

**ट्वाँटी हाल्नु**—=धडपकड गर्नु। कालूले मेरो पैसा म्याद-भित्र बुझाएन् भने ट्वाँटी हालेर लिन्छु।

## ठ्

**ठक्कर खानु**—(१)=धोका खानु। ····ती आश्रमःरा दानवहरूले उल्टो ठक्कर खाए।—श्री केसर (विक्रमोर्वशी)। खान्छ ठक्कर जो चाँडै लामो जीवन मार्गमा होशी कदम चालेर उही दौडन जान्दछ। —बालकृष्ण (ध्रुव)। (२)=केही कुरामा ठोकिनु। यो घोडा ठक्कर खान्छ।

**ठग विद्या**—(१)=छल्ने जुक्ति। अहिले तेरो पेट दुखेको छैन, खालि ठग विद्या मात्र हो। (२)= पैसा ठग्ने इलम। रिट्ठे झांक्री तातो छारो केही जान्दैन, यिनीहरू ठग विद्या मात्र जान्दछन्।

**ठट्टा उडाउनु**—=हँसी वा खिसी गर्नु। निस्संदेह केही स-ज्जनहरूले उस वेला माँटिसन-को ठट्टा पनि उडाए होलान्। —जितेन्द्र (आधुनिक आविष्कार)।

**ठट्टा नहुनु**—(१)=लडैंतरो कुरा अथवा मान्छे, वा सजिलो कुरा नहुनु। जावो एउटा अदना क-रियाले बादशाहको पोजिसनमा पुग्नु ठट्टा होइन।—रुद्रराज (भारतवर्षको संक्षिप्त इतिहास, भाग २)। (२)=साँचिको हुनु। ठट्टा होइन, आज म तिम्रो घरमा आउँछु।

**ठट्टामा उडाउनु**—=दिल्लगी

गर्दा गर्दै यथार्थ जवाब दिन छल्नु। झाङ्राराजासँग एउटा कोट मागेको ठट्टामा उडाइदिबक्स्यो।

**ठण्डाराम हुनु**—(१)=चिसो हुनु। आगो निभेर भात ठण्डाराम भइसक्यो; अझसम्म गफ गर्न छाड्दैनौ। (२)=सिद्धिनु। दही त ठण्डाराम भइसकेछ, तिमी ढीलो भयौ सबैले थपी थपी खाइसके। (३)=मर्नु। जेठा दाइ मेलोबाट फर्केर चोटामा हेर्न जाँदा बाजे ठण्डाराम भइसक्नुभएछ।

**ठण्डी लाग्नु**—=जरो आउने वा रुघा खोकी लाग्नेसम्म गरी चिसोले असर गर्नु। हिजो सानी मैयाँ रातीसम्म डुली, त्यसैले ठण्डी लाग्यो।

**ठनक्क भाँचिनु**—=पूरा वा छुट्टिने गरी भाँचिनु। म एक औंलाले हानेर त्यो सीसाकलम ठनक्क भाँच्न सक्छु।

**ठहरै पर्नु**—(१)=प्रेमले विह्वल हुनु। कर्के आँखाले एक पल्ट के हेरेकी थिइन् मत ठहरै परें। —रुद्रराज (चप्पा काजी)। (२)=ठूलो आपत् वा संकटमा पर्नु। घरमा मेरी ती बुढी आमा! ती बुढी मर्ने छन्! चन्द्रमा जस्ती ता मेरा सुना ठहरै पर्ने छन्।—लक्ष्मीप्रसाद (मुना-मदन)। (३)=भुतुक्क मर्नु (साधारण अर्थ)। भूतको मुखमा परे ठहरै पर्छ भन्छन्।

**ठाउँ छाड्नु**—(१)=मर्यादा नाघ्नु, बढ्नु। ज्यादै ठाउँ छोडेर काम गर्ने बानी थियो।—रुद्रराज (चप्पा काजी)। (२) साधारण अर्थ। तिमीहरू आफ्ना आफ्ना ठाउँ नछाडेर बस।

**ठाउँ दिनु**—(१)=मौका दिनु। अर्कालाई ठाउँ दिएपछि भन्दैन त? (२)=चुकिदिनु। तिमिले ठाउँ दियौ, उसैले उसले तिमीलाई बिगार्न पायो। (३)=हक दिनु। उही सरहको लालेलाई जागिर थपिदिएर घनेलाई कराउने ठाउँ दियौ। (४) साधारण अर्थ। मलाई अलिकति ठाउँ देऊन, हेर्न पाइनँ।

**ठाउँ न ठहर**—=अमिल्दो वा साँघुरो ठाउँ। शिकार खेल्न



आएको वेला यस्तो भीरमा, ठाउँ न ठहर हरि भात पकाएर खान्छु भन्छ।

**ठाउँ पाउनु, भेट्टाउनु**—(१)=दोष वा कसूर फेला पार्नु। चन्द्रेले ठाउँ पाएपछि तिभीलाइ बाँकी राख्ला भन्ने छ? (२)=मौका पाउनु। उसले ठाउँ पाएपछि भन्दैन त? (३)=हक हुनु। पुरानियाँ हुनाले उसले कराउने ठाउँ पायो। (४)=भने जस्तो मालिककहाँ भर्ना हुनु। शिवनाथले त ठूलो ठाउँ भेट्टाएछन् (यस अर्थमा 'पाउनु' हुँदैन)। (५) साधारण अर्थ। दाज्यैज्यू मौसुफबाट मुलुकका बेहतरका खातिर धेरै गरी बक्सियो, उहाँको सम्झना सदा पवित्र-रूपले हाम्रा दीलमा वास गरी मुलुकका इतिहासमा पनी उहाँका यशकिर्तीले उच्च ठाउँ पाउनेछ।—श्री३भीम (नगर-प्रदक्षिणोत्सवको वक्तृता)।

**ठाउँमा आउनु**—(१)=कायल हुनु, तर लाग्नु, मतापमा आउनु। शान्त भै ठाममा आये ठूला नद नदी सब। सबैको अस्थिरै हुन्छ उर्लंदो वेग-वैभव॥—लेखनाथ (ऋतु-विचार)। (२)=इनसाफ दिने व्यक्तिकहाँ आउनु। ठाउँमा आएको छु, अब इनसाफ हुन्यैछ। (३) साधारण अर्थ। आफ्नो ठाउँमा नआएर किन अन्त गएको?

**ठाउँमा पर्नु**—(१)=(कुरा) असर पर्ने गरी भन्नु। कुरा त ठाउँमा पारेर बोल्ने हुन्।—रुद्रराज (चप्पाकाजी)। (२)=हर्ताकर्ताकहाँ पुग्नु (बिन्ति आदि)। ठाउँमा कुरा परेपछि मेरो जित हुन्छ, हेरिरहू। (३) साधारण अर्थ। ठाउँमा परे त पेच सजिलैसित भित्र पसिहाल्छ नि, बल नगर।

**ठाङे लाग्नु**—=रोग वा चोटपटक लाग्नु (ठाङेको अर्थ 'मुख बन्द नहुने गरी हाइ गरेको गन्यै हुनु' हो तापनि त्यस अर्थमा आजकल प्रयोग नभई माथिको अर्थमा प्रायः अकरण भई प्रयोग हुन्छ)। मूसीलाइ केही ठाङे लागेको छैन, हारेको रिसले रोएकी मात्र हो।

**ठाडठाडा कान लाउनु**—=एक कुरा पनि कानबाट बाहिर पर्न नदिनालाइ चंख भई ध्यान दिनु। गौंथली आई कि भनेर चामेले ठाड ठाड़ा कान लायो ।—गुरुप्रसाद (कथा कुसुम) ।

**ठाडे गाँउबाट आएको**—ठिङ्गेश्वरको व्रत लिएको (ठिङ्ग उभिरहने) मानिसलाइ भन्ने बोली । यिनले त बस्न जानेको रहेनछ, ठाडे गाउँबाट आएका हुन् क्यारे ।

**ठाडै कराउनु**—=हर्ताकर्ताकहाँ नै सरासर गएर भन्नु (अरू मान्छे, बिन्तिपत्र, वा अड्डाद्वारा होइन) । मलाई निकाल्यौ भने ठाडै कराउन जान्छु ।

**ठाडै खुट्टाले फर्कनु**—=बस्तै नबसेर लगत्तै फर्कनु । काहिंला बाको खबर भनेर लखनथापा ठाडै खुट्टाले फर्क्यो ।

**ठाडै छेराउनु, छेर्नु**-(१)=तुरुन्तै तिराउनु, तिर्नु । हाम्रो मालिक त साह्रै चण्डाल छ, अस्ति ऐना फुटाएको त ठाडै छेरायो । (२)=साह्रै डराउनु । छोरी देखिन् आमा ठाडै छेर्दथिन् ।—रुद्रराज (रूपमती) । (३) साधारण अर्थ ।

**ठाडै निल्नु**—=एकदम डाँकोले खाएर बोल्नै नदिनु । रघुवीरले एक वचन के बोलेको थियो, रामप्रसादले ठाडै निलयो ।

**ठाडै सुकनु**—=ओछ्यान नपरी ज्यादै दुब्लाउनु । साना बाज्ये ठाडै शुकेर जानलागे । —रुद्रराज (रूपमती) ।

**ठाडो कम्मर लाउन पाउनु**—=(कामले) एक छिन फुर्सद नपाउनु । दिदीकी छोरीको बिहाले ठाडो कम्मर लाउन पाएको छैन, चिठी लेखिदे भन्न आउने !

**ठाडो घाँटी लाउनु**—(१)=ठाडो घाँटी लाएर निल्नु वा पानी, (प्रायः) रक्सी पिउनु । (२)=मर्नु । भ्वानसिङले त ठाडो घाँटी लाएछ ।

**ठाडो जवाफ**—(१)=कोरा जवाफ । अड्डाले ठाडो जवाफ दिएर पठायो । (२)=रूखो जवाफ ।

**ठाडो पुच्छर लाउनु**—(१)=भाग्नु (गाई वस्तुको भाग्दा पुच्छर ठाडो गर्ने आदतबाट)। ....लक्ष्मी-पूजाको मध्य रातकी लक्ष्मी जाग्नुसंम जागीन्, माऊसित छुट्याएकी लैनी बाच्छी झैं ठाडो पुच्छर लायेर विपत्तासित भागीन्,.....।—लेखनाथ (लक्ष्मी-पूजा) । सानी यहाँ थिई कति चाँडै ठाडो पुच्छर लाइसकिछ।(२)=पोइल जानु । गङ्गीले ठाडो पुच्छर लाइछ । (३) साधारण अर्थ । कोकलेको पोशाक देखेर भैंसी झन ठाडो पुच्छर लायेर कुदून थाल्यो ।—गुरुप्रसाद (कथा कुसुम) ।



**ठाडो मुख गर्नु**—(१)=इज्जत राख्नु । एउटा जडाउरी कोट निगाह भए त जोरीपारीको अगाडि ठाडो मुख गर्न पाउँथें । (२)=रूखो वचनले बोल्नु । लोग्नेसँग सोझो मुख कहिले छैन, सधैं ठाडो मुख गर्न लागेपछि उसको मन कसरी पलाउँछ ? (३)=टाउको ठाडो गरेर मुखमा हेर्नु । यतिका वर्ष भयो दुलही बज्यैले सासू ससुरासित कहिले ठाडो मुख गरेर बोल्नुभएको थाहा छैन ।

**ठाडो मुड्की दिनु**—=कान्छी औंलापट्टिबाट मुक्की दिनु (बढ्ता दुख्ने हुनाले) । त्यति कुरामा पनि रुनेलाई मुड्की देन ।

**ठिकठिके जाडो**—=चिउँडो कामी दाँत बज्नेसम्मको जाडो। नेपालमा चैतसम्म पनि ठिकठिके जाडो रहन्छ ।

**ठिक पार्नु**—(१)=हो जस्तै पारेर कुरा गर्नु । अगिल्तिर ऊ ठीक पारि दिन्छ, हो न हो साँचो हो ।—भीमनिधि (सहनशीला सुशीला)। ठिक पार्छौं, बजिनी ! तँलाइ मेरो एक जात मायाँ छैन । (२)=बर्ता पनि होइन कम पनि होइन वाजबी पार्नु । नून ठिक पारेर अचार बना, अस्ति त ठाठो पारिछस् ।

**ठिक्कै लाग्नु**—(१)=उस्तो बेस, राम्रो, मीठो नलाग्नु । तिम्रो फरियाको बुट्टा मलाइ त ठिक्कै लाग्यो । (२)=एकदम ठीक (न बढी न घटी) लाग्नु। तिमी यो भित्ताको रङ चड्का भन्छौ, मलाइ त ठिक्कै लाग्यो।

**ठिङ्गेश्वरको व्रत लिएको**—ठाडे गाउँ····*इत्यादि* (मा हेर)।

**ठिटो गाई**——=दूध दिन थाकेकी गाई।

**ठीक खानु**——=निको रङ्ग हुनु (प्रायः अकरण)। भोलि यो पाठ बुझाउन सकेनौ भने ठीक खानेछैन।

**ठूली बँसी पस्नु वा भात खान जानु**—मालिकलाइ धुर्क्याउँदा भन्ने बोली। मालिकबाट विवेक नभए ठूली बँसी भात खान जाउँला के! (२)=मधेस पस्नु। खै, यहाँ मीठो खान पाइएन ठूली बँसी भात खान जान्छु।

**ठूलो ओखति**——=सुत्केरीको आङ बाँध्ने औषधि (पाषाणभेद भन्ने बुटी)।

**ठूलो दिल हुनु, गर्नु**——=उदार हुनु। ठूलो दिल गरेकी पतिव्रताले मञ्जुरी दिएको हुनाले विना बाधाको तिम्रा पियारा सितको सहवास हुनेछ।—श्री केसर (विक्रमोर्वशी)।

**ठूलो भाग खानु**—(१)=लाभ उठाउनु (प्रायः विफल हुँदा भन्ने बोली)। दाइकहाँ ठूलो भाग खान गएकी थिइस्, पाइनस् के स्वाद! (२) साधारण अर्थ। सबभन्दा ठूलो भाग खान पाएपछि पनि पुगेन भन्नु हुन्छ?

**ठूलो माछो मार्नु**——=ठूलो केटा-केटी वा मान्छे लोट्नु (लोट्ता गिज्याउने बोली)। आज त ठूलो माछा मर्‍यो।

**ठूलो मुख गर्नु, बाउनु, लाउनु**—(१)=ठूलठूला मानिसको विरुद्ध वा राजकाजसंबन्धी कुरा गर्नु। हेर, यसरी ठूलो मुख बाउन लागिस् भने सेतो घर पुग्लास्! (२)=औकात वा हद नाघेर माग्नु वा खान खोज्नु। सुबिदारको भान्छे भएर सरदार बाजेकी छोरी माग्ने?—यस्तो ठूलो मुख गर्न लाग्यौ भने सबैले हँसी गर्छन्।

**ठूलो मुट्ठ हुनु**——=ठूलो आँट वा साहस हुनु। उनले पनि ठूलो मुट्ठ भएर मात्र त्यसो गर्न सकेकी हुन्।—रुद्रराज (रूपमती)।

**ठेगानको कुरा**—(१)=ठीक, साँचो कुरा। तिमी ठेगानको कुरा गर्दैनौ के पत्याउनु, के नपत्याउनु। (२)=होशसित गरेको कुरा। आजकल बूढा एउटा ठेगानको कुरा गर्दैन, अम्मलपट्टि लागेको छ क्यारे!



**ठेगानमा आउनु**—(१)=ठीक स्थिति वा थान्कोमा पुग्नु। हो, यतिका बेरपछि बल्ल तेरो बुद्धि ठेगानमा आएछ। (२)=मतलबको वा असली कुरामा आउनु। बल्ल ठेगानमा आयौ, अब भने बुझ्छौ। हर्ष बढाइ गर, तिम्री प्यारी सखी ठेगानमा आउन लागिन्,····।—श्री केसर (विक्रमोर्वशी)। (३)=इनसाफ गरी दण्ड सजा गर्न सक्ने मान्छेकहाँ आउनु। ठेगानमा आएपछि यस कुराको धोइफोइ हुन्छ, किन धन्दा मान्छौ? (४)=वाञ्छित ठाउँमा पुग्नु (यो अर्थमा प्रायः 'ठेगाना' हुन्छ)। दश बजे ठेगानमा आइपुग्यैं।

**ठेगानमा नहुनु**—(१)=चंचल हुनु। तिम्रो मन ठेगानैमा छैन, मैले भनेको के बुझ्थ्यौ त! (२)=थान्कोमा नहुनु। एउटा माल ठेगानमा छैन, खोजेको वेलामा कहाँबाट पाइन्छ?

**ठेगानमा पुऱ्याउनु**—(१)=ठीक ठाउँमा पुऱ्याउनु। यतिका दिन भइसक्यो यो माल जहाँको तहीं देख्छु, किन ठेगानमा नपुऱ्याइदिएको। (२)=इनसाफ वा सजा गरिने ठाउँमा पुऱ्याउनु। धेरै नि हुँ नखोज्, ठेगानमा पुऱ्याइदिउँला!

**ठेगान लाउनु, लाग्नु, बस्नु**—(१)=पक्का गर्नु, हुनु। तिमी मधेस जाने कुराको ठेगान लाग्यो? (२)=छिन्नु, छिनिनु। आज यस कुराको ठेगान न लाइ एताबाट अब गइन लौ ऐले मैले भनेर यो रातकाभीचमा नुहाउन शक्नु हुन्छ?—शिवप्रताप (दुर्गेशनन्दिनी)।

**ठेट्ना मकै**—(१)=फूल नउठेको वा नउठ्ने। (२)=कति भने पनि नमान्ने अल्लठ लडको। यो ठेट्ना मकैलाइ भनेर साध्य हुँदैन।

**ठेला बस्नु, जम्नु, उठ्नु, पर्नु**——=ज्यादा घसिनाले छाला साह्रो-भई चक्का जम्नु। जस्तो काम्

गर्न मानिसको हातमा ठेला बस्यो भने, त्यो ठेला बसेको ठाउँमा अरु छालामा भए जस्तो ज्ञान् हुदैन, तेस्तै बास्नाको ठेला जमी शके पछि तेस्मन्मा सत्य बस्तुको प्रतीति बस्न शक्तैन। —जयपृथ्वी बहादुर (तत्त्व-प्रशंसा)। कोदाली खन्दा खन्दा हातमा ठेला परिसक्यो।

**ठेस लाग्नु, खानु**—=ठक्कर खानु (२) (तर यो वाक्यांश मानिसको खुट्टाले ठक्कर खाँदा मात्र प्रयोग हुन्छ। 'घोडाले ठेस खायो वा मेरो टाउकोमा ठेस लाग्यो' हुँदैन, उपमा अर्थमा 'नाकमा ठेस लाग्नु' हुन्छ)। घरमा गएर स्वास्नीलाई त्यस्तै फुरौला पकाउन लाउँछु भनेर फुरौला फुरौला भन्दै दगुर्दा त ठेस लागेर लडेछ।—बोधविक्रम (दन्त्यकथा)। काल आएको बेलामा ठेस लागेर पनि मान्छे मर्छ।

**ठोस लाउनु, लाग्नु**—=अपजस दिनु वा आउनु, खोट लाउनु वा लाग्नु। काम गर्नु जति परेपछि अर्काले ठोस लाउन नपाउने गरी गर्नुपर्छ।

**ठ्याँक वा ठ्याँकका ठ्याँक खुवाउनु, दिनु**—=गलहत्ती वा धक्का दिनु। यो बदमाशलाइ ठ्याँक खुवाएर निकालिदे।

**ठ्याक मिल्नु**—=मिजास वा कुराकानी मिल्नु (अक्सर अकरणमा)। भरखरका उमेर मा ती वीरेन्द्रसिंहको आफना बाबू सङ क्यै गरे पनी ठ्याक मिल्दैनथ्यो।—शिवप्रताप (दुर्गेशनन्दिनी)।

**ठ्याक हुनु**—=मेल हुनु, बोलचाल हुनु (अक्सर अकरणमा)। त्यसै हुनाले बाबु छोराको ठ्याक थियेन।—शिवप्रताप (दुर्गेशनन्दिनी)।

## ड्

**डँडाल्नु सेकाउनु, सेक्नु**—(१)=चुट्नु। लौ जा मैयाँ बाहेक अरू सबैको डँडाल्नु सेकेर आ।—बोधविक्रम (दन्त्यकथा)। (२)=मटका वा नोकशान पार्नु। दाम पनि मोरोले डबल लियो—डडाल्नोनै सेकियो।—रुद्रराज (चप्पाकाजी)। (३)=डँडाल्नु रापमा तताउनु। तिमी काम गर्दै गर म घाममा एक छिन डँडाल्नु सेकाएर आउँछु।



**डङ्क मार्नु**—=(बिच्छी, मौरी, इत्यादिले) चिल्नु। यो कुकुरलाइ बारुलाले डङ्क मास्यो होला, उसैले आँखानेर सुनियो।

**डङ्का पिटाउनु**—=हल्ला उठाउनु।

**डङ्का फिंजाउनु**—=हल्ला फैलाउनु।

**डङ्का बजार गर्नु**—=घरै उचाल्नेसम्मको ठूलो आवाज गर्नु। गजुरेलले एक दुइ लपेटा पिट्तैमा विश्वेश्वरी डङ्का बजार गरेर रोई।

**डढेलो लाग्नु, सल्कनु**—(१) =आगो सल्कनु (केवल वनमा वा उपमा अर्थ भएर बुद्धि, सुद्धिमा)। डाँडामा डढेलो सल्केको हेर। "एकराते दहीमा बिरालो पल्केको। बज्यैको बुद्धि माडढेलो सल्केको॥" फेरी सोहि बखत् सबै बन भरी लाग्यो डढेलो तहाँ। बाँबाँ सोर गरेर गाइहरु सब् घुम्दा भया बनूमहाँ॥—होमनाथ (श्रीमद्भागवत कृष्ण चरित्र)। (२)= नराम्रो कुरामाथि अझ नराम्रो कुरा लगाउनु। उसै त कालेले कान फुकेको, उसमाथि सेते डढेलो लाउने, के बाँकी रहन्थ्यो?

**डण्ड पेल्नु**—=चार हातखुट्टा टेकेर छातीले नछुने चिउँडाले मात्र छुने गरी कसरत गर्नु।

**डबलमा जानु**—=छिटो जानु (कवायदबाट आएको वाक्यांश)।

**डम्म अघाउनु**—=डकार आउने गरी पेट भरिनु। एक गिलास दूध खाएको त डम्म अघाएँ।

**डर देखाउनु**—=खराबी हुने संभव छ भन्ने झल्काउनु। मैले डर देखाइदिएर पो नत्र त कान्छाले पुनवीरलाइ बजाइसकेको थियो।

**डरले छेर्नु**—=डरले थरहरी हुनु। अँध्यारो कोठामा जाँदा त डरले छेर्छौ, यस्तै मान्छेले राती चोर पक्रने!

**डाँकको बोली**—=भनेको ट्वाक पुग्ने वचन (कहिलेकहीं मुखमा

डाँक वा भूत आएर बस्छ, त्यस वेला बोलेको पुग्छ भन्ने चलन-बाट)। बहिनी अस्ति तिमीले भनेको त डाँकको बोली रहेछ, ठ्वाक्क उस्तै पुग्यो।

**डाँक बसेको मुख**—=जे बोल्यो उही तत्कालै मिल्न जाने (अक्सर खराब कुरा; उसैले रिसमा भन्ने)। श्यामेले 'तिमी नलडिछाड्दैनौ' भनेको मात्र थियो लडिहाले, कस्तो डाँक बसेको मुख!

**डाँक बोल्नु**—=लिलाममा यति दाम दिन्छु भनेर बोल्नु। तिमीले ६४ पैसा डाँक बोलेको होइन, त्यसमा अरूले बढे?

**डाँक मार्नु**—=हुलाकमा डाँका लाग्नु। पचास साठी जनाको डफ्फा आएर डाँक मारे। (२) =एउटाले पाउनेमा अकैले बीचबाट टप्काउनु। हरिलाइ भनेर दिएको जिताउरीमा जितमानले डाँक मार्‍यो।

**डाँक राख्नु**—=सफर गर्दा ठाउँ ठाउँमा पेश्की सवारी राख्नु। बीचमा डाँक राखे त चाँडै नै भीमफेदी पुग्छौं।

**डाँका पर्नु**—=डाँकूद्वारा लूटलाट हुनु। तेस दिन राति वेदग्रामका गाँउलेहरूले चन्द्रशेखरका घरमा डाका पर्‍यो भन्ने भयानक कुरा सुने।—गम्भीरध्वज(चन्द्रशेखर)।

**डाँका मार्नु**—(१)=हाकाहाकी लूटपीट गर्नु। मैले कहाँ डाँका मारें? कसको खून गरें?—काशीबहादुर (उषा)। हिजो यी बदमाशहरू गङ्गारामको घरमा डाँका मार्न गएका थिए। (२)=डाँकूलाइ मार्नु। यति धेरै मानिसले त्यस डाँका मार्न सहजै सकछौ।

**डाँको छोड्नु, छोडेर (छोडी छोडी) रुनु**—=हाँ हाँ गरेर रुनु।.....उनले धनमादका धुँवाको पीरो मुस्लो निकालिन् र तिनका ती पिलपिलाउँदा आँखा पिल्स्याउन थालिन् भने डाको छोड्दै आउँछन्.....।—लेखनाथ (लक्ष्मीपूजा)। रूवाबासी को धुमधाम मच्चिएकोछ, प्रायः सबै जना डाँको छोडि छोडि रोइरहेछन्।—शिवप्रताप (दुर्गेशनन्दिनी)। "....यी कहाँकी कहाँकी छँडुलीहरूको



पनि रङ्ग न ढङ्ग संग गाली खाइरहनु पर्ने" के भनेकी थिइन् रूपलता डाँको छोडेर रुन थालिन्।—रुद्रराज (चप्पा काजी)। उनी एकदम घोप्टो परेर डाँको छोडेर रुन लागिन्, त्यै अवस्थामा राजकुमार उनीकहाँ पुगे।—बोधविक्रम (दन्त्यकथा)। बिचरा सिपेरिसस!.....त्यसका कमलो निधारलाइ वारंवार स्वाइ खान्थे, अनि डाँको छोड़ी छोड़ी रुन्थे।—भएभरको वृत्तान्त पढ़ेर तिनका बाबु डाँको छोड़ेर रुन थाले,.....।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)।

**डाँकोले खानु, निल्नु**—=ठूलो स्वरले डाँटेर बोल्नै नदिनु। लालेले मनासिबै कुरा भन्न लागेको थियो मीनेले डाँकोले खाइहाल्यो।

**डाँडाको [माथिको वा मा पुगेको] घाम हुनु**—=बूढो भई मर्ने वेला भएको हुनु। हामी त डाँडामा पुगेको घाम भइसक्यौँ जति साँचिन्छ उति तिमीहरूकै न हो।

**डाँडा[माथि]को जून**—=डाँडामाथिको घाम। संझदी हुन् ती डाँडाकी जुन, आमाले मलाई, वनको छेउ म टाढा बस्छु त्यो घर रूलायी।—लक्ष्मीप्रसाद (मुना-मदन)।

**डाँडो काट्नु, कटाउनु**—(१) =राजधानीबाहिर भाग्नु, निकाल्नु, (हाम्रो राजधानीलाइ डाँडाले घेरेको हुँनाले)। मुनियाँले त अहिलेसम्म डाँडो काटिसकी होली, पक्रन नपठाए पनि हुन्छ। यस्तो गरिस् भने डाँडो कटाइफ्लास्! (२)=धेरै टाढा पुग्नु। श्यामाको बिहाको कुराले त डाँडो कास्यो।

**डाक न बोलाउ**—=चाह वा आदरभाउ नभएको। डाक न बोलाउ भएको ठाउँमा किन जान्छ्यौ?

**डाडु पन्यू चाट्नु**—डाडु पन्यू चाटेदेखि बिहामा पानी पर्छ भन्ने चलन छ, उसैले बिहामा पानी पर्‍यो भने दुलहा वा दुलहीले डाडु पन्यू चाटेको ठहरिन्छ। जन्ती पर्सने वेलैमा पानी पर्‍यो,

सानीले त डाडु पन्यू चाटेकी रहिछ ।

**डाडु पन्यू हातमा हुनु**—(१) =पकाउने काम आफ्नो जिम्मामा हुनु । डाडु पन्यू हातमा भएको मान्छेलाइ खान केही दुक्ख छैन । (२)=दिन खान सक्ने हुनु । डाडु पन्यू तपाईंकै हातमा छ, जाबो नौसिन्दा खान्गी पनि नपाउँला त ?

**डाडुमा पानी तताएर [ त्यहीँ डुबी ] मर्नु**— =नपत्याएको कुरा गर्दा भन्ने असंभव जताउने बोली । तिमीले यो कुरा गर्न सक्यौ भने त म अहिल्यै डाडुमा पानी तताएर मर्छु ।

**डामेको साँढे जस्तो**— =छाडा वा नियमको अधीनमा नबस्ने मानिसलाइ दृष्टान्त दिंदा । रेग्मी बाजे त डामेको साँढे जस्ता छन्, १२ नबजी कहिल्यै अड्डामा आउँदैनन् ।

**डिक लेखिदिनु**— =धितो राखेर तमसुक गरिदिनु । सय रुपियाँ सापटी पाऊँ, बरु मेरो खेत डिक लेखिदिन्छु ।

**डिको हाल्नु, दिनु**—(१)=धर्को हाल्नु । मलाइ त डिको हालेको कापी चाहिन्छ । (२) =अक्षरको माथि धर्को वा टाउको दिनु। जाँचमा डिको हालेर लेख्नुपर्छ, डिको नदिएको अक्षर लेखे नम्बर काटिन्छ ।

**डिम्के चिउरा**— =थप्पड । धेरै नरो डिम्के चिउरा पाउलास् ।

**डिल्ली**—यो दिल्लीको अशुद्ध रूप हो, हामी यस्तो उच्चारण गर्छौं तापनि व्यक्तिवाचक नाममा बाहेक 'दिल्ली' नै लेख्नु बेस हो ।

**डीङ मार्नु**— =आफ्नो झूटो बडाइ गर्नु, बढाई बढाई कुरा गर्नु । डीङ मार्न त सबै जान्दछन्, काम गरेर देखाउनुपर्छ ।

**डुक्री पिटाउनु**— =सबैलाइ भनी भनी हिंड्नु, हल्ला मचाउनु ।

**डुगडुगी (डुग्गी) फिराउनु, पिटाउनु**— =कराई कराईकन सबैलाइ सुनाउनु, (यसबाट, कुरा) फयल गर्नु । मुनुमाया पोइल गएको कुरा डुगडुगी फिरेछ । डुग्गी पिटाइदिने मिजास थियो ।—रुद्रराज (रूपमती) ।



**डुबुल्की मार्नु**— =खोला इत्यादिमा डुबी डुबी नुहाउनु । गौरी घाटमा सात चाटि डुबुल्की मारेर नुहाएँ ।

**डुलुवा कुकुर**— =घर घर डुलेर खाने मान्छे (लाइ भन्ने हेलाको बोली) । तिम्रो छोरो डुलुवा कुकुर भइरहेछ, किन छाडा छोड्छ्यौ ?

**डुलुवा भमरा**— =नयां नयां मनिससँग प्रेम गरिहिंड्ने मान्छे। डुलुवा भमरा चौपट्ट जाली । —लेखनाथ (भर्तृहरिनिर्वेद) ।

**डुल्की जानु**— =डुल्की (ध्याच ध्याच गर्ने चाल,मा दगुर्नु (घोडाको बारे) ।

**डुहु(कु)रे मूसो जस्तो**— =भित्र भित्र खेदो गर्ने मानिसलाइ दृष्टान्त दिने बोली । बाहिर देख्ता मात्र यो साधु छ, भित्रको त डुहुरे मूसो न हो ।

**डेग चल्नु**— =ठाउँबाट अलिकति अन्यत्र सर्नु (अक्सर अकरण अर्थमा) । ऊ क्यात, लेखेको ढेढु झैं केही कुरा मनमा खेलाएर डेग नचली माणवक बाजे बसिरहेका रहेछन्, लौ अब तिनीनिर जान्छु ।—श्री केसर (विक्रमोर्वशी) । 'अब असूल नगरी डेग् चल्ने होइन' भनेर अड्डि लियो ।—रुद्रराज (रूपमती) ।....त्यो दिनको राजा खोज्न भनेर मन्त्रिवर्गले हात्तीलाई पठाउन लागे; तर हात्ती डेग चलेन ।—बोधविक्रम (दन्त्यकथा) । पेनुलाइ त हामी दुइ जनाले डेग चलाउन सकेनौं ।

**डेड़ो (रो) आँखाले नहेर्नु**— =एक जात वास्ता नराख्नु । अस्ति मसँग झगडा भएदेखि मोहनमाया मेरा छोराछोरीलाइ डेडो आँखाले पनि हेर्दिन ।

**डेढ अकली**— =जान्ने हुने तर बुद्धि पुर्याउन नसक्ने । यो बड़ो जान्ने भएर बत्ती बनाउन लागेको थियो घरभरीको फ्यूज हिंडाइदियो, यस्तो डेढ अक्कलीबाट पनि कहिल्यै काम हुन्छ !

**डेरा गर्नु**—(१)=बाहल तिरी वा लिहाजले तिर्न नपरी अर्काको घरलाइ आफ्नो वासस्थान तुल्याउनु । आजकल म आनन्दको

घरमा डेरा गरेर बसेको छु। ....डेरा सम्म गरी फर्कोस् स्वर्गलाई समेत त्यो, जन्मभूमि बनोस् आफू, आफू होस् जन्म-भूमि त्यो !—बालकृष्ण (मुकुन्द इन्दिरा)। (२)=घुसेर बस्नु। मेरो शरीरमा रोगले डेरा गरि-रहेछ।

**डेरा जमाउनु**—(१)=(डर, लाज, आदि) को पूरा असर पर्नु। लाजले उनमा डेरा पनि जमायो।—बोधविक्रम (दन्त्य-कथा)। (२)=बहालमा लिएको कोठा राम्ररी सजाउनु वा डेराको बन्दोबस्त हुनु। किस्नेले त त्यस्तो रही डेरा अहिले त जमाइसकेछ। उसले त आनन्देकहाँ डेरा जमाइस-केछ।

**डेरा डण्डा गर्नु**—=वास बस्ने जोहो गर्नु। तिमी अगाडि गएर डेरा डण्डा गर, म भरिया खेदेर ल्याउँदै गर्छु।

**डेरा पर्नु**—(१)=वास बस्ने काम हुनु। डेरा पर्‍यो दिन दसेक पहाड़माहाँ। शोणित् पुरी भनि सहर् पनि वस्छ जाहाँ॥—मोतीराम (उषा चरित्र)। (२)=(नेर) डेरा गरेको घर हुनु। बानेश्वरको सडकैमा मेरो डेरा पर्छ।

**डोको जत्रो मुख बाउनु, गर्नु**—(१)=रुँदाखेरि मुख ठूलो पारी आँ गर्नु। योसित त मलाइ बोल्नै मन लाग्दैन, केही भन्न हुन्न डोको जत्रो मुख बाइ-हाल्छे। (२)=खूब चाखसँग खान चाहनु। रामेको बिहा खान भनी डोको जत्रो मुख बाइरहेकी थिइस्, के खाइस्?

**डोको न डालाको कुरा**—=फेद न टुप्पाको अप्रासङ्गिक कुरा। चामे मानिस त रसिलै हो, तर डोको न डालाको कुरा धेरै गर्छ।

**डोको नास्लो काट्नु**—=पार दिनु। मेरो डोको नास्लो काटिएको ९ वर्ष भयो।

**डोरो काट्नु**—=धर्को कोर्नु वा तान्नु। भतेरमा डोरो नकाटे-को भान्सा कसको होला?

**डोरो तान्नु, हाल्नु**—=धर्सो लेख्नु, बनाउनु (प्रायः 'तान्नु' चाहिं कलमले लेख्ता प्रयोग हुन्छ,



'हाल्नु' चाहिं चिन्ह लाउँदा, रङ लाउँदा, वा बुट्टा लेख्ता प्रयोग हुन्छ; तर यसको कडा नियम केही छैन)। जो मर्जी लेखेपछि डोरो तानेर छाडिदेऊ। हाजिरी फारममा एउटा डोरो तान्न छुटेछ। त्यो दोलाइँको किनारामा रातो र हरियोको डोरो हाले खुल्ला जस्तो लाग्छ। डोरो हालेको देखिनस्? त्यसभन्दा भित्र नआइज।

**डोरो बाट्नु**—=जनै पूर्णिमाको रक्षाबन्धने धागो बनाउनु। यति डोरो नबाटे ६० घर जजमानलाई कसरी पुऱ्याउलास्!

**डोरो [बाटो] लाउनु**—(१)=(अक्सर धामका देउताले) आफू-कहाँ आउने परिस्थिति मिलाउनु। परमेश्वर, काशीमा चाँड़ै डोरो-बाटो लाइदेऊ।—बालकृष्ण (मुकुन्द इन्दिरा)। (२)=चिन्हुको निम्ति धर्सो तान्नु वा डोब लाउनु (यहाँ 'बाटो' प्रयोग हुन्न)। यहाँ ३९ हात पुग्यो, डोरो लाऊ।

**डोहो डोहो पर्नु, हुनु**—=पुगेस् पुगेस् हुनु, खाँचो होला जस्तो हुनु। अस्ति भोजमा ७० कहतारा दहीले पनि डोहो डोहो भयो (वा पर्‍यो)। आजकल मलाइ पैसाले यस्तो डोहो डोहो परिरहेछ, के भनूँ!

**ड्याक पर्नु**—=टुट्टा पर्नु ('ड्याक हुनु' प्रयोग हुँदैन)। सराफी-कहाँ गन्दा के भएछ के, मालिककहाँ हिसाब बुझाउँदा त एक रुपियाँ ड्याक पर्‍यो।

## ढ

**ढकमक फुल्नु**—(१)=प्रशस्त-सँग (फूल) फुल्नु। वसन्त ऋतु हुनाले हाम्रो पर्खालनेरको गुला-फका फूल ढकमक फुलेका थिए। (२)=सेतै भएर कपाल फुल्नु। आफू भने ढकमक फुलिसकेको, बुद्धि भने केटा-केटीको जस्तो छ।

**ढङ्ग न रङ्गको**—(१)=सीप न-भएको, रीत नजानेको, सन्सरे। यस्तो ढङ्ग न रङ्गको मान्छेले किन तेल खन्याउन अघि सर्नु-

पर्‍यो ('सीप पनि छैन, रूप पनि छैन' को अर्थमा विभक्ति नलागेर पनि यो प्रयोग हुन्छ, तर प्रायः रूपसँग सम्बन्ध रहँदैन : —ढङ्ग न रङ्ग, उसै भात पकाउन अघि सर्ने !) । (२)=नराम्रो, बिलकुल बेठीकको, (प्रायः चीज) । ढङ्ग न रङ्गको माल किनेर ल्याएछ ! विनासित्तिकी ढङ्ग न रङ्गकी (=नराम्री) स्वास्नी ल्याएछ ।

**ढलक ढल्काउनु, ढल्कनु**—=बिस्तारै तर निकै बगलतिर झुकाउनु, झुक्नु (ढलकसँग अरू कुनै क्रियापद प्रयोग हुँदैन) । सानो छोरा गाग्रो ढलक ढल्काएर पानी सार्न पनि सक्ने भयो । रूख ढलक ढलिकसक्यो अझ पनि लडेको छैन। खिलप्रसाद १० बजे आउँछु भनेको मान्छे १ बजे पो ढलक ढल्की ढल्की आउँछ ए ! आजकलको सामाजिक विचार अर्कैतिर ढलक ढलिकसकेको छ ।

**ढांश ढुंगेमा भेट**—=तोप बन्दूकबाट फायर छुटिरहेको समय, अर्थात् लडाईंमा मात्र विपक्षीको हैसियतमा हुने मुठभेड ('ढुंगे' ढुङ्गे पनि सुनिने हुनाले, त्यसमा श्लेष छ) ।

**ढाड भाँच्नु**—(१)=बेसरी चुट्नु। अब यसो गरिस् भने तेरो ढाड नभाँची छोड्दिन । (२)=ठूलो नोक्सानी वा हानि हुनु । दुइ हात मार्दा त च्याँखेको ढाडै भाँचियो । (३)=(निहुरिरहँदा वा गह्रौं चीज बोक्दा) कम्मर दुख्नु । ओहो, यो पेनु बोक्दा त ढाडै भाँचियो !

**ढाड सोभयाउनु**—(१)=आरामी लिनु । हरबखत कामको कामै छ, एक छिन ढाड सोभयाउनसम्म पनि पाएको छैन । (२)=चुट्नु । तँ धेरै मात्तिन लागेको छस्, एक दिन तेरो ढाड नसोभयाई भएको छैन ।

**ढाढस बाँध्नु, दिनु**—=चित्त सह्माल्नु ('दिनु' प्रायः अर्काको) । दुःख परेमा ज्यादा हडबडाउनु हुँदैन ढाढस बाँधेर बस्नुपर्छ, यो सबैलाइ पर्ने कुरा हो ।

**ढाल जत्रो छाती गर्नु**—=फूर्ति वा रवाफ झिक्नु, गौरवान्वित हुनु। झगडा जितेदेखि शत्रुहरूको अगाडि ढाल जत्रो छाती गरेर हिंड्न पाउँथें ।

**ढाल जस्तो छाती गर्नु**—=निर्धक्क वा निस्फिक्र हुनु, मन बलियो गर्नु । चित्त बुझ्यो, अब त आँफ्नै काखले मनें भइयो, अबलाई कसैको डर भएन, ढाल जस्तो छाती गरेर बस्ने भएँ। —बोधविक्रम (दन्त्यकथा) ।

**ढिकी कुट्नु**—=ढिकी चलाउनु । लक्ष्मी एक बजे ढिकी कुट्न गएकी थिई, अझ आइन ।

**ढिकीको पुच्छरको रुपियाँ**—धनको तुजुकको महिमा दर्साउने वाक्यांश (बाहुनको ढिकी कुटिदिंदा त्यही ढिकीको पुच्छरको मन्तिर गाडेको धनमाथि सर्किनीको खुट्टा पर्नाले त्यसको तुजुक बढी बाहुनीले 'मेरो छोरालाइ केटी पाइनँ' भन्ने कुरा गर्दा 'मेरी छोरी पनि राम्री छ' भनिछ । भोलिपल्ट बाहुनले त्यो कुरा सुनी गाडेको धन झिकेपछि त्यही पुच्छरमा उभिएकी सर्किनीलाइ हिजो भनेको कुरा बाहुनीले सुनाउँदा लज्जित भइछ । अर्थात् सर्किनीलाइ न धन गाडेको थाहा थियो न झिकेकै, तैपनि धनमाथि उभिंदा र खालीमा उभिंदा त्यसको मिजाजमा कत्तिको विभिन्नता भयो, त्यही जनाउने कथाबाट) ।

**ढिकी जाँतो गरेर खानु**—=अर्काको ढिकी कुटी जाँतो पिंधी जीविका गर्नु । तिमीले ढिकी जाँतो गरेर खानुपर्छ भने तिम्रो लोग्ने जागीरे भएको के सार भयो ?

**ढिपी लिनु**—=एकोहोरो लाग्नु, घमण्ड लिनु । बरु गै तप घोर गर्दछु अनि नारायण-रूप हेर्दछु भनि केवल त्यै ढिपी लियौ ध्रुव ! छाड्यौ मकनै र मारियौ ! —गोपाल पाँडे (सुनीति-विरह)।

**ढिम्री कस्नु**—(१)=मड्का पारेर, पैसामा बेसरी कसेर, वा काममा खूब जोतेर दुक्ख दिनु । भोली कुमारी चोकले ढिम्री कसेर जायदात गर्दा खेरी फेरी टाटका टाट—किरीमिरीले जग्गा जोर्नशकेका छैनन् ।—रुद्रराज रूपमती । (२) साधारण अर्थ ।

**ढुकना थाप्नु**—=ढुकेर बस्नु। त्यो माग्ने अघिदेखि ढुकना थापिरहेछ, अलिकति चामल दिएर पठाऊ।

**ढुकुरको बच्चो जस्तो**—=जति पाले पनि नपछयाउने वा गुन नसंझने मान्छेलाइ दृष्टान्त दिने। सौतिने नन्दको छोरो पालें; तर ढुकुरको बच्चो जस्तो रहेछ, हुर्केपछि त टेर्नै पनि छोड्यो।

**ढुकुरे छाती**—=निकै पोटिलो तर कोठार नफुकेको छाती।

**ढुकेसो हाल्नु**—=ढुकना थाप्नु।

**ढुक्क हुनु**—=निर्धक्क वा निस्फिक्र हुनु।....यो खण्डमा मात्र तपाईंहरूको काल आउने नत्र केही गरे पनि नआउने भनेर राम्रो गरी बुझ्न पाए मनमा ढुक्क भएर तपाईंको टहल गरी बस्ने थिएँ....।—बोधविक्रम (दन्त्य-कथा)।

**ढुङ्गा खाए पनि पच्ने**—=खूब पाचनशक्ति हुने (प्रायः केटाकेटीलाइ प्रयोग हुन्छ)। अहिले तिनीहरूको ढुङ्गा खाए पनि पच्ने बेला छ, एक मुठी बदामले केही गर्दैन।

**ढुङ्गा जस्तो**—=साह्रो वा निठुरीको दृष्टान्त दिने। तर केही गर्दा पनी ढुँगा जस्तो कठोर त्यसका खसमको छाति पग्लन नशकी बिक्री खतम भइहालेछ। —श्री ३ चंद्र (अमलेख-भाषण)।

**ढुङ्गामाथिको तित्रो**—=जस अपजस आफ्नो शिरमा नलिई कामकाजमा केवल हेर विचार मात्र गर्ने। म त ढुङ्गामाथिको तित्रा मात्र हुँ, राम्रो काम गरे आफै इनाम पाउला, नराम्रो काम गरे गाल पर्ला—मैले त संझाइदिनु मात्र हो।

**ढुङ्गो खोज्दा देउता पाउनु, मिल्नु**—=इच्छा गरेको खोज्दा त्यो इच्छाभन्दा ठूलो इच्छा पूर्ण गराउने चीज भेट्टाउनु।....मेरो निमित्त यो—"ढुङ्गा खोज्दा देवता पाए झैं" भन्ने आहान चरितार्थ भएको हो।—भवानी (यौवनको आँधी)। एउटा झुत्रो मयलपोशको खोजीमा हिंडेकोमा नयाँ कमीज सुरुवालसमेत निगाह हुँदा त ढुङ्गा खोज्दा देउता मिले जस्तै भयो।

**ढुङ्गा टुसाउँदो उनिउँ फुल्दो**



—=पश्चिमबाट सूर्य उदाउँदो, अर्थात् असंभव कुरा घटित हुँदा (किनभने कहिले ढुङ्गो टुसाओस् न उनिउँ फुलोस्)। मेरो बिहा त ढुङ्गो टुसाउँदो उनिउँ फुल्दो हुन्छ।

**ढुङ्गो पल्टाउनु**—सधैं आउने मानिस धेरै दिनपछि आयो भने उसलाई गिज्याएर ढुङ्गो पल्टाउने चलन छ (पृथ्वीको सारा चीजको स्थिति उल्टेको जनाउनु)। ओहो! विष्णुमतो कहाँबाट आइछ, लौ लौ ढुङ्गो पल्टाइदे।

**ढुङ्गो हो कि मुढो हो**—जति सोधे वा बोलाए पनि पटक्कै जवाब नदिने मानिसलाइ भन्ने। बोले पो—ढुङ्गा हो कि मूढा हो।—रुद्रराज (प्रायश्चित्त)। मैले हिजो कुन फरिया लिन्छयौ भनेर दश पटक सोद्धा ढुङ्गो हो कि मुढो हो जस्तो गरेर बस्यौ, अहिले नराम्रो फरिया पर्‍यो भन्ने ?

**ढोका बन्द हुनु, खुल्नु**—(१) =जान वा आउन रोकावट हुनु, नहुनु। कुसुमाकरलाइ चौतरिया साहेबकहाँ ढोका बन्द थियो, खुले नखुलेको थाहा पाइन। (२)=साधारण अर्थ।

**ढोका बलियो हुनु**—(१)=मालिककहाँ बल पुग्नु। त्यसैले हाम्रो ढोका बलियो छ भन्ने यिनको घमण्ड थियो।--रुद्रराज (रूपमती)। (२)=मालिकको घरबाट बराबर लाभ भइरहनु। पूजाकोठे बाजेको ढोका बलियो छ—घरमा पैसा नभए पनि उनी दब्दैनन्।

**ढोग दिनु**—=दर्शनको रूपमा मान्य मानिसको गोडा वा हातमा टाउकाले छुनु ('ढोग गर्नु' कहिल्यै प्रयोग हुँदैन)।....हजारौं सर्पका जिब्रासंग जिब्रो जुधे पनि, धूलो भई सबैलाई ढोग्दै हिंड्नु परे पनि,....प्रह्लाद, पाइलालाई पछि सार्नु त के कुरा बढाईकन राखेको ठाउँमा त्यो कँपाउनु समेत हुन्न।—बालकृष्ण (प्रह्लाद)।

**ढोड नसो भाँच्नु, सोझयाउनु**—(१)=बेसरी चुट्नु। (२)=(यस अर्थमा सोझ्याउनु प्रयोग हुन्न) कुर्कुच्चामाथिको नसो भाँच्नु (यसलाइ ढडेसो पनि भन्छन्। धेरै उफ्रेर नहिंड्,

ढोडेसो भाँचिएला) ।

ढोले कुम्लो—=ज्यादै ठूलो पोको । केसरी दी त कन्नो ढोले कुम्लो बोकेर आइछन् ।

ढौंटारी मार्नु— लम्बे फेरो मारेर डुल्नु (ह्याउँदाको बोली) । अर्का-को घरमा चोटा र कोठा ढौंटारी मार्नु ठीक छैन ।

ढयाके ब्याज—=एक महीनामा रुपियाँको दुइ पैसाको दरले लिने ब्याज ।

## त्

तँ गर् म गर् पर्नु—(१)=हान थाप पर्नु । नोकरहरुको तँ गर् म गर् पर्‍यो भने मालिकको काम हुँदैन । (२)=दोधार पर्नु । हामी दुइ जनाको तँ गर् म गर् पर्‍यो, उसैले हिजो काम शुरू भएन ।

तँ छाड् [कि] म छाड्—=तैं छाड् कि मै छाड् । कारण सबै दुनिया पैसाकै लागि····तँछाड-मछाड गर्दै हिडिरहेका सबैले देखेकै छन् ।—भवानी (यौवनको आँधी) ।

तँतँ र मम—=तिमी, तपाईं, हजूर भन्ने गरेकालाइ तँ भनेर झगडा गर्नु । आफूले मान्नुपर्ने मानिससित तँतँ र मम गरेर बाझ्नु हुँदैन ।

तँलाई भनेको होइन तेरो पेटको कीरा मारेको—अर्कोले आफू-लाई नभने जस्तो गरी पेच लाई आफ्नो मेख मार्दा भन्ने बोली । पानबट्टा चलाउने म, उसलाई भनेको भन्दैमा म पत्याउँछु ? —हो हो, तँलाई भनेको होइन तेरो पेटको कीरा मारेको ।

तकलीफ उठाउनु—=दुःख गर्नु । पागल् पनी कहाऊं, तक्लीफ् अनेक् उठाऊं । पानी पिईरहेछु, बोलुन् चाहे नबोलुन् ॥—शम्भुप्रसाद (शम्भु भजनमाला) ।

तत नन गर्नु—=कनी कुथी, कनी कनी (तत नन दुवैको उ-च्चारण हलन्त होइन) । अस्ति माधवले तत नन गरी रामायण पाठ गर्न लागेको सुनेथें ।

ततर्को र फतर्को—=फतफत र झर्कोफर्को । काम जति गर्नु-परेपछि ततर्को र फतर्को गरेर के फाइदा ?



तत् विशेष—=केही, अलिकति । कालुभन्दा त तत् विशेष राम्रु राम्रो छ ।

तथा बस्नु, गर्नु, हुनु—= ठेगाना लाग्नु, गर्नु । तिमीले भनेको कुराको अझ तथा भए-को छैन, मैले तथा गर्नुपरे-को भए अस्ति नै एउटा तथा बसिसकथ्यो ।

तनमन [ धन ] दिनु—=लय वा लठ हुनु, शरीर मन [ धन ] भिजाउनु ।

*तना*(तुना)मा गाँठो पार्नु— लुगा फुकाल्दा तनामा गाँठो परी सजिलोसँग नफुक्ता 'यस कारण मैले तनामा गाँठो पारेको हुँ' भन्ने सहसा सम्झना हुने हुनाले घरमा पुगेपछि सम्झनाको लागि यसो गर्छु भन्ने विचार उठ्ता वा कसैसित केही कुराको वादा गर्दा उत्तिनै खेर तनामा गाँठो पार्ने चलन छ । तिमीले भट्टी काव्य ल्याइदिन्छु भनेको यतिका दिन भइसक्यो सधैं ल्याउँछु ल्याउँछु मात्र भन्छौ—आज त तनामा गाँठो पारेर जाऊ है ।

तन्ना कस्नु—=तन्ना तन्काएर भूइँमा ओछ्याउनु वा बिछयौना-मा हाल्नु । बगैंचा सब देखिन्छ हजारौं फुलले गरी । वसन्तको बुटे तन्ना कसेको बैठकै सरी ॥ —लेखनाथ (ऋतु-विचार) ।

त भन्नु—हेरिसक्नु, कामसरो ।

तमाखु खानु—=चुरोट खानु (हेर) । भित्तामा हुक्का अड्यायेर तमाखु खाँदै सुन चाँदी पिट्दै गर्थ्यौं ।—गुरुप्रसाद (कथा कुसुम) । बुढाथोकीलाई गोडा आठेक पैसा तमाखु खानलाई दिनू भन् लौ, भिम्र ।—प्रेमराज (ससुराली) ।

तमाखु तान्नु—(१)=तमाखु खानु, तमाखुको सर्को लिनु । मोहन केहि न भनेर नदीको दृश्य हेरी रहेको छ—बस्नेत कतै न हेरी तमाखु तान्नामा तल्लीन छन् ।—रूपनारायणण (भ्रमर) । (२)=तमाखुको टुकुनी वा टपरी घिसार्नु । त्यो तमाखु तान, हिंड्ने ठाउँमा राखेछ ।

तमाखु भर्नु—=पातामा टाँसेको

वा ख़ाली तमाखु चिलिममा हाली सल्केको गोलले ढाक्नु । ए ! **तमाखु भरेर ल्याओ ए !**—रुद्रराज ( प्रायश्चित्त ) । **चामे अगेनामा आगो सल्काएर तमाखु भर्न लाग्यो ।**—गुरुप्रसाद (कथा कुसुम) ।

**तर मार्नु**— = सुखभोग गर्नु, पैसा कमाउनु, (प्रायः एउटाको मालमा अर्कोले ; यहाँ 'तर'को उच्चारण हलन्त हुन्छ) । **उम्दा २ खेतको अन्न साहूले तरमार्छ ।**—रुद्रराज (चप्पा काजी) ।

**तर लाउनु, लाग्नु,** ('तर' को उच्चारण हलन्त हुँदैन)–(१) = एउटा काममा लाउनु, लाग्नु, काम लाग्ने तुल्याउनु ।·····कतै झरना भयो, कतै मूल फुटेर ठेलमठेला गर्ने नदी भएर सर्पको हिडाइले आई पृथ्वीमा तर लाग्यो ;....।—बालकृष्ण ( कथा कुसुम ) । त्यसपछि महाजनले २।३ वटा नबिकेका फ्याम्सी मालहरू पनि **तर लाइहाल्यो** ।—रुद्रराज (चप्पा काजी) ।(२) = अदपमा राख्नु, सपार्नु, सप्रनु । **तर लाग्ने मानिसको यस्तो छाडन हुन्छ ?**

**तर लाग्नु** (यहाँ 'तर'को उच्चारण हलन्त हुन्छ)—(१) = पन्यालो कुराको सतहमा उत्रेर (धेरै संख्यामा) बस्नु (यस अर्थमा 'पर्नु' पनि प्रयोग हुन्छ । पानीमा **तर लागि हाँस कइला हुन्छन्** धुलाले तसै ॥—राजीवलोचन (केदारकल्प) । **महमा झिंगाको तर परेछ** । (२) साधारण अर्थ । **दूधमा तर लागेन, पानी मिसाएको रहेछ ।**

**तरले पर हान्नु**–=हुने देखाएर वाधा झिकी टङ्ग्याउनु (यहाँ'तर'को उच्चारण हलन्त गर्नु हुँदैन) । अघिबाट दिन्छु भन्दा आस लागेको थियो, **फेरि तरले पर हान्यो ।**

**तलतिर बगाएर माथितिर खोज्नेमाफिकको**—उँधो बगाएर·····*इत्यादि* (हेर) ।

**तल** *बितल* **(माथि) पर्नु**—(१) = (काम) बिग्रनु । यस काममा **तलबितल पऱ्या** भने हामीलाई गाल पर्छ ।(२) = मर्नु (को कोमल रूप) । आमाको जिउ मात्रै **तल माथि परोस्न** ; अनो नानीको ताँई देखिएला ।—रुद्रराज (रूपमती) ।



**तल सार्नु**—(१) = बौद्धमार्गीबाहेक घाट लान नभ्याएको वा जान इच्छा नगरेको बिरामीलाइ प्राण जाने वेलामा तलामा मरेदेखि अगति पर्छ भनी जमीन भेट्टाउन आँगनमा ल्याउने चलन हुनाले यो वाक्यांशले 'प्राण जानै आँटिको हुनु' को अर्थ दिन्छ । त्यसबाट प्राण गइसकेपछि पनि मान्य मानिसहरुलाइ इवाट्ट जूठो सुन्दा बाधा नपरोस् भनी 'फलानालाइ त तल सारिसक्यो' भनेर सुनाउँछन्, यसको अर्थ 'देहान्त भयो' पनि हुन सक्छ । (२) साधारण अर्थ । यहाँ गजमौरो भयो एक दुइटा माल तल सार ।

**तलाशी लिनु**— = शंका लागेको मानिसको लुकाउने ठाउँ वा शरीरमा हराएको माल खोजतलाश गर्नु । **या चोरको घरमा तलाशी लिन कोको गएका थिए ?**

**तल्लो दाउको (पनि)**— = कमसे कम । अहिलेसम्ममा **तल्लो दाउ पनि (तल्लो दाउको) पचास रुपियाँ हारें हुँला ।**

**तल्लो** *दाउ* **(पेच) पर्नु**— = हात तल पर्नु (कुश्तीको बोलीबाट) । **मेरो तल्लो दाउ पऱ्यो, उसले छ्याँकिहाल्यो ।**

**तस्बीर झिक्नु, खिच्नु**—(१) = क्यामेराले फोटु लिनु । हेमेरा कृष्ण ! मुटुको गाँठो झन् कसि नवोल ! **तस्विर खिच्छु मनमा** तिम्रो मुहार अमोल !!–लक्ष्मीप्रसाद (मुना-मदन) । निप्सले अचल वस्तुहरूको **तस्बीर खिच्नामा** पूर्ण सफलता प्राप्त गरे ।—जितेन्द्र (आधुनिक आविष्कार)।(२) साधारण अर्थ, अर्थात् अघिल्लो = टाङेको तस्बीर कीलाबाट झिक्नु ; = पछिल्लो तस्बीर लेख्नु ।

**तस्बीर टाँग्नु, हाल्नु**—=तस्बीर झुण्ड्याउनु । तिनका उपासकहरू तिनका **तस्बीर** आफ्ना घर घरमा **टाँगिराख्तथे** ।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथा-संग्रह) ।

**तस्बीर बन्नु, हुनु**—(१) = टोलिएर हलचल नगर्नु । त्यही त भने को, म त तस्बीरै भएँ ।—रुद्रराज (प्रायश्चित्त) । उसको

मनमा जितिसकेँ भन्ने परेको रहेछ, मैले बज्रमाथ गरिदिंदा त तस्बीर बन्यो । (२) साधारण अर्थ । अहिले दीर्घमानकहाँ नानीमायाको तस्बीर बन्न लागेको छ । अस्ति मैले पठाएको तस्बीर भयो कि अझ बनाउनुपर्छ ?

तहबील मास्नु—=आफ्नो जिम्मामा रहेको सरकारिया वा मालिकको पैसा मास्नु । बिर्तामालको खरिदार तहबील मासेबापत कैद परेछ ।

तह मिलाउनु—=स्थिति बसाल्नु, बन्दोबस्त गर्नु । आफ्नो घरको त तह मिलाउन सकेका छैनौ, अर्काको घरको के मिलाउलौ ?

तह लाउनु—(१)=चाङ वा तङ्गी लाएर वा अरू किसिमले मिलाएर राख्नु वा थन्क्याउनु । कितावहरु के विधि छरिराखेको राम्ररी तह लाएर राख । (२) =अदपमा राख्नु । यस्ती वराल पुत्रीलाई तह लाउन पण्डितनी बज्यैलाई मुश्किलै पऱ्यो ।—रुद्रराज (रूपमती) । यस्तो हाल थाह पायेर अत्याचारी पठानहरूलाई चाड़ैनै राम्ररी तह्नलाई भयेन‥‥।–शिवप्रताप (दुर्गेशनन्दिनी) ।

ताँति लाग्नु— =धेरै मानिस वा अरू जीव लहरै हिंड्नु । धेरै लुटिसके पछी डाकुहरू एक एक जनाको ताँती लागी निस्केको टाढै बाट देखे ।—गम्भीरध्वज (चन्द्रशेखर) ।

ताईं देख्नु, हेर्नु— =ताकत वा फूर्ति देख्नु (नपत्याउँदा प्रयोग हुने; 'ताईं' अन्यत्र प्रयोग हुँदैन। खोइ काजीलाई भेट्टाएकी छैन, भेट्टाऊँ न, अर्काकी छोरी बेटीको सतीत्व नष्ट गरेर यसरी अलपत्र पार्न खोजेकाको ताँइ देखाइदिन्छु,‥‥ ।— रुद्रराज (चप्पा काजी) । नानीको ताईं देखुँला !

ताईको फुरौलो— =क्षणिक फूर्तिको काम देखाएँ भनेर फुरुक्क पर्ने । कस्ता कस्ताले गरेको काममा यी ताईका फुरौलाले के गर्लान्, हेरौंला नानीहरुको ताईं !

ताईको फुरौलो(ली) नाचे झैँ — =कामको चटारो पर्दा फूर्ति र जाँगरसाथ कहिले यता कहिले उता गर्दा दृष्टान्त दिने ।



ताउलो बस्नु—(१)=टाट उल्टनु, खान नपाउनु । धर्मरत्नको घरमा ताउलो बसेछ।(२)=(आगोमा) भात पकाउने भाँडो बसालिनु । भर्खर त चुल्होमा ताउलो ब्रसेको छ, अहिले भात किन पाक्थ्यो !

ताक पर्नु— =मौका पर्नु । पोइ मऱ्यो तेरो ताक पऱ्यो मेरो (उखान) ।

ताकमा हुनु — =मौका हेरिरहनु। ऊ आज अकैं ताकमा छ, तिमीसित शिकारमा जाँदैन ।

तातो न छारो—(१) =तातो पनि छैन छारो पनि छैन, अर्थात् फुस्सा । चैतेको बिहामा गएको के पाइन्थ्यो, तातो न छारो । (२)=सित्तैं, व्यर्थै । तातो न छारोसित किन कराइरहेको ?

तातो नलाग्नु—(१)=माने नलाग्ने, निरर्थकको। तँ तातो नलाग्ने कुरा गर्छस् । (२) साधारण अर्थ । भाँडा त छाम्दा तातो नलाग्ने छ, दूध के तातो होला !

तातो पानी लाउनु— =खूब गर्नु (वक्रोक्ति) । यही हो माला गाँसेको ?—तातो पानी लाइछस् !

तातो पिंडालु खाए जस्तो— ज्यादा हतपताएकोमा दृष्टान्त दिने बोली । किन तातो पिंडालु खाए जस्तो गर्छौ, यति काम सिद्धिएपछि त दिइहाल्छु नि !

तातो रगत—रिस वा जोश जताउँदा प्रयोग हुने । तातो रगत यो चीसो हावा खाई चिस्याउँछु, सफा हृदय पारेर इन्दिरा-मूर्ति थाप्नछु,‥‥।—बालकृष्ण (मुकुन्द इन्दिरा) ।

तातो रिस— =सोचविचारपछिको होइन, झडङ्ग उठेको रिस । तातो रिसमा जे बोल्यो बोल्यो, सानोबाबु पछि ईख राख्तैन ।

तातो लाग्नु—(१)=ताकिता लाग्नु । अघिसम्म अल्मलिएर बस्यो, अहिले मालिक आउने वेला भएपछि बल्ल तंलाइ तातो लाग्यो । (२) साधारण अर्थ । मलाइ त तिम्रो हात तातो लाग्यो, जरो छ कि !

तात्तातै वैकुण्ठ जानु— =

तुरुन्तै स्वर्ग जानु (प्रायः गिज्याउँदा)। जरो आएको वेलामा बर्त गर्‍यौ, अब तात्तातै वैकुंठ जाउली।

**ताना(ना) छोड्नु**—=गीत गाउनु, राग ढाल्नु। घर भित्र पस्ता पनी ताना छोड्दै अएका थिए।—रुद्रराज (रूपमती)। चरा चुरुङ्गी बिहानदेखि साँझ नपरुञ्जेल तान छोडी २ मस्त संग अलापिरहथे···· ।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)।

**तानतुन गर्नु**—(१)=जबर्जस्तीको अर्थ झिक्नु। तानतुन गरे त यसको के के अर्थ निक्लन्छं के के। (२) साधारण अर्थ। तानतुन गरेर तन्ना कस।

**तान लाउनु**—(१)=टाढा रहेका दुइ मानिसको बीचमा सवाल-जवाफ लगिदिन धेरै पटक ओहोरोदोहोरो गर्नु। उहाँले त कुरा छिन्दिहाल्नुभयो नि, कति तान लाइरहूँ—खुट्टा पनि दुखिसक्यो! (२)=कपडा बुन्नालाइ लामो गरी धागो टाँग्नु। म भेट्न जाँदा राममाया तान लाइरहेकी थिई।

**तानामाना च्यात्नु**—=सरकारिया जागीर खोस्नु। यस्तो गरिस् भने तानामाना च्यातिएला भन्ने हुकुम भयो।

**तानामाना भिर्नु**—=जङ्गी पोशाक, बेल्ट, इत्यादि लाउनु। आज त तानामाना भिरेर सिंहदरबार जानुपर्छ।

**ताना मार्नु**—=गिज्याउनु, गिल्ला गर्नु। गहमान बस्नेतको कुरा सुनेर केटाकेटीहरु ताना मारी मारी हाँस्छन्।

**तामाको मुना जस्तो**—कलिलो वा सुकुमारी गोरो राम्रो व्यक्तिलाई दृष्टान्त दिंदा प्रयोग हुने। यिनको त कस्तो राम्रो तामाको मुना जस्तो छोरो रहेछ।

**तामा तुलसीपत्र छुनु, हातमा लिनु, टाउकामा राख्नु**—धर्म भाक्ने रीति (अदालतमा यसै गरी किरिया हाल्न लाउँछन्)। तामा तुलसीपत्र छोएर फलानाले चोरेको देखेकै छु भन्न सक्छौ?

**तायदात हुनु**—(१)=सरकार लाग्नु, सर्वस्व हुनु। उसको घर



तायदात भयो। (२)=धनमाला। उसको घरमा कति तायदात छ?

**तार लाउनु**—(१)=पार लाउनु, (अह्राएको काम) सिध्याउनु। तँ खान मात्रै माग्छस्, यत्रो बडामा भएर एउटा कामको पनि तार लाउन सक्तैनस्। (२)=तारको जाली वा बार हाल्नु। बगैंचामा तार लाएर घेरिदेऊ।

**तारीख गुज्रनु, गुजार्नु**—=यो दिनमा आउनू भनी अड्डाले तोकेको मिति बित्नु, बिताउनु। मैले जानी जानी तारीख गुजारेको होइन, बिरामी भएँ, अर्जी लेखिदिने मान्छे पाइन, उसैले गुज्र्‍यो।

**तारीखमा झुलाउनु**—=जहिले हाजिर भयो फेरि यो मितिमा हाजिर हुनु भन्ने परपरको मिति तोकी तोकी झगडियालाइ रल्लाइराख्नु। यो विचारीको झगडियालाइ तारीखमा झुलाउने बानी छैन।

**तारीखमा राख्नु**—=फलाना दिन हाजिर हुनु भनी झगडियालाइ आफ्नो पहुंचमा राख्नु (अड्डाले)। घुस मुद्दाको झगडियालाइ तारीखमा राखेका छौ?

**तारीखमा हिंड्नु, हिंडिरहनु**—अड्डाले तोकेतोकेको मिति मितिमा हाजिर हुनु। एउटा फटाहाले झगडा लाइदिएर पुसदेखि तारीखमा हिंडिरहेछु।

**तारे भीर**—=साह्रै ठाडो भीर। लौरीविनायकको तारे भीरमा कसको ताकत चढ्न!

**तारो थापेर, थापे जस्तो गरी**—=टटकारै देख्ने गरी। कर्साहेब तारो थापे जस्तो गरी बगैंचामा राज भएको छ, यो मूला चलन आइरहेछ! ललितराज तारो थापेर बसिरहेछ, कस्तो नदेखेको!

**तारो थाप्नु**—(१)=ताक्नु, लक्ष्य गर्नु। जाउँ कहाँ, सुख पाउँ कहाँ, कलि थाप्छु मैंकन तारो॥—शम्भुप्रसाद (शम्भु भजनमाला)। (२) साधारण अर्थ। उसको हात चौपट्टै सोझो छ, पैसाको तारो थापेर हान्न सक्छ।

**तारो हान्नु**—=निशाना राखेर त्यसमा अस्त्रले प्रहार गरी ठीक

निशानामा लाउन रियाज गर्नु। तारो हान्नामा पहिला भए उहिले सुनको तकमा पाइन्थ्यो।

**ताल न सुरको**—=छाँट न काँटको। ताल न सुरको कुरा गरेपछि हामीलाइ रिस उठ्तैन त ?

**तालाबाला खेलाउनु**—=आच्छु आच्छु पार्नु। सानो छोराले मेरो सुनको घडी हराएर एक छिन त तालाबाला खेलायो। ज्यानमारा खुर्सानी चपाइदिएको त तालाबाला खेलायो। आज मलाइ भोकले तालाबाला खेलायो।

**ताली मार्नु, बजाउनु**—=थपडी बजाउनु। आफूले बहुलट्टी ताना झिकेको देखी अरूले ताली मारेर हाँस्ता आफूलाइ धन्य ठान्नु पनि धिक्कारै हो। ····दुइटै हात चाहिन्छ करताली बजाउन।—बालकृष्ण (ध्रुव)।

**तालुको छाला पैतलामा पुर्‍याउनु**—=ज्यादा खसालेर वा मेख मर्ने गरी छास्नु। सन्तेले तालुको छाला पैतलामा पुर्‍याएर भनिसक्यो, अझ पत्ता छैन।

**तालुमा आलु फल्नु**—=भाग्य हुनु। तालुमा आलु फलेको भए चिट्ठा पर्ला नत्र एक रुपियाँ जाला।

**तालुमा सुपारी ठोकेर लिनु**—=एक कौडी पनि नछोडेर लिनु (अंशबण्डा गर्दा आफूभन्दा ठूलो मान्छेसित)। तपाईंलाइ थिचोमिचो गर्न दिन्न तालुमा सुपारी ठोकेर लिउँला !

**ताल्चा मार्नु**—=ताल्चा बन्द गर्नु। अनि पछि वाहिर निस्कनासाथ ताल्चा मारी कुटीमा दाखील भए।—बोधविक्रम (दन्त्यकथा)। तालचा मारेको देख्ने बित्तिकै उसको होस उड्यो।—गुरुप्रसाद (कथा कुसुम)। सिपाहीले आएर कोठामा ताल्चा मारिदियो।—काशीबहादुर (उषा)। साइँदी, तिम्रो आँखामा तल्चा माँरू है ?—ग्रन्थकार (कथा कुसुम)।

**तिघ्रा ठटाएर हस्नु**—=खूब रमाएर वा स्वादले हाँस्नु (गिल्ला वा खुशीमा)। बाबूका जोरी पारीहरु तिघ्रा ठटाएर हांस्दा हुन्।—गुरुप्रसाद (कथा कुसुम)।



**तितौरीको छाक**—=चाँडै नै सिद्धिने, एकदम फारो नहुने। तिमीलाइ जति ल्याएर दिए पनि तितौरीको छाक न हो !

**तित्रे (तित्रापङ्खी) बादल**—=नीलो भूईँमा सेता छिर्कै छिर्का परेर बसेको बादल। सूर्य अस्त भए पछि सुन्तला रङ्को तित्रापङ्खी बादल उड्दछ पूर्वपट्टि, टुपी ठाड़ो पारी पश्चिममा पनि बाउन्ने झैं निकै ठूलो रातो बादल दौड्दछ,···· ।—बालकृष्ण (मुकुन्द इन्दिरा)।

**तिन ताक**—=त्यस समय वा कालमा। बाबू ! अवश्य तिनताक कुनै विशेष। चिन्तावितर्कविच मस्त रहेछ देश ॥ —लेखनाथ (सत्यकलिसम्वाद)। काठमांडूमा तिन ताक प्रताप मल्ल राजा थिये औ पाटनमा श्रीनिवास मल्ल राजा थिये।—सूर्य्य विक्रम (पृथ्वीनारायण शाह)।

**तिर्खा मेट्नु**—=प्यास शान्त गर्नु। हो नै, धेरै दिनमा यहांको दर्शन पाउँदा झन्-सारो तिर्खा मेटिसकेकै छैन ;···· ।—श्री केसर (विक्रमोर्वशी)। तिर्खा मेटिइन्या न देखि जलले बोल्या हनूमान् तसै ॥—भानुभक्त (रामायण)।

**तिलको गेडा घोटी, मासको गेडा फोरी, तल्लोमा पिरा माथिल्लोमा हीरा**—अंशबण्डाको कागत लेख्ता प्रयोग हुने बोली।

**तिलको गेडा वा तिल जति, बराबर**—=अलिकति। पालेका मनमा विमलाका तर्फबाट तिल बराबरपनी सन्देह भयेन।—शिवप्रताप (दुर्गेशनन्दिनी)। आफ्नो हकको जग्गा तिलको गेडा जत्ति पनि छाड्दिन।

**तिलचामल हुनु**—=(कपाल) कालो र सेतो सरोबर हुनु। तिम्रो कपाल पनि तिल चामल भइसकेछ।

**तिलपेले भैँ पेल्नु**—=काममा दल्नु वा जोत्नु।

**तिल[को गेडा] राख्ने ठाउँ पनि नहुनु, रहनु**—=अलिकति जग्गा पनि नहुनु (प्रायः बिमिरा उछ्रँदा र ज्यादै भीड

लागी एउटा मान्छे छिर्न सक्ने-सम्म पनि नहुँदा) । यस पाला भोटो देखाउने जात्रामा ज्यादै घुइँचो हुनाले तिल राख्ने ठाउँ पनि थिएन । सानीको जीउमा यसरी बिफर निस्के कि तिल राख्ने ठाउँ पनि बाँकी रहेन ।

तीखो कान लाएर सुन्नु—=खूब ध्यान दिएर सुन्नु । यो गुप्ती पुलिसले हाम्रो कुरा तीखो कान लाएर सुनि-रहेछ ।

तीते फूल झैँ—देख्ता राम्रो तर छुनासाथ बिग्रने कुरालाइ दृष्टान्त दिने बोली ।

तीतो मुख गर्नु—=अप्रिय वचन बोल्नु । अर्काको घरमा आएको मानिसलाइ किन तीतो मुख गर्छौ, मन नपरे घरको धनीले नै भनिहाल्छ नि ।

तीन काना न अठाह—=नाफा न नोकसान । त्यत्रो धोको बोकेर ल्याइ मात्र दियौ, तिमीलाइ त तीन काना न अठाह ।

तीन कौडीको नहुनु—=केही कामको नहुनु । ति इर्ष्याका मूर्तिहरूले शर्माका हाकीमहरूको कान भरेर तीन कौडीको बुद्धि न भएको पत्तु छ भन्ने पारिरहेका थिए……।—रुद्रराज (रूपमती) ।

तीन छक खानु, पर्नु—=ज्यादै अचम्म मान्नु ।

तीन जेठ काट्नु—(१)=तीन सालको गर्मी खेप्नु । आजका खेतालालाइ तीन जेठ काट्नु जस्तो भयो । (२)=बाधा केही नरहनु (विवाह गर्ने वर वधू जेठो र जेठी, महीना पनि ज्येठ भएमा विवाह नगर्नू भन्ने शास्त्रको वचन हुनाले तीन जेठ परेन भने विवाह हुनामा बाधा केही रहन्न, त्यसैको दृष्टान्त लिएर) । अबलाइ हाम्रो कामले तीन जेठ काट्यो ।

तीन ठाउँमा भाँचिएर हिंड्नु—=स्वाङ पारेर हिंड्नु (आइ-माईको बारे) । लोग्नेमान्छे देख्यो कि यो बेस्से तीन ठाउँमा भाँचिएर हिंड्छे ।

तीन तारा तित्रिक—=तिम्रो (त्यसको बोलीबाट) ।



तीन तियाली—दुइ पटक भयो भने तीन पटक नभई छोड्दैन भन्ने बूढीरूढी छ, उसैले तेस्रो पटकलाइ 'तीन तियाली' भन्छन् । धनेले दुइटी स्वास्नी खाइसक्यो अब तीन तियाली पुऱ्याउँछ ।

तीन त्रिभुवन वा त्रिलोक देख्नु—(१)=साह्रै आनन्द हुनु । अलिकति भाङ त खाऊ तीन त्रिभुवन (त्रिलोक) देख्छौ । (२)=रिसले आगो हुनु । त्यसले गधा भन्नासाथ मैले त तीन त्रिभुवन देखें । (यो र तलका वाक्यांशमा 'त्रि' को अर्थ नै तीन भए तापनि 'तीन' विशेषण थपिन्छ) ।

तीन त्रिभुवन हल्लाउनु—(१)=हुने र सकेसम्मको मिहिनेत गर्न बाँकी नराख्नु । तीन त्रिभुवन हल्लाइसकें तिमीले भनेको मान्छे फेला पार्न सकिनँ । (२)=सारालाई थरहरी पार्नु । नयाँ बडा हाकिमले तीन त्रिभुवन हल्लाइराखेको छ, कसैले चुँक बोल्न सक्तैनन् ।

तीन त्रिलोक चौधै भुवन जित्नु—=भएभरको सारा मुलुकै जित्नु (अत्युक्ति गरी) । मानिस-लाई मुख्य चाहिनु पर्ने हया अदब हो दुवै कुरो नभए पछि तीन त्रिलोक चौधै भुवन जिति हारल्योनी;……।—रुद्रराज (रूपमती) ।

तीन दिनले जेठो हुनु—=खूब सिपालु हुनु (खराब काम गर्न) । भाँडा खसाल्न त तिमिल्सिना तीन दिनले जेठो छ ।

तीन दिने दाज्यूभाइ—=पाँच-दिने दाजुभाइ (तीन दिन जूठो बार्नुपर्ने हो तापनि चौथो जोर दिन हुनाले त्यसमा नफुकाई पाँचौ दिनमा जूठो फुकाउने चलन छ ।

तीन न तेह्र—=बेसरोकारको, न तीनदिने दाजुभाइ न तेहदिने दाजुभाइ, अर्थात् जूठो न पिंढीको बन्धु जस्तो बेकामको । ह्वासिङ्खा तीन न तेह्रको मान्छेसित कुरा गर्न मलाइ खाँचो छैन ।

तीन फत्तिन ताङ पार्नु, देखाउनु—=बेसरी चुटेर उफ्रने छटपटाउने पार्नु ।

स्कूलमा मसित झगड़ा गर्‍यो भनेर जितमानलाइ उसको बाबुले तीन फत्तिन ताङ पारेछ ।

**तीन बल्ढ्याङ खानु**—(१) = फेलो खानु । सुब्बाले मलाइ हराउँछु भनेर खूब गरेका थिए, आफै तीन बल्ढ्याङ खाए । (२) = बेसरी पछारिनु । घोड़ाबाट खसेर सेतेले तीन बल्ढ्याङ खाएछ ।

**तीन भुंडी देख्नु**— = मस्त निदाउनु । आज बेहान मास्टर आउँदा त तिमी तीन भुंडी देखिरहेका थियौ ।

**तीन शहर घुमाउनु**— = बेइजती गर्ने वा दुनियाँलाई यसो गर्ने हुँदो रहेनछ भन्ने शिक्षा दिन शहरमा हिंडाएर देखाउनु (नेपालमा काठमाण्डु, भादगाउँ, पाटन तीन शहर हुनाले) । यस्ता बदमाशलाई तीन शहर घुमाउनुपर्छ ।

**तीन शहर नेपाल**— = नेपाल खाल्डाभर (माथि लेखेका तीन शहरलाई लक्ष्य गरी) । तीन शहर नेपालमा पं० रसिक मोहन मिश्रको भाग्य देखेर आश्चर्य नमान्ने को होला !— रुद्रराज (रूपमती) ।

**तीन सल्ली घाम आइसक्नु**— = झलमल्ल घाम लागिसक्नु (बेहान अबेरसम्म सुतिरहँदा प्रयोग हुने) । लतमाया त कति सुतिरहेकी, तीन सल्ली घाम आइसक्यो !

**तीर जस्तो लाग्नु**— = दिलमा बिझ्ने गरी असर पर्नु । सानो लामाकहाँ एक रुपियाँ सापट माग्न गएको थिएँ, त्यसकी स्वास्नीको वचन मेरो मुटुमा तीर जस्तो लाग्यो ।

**तीर्थे भोज**— = तीर्थ गरेर घर फर्केपछि गरिने भोज, त्यति नगरी बाटामा हुन गएका अनाचारहरूको प्रायश्चित हुँदैन भन्ने चलन छ । ठाहिला बाजे बद्री पुगेर आएका आज उनको घरमा तीर्थे भोजको निंता छ ।

**तुनामा गाँठो पार्नु**— = तनामा गाँठो पार्नु (हेर) ।

**तुम्बा भर्नु**—(१) = पेट भर्नु । केटाकेटीको जात यस्तै हुन्छ— तुम्बा भरिसक्यो, अनि मैले भनेको किन टेर्थ्यो ! (२) = लाभ उठाउनु । बीरबहादुरले यस पालीको खेपमा खूब तुम्बा भर्‍यो रे ।



**तुलसीको मठ**— = चौकी उठाई तुलसी उमारेको ठाउँ (बौद्धमार्गीहरूबाहेक घाट नजानेहरू अक्सर त्यहीं देह त्याग गर्छन्) ।

**तुलसीको लिङ्गो**— = आकाशबत्ती झुण्ड्याई तुलसीको मठनेर गाड्ने बाँस (यसलाई कौसीमा पनि ठड्याउने चलन छ) । तुलसीको लिङ्गोलाइ एउटा बाँस ल्याइदेऊ ।

**तुसारो पर्नु**— = ठाँटो जम्नु, जम्नेसम्मको चिसो शीत बर्सनु । यो घडीमा····जाडो महीनामा तुसारो परेर पानी जम्ने हुनाले टायमको ठीक थाहा हुन सक्तैनथ्यो ।—जितेन्द्र (आधुनिक आविष्कार) ।

**तेजो वध गर्नु, हुनु**— = शेखी झार्नु ।

**तेते भिजू भिजू, नानी बढू बढू**— = केटाकेटीको तालुमा तेल हाल्दा भन्ने बोली ।

**तेत्तीस कोटि**—हिन्दुहरूका देउताको पूरा संख्या । महालक्ष्मी, नवदुर्गा, तेत्तीस कोटि देवतालाई आफ्ना आँङ्मा बोलाउने र तिनीहरूबाट काम लिने ।—प्रेमराज (ससुराली) ।

**तेरीज कस्नु**—(१) = मजमून निकाल्नु । कुइनका तहि सामुमहा वसी । गरदथ्या उपदेश तिरिज् कसी ॥—डिल्ली शम्शेर (यूरोपयात्रा) । यो कथाको तेरीज कसेर भन । (२) = मूठ बाँधनु । आमदानीको तेरीज कसेर देखाऊ ।

**तेरो (त्यसको) थाप्लो, टाउको, नाक**— = रिस उठ्ता जुन कुरालाइ पनि प्रयोग हुने बोली । त्यसको नाक कहाँ राखेछ, कैंची पाउँदै पाइनँ । तेरो थाप्लो मोजा ले !

**तेरो मेरो गर्नु**— = यो आफ्नो यो अर्काको भनेर पक्ष लाउनु । तेरो मेरो किन गर्छौ, तिमी मर्दा साथमा के जान्छ र ?

**तेर्सै मासु लाग्नु**— = अग्लो नभई मोटाएर फाँद मात्र बढ्दै जानु । तेर्सै मासु लाग्यो, अब सानी बढ्दिन ।

**तेर्सो कछाड कस्नु**— = छोटो

धोतीको एक टुप्पाले कछाड कसे-पछि बाँकी पटुका जस्तो गरी घुँडासम्म बेर्नु । **तेर्सो कछाड़ कसेको** ।—गुरुप्रसाद (कथा कुसुम) ।

**तेर्सो घाँटी लाउनु**—(१)=काट्नालाइ गर्धन थापिदिनु । (२)=मंजूरीको सूचनार्थ घाँटी तेर्सो पार्नु । मैले त्यो कुरा भन्न नपाउँदैमा बाजेले **तेर्सो घाँटी लाउनुभयो** । (२)=जाँड, रक्सी, सर्वत, आदि पिउना-निमित्त घाँटी तेर्स्याउनु । आज धनबीरे भट्टीमा **तेर्सो घाँटी लाइरहेको** थियो ।

**तेल ठोकेको कमारा, कमारी**—=पैसा हाली किनेको खास कमारो, कमारी (किनेपछि तालुमा तेल ठोक्ने उहिलेको चलन-बाट) । मलाइ मनपर्दो भन्न पाउँदैनौ, म तिम्रो **तेल ठोकेकी कमारी** त होइन !

**तेल थूक गरी**—=(पकाउँदा) मुखमा रहने वा जिब्रो भिज्ने थूक जति तेल हाली (गरीबीले गर्दा), उसैले साह्रै कहर काटेर । मैले **तेल थूक गरी** कमाएको बालो तिमीलाइ कसरी जुवाको निम्ति माग्न दिउँ ?

**तेल बेसार घस्नु**—(१)=चेपारो पार्नु, लोलोपोतो गर्नु । विष्णुमतीले खूब तेल बेसार घस्न जानेकी छ । (२) साधारण अर्थ (प्रायः चराचुरुङ्गीलाइ घाउ लाग्दा) । मेरो बट्टाइ-लाइ घाउ लागेछ **तेल बेसार घसिदिन्छु** । खुल्क्याएको खसीलाइ **तेल बेसार घस्नु-पर्छ** ।

**तेह्रदिने दाजुभाइ**—=मर्दा तेह्र दिन जूठो लाग्ने अथवा ज्यादै नजीकको नातेदार । यस पाला केदारनाथले छोरीको बिहामा **तेह्रदिने दाजुभाइ** सबैलाइ चुलै निम्ता गरेका थिए ।

**तैँ (तँ) छाड् [कि] मै (म) छाड्**—=हानाहान, प्रतियोगिता । एक एक जना गरेर आए त भइ-हाल्छ नि, किन **तैँ छाड् [कि] मै छाड्** गर्छौ ?

**तोड पर्नु**—(१)=मडका पर्नु, मर्माहत हुनु । आफ्नो मिलेको मान्छेले पनि त्यस्तो वचन लाउँदा उसको मनमा साह्रै **तोड**



**पर्‍यो** । (२)=बेमेल हुनु, मन फाट्नु । त्यस्ती माया गर्ने भाउज्यू सँग **तोड पर्‍यो** ।—रुद्रराज (रूपमती) । (३)=दखल पर्नु । झुमा भर्‍याङको टाउकोदेखि तल्लो चकासम्म गुल्टेर थचारिई, बिचरालाइ कति **तोड पर्‍यो** होला ।

**तोते बोली**—=जिब्रो राम्ररी नफट्कारिएको वा अस्पष्ट बोली (प्रायः केटाकेटीमा हुने) । **तोते बोली** नबोल्दैको यो नाती राहु मर्दछ ? संह्लाद र अनुह्लाद ह्लाद प्रह्लाद मर्दछन् ?—बालकृष्ण (प्रह्लाद) ।

**तोपको मुख(मोहोरी)मा राखेर उडाउनु**—सजाको रूपमा । लडाइँमा शत्रुदेखि भाग्ने सिपाही-लाइ **तोपको मुखमा राखेर उडाउँछन्** ।

**तोप चल्नु, पड्कनु**—(१)=तोप हानिनु (प्रायः दिनको १२ बजे र रात परेपछि ; ठूलाठूला मानिस नेपाल खाल्डाबाहिर जाँदा वा भित्र आउँदा 'तोप हुनु, दिनु' हुन्छ) । नरेन्द्र संधैं साँझमा आउँथ्यो, **तोपचल्ने** बेला सम्म बसेर जान्थ्यो ।—गुरुप्रसाद (कथा कुसुम) । राती **तोप चलेपछि** हिंडे पुलिसले पक्रन्छ । (२)=वायु छाड्नु (व्यङ्गोक्ति) ।

**तोबा तोबा हुनु**—=हैरान वा कायल हुनु । हजूरको छोरालाइ पढाउन म त **तोबा तोबा भइसकें** ।

**तोरीको फूल देख्नु**—(१)=(ठक्कर लाग्दा) झिलिक्क पहेंलो छिर्का देख्नु । तर प्रतापले नोल टीपेर थापलो मा **तोरिको फूल देखने** गरी ठटाये ।—गम्भीरध्वज (चन्द्रशेखर) । (२)=रिसले आँखा नदेख्नु । सौताले मेरो खाल्टो खोल्ता त **तोरीको फूल देखें** ।

**तोलाको वचन खोलामा जानु, हाल्नु**—=कदर गर्नुपर्ने बोलीको लङ्घन गर्नु, हुनु । त्यहाँ नजाऊ भन्दा मेरो **तोलाको वचन खोलामा हाल्यौ**, अहिले पछुताउनुपर्‍यो ।

**त्यहाँ खाई यहाँ चुठ्नु**—=ज्यादै छिटो गर्नु । हेर ! बिहा अड्किरहेछ त्यति काम गरी

त्यहाँ खाई यहाँ चुटून आऊ।

**त्राहि त्राहि हुनु**—=डरले थरहरी हुनु (त्राहिको 'बचाऊ' अर्थ यस वाक्यांशमा फीका भएको देखिन्छ)। जनरल साहेब रिसानी भएको सुन्दा त म त्राहि त्राहि भएँ।

## थ्

**थकथक (की) मान्नु, लाग्नु,** —=पछुताउनु('मान्नु' अरूले, 'लाग्नु' आफूलाइ)। अस्तिको फरिया नलिएकोमा मलाइ थकथकी लागिरहेछ, बहिनीले पनि थकथकी मानिन्।

**थकाइ मर्नु, मार्नु**—=विश्राम हुनु, गर्नु। लौ जाऊँ अवता थकाइ मरिगो आचार्यलाइ भनि। कैलास्देखि खुसी भई गइगया ठाडो उकालो चढी॥—राजीवलोचन (केदारकल्प)। एक छिन चौतारामा थकाइ मारेर चामे विस्तार उकालो लाग्यो। —गुरुप्रसाद (कथा कुसुम)।

**थक थक मान्नु, लाग्नु**—= थकथकी मान्नु, लाग्नु।

**थपडी मार्नु, बजाउनु**—= ताली बजाउनु।····अर्काको विजोग देखेर थपडी मार्दछन्, हस्सी उडाउँछन्, बाह्र सत्ताइश कुरा गरेर दिल ठण्डा गर्दछन्। —रुद्रराज (रूपमती)। सम्पूर्ण देशकन आपसमा लडायें। आफू उहीं वसिवसी थपडी बजायें॥ —लेखनाथ (सत्यकलिसम्वाद)।

**थला पर्नु**—=बिरामी भएर वा शरीरले काम नदिई ओछ्यान पर्नु। औलाको जरोले यस पाला महीना दिन थला परें।

**थलै बस्ने (पर्ने) गरी**—= ठाउँबाट उठ्नै नसक्ने गरी। तिमीले धनबीरलाइ थलै बस्ने गरी चुटेछौ।

**थलै मार्नु**—=धेरै बेरसम्म आसन जमाउनु। नबस्नु बसिहालें, अब थलै मारेर बस्छु।

**थाँक्रो हाल्नु, दिनु**—=लहरा इत्यादिलाइ थाम्न घोचो गाड्नु। काँक्रोलाइ थाँक्रो दियो थाँक्रै धनी (उखान)। यो लौकालाइ थाँक्रो हाल्नुपर्‍यो।



**थाङ्ना तुन्नु**—(१)=सुनिसकेको कुरा दोहर्‍याई गन्थन गर्नु। आज पनि उही कुरा, भोलि पनि उही कुरा-कति थाङ्ना तुनिरहन्छयौ? (२)साधारण अर्थ। बूढा नयाँ लुगा हाल्न सक्दैनन्, मलाइ थाङ्ना तुन्दैको फजिती छ।

**थाङ्नामा सुताउनु**—(१)= फस्ल्याइ फुस्लुङ पारेर छकाउनु। बूढाले भन्यो—'तँ लाटो छस्, बुहारीले थाङ्नामा सुताएको पनि पत्तै पाउँदैनस्।'—बालकृष्ण (कथा कुसुम)। (२) साधारण अर्थ। नानीलाइ चिसो थाङ्नामा किन सुताइस्?

**थाङ्ने बेथा**—=धेरैसम्म टङ्गिरहने र दुःख दिने रोग। यो थाङ्ने बेथाले मलाइ कहिल्यै छोडेन।

**थाङ्ने माग्ने**—=झुत्रो लुगा लाएको मगन्ते (भीखमङ्गाहरूलाइ भन्ने सगोलको बोली)। यी थाङ्ने माग्नेहरूलाइ ढोकामा नराख, जे दिनु छ दिएर पठाऊ।

**थात न थलो**—=घर न बार भएको। थात न थलाको मानिसलाइ म सापटी दिन सक्किन।

**थाती राख्नु, बस्नु, रहनु**— =थामिराख्नु, थामिएर रहनु। दक्षिणा बाँड्ने कुरा त आज पनि थाती बस्यो।

**थाना लाउनु**—=यथा स्थानमा राख्नु। वायुदेउतालाइ थाना लाएपछि तिम्रो बेथा निमन हुन्छ।

**थान्को लाउनु, लाग्नु**—(१) =ठेगान लाउनु, लाग्नु। आज मेरा कुराको थान्को लाइदिनुपर्‍यो।····जाने भए शकुन, तैं पनि भाइहरू सबै साथ लिई जा,—म अली पछि आउँला एउटा थान्को लाई प्रह्लादको यहां;....।—बालकृष्ण(प्रह्लाद)। (२)=तोकिएको ठाउँमा थन्क्याउनु, थन्किनु।····थोरै समयमा नै सुविस्तैसँग आफ्नु थात बास तयार गरी जाहान बच्चा माल मत्ता थान्को लगाई आनन्दसँग बस्न पाई आफ्नु अरू उद्योग धन्दातिर लाग्न पाए।—श्री३ जुद्ध (भूकम्प-

भाषण)। बलले पुगे जती, थान्को सबै लाये। न सकेको बधि गेर, हरि नाम गाये ॥—शिखरनाथ (गंगामाहात्म्यको सवाई)। (३)=हेला गरेर पन्छाउनु, पर सर्नु (प्रायः लोग्नेले स्वास्नीलाई)। गुनेले रत्नवदनलाइ थान्को लायो रे। (४)=('लाग्नु' सित मात्र)रजस्वला हुनु। म त आज बिहान ९ बजे थान्को लागें।

**थाप्लो भारी**—टाउकामाथि बोक्ने हुनाले।

**थाप्लो हुलाक**—=चिट्ठीपत्र पुलिन्दाहरु हालेको पोको टाउकोमा बोक्ने हुलाकी प्रणाली।

**थाप्लो[मा] पर्नु**—=टाउको पर्नु, टाउकामा पर्नु (दुवै हेर)। हाम्रो त अब कति दिन छ र—बुढेसकाल भइ सक्यो, घरको व्यवहारै अब दुलहीका थाप्लामा नपरी छाडदैन।—रुद्रराज (रूपमती)।

**थाप्लो फुटाउनु**—=टाउको फुटाउनु (हेर)।

**थारो हाल्नु**—=कुनै ठाउँमा कसैले चलन वा चल्ती नगरोस् भन्ने आशयले घोचो वा रूखको हाँगामा ढुङ्गो झुण्ड्याएर बन्देजको निशाना दर्साउनु। आजकल त्यस मैदानमा भैंसी चराउन पाइँदैन, त्यहाँ थारो हालेको छ।

**थिति न बिति**—=नियम व्यवस्था केही नभएको हालत। थिति न बितिसित जो पायो उही मानिसलाइ घरभित्र हुलिरहेछ, दिनहुँ भोज चलिरहेछ, त्यस्तो भएपछि कहाँबाट खर्च पुग्छ?

**थिति राख्नु, बसाल्नु, लाउनु**—=नियम व्यवस्थापित गर्नु, रूल बसाल्नु। घर भाँडिन लाग्यो, हजूरले एउटा थिति बसालिबक्सनुपर्‍यो।

**थुकथुकी लाग्नु**—= घिनले वा पेट बिग्रेर थुक्न मन लागिरहनु। त्यो कुहिएको कुकुर देखेदेखि मलाइ थुकथुकी लागिरहेछ।

**थुकी छोड्नु**—=(दैव, ईश्वरले) नरुचाउनु (ईश्वरले रुचाएको मान्छेलाइ उनले आफूकहाँ लाने हुनाले त्यो मान्छे चाँडै मर्छ भन्ने विश्वासबाट)। दैवले थुकी



छोडे भने आधौं मेरो छोराको बिहा गरुँला जस्तो लागेको छ।

**थुकेको थूक चाट्नु**—=दिएको माल खोस्नु। हिजो तिमीले दिएको किताब हो, थुकेको थूक चाट्छौ भने लैजाऊ।

**थुक्क (थू) भन्नु**—(१)=घृणा गर्नु। त्यो स्वास्नीलाइ निकालिस् भने त सबैले तँलाइ थुक्क भन्छन्। (२)=ज्यादै नराम्रो (अकरणमा)। श्यामवदन थुक्क भन्नु त छैन ब्यारे!

**थुक्क मथिङ्गल**—थुक्का भन्ने बोली (मथिङ्गल=गिदी, हो तापनि खकार सिंगान गिदी पग्लेर आएको हो भन्ने विश्वासबाट; यो वाक्यांश सदरिया बोलीमा प्रयोग हुँदैन)।

**थुक्क मातङ्ग**—दिक्क वा अचम्मको विस्मयादिबोधक (मातङ्ग=हात्ती; यो पनि तल्लो कक्षामा मात्र प्रयोग हुन्छ)।

**थुतुनु चलाउनु**—=चोथालो चलाउनु।

**थुतुनु जोरेर बस्नु**—(१)=कुरा गरेर बस्नु (रिसको बोली)। अघि जरिफासंग थुतुनु जोरेर बसेकी थिइस्, अहिले भेटै भएको छैन भनेर कसरी भन्न सकेकी! (२) साधारण अर्थ। दुइटा कुकुर थुतुनु जोरेर बसेका तस्वीर कता हाल्यौ?

**थुना पर्नु**—=थुनिनु। मालको सुब्बा त थुना परेछन्।

**थूक [घुटु घुटु] निल्नु**—(१)=खाने माल देख्ता तृष्णाले मुख रसाएर आएको थूक निल्नु, अर्थात् लोभिनु। तँलाइ रुघा लाग्यो भने पर्सि भोजमा भाइ बहिनीले मीठो मीठो खाँदा थूक घुटु घुटु निलेर बस्नुपर्ला। (२)=जुन कुरामा पनि लोभिनु। मेरा नयाँ चुराहरु देखेर बहिनीहरुले थूक निले। (३) साधारण अर्थ। थूक निलौं बलैले गलो साफ गरेर तिनले भनिन्, "····के मेरो एउटा कुरामा तपाईं विश्वास गर्नुहोला?"—खड्गमान (अँध्यारोमा उज्यालो)। टन्सिल बढेर थूकै निल्न भएन।

**थेको थाप्नु**—=सही थाप्नु, अँ वा हो भन्नु। गफ गर्दा थेको थाप्ने मान्छे भएन भने केही मजा हुँदैन।

थेचोको (भादगाउँले) दही— बयान भएको उत्तम दही ।

थैली फुकाउनु, खोल्नु—(१) =खर्च गर्नु । थैली फुकाउन गाह्रो मान्छौ, सित्तैं तिमीलाइ कसले चुरोट खान दिन्छ ? (२) साधारण अर्थ । कसले यसरी गाँठो पारेछ ? मेरो नङ छैन, यो थैली फुकाइदेऊ । छोटो सुर्का ताने थैली खोलिन्छ, त्यति पनि थाहा छैन !

थोत्रो जुत्ता—रिसाउँदा (प्राय:) स्वास्नीमान्छेलाई भन्ने नाउँ । आज सम्म बाबू आमाले त कसैले कहिले हात हाल्न शकेको छैन, यो थोत्रो जुत्ताको यत्रो घमण्ड ?—रुद्रराज (रूपमती) ।

थोर बहुत—=धेर थोर, केही, (हिन्दीबाट) । सांझ परेपछि इन्दुमतीले थोर बहुत सिंगार पटार गरी लेग्नेको कोठामा पसेर भनिन्—के गरिरहनु भए-कोछ ?—खड्गमान (दर्पचूर्ण) ।

## द्

दगा धर्नु—=इबी लिनु । रावण् माथि दगा धरेर सहजै लक्ष्मण् उख्राथ्या जसै । बाँच्या भाइ दया गर्‍यौ र हनुमान् ! भन्थ्या हुकुम् भो तसै ॥—भानुभक्त (रामायण) ।

दङ्ग पर्नु—=खुशी हुनु । मैले सानी छोरीलाइ पिपलमेट दिए-का त दङ्ग परी ।

दङ्गल खानु—=धेरै मानिसको भीडमा परी धक फुक्नु । तिम्रो छोरो जङ्गली रहेछ, दङ्गल खु-वाउनुपर्छ ।

दङ्गा मचाउनु—=भीड लाग्ने गरी झगडा गर्नु ।.........दङ्गा मचाउने जस्तो देखियो भने एउटा मान्छेलाई अघि सारी दिनु, त्यसैले सकाउँ, भै गयो नी भन्ने सल्लाह ठहर्‍यो ।—रुद्रराज (रूपमती) ।

दण्ड पर्नु, लाग्नु—(१)= नोकसान पर्नु । एक दिन जुवा खेलेको ४ रुपियाँ दण्ड पर्‍यो। (२)=जरिवाना हुनु । मुख चलाएको हुनाले तँलाइ पनि दण्ड पर्‍यो ।



दबेको अवाज—=धीमा स्वर । दबेको अवाजमा दुइ जनाले कुरा गरेको सुनें ।

दम उखुडिनु—=ज्यादा स्वाँ स्वाँ भएर शरीरले काम नदिनु (प्राय: कुश्तीमा) । दम उखु-डिएपछि बलियो भए पनि केही चल्दैन ।

दम खानु—=दम दिंदा चाबी घुम्नु । यो टिनको हाँसलाइ कसले बिगार्‍यो, दमै खाँदैन ।

दम खिचनु—=(मर्ने वेलामा) माथितिर मात्र एकोहोरो सास तान्नु । रामभक्तले दम खिं-चिसक्यो अब धेरै बेर छैन ।

दम टुट्नु—=(घोडाको बारे) अलिकति दगुराउँदैमा स्वाँ स्वाँ भएर काम दिन नसक्नु । त्यसरी बेफूँकसँग बढाउन लाग्यौ भने घोडाको दम टुट्छ ।

दम दिनु—=(कमानी फुक्तै जाँदा घडी, खेलाना, फोनोग्राफ, इत्यादि चल्ने घुम्ने हुनाले) चाबीले घुमाई कमानी कस्नु । मलाइ त दम दिने खेलाना मन पर्छ ।

दम नहुनु—(१)=उपाय नहुनु, जुक्ति नलाग्नु । मेरा चार गोटी छन्, तिम्रो एक गोटी—यो खेलमा तिम्रो दम छैन । (२) =अडिने बूँदा नहुनु । खै, रने तेरो मुद्दामा त दम छैन । —ग्रन्थकार (कथा कुसुम)।(३) =दम सिद्धिएको हुनु । यो घडीको दमै छैन, कसरी चलोस् त !

दम निक्लनु—=मर्नु । शंकरे दमै निक्ला जस्तो गरी दगुरेर आयो ।

दम पच्नु—=परिश्रम गर्दा दम नबढ्ने अभ्यास हुनु । नरसिङको दम पचेको छ, जति भने पनि दौडन सक्छ ।

दम बढ्नु—=परिश्रम परेर स्याँ स्याँ हुनु । ज्यादा मोटाएपछि यति भस्याङ चढ्दैमा पनि यसरी दम बढ्न थाल्दो रहेछ ।

दम मार्नु, लिनु—=विश्राम गर्नु, थकाइ मार्नु । उकालामा यो घोडा दम मारी मारी जान्छ ।

दम सिद्धिनु—=चाबी दिएको कमानी फुकिसकी चल्न घुम्न छाड्नु । त्यो रेल ( खेलाना )

दगुर्न छोड्यो, दम सिद्धियो होला ।

**दमाई कामीको जस्तो**—नीच बुद्धि देखाउँदा वा छुच्चो मुख गरी झगडा गर्दा दृष्टान्त दिने । त्यसैले यो दुर्मति लागेको—दमाई कामीको जस्तो बेहोर—छि ! कस्तो काल आयो । —रुद्रराज (रूपमती) ।

**दम्को जानु, पर्नु**—=मचक्क टेक्ता कुर्कुच्चा दुख्ने हुनु ।

**दया उठ्नु, लाग्नु**—=करुणा पैदा हुनु, मन पग्लनु । खटाइ-एका ठाउँमा केही गाह्रो नमानी गए—यस्तो देख्ता खुशी पनि लाग्यो, दया पनि उठ्यो ।—श्री ब्रह्म (नेपालको महाभूकम्प)। युवतीले—दुःख पाएका परदेशी रहेछन् आमा, दया लाग्यो र बसेकी भनी ।—गुरुप्रसाद (कथा कुसुम) ।

**दरगाहमा बुझाउनु**—=परलो-कमा जवाफदेही गर्नु । अब द-र्घामा बुझाउँला ।—ग्रन्थकार (कथा कुसुम) । अहिले तिम्रो हात माथि छ जति [अन्याय] गर्छौ गर, तर पछि ता दरगाहमा यसको बदला नबुझाई सुख पाउनेछैनौ ।

**दर्के पानी**—=मुशलधारे वर्षा। यस्तो कंती छाताले दर्के पानी ओल्छ र ?

**दर्शन गर्नु**—(१)=सलाम गर्नु, ढोग दिनु । मालिकलाइ देखेपछि दर्शन गर्नुपर्छ । (२)=(ठूलो मानिसलाई) भेट्नु (उच्च कक्षा-लाई प्रयोग हुने) । यिनीलाई अघिलाएर हामीहरू सँगै यहाँले मघवाको दर्शन गर्नु उचित छ ।—श्री केसर (विक्रमोर्वशी) ।

**दर्शन पाउनु, मिल्नु**—=(ठूलो मानिसलाई) देख्नु वा देख्न पाउनु, भेट्नु वा भेट्न पाउनु (उच्च कक्षालाई प्रयोग हुने ; 'मिल्नु' आजकल व्यंग्यमा बाहेक् उस्तो प्रयोग हुँदैन)। पृथ्वीमा न झरी उनै प्रभुजिको दर्शन मिले-श्यो जसै । टाढैबाट गऱ्या प्रणाम् भरतले खुप् हर्ष मान्या तसै ॥ —भानुभक्त (रामायण) ।

**दल बाँध्नु**—=हूल जम्नु । गुण्डाहरु दल बाँधेर डटेका थिए ।

**दलिन गन्नु**—यो वाक्यांशले तलका भाव जाहेर गर्छ :—(१) जवाफ दिनाको असमर्थता । अहिले चित्त लाएर पढे पो भरे माष्टरले पाठ सोद्धा दलिन गन्नु-पर्दैन । (२) बेकारी । खारेज भएदेखि हीरालाल दलिन गनेर बसिरहेछ । (३) मनमा कुरा खेल्ने काम । टेबुलमाथि किताप पल्टाएर राखेको थियो, ती कुर्सीमा पसारिएर माथि मुख फर्काईकन दलिन गनिरहेका थिए ।—खड्गमान (अँध्यारोमा उल्यालो) ।



**दश औंला जोर्नु**—=बिन्ति गर्नु । दश औंला जोर्छु मेरो छोरालाइ नथुनिदिनोस् ।

**दश कर्म गर्नु**—=जग्गा कमा-उँदा खन्ने, रोप्ने, गोड्ने, इत्यादि दश थरीको काम गर्नु (अदालती बोली) । बाबुबाजे-का पालादेखि दश कर्म गरेर खाइआएको जग्गामा तैंले पोल हाल्दैमा हुन्छ ? !

**दश खण्ड [बढ्ता]**—दँजाइको हद देखाउँदा प्रयोग हुने । सब् कोष्मा पनि अन्नको र धनको दस् खण्ड बढ्ता गरी । राख्याको छु दयानिधान् ! हजुरका सेवा विषे मन् धरी । —भानुभक्त (रामायण) ।

**दश दिशा लाग्नु**—=छ्यान्ड-म्यान्ड हुनु, यता उता लाग्नु । इनामको आशाले सयकडौं मानिसहरू चोरको खोजमा दश दिशा लागे ।—बोधविक्रम (दन्त्यकथा) ।

**दश धारा दूध चुसाउनु**—=आफ्नो स्तनबाट दूध खुवाउनु (उड्काउँदा प्रयोग हुने) । दश धारा दूध चुसाएर यत्रो पारें, अहिले मलाइ हेला गर्न थालिस् ।

**दश नङ्ग्रा खियाउनु**—=खूब परिश्रम गर्नु (उड्काउँदा प्रयोग हुने) । दश नङ्ग्रा खियाएर काम गरें, एउटा फुटेको पैसा दिएन ।

**दशा पन्छाउनु**—(१)=झंझटको काम वा दिक्क गर्ने मान्छेलाइ केही परिबन्दले अर्कोलाइ सुम्पनु । मोहनदासले त्यो मोटर बनाउँछु भनेछ, मेरो दशै पन्छियो । (२)=मागेर पिरल्ने मान्छेलाइ (केही दिएर) पठाउनु । हनुमा-रत्न कराइरहेछ एउटा टोपी

अन्भन्याएर दशा पन्छाऊ ।

**दशा लाग्नु, ले घेर्नु**— = विनाश हुने वेला आउनु, दुर्भाग्यको वशमा पर्नु। दशा लागेको वेलामा बुद्धि पनि बिग्रन्छ ।

**दशाले कुत्कुत्याउनु**— = विनाश हुने वेला आएको हुनाले दैवले केही कुरा गर्न प्रेरणा गर्नु । बिचरालाइ दशाले कुत्कुत्याएको रहेछ, त्यसैले सलाई खेलेर त्यत्रो घर सखाप पार्‍यो ।

**दहीचिउरे हुनु**— = जसले खान दियो उतैपट्टिको साक्षी हुनु । साक्षी भएको मुद्दामा पनि धेरै जस्तो साक्षी—दहीचिउरे हुन्छन् ।—ग्रन्थकार (कथा कुसुम) ।

**दही जमाउनु**— = पकाएको दूध ठेकीमा हाली दही तुल्याउनु । आज म दूध खान्न, त्यसको दही जमाइदिनू ।

**दाँत गाड्नु**— = आँखा गाड्नु, लोभिनु । मेरो फरियामा मोहिनीले दाँत गाडिरहिछ ।

**दाँत ङिच्याउनु**— = दाह्रा ङिच्याउनु (हेर) ।

**दाँत झर्नु**—( १ ) = (हतियारको) धारमा सानो खुँडे पर्नु । स्यांगीको दाँत झरेछ लाग्दै लागेन । (२) साधारण अर्थ ।

**दाँत झार्नु, फुकाल्नु**—चोथालो चलाउँदा हप्काउने बोली । धेरै मुख नचला दाँत झारिदिउँला नि !

**दाँत तिख्याउनु**— = खान उत्सुक हुनु । बुढाथोकीको घरमा बिहा भन्ने सुनेदेखि यो दमाईले दाँत तिख्याइरहेछ ।

**दाँत बाँध्नु**—(१) = ( सुनले ) दाँत मोड्नु । सुनले दाँत बाँधेको तिमीलाइ असाध्य खुलेको छ । (२) = बेहोश हुँदा तलमाथिको दाँत टम्म भएर जोरिनु । दोजिया थी, मूख नीलो भएर आयो । दाँत बाँधी ।—गुरुप्रसाद (कथा कुसुम) । मूर्छा पर्दा सन्तेको दाँत बाँधिएर मैले कर्दले खोलें ।

**दाँतबाट पसिना आउनु,चुहिनु**— = लोभले दिन साह्रै कष्ट पर्नु । होइन भने त्यसै एक पैसा खसाल्न पनि दाँतबाट तर्र पसिना चुहिन्थ्यो ।—रुद्रराज (प्रायश्चित्त) । मलाइ दुइ पसा दिन पनि तिम्रो दाँतबाट पसिना आयो, होइन ?



**दाँतमा ढुङ्गो लाग्नु**— = सुखको बीचमा बेमज्जा वा शरम लाग्ने कुरा पर्नु । छोरीको घरको कुरा सुनेर मङ्गले निकै फुर्फुरिएको थियो, झड्केलो छोरा छ भन्ने कुरा सुन्दा उसको दाँतमा ढुङ्गो लाग्यो । (२) साधारण अर्थ । क्या मीठोसित भात खान लागेको थिएँ, दाँतमा ढुङ्गो लागिदिएर बडो बेमज्जा भयो ।

**दाँत सिरिङ्ग हुनु**—(१) = घोटिएर किर्र गरेको आवाज सुनी दाँतमा कुत्कुती लागेको जस्तो हुनु । सिलेटमा पेन्सिल घोटिएको सुन्दा मेरो दाँत सिरिङ्ग भयो । (२) = कच्चा दाँतमा चिसो लागी कुत्कुती लागे जस्तो हुनु ।

**दाँते ओखर**— = सजिलैसंग फोडिने ('हाड़े ओखर' दाँज) ।

**दाँते बह**— = साह्रै कडा पीर । घरमा झड्केलो छोरो हुनाले मलाइ सधैं दाँते बह छ ।

**दाउ जाग्नु**— = सबै वा कुनै दाउले मारिरहनु । दाउ जागिरहेछ अहिले च्यांखे थाप्नु हुन्न । छक्का दाउ जागिरहेछ ।

**दाउ पर्नु**— = (१) = चौका पंजा इत्यादि हुनु । मेरो दाउ नपरेको घण्टौं भयो । (२) = मौका पर्नु ।·····तेसै एकाएक शत्रु हरुका दाउ परेर लड़ाञी नै गर्न नपाइ ती पठानहरुलाइ आफ्नु प्राण गुमाउन पर्थ्यो ।—शिवप्रताप (दुर्गेशनन्दिनी) । दाउ पर्‍यो कि उसले तँलाइ बिताइहाल्छ ।

**दाउरा जस्तो**—अति दुब्लो मान्छे वा साह्रो वस्तुलाई दृष्टान्त दिने । यो त दुब्लाएर दाउरा जस्तो भएछ, ए !

**दाउरा हुनु**—(१) = दुब्लो हुनु । (२) = साह्रो हुनु । ज्यादा भुटिएर मासु त दाउरा भइसकेछ । (३) साधारण अर्थ । हाँगाबिंगा बटुलन तिमीलाई दाउरा हुन्छ ।

**दाउ लाग्नु**—(१) = दाउ जाग्नु । तब पासा हान्नु, जे भन्यो उही, कस्तो दाउ लागेको ए !—रुद्रराज (चप्पा काजी) ।

(२)=उपाय खेर नजानु। नब्बे सालको भूकम्पमा खर, चित्रा, पराल, बाँश बेच्ने गरीबहरुको पनि दाऊ लाग्यो। —लेखनाथ (लक्ष्मी-पूजा)।

**दाउ सेलाउनु, गिर्नु**—=सबै वा कुनै दाउले धेरैसम्म तिरिरहनु। यो तिया दाउ सेलाइरहेछ।

**दाउ हेर्नु**—(१)=मौका पर्खनु। उसले दाउ हेरिरहेको छ, तैंले चुक्कासाथ बिताउँछ। (२)=कौडा, पासा, आदिमा के दाउ पर्‍यो हेर्नु।

**दाखिल गर्नु**—(१)=(ताशको फुट्टो गनेर खाने खेलमा) हातमा जोडी ताश छ भने भूइँको नखाई आफ्नो पालो पालामा खाएको पत्तीसित सो ताश राख्नु ('दाखल गर्नु' पनि भन्छन्)। (२)=आफूभन्दा ठूलो मानिसकहाँ वा अड्डामा बुझाउनु। दुइ कापी त अस्ति नै प्रभुकहाँ दाखिल गरें। दुवै मिसिल कुमारीचोकमा दाखिल गरेको छु।

**दागा धर्नु**—=दगा धर्नु (हेर)। खसमलाई भेडो तुल्याएर पुगेन र ममाथि दागा धर्छेस्।—रुद्रराज (चप्पा काजी)।

**दान गरेको हात्ती जस्तो**—साह्है दुब्लो मानिसलाइ दृष्टान्त दिंदा प्रयोग हुने। माउली बसेको केटो त झन् दान गरेको हात्ती जस्तो भएछ।

**दान पत्ता लाउनु**—=अर्कोलाइ दिएर सिध्याउनु। यसलाइ अस्ति मात्र मैले एउटा टोपी दिएको थिएँ दान पत्ता लाएछ।

**दाना [पानी] टुट्नु**—(१)=अन्नजल पाउन बन्द हुनु, नोकरी छुट्नु।……तिमीले गाँसेको फूल मैयाँको नजरमा गडी उहाँले मेरो मालालाई छिः छिः दूर दूर गर्न लाग्नु भयो भने मेरो त दाना नै टुट्ने भयो। बोधविक्रम (दन्त्यकथा)। जति काम गरे पनि हजूर रिसानी मात्र होइबक्सिन्छ, अब मेरो दाना पानी टुट्न लाग्यो क्यारे। (२)=मर्नु (यसमा 'पानी' लोप हुँदैन)। हाइ मेरे स्वामी धर्मैको खानी टुट्यो नि हजुर्को यो दाना पानी। पद्म बहादुर (धर्म शम्शेर थापाको रामायण)।



**दाना पानी हर्नु**—=अर्काको जागीर वा वृत्ति जाने पार्नु वा खोस्नु। अब तैंले भन्दैमा त्यसको दाना पानी हरिदिऊँ? —चन्द्रलाल (विष-वृक्ष)।

**दाम उठ्नु**—=लिनुपर्ने दाम हात पर्नु। कालुलाइ सापट दिएको दाम अझ उठेको छैन।

**दाल गल्नु**—(१)=उपाय लाग्नु (अकसर अकरणमा)। रूपलता र बिजुलीका कब्जा परुन्जेल उनीहरूबाट सुख भोग होउन्ज्याल् हाम्रो दाल गल्दैन……।—रुद्रराज (चप्पाकाजी)। (२) साधारण अर्थ। मदिसे दाल चाँडै गल्दैन।

**दाल [र] भात [खाए जस्तो वा खाएको] हुनु**—(१)=खूब सजिलो हुनु। के त्यस्ती छटेललाई फसाउन दाल भात खाएको हो भन्ने संझेको छ। —रुद्रराज (चप्पा काजी)। कविता लेख्नु दाल भात खाए जस्तो कुरा होइन। तिम्रो किरिया त दाल भात (=बराबर भङ्ग गरिने) छ। (२)=बानी परेर मामूली हुनु। शाशूको मुख थामिएको थिएन, परन्तु दिनदिनै त्यही प्रक्रिया चलिरहेकै हुनाले उनको गाली त दाल भात भइसकेको थियो।—रुद्रराज (रूपमती)।

**दालमा कालो हुनु**—=भित्र केही कपट वा भेद हुनु। जरूर दालमा कालो छ, नत्र त्यो मकहाँ किन आएन?

**दाहिने शंख**—=दाहिनेतिर फर्केको (शुभफलदायक वस्तुमा गनिएको छ)।

**दाहिने हात**—(१)=साह्है सहायक वा मन परेको कार्यकर्ता हुनु। मैले आफ्नी बामाङ्गीको साथ साथ दाहिने हात लाइ पनि गुमाएँ।—भीमनिधि (सहनशीला सुशीला)। आजकल विष्णुप्रसाद जसाहेबको दाहिने हात भइरहेछ। (२) साधारण अर्थ।

**दाहिने हुनु**—=अनुकूल या प्रसन्न हुनु। मालिक दाहिने भयो भने अरू कसैको केही चल्दैन।

**दाह्रा किट्नु**—=तल्लो र माथिल्लो दाँत रगेडेर आवाज झिक्नु । रिस्ले मुर्मुरियो बचन् यति भन्यो कर्कर्र दाराकिट्यो ॥ —मोतीराम ( उषा चरित्र ) । घडीतुल्य पला लाग्छन् वर्ष-तुल्य घडी सब । दुःखी दाह्रा किट्टी भोग्छन् रातको शीत-गौरव ॥ —लेखनाथ ( ऋतु-विचार ) । मेरो खुट्टाको अपरेशन गर्दा दाह्रा किटेर सहें । तिमी निद्रामा दाह्रा किट्ता रहेछौ ।

**दाह्रा झिच्च्याउनु**—(१)= माग्नु । अहिले मसित जोरी खोज्छस् भने यो माल चाहियो भनेर दाह्रा झिच्च्याउँछस् । (२)=लजित या लाचार हुनु । अबि त मैले चोरेको होइन भन्थिस्, अहिले त दाह्रा झिच्च्याउनुपऱ्यो ।

**दिउँला भनेर नदिए (ढाँटे) अन्धो आउँछ**—=अन्धो आए-को मानिसलाइ गिज्याउने बोली ।

**दिएको माल लिए गाँड आउँछ**—=दिइसकेको चीज फिर्ता लिन खोज्ने मान्छेलाइ डर देखाउने बोली ।

**दिक(दिक्क) गर्नु**—=आजित पार्नु ।

**दिन आउनु, पल्टनु, फिर्नु**—सुदिन आउनु । तिम्रो दिन अब पल्टेको छ ।—चन्द्रलाल (विषवृक्ष) ।—टुहुराको दिन आउँछ, राँडीको दिन जान्छ (उखान) ।

**दिन उघ्रनु**—=बादल हटी घाम लाग्नु । एक मिनिट पनि दिन उघ्रँदैन ।—रूपनारायण (भ्रमर)।

**दिन काट्नु, कटाउनु**—= समय बिताउनु ।····दिन भने काँटे तर मन बहलाउने कुरा केही नहुँदा पहर लम्बेतान भएको रात कसरी बिताउने हो ?—श्री केसर (विक्रमोर्वशी) । त्यै राज्यकै विषयको गरि इन्त-जाम । काटी दियें दिन जती सुखमा तमाम ॥—लेख-नाथ (सत्यकलिसम्वाद) । यो संग ८ आना ऊ संग ४ आना भोलिदिउँला है भन्दै झार झुर पार्दै आफ्नो दिन काट्न लागे ।—रुद्रराज (चप्पाकाजी)। धर्मात्मा हरु धर्म भोगन भनी स्वर्गैमहा बस्तछन् । नन्दन् वा-



गमहा घुमेर सुखले दिन् का-ट्तछन् भन्दछन् ॥—डिल्ली शम्शेर (यूरोपयात्रा) । त्यहीं बसी पसलेको काम सगाई उनी आफ्नो दिन काट्न लागे !—बोधविक्रम ( दन्त्यकथा ) ।···· बैजनी केशको गुजुल्टो काटेको अपराधमा आफूलाई माया गर्ने कोही नभएर ती राजकुमारीले एक्लै दिन काट्नु पऱ्यो ।—खड्गमान (ग्रीस र रोमको दन्त्य-कथासंग्रह) । म तिमीसँग दिन काटेर बस्न शक्तिन ।—प्रेमराज (ससुराली) ।

**दिन खानु**—=उमेर पुग्नु । कहाँ, खड्केले त निकै दिन पो खाइसकेको छ, पुड्को भएर पो उस्तो नदेखिएको !

**दिन घडी**—=दिन बित्तै जाँदा। अब दिन घडी किन टेर्थिस् ! —बालकृष्ण (कथा कुसुम) ।

**दिन चढ्नु**—=दिन छिप्पिनु । दुइ घडी दिन चढ्दा म बाटो लागेको थिएँ ।

**दिन डुब्नु**—=साँझ पर्नु । 'कहिले यो गर, कहिले उ गर' मा दिन डुबिहाल्थ्यो ।—रुद्रराज (रूपमती) ।

**दिन, दिउँसो**—यी दुइ पद पनि 'रात, राती (हेर)' जस्तै हुन्, दिउँसो=दिनमा ; तर उ जोडा-ले जत्तिको यी जोडाले यो नियम पालन गर्न सक्तैनन् । 'दिउँसो आऊ,' तर 'दिउँसोको घाम, खाना, काम, इत्यादि' पनि हुन्छ । 'दिन आऊ' चाहिं हुन्न तापनि 'आइतवारको दिन आऊ, रातदिन खेल्छौ, दिन भोक न राती निद्रा' हुन्छ ।

**दिन दुगुना, रात चौगुना बढ्नु, हुनु**—=खूब चाँडै अथवा खूब धेरै बढ्नु, उन्नति गर्नु । हजूरको कीर्ति दिन दुगुना रात चौगुना बढि-रहेछ ।

**दिन पर दिन**—=रोजिन्दा, क्रमशः (प्रायः बढ्नु, घट्नु अर्थ दिने पदसित प्रयोग हुन्छ)। हामीहरूको ता दिन पर दिन जिऊ खियाउने यो चाकरी झ्यालखानै जस्तो भयो ।—श्री केसर (विक्रमोर्वशी) ।

**दिन फर्कनु**—=सुखको दिन शुरू हुनु । सबैलाइ दिन् लागि

फर्कन्छ फेरी । मलाई गडेको गडेकै गराइस् ॥—शम्भुप्रसाद (शम्भु भजनमाला) ।

**दिन बियाल्नु**—=समय बिताउनु । पासा खेलेर दिन बियाल्नुपर्‍यो ।

**दिन बिग्रनु**—=दशा लाग्नु । आजकल मेरो दिन बिग्रिरहेछ जे काममा हात हाल्छु अपजश मात्र आउँछ ।

**दिन ब्या(बिया)उनु**—=(बिहान) उज्यालो हुनु । दिन जब त बिहायो शुद्ध भै स्नान गर्नू ।—राजीवलोचन (केदारकल्प) ।

**दिन[को] भोक न राती निद्रा (रातको नींद)**—=खाँदै नखाई सुत्तै नसुती ।....छोरा छोरी बिरामी भएमा दिनको भोक न रातको नींद—सबै बिर्सेर सेवा शुश्रूषा गरी देव देवता पुकारी कति गरेर बचाउने....आमालाई उल्टो दोष लगाएर जान शक्ने !—रुद्रराज (रूपमती) ।

**दिन लाग्नु**—=दशा लाग्नु । रिन लागे पनि दिन नलागोस् (उखान) । दिन लागेपछि चाकरले पनि हेप्छ ।

**दिनुपर्दा दिदीको साहिनु नलाउने**—छुच्चो मान्छेलाई प्रयोग हुने (=दिनु त परै रहोस् 'दि' अक्षर पर्ने शब्द पनि नभन्ने) ।

**दिमाग खर्च गर्नु, लडाउनु**—=अकल लडाउनु । दिमाग धेरै खर्च गर्नु पर्‍यो ।—रुद्रराज (चप्पा काजी) । मेरो कुरा बुझ्न अलिकति दिमाग खर्च गर्नुपर्छ ।

**दिमाग चढ्नु**—=शेखी बढ्नु । तर जताततैबाट आफ्ना कामको निमित्त तारीफै तारीफ बसेकोले त्यसको दिमाग एकदम चढ्यो ।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह) ।

**दिमाग(मगज)मा चढ्नु**—(१)=बुझ्नु (अकरणमा प्रयोग हुने) । यो हिसाब मेरो दिमागमा चढ्दै चढेन । (२)=धुन सवार हुनु । अस्ति ताशको चटक देखेदेखि मेरो दिमागमा त्यही चढिरहेछ ।

**दियोकलश पुज्नु, पूजा गर्नु**—



=बाहुन वा छेत्रीले छेत्रीकी छोरीलाइ छोटकरी विधिले वा गुप्त हिसाबले बिहा गर्नु (यस बिहाबाट जन्मेकाले पूरा अंश पाउँदैन) । दियो कलश पूजा गरेर ल्याए त भइगयो नि !—रुद्रराज (प्रायश्चित्त) ।

**दिल खोलेर, फुकाएर**—(१)=मन फुकाएर, खिचु वा संकोच नमानेर । लुँइटेल परिवारले दिल फुकाएर सुतकेरी र बालकलाई चाहिने सराजाम जोडी राखेका थिए ।—रुद्रराज (रूपमती) । कान्छी आमाको लाज लाग्यो, दिल खोलेर गीत गाउन सकिन । (२)=मनमा केही कुरा नलुकाएर वा पर्दा नराखेर । साथी सँग दिल न खोले को सँग खोलून् ?—रुद्रराज (रूपमती) । तिमीले मलाइ टाढा देखेछौ, दिल खोलेर कुरा गरेनौ ।

**दिल ठण्डा गर्नु**—=शान्त वा निर्धक्क हुनु ।....अब तिमी चाँडै निको हुन्छौ भन्ने इत्यादि ढाढस लाग्ने मीठो कुरा गरी उसको दिल ठण्डा गराई दिनू पर्दछ ।—राममणि (सह्यार-सुसार-संभार) ।

**दिल तोडिनु, तोड्नु**—=मन भाँचिनु, भाँच्नु । दिलै तोडिएपछि के वास्ता !

**दिल दिनु**—=मन लाउनु । के गर्छौ, फर्कला भनि दिएं सुरुचिलाई यो कारकोर गरी दिल ;....।—बालकृष्ण (ध्रुव) । किन्तु अब रेमिङ्टन इत्यादिले बडो दिल दिएर यो कामलाई गर्न आरम्भ गरे ।—जितेन्द्र (आधुनिक आविष्कार) ।

**दिल पर्नु, बस्नु**—=मन पर्नु (स्त्रीपुरुषको संबन्धमा मात्र प्रयोग हुने) ।....यिन मध्ये कुनचाँहीमा तिम्रो दिल बस्यो भनी सोधिन् ।—श्री केसर (विक्रमोर्वशी) । मान्छे राम्रो केलाइ चाहियो दिल बसेको राम्रो (झ्याउरे) ।

**दिल फुकाएर**—=दिल खोलेर ।

**दिल बहलाउनु**—=मनलाइ चैन दिनु । अथवा वाहाँ उर्वशीको सक्कल पाटीमा लेखेर नजर हुँदै दिल बहलाइ बक्सियोस् ।—श्री केसर (विक्र-

मोर्वंशी)। ताराहरू ल्याटोनालाई दिल बहलाइदिन इच्छा गरेर हो कि भने झैं गरी दयाको दृष्टिले तल हेरिरहेका थिए।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)।

दिलबाट खस्नु, खस्कनु—=माया गरिन छोडिनु, मन पर्न छोड्नु। मंगलेसित ठट्टा गरेदेखि हरिमाया मेरो दिलबाट खस्की।

दिलबाट टाढा हुनु—=संझना टुट्नु, माया मारिनु। नजरबाट टाढा भए पनि दिलबाट टाढा नहूँ।

दिलोज्यान दिएर—=तनमन दिएर। दिलोज्यान दिएर सरकारको काम दिएको छु।

दिसा गर्नु—=झाडा फेर्नु (को कोमल रूप, 'दिसा फेर्नु' प्रयोग हुँदैन)।

दिसा जानु—=दिसा गर्न जानु (यहाँ 'गर्न' लोप हुँदा राम्रो हुन्छ, 'झाडा जानु' हुँदैन)। बाजे दिसा जानुभएको छ, एक छिन पर्ख।

दिसा बस्नु—=दिसा गर्न बस्नु (यहाँ पनि 'गर्न' लोप गर्दा राम्रो सुनिन्छ, 'झाडा बस्नु' हुँदैन)।

दिसासूची हुनु—=झाडापिसाप गर्नु (को कोमल रूप, जो प्रायः उच्च कक्षामा र बिरामीको बारे मात्र प्रयोग हुन्छ)। आज यती बाजी दिशा शुचि भयो, दिशा शुचि यस्तो छ, रोगीलाई साह्रै दुःख भयेको जस्तो थियो अथवा रोगीले बडो संचो मानेको छ।—राममणि (सद्यारसुसार संभार)।

दीठ दिनु, लाउनु—=ध्यान दिनु, लाउनु, आँखा गाडेर हेर्नु, (दृष्टिको 'दीठ' रूपको नेपालीमा उस्तो प्रयोग देखिँदैन)। तिम्रो कुरा चुनीले कस्तो दीठ दिएर सुनिरहेकी, हेर! सानुले एक दीठ लाएर (सँग) मेरो मुखमा हेरीरहेछ।

दुःख उठाउनु, झेल्नु—=परिश्रम गर्नु, दुःख भोग्नु। आरम्भमा अनेक मुश्किल दुःख उठाउनु पऱ्यो।—जितेन्द्र (आधुनिक आविष्कार)। अनेक दुःख झेलेर बल्ल झगडा जितेँ।



दुःख काट्नु—(१)=दुःख भोग्नु। यस पाला दुःख काटी काटी भात खाने भाँडा जोरें। (२)=दुःखको समय पार गर्नु, दुःखको काम सिद्ध्याउनु। सोध्या साधकिले तिमी अति दुखी कुन् पापले पो भयौ। काहाँ सम्म दुखी भएर रहनु काट्यौ कति दुख् सह्यौ॥—राजीवलोचन (केदारकल्प)। बल्ल बाटाको दुःख त काटियो, बा!

दुःखको पहाड खस्नु—=ठूलो दुःख आइपर्नु। नजर होस् कन्नो दुःखको पहाड हजुरका शिरमा खस्न आँट्यो! अब हजुरको टेक एक रहने छैन।—चक्रपाणि (नेपाली संक्षिप्त रामायण)।

दुःखको मानु—=बिहानको खाना (खाएपछि काम गर्नुपर्ने हुनाले; 'सुक्खको मानु' दाँज)।

दुःख पोख्नु—=मनमा पीर लागिरहेको कुरा भन्नु।""राजा सबैका साजा बाबु जस्ता हुन् भनी आफ्नो मनको दुःख पोख्न आएकी रहिछ।—श्री ३ चन्द्र (अमलेख-भाषण)। यो मेरै पाप हो, जे गरे पनि आफ्नो भाग्य-विधाताले हाँसेर नसहीकन अरूकहाँ गई दुःख पोखेको फल हो।—बालकृष्ण (मुकुन्द इन्दिरा)। त्यसो हुनाले जूनो समुद्रका मालिक नेप्च्यूनकहाँ आफ्नो दुःख पोख्न गइन्।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)।

दुःख बज्रनु—=दुक्ख आइपर्नु। दुःख बज्रँदा धैर्य लिन सक्ने बहादुर पो बहादुर।

दुःख सुक्खको कुरा गर्नु—=घरायसी कुरा वा मनको गन्थन गर्नु। बाटामा लोग्ने स्वास्नी घर गृहस्थीका दुःख सुखका कुरा गर्दै जान्थे।—गुरुप्रसाद (कथा कुसुम)। तपाईंसित बसेर यसो दुःख सुक्खको कुरा गरूँ भने पनि फुर्सतै पाउन्न, के गर्नु!

दुःख सुक्ख भुक्तेको—=गृहस्थीको पूरा अनुभव पाइसकेको। हामी जस्तो दुःख सुक्ख भुक्तेको मानिसको अर्ती लिनुपर्छ।

दुइ[टा] आँखाले देखिनसहनु

—=ज्यादै नरुचाउनु, साह्रै मन नपर्नु । जेष्ठामा परेकी भनेर नातिनीलाई बूढी दुइ आँखाले देखिसहन्नथिन्,……। —बालकृष्ण (कथा कुसुम) ।

**दुइ चार अक्षर जान्नु**—=केही पढेको । जे भए पनी दुइ चार अक्षर जानेका भाइ अंश गो माँस सम्शेर एक एक गरेर बुझाई दिनु भयो ।—रुद्रराज (रूपमती) ।

**दुइ जीउ हुनु**—(१)=ज्यानको माया नहुनु (मार्ने एउटा जीउ राख्ने एउटा जीउ हुनु) । हजूरको छोरालाइ कुट्न मेरो दुइ जीउ छ र ? (२)=दोजिया वा गर्भिणी हुनु । भुन्टीको आजकल दुइ जीउ छ, अमिलोमा तिर्सना लाग्यो भन्थी, पठाइदेन ।

**दुइ ढुङ्गाको अन्तरको तरुल**—=कटाक्ष परेका दुइ मानिसको बीचमा परी दुवैलाइ तोड्न नचाहने मानिसलाइ दृष्टान्त दिने । कान्छी लाहुर जाउँ भन्छे, जेठी नेपाल नछोडूँ भन्छे, मत दुइ ढुङ्गाको अन्तरको तरुल भइरहेंछु ।

**दुइ दिनको**—(१)=क्षणिक, अलि दिनको । होइन, सँधै पुग्ने हिसाब संग पो मानिसहरूले चल्नु पर्दछ, यसरी २ दिनको रंगी चंगीले के गर्नु ।—रुद्रराज (चप्पा काजी) । दुइ दिनको जिन्दगीमा झगडातगडा गरेर के फाइदा ? (२) साधारण अर्थ । यी बाटामा दुइ दिनको फरक पर्छ ।

**दुइ दिनको रामछायाँ**—(१)=क्षणभङ्गुर चहकमहक वा माया । हजूरको माया दुइ दिनको रामछाया मात्रै त हो नि । (२)=देख्ता राम्रो तर धेरै दिन नटिक्ने । यो फरिया त दुइ दिनको रामछायाँ मात्र रहेछ, एक धुनैमा यस्तरी खुइलियो ।

**दुइ नाउमा [खुट्टा] टेक्नु**—=यो मानिसको भर परे हुन्छ कि उ मानिसको भर परे हुन्छ भन्ने दोधार गर्नु (त्यसो गर्दा झन् बरबाद हुन्छ, जस्तो दुइ नाउमा दुइटा खुट्टा राख्ता नाउ फाटेर पानीमा डुब्ने सम्भव हुन्छ भन्ने आशय दर्साउँछ) । तिमी साहिंला लप्टनको पनि कान्छा लप्टनको पनि चाकरी गर्छौ, त्यसरी दुइ नाउमा टेकेर पार लाग्लौ जस्तो लाग्दैन ।



**दुइ पैसा**—=थोर बहुत द्रव्य । ……व्यापारीहरूलाई पनि २ पैसा फायदा हुने, लोकले पनि आफूलाई चाहिने माल सामानहरू भने जति सुपथ मोलमा पाउने भई दोहोरै भलाइ हुने कुरा छ ।—श्री ३ जुद्ध (भूकम्प-भाषण) । (२)=सस्तो बेसाहा । दुइ पैसाको मालमा पैसा खर्च गर्नुभन्दा गहकिलै माल लिनु निको । (३) साधारण अर्थ ।

**दुइ मुख भएको**—(१)=कुराको सही नभएको । यस्ता दुइ मुख भएको मानिसको भर पर्यौ भने उत्तानो टाङ पर्छौ । (२) साधारण अर्थ । दुइ मुख भएको रुद्राक्षलाई गौरीशंकर भन्दछन् ।

**दुइ हातले टीका लाउनु**—मीत लाउँदा वा दशैंको टीकामा मात्र (प्रायः पहाडतिरको चलन) ।

**दुखी कर्म**—=दिक्कैदिक्कमा बित्ने वा परिश्रम नगरी नहुने । दुःखी कर्म लिएर जन्मेको मानिसलाइ एउटा न एउटा कुराबाट चिन्ता परिहाल्छ ।—भीमनिधि (सहनशीला सुशीला) ।

**दुखेसो गर्नु**—=दुःखले निर्वाह गर्नु । दुखेसो गरी दिन काटिरहेंछु ।

**दुनु गाँस्नु**—(१)=पात गाँस्नामा सबभन्दा सजिलो कामको रूपमा । यत्रो बडोमा भएर दुनु गाँस्न त ढङ्ग छैन के कुरा गर्छस् ! (२) साधारण अर्थ ।

**दुनु जत्रो (कुचिए जस्तो) मुख लाउनु**—=अँध्यारो मुख लाउनु । लोग्ने हिन्दुस्थान जाने भयो भन्ने खबर सुन्दा सेतीले दुनु जत्रो मुख लाई ।

**दुनु सोभयाउनु**—=आफ्नो सव्य पार्नु । यति भनेर मन्त्रीले मालिनीको चित्त बुझाए, आफ्नो दुनु पनि सोभयाए ।—बोधविक्रम (दन्त्यकथा) । कर्मध्वजको छोरालाइ नातिनी दिएर वीरे थापाले आफ्नो दुनु सोभयायो ।

**दुम लुकाउनु**—=पुच्छर लुकाउनु (हारेको कुकुरले पुच्छर लुकाएको दृष्टान्तलाइ लिएर त्यसबाट), डरले केही काम वा इरादा छोड्नु ।····मुख्य जर्नेललाई दुम लुकाई सुइँकुच्चा ठोक्ने····अत्यास कसरी वीर नेपाली फौजले पारे यो पनि भानुभक्तले प्रफुल्लित हृदयले जरूर सुनेका होलान् ।— श्री मृगेन्द्र (भानुभक्त स्मारक ग्रन्थ) ।

**दुम्सीलाइ धूँवा दिए झैँ**—लुकेकोलाइ कायल पारी निस्कन कर लाउँदा दृष्टान्त दिन प्रयोग हुने । दुम्सीलाइ धूँवा दिए झैँ नगरी यो चोर कायल हुँदैन ।

**दुरुस्त पार्नु, हुनु**—=ठो जस्तै भान पार्नु, साखुल्ले हुनु । सके यसैले घडी फुटालेकी होली, अहिले दुरुस्त हुन आउँछे !

**दुलो पस्नु**—(१)=आफ्नो कोठाभित्र पस्नु । यिनीहरु त नवै बजे दुलो पसिसकेछन् ए ! (२) साधारण अर्थ । दुलो पसेको सर्पलाइ नजिस्क्याऊ ।

**दुवाली थुन्नु**—=माछा समात्लालाइ खोलो एकातिर फर्काउनु ।

**दुवै हातमा लड्डू**—=दुवैतिरबाट लाभ । घनेको त दुवै हातमा लड्डू भयो, दुलहाबाट पनि दुलहीबाट पनि दोसल्ला ओढाए ।

**दुहाइ दिनु**—=रक्षा वा बचाउको निम्ति पुकार्नु । दुहाइ दिएको सुन्नासाथ म भित्री लुगाले नै दगुरेँ ।

**दुहुनु भैँसी जस्तो**—=बराबर पैसा इत्यादि दिने मान्छे वा खाने सर्दाम पूर्ति गर्ने बोट इत्यादिलाई दृष्टान्त दिने । यस पाली फर्सी लाएको दुहुनु भैँसी जस्तै भइरहेछ, जहानलाई मुन्टाले निकै धान्यो ।

**दूधको तर काँढाको झाङमा फ्याँके जस्तो**—असल कुरा वा मान्छेको कदर नगर्दा दृष्टान्त दिन प्रयोग हुने । हजुर, दूधको तर काँडाको भयाँगमा फ्याँकिदिए जस्तो भयो ।—भीमनिधि (सहनशीला सुशीला)।

**दूधको दूध, पानीको पानी**—=ठीक न्याय, यथार्थ कुरा । तर आफ्नो पावर मजबूत भए पछि अघिल्लाको सात पुस्ता देखाइदिए, पछिल्लाको ठूलो कदर गरिदिए—दूधको दूध, पानीको पानी भयो ।—रुद्रराज (भारतवर्षको संक्षिप्त इतिहास, भाग २) । केही कुरो पनी आखिर दूधको दूध पानीको पानी नभई कहाँ छोड्दछ र ।—ऐजन (रूपमती)। ····दूधको दूध पानीको पानी खुट्ट्याउने, जैसीले धुलौटो कोर्ने भन्दा पनि बुद्धिमानी सँग बोक्सीका आँखा फोर्ने ।—प्रेमराज (ससुराली) ।

**दूधको वा दूधे बालख**—=दूध खाँदैको वा साह्रै सानो बालख । दूधे बालखलाइ छाडेर कसरी परदेश जान सकेको ।

**दूध छुटाउनु**—=आमा वा धाईको दूध खान नदिनु । अब मूसीलाइ दूध छुटाउने वेला भयो।

**दूध पस्नु**—(१)=अनाजमा रस पस्नु । यो मकैको दूधै पसेको रहेनछ । (२) साधारण अर्थ । तिम्रो आँखामा दूध पसेन क्यारे ?

**दूध [र] भात [खाए जस्तो] हुनु**—=सजिलो हुनु ।

**दूधले चुठाउनु**—=(धनीले) हुन सकेसम्म खर्च गरी सुक्ख दिनु । दूधले चुठाएर राखेकी मेरी मैयाँ ! आँखामा हाले पनि नबिझाउने मेरी मैयाँ !—भीमनिधि (सहनशीला सुशीला) ।

**दूधे गाला**—=आमा वा धाईको दूधले लागेको भुकुल्ले गाला । पछि त उठिहाल्छ नि, यो दूधे गालाले पो यस्तो नेप्टो जस्तो भएको, हेर न फोहोरा !— बालकृष्ण (कथा कुसुम) ।

**दूबो झैँ मौलाए, कुकुर झैँ बौलाए**—ठट्टामा भन्ने बोली ।

**दूबो फैलाए जस्तो फैलाउनु**—मर्दै नमर्ने गरी बढेर जानु (आशिष् दिंदा प्रयोग हुने, दूबो कहिल्यै मर्दैन भन्ने चलेकोले) । भाग्यमानी भए ! तिम्रा बालबच्चाले डाँडा काँडा ढाकून्, दूबो फैलाए जस्तो फैलाऊन् ।

**दूर दूर गर्नु**—=छि छि दूर दूर गर्नु (को कम प्रचलित र हलुका रूप) । कुहेको मासु देख्तैमा दूर दूर गर्दछ ।

**दृष्टि दिनु, पुऱ्याउनु**—=

ध्यान दिनु, विचार पुऱ्याउनु, रेखदेख गर्नु । त्यस माथि संसार पट्टि दृष्टि नदिएकाले यो प्रपञ्चमय जगत्मा उनीहरूले केही उन्नति गरेका थिएनन् ।—रुद्रराज (प्रायश्चित्त) । तिमीले दृष्टि पुऱ्याउन सकेनछौ, डक-मीले ठगिहालेछन् ।

दे—=कुनै कुनै शब्दको अगाडि आई प्रयोग हुँदा यसको 'प्रदान गर्' अर्थ रहँदैन, जस्तोः—दे दनादन, दे कुलेलम, दे पटापट, दे फकाफक, दे भकाभक, इत्यादि ; यसरी प्रयोग हुँदा 'दे= एकदम, बेसरी' हुन्छ ।

देउता आउनु—(१)=बिफर उच्रनु (बिफर, ठेउला, दादुरालाई शीतलामाई भन्छन्, तापनि प्रायः बिफरलाई 'देउता' प्रयोग हुन्छ) । साम्रानीलाई देउता आएको जस्तो लाग्यो है, मलाई त ! (२)=साधारण अर्थ । घरमा साफसुघर राखे देउता आउँछन् रे ।

देउता चढ्नु, चढाउनु—(१) =डगडग काँप्ने पारी (झांक्रीको) शरीरमा देउता (=उछ्वास) प्रवेश हुनु, गराउनु ('देउता बस्नु' हेर) । आफ्नो आंगमा देउता चढाउने,……जैसीले धुलौटो कोर्ने भन्दा पनि बुद्धि-मानी सँग बोक्सीका आँखा फोर्ने ।—प्रेमराम (ससुराली) । यसबाट (२)=रिसले डगडग काम्नु, काम्ने गरी रिस उठाउनु । यतिका रुपियाँ हराएको सुनेपछि लप्टन साहेबलाई देउता चढ्छ, अब । (३) साधारण अर्थ । रथमा देउता चढाइसके, अब रथ तान्ने वेला भयो ।

देउता थाप्नु—=देउता बनाएर वा ठानेर पूजा गर्नु । यो ढलौटे रामचन्द्र कति राम्रो रहेछ, म त देउता थाप्न लान्छु ।

देउता बस्नु, बोलाउनु—(१) =(झांक्रीले) विधिविधान गरी देउता बोलाई (=आफूमा उच्छ्वास पैदा गराई) रोग पत्ता लाउनु वा निको पार्ने उपाय गर्नु (उच्छ्वास पैदा भएपछि झाँक्रीले बोलेको ठहरिन्छ), चिन्ता गर्नु । आज बिजुली झांक्री देउता बस्ने भएको छ ? आज पल्लो घरमा देउता बोलाएको हेर्न



जान्छु । (२) साधारण अर्थ । मेरो कुममा देउता बसेको छ, नछोऊ । तेरो शक्ति भए यो ढुङ्गाको देउता बोलाउन सक् !

देउता बुझ्नु—=ठीक मिजाज-मा आउनु, चित्त बुझ्नु । आज कसले के गरिदिए छ कुन्नि सन्तीको देउता बुझेको छैन ।

देउता भाकूनु, देउतालाइ भाकल गर्नु—=यो काम पूरा भयो भने वा फलानालाइ निको भयो भने फलाना देउतालाइ पूजा बलि इत्यादि दिन्छु भन्ने प्रतिज्ञा गर्नु । देउतालाइ भाकल गरेकोछु पाशामा जितें भने मैतीदेवीकहाँ बोको पठा-उनुपर्छ । देउता भाकी भाकी मुद्दा लडेको होइनस्, के भयो ?

देउता माने जस्तो—=ज्यादै आदर गरेकोमा दृष्टान्त दिने बोली । मान्नलाइ देवता माने जस्तो मानिन्थे ।—जयपृथ्वी-बहादुर (शिक्षा दर्पण) ।

देखा जायगा—यो हिन्दी वा-क्यांश तलका अर्थमा हाम्रो भाषामा पनि प्रयोग हुन्छ । (१)=(दगा धर्दा) थाहा पाउ-लास् । देखा जायगा, मानिस-को फेला परेको रहेन छ ।—रुद्रराज ( प्रायश्चित्त ) । अहिले मलाइ कुटेको डिल्ली बजारको बाटो हिंड्दा कुन नौमत हुँदो रहेछ, देखा जायगा ! (२)=देखुँला तिम्रो ताइँ । यस पालीको जाँचमा पहिला हुन्छु भन्छौ, देखा जायगा । (३)=पछि जे गर्न पर्ला गरुँला । थोड़ बहुत कम बेसी होला त्यो देखा जायगा । —रुद्रराज (चप्पा काजी) ।

देखा[हा] पर्नु—=देखिनु । सरकार पनी त वाहाँ उर्वशीको देखापरिबक्सेको होइन र?——श्री केसर (विक्रमोर्वशी) ।

देखिनसहनु—=एकदमै नरुचा-उनु (प्रायः मानिसलाइ) । केही कारणले जूनो केलिस्टोलाइ देखि सहन्नथिन् ।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह) ।

देखुँला तेरी (नानीको) ताइँ—=सामर्थ्य वा शक्ति थाहा हुनेछ । देखुँला नानीको ताइँ, गुड्डी हांकेर मात्र त हुँदैन ।

**देख्नु, हेर्नु**—झट्ट हेर्दा यी दुइ पदको एउटै अर्थ देखिन्छ तापनि भिन्नभिन्न पद भिन्नभिन्न स्थानमा प्रयोग हुन्छन् । मोटामोटी हिसाबले—देख्नु = आँखामा पर्नु (पहिला पटक वा सामान्य), (खोजेको) पाउनु, भेट्टाउनु ; हेर्नु = आँखा लाउनु, आँखामा परिसकेपछि थोर बहुत ध्यान दिई आँखा लाउनु (उसैले 'देखा पर्नु' हुन्छ, 'हेरा पर्नु' हुँदैन) । आजकल माइला ददालाई मैले देखेको छैन, जुङ्गा खौरेको छ रे । तिम्रो दराजमा त्यो किताप देखेको थिइनँ, अब हेर्छु (= पढ्छु, खोज्छु) । यता हेरन ! मृग देख्नासाथ त्यसको सौन्दर्यले मुग्ध भएर हेरिरहें । साँचि उनले जोडेको नाच देख्यौ ?—देखें, राम्रो लागेर आखिरैसम्म हेरें । मैले देखेर पनि हेरिन ।—खड्गमान(वैकुण्ठको दानपत्र) । देख्लास् कुन नौमत हुँदो रहेछ ! हेर त, सक्छु कि सक्तिनँ ! अस्ति तिमीलाई पशुपतिमा देखिनँ, तिम्रो सिंगार हेर्ने मन थियो । देख्यौ, उसले मैले भनेको टेरेन ? तस्वीर हेर न वा हेर्ने इच्छा छ (यहाँ 'देख न, देख्ने' हुँदैन, किनभने इच्छा, आग्रह, आदिको अगाडि 'हेर्नु' मात्र प्रयोग हुन्छ) ।

**देश खाई शेष भएको**— = देश परदेश घुमी सबै कुराको वाकिफ भएको । देश खाएर शेष भएको मानिसलाई कुरामा कसले जित्न शक्ला ?—भवानी (यौवनको आँधी) । हामीलाइ खिसी गर्नुपर्दैन, तिमी जस्तो देश खाई शेष भएका हामी होइनौं ।

**देश लाग्नु**— = परदेशमा बस्तै गरी जानु (हाम्रो भाषामा विशेषण, सर्वनाम, इत्यादिले नकिटेको एकलो 'देश' को अर्थ परदेश हुन्छ) । यहाँ जागीर पाइएन, देश लाग्नुपर्‍यो ।

**देह त्याग गर्नु**— = मर्नु । अस्ति बिहान ८ बजेर ९ मिनेट जाँदा कृष्णमायाले आर्यघाटमा देह त्याग गरिन् ।

**देहरा जानु, बित्नु**— = जीवन, जिन्दगीको समय, (देहरा यी



क्रियापदसित बाहेक प्रयोग हुँदैन) । आफ्नो देह र यत्तिकैमा गै गो ।—भीमनिधि (सहनशीला सुशीला) ।

**दैया चल्नु**— = जोड चल्नु (हेर) ।

**दैलेखे जुत्ता**— = दैलेखमा सिएको जुत्ता (ठेला नउठ्ने नरम छालाको निमित्त प्रख्यात छ) ।

**दैवको लाठो, चक्र**— = भाग्यचक्र । मलाइ परेको देखेर हाँस्छौ —दैवको लाठी सबैमाथि घुम्छ, आज मलाइ भोलि तँलाइ।

**दैव लाग्नु**— = दशा बिग्रनु । मान्छे लागे डराउन्न, दैव लागे मेरो के लाग्छ ।

**दैवले ठग्नु**— = अभागी वा खुनी हुनु । म त दैवले ठग्यो विधवा भएँ, तिमी सधुवा मान्छेले पनि कालो लुगा लाउनु हुन्छ ? ।

**दैवले देख्ला**— = अन्याय हुँदा वा गुन नदेख्ता निराश भई भन्ने बोली । जति गरे पनि तिमीले मेरा गुन संझेनौ, भैगो दैवले देख्ला ।

**दैवी पर्नु**— = अवझटमा मर्नु वा दुर्भाग्यवश केही संयोग परी ठूलो नोकसानी हुनु । बीचमा अकस्मात यस्तो दैवी परिआयो ।—श्री३ जुद्ध (भूकम्पभाषण) ।

**दोठ्याङ खानु**— = कुरा फरक परी गोलमाल हुनु । उसले मोटर भनेको रहेछ मैले खाने मटर संझें, त्यसैमा दोठ्याङ खायो ।

**दोबाटो ढुकुने, कुर्ने**— = बाटोघाटोमा बसी बटुवाको धनमाल लुट्ने । तँ दोबाटो ढुकुने पाजीसित मेरो केही सरोकार छैन ।

**दोबाटोमा भेटेको चितुवा झैँ** —देख्यो कि तर्सेर भाग्नुपर्नेसम्मको डरलाग्दो मान्छेलाइ दृष्टान्त दिंदा प्रयोग हुने । मलाइ दोबाटोमा भेटेको चितुवा झैँ किन गर्छ्यौ नानी, म तिमीलाइ खान्न ?

**दोष लाउनु**—(१) = (फलानाको) कसूर वा भूल हो भन्नु (कुनै प्रमाणको सहाराले) । अघि तिमीले फूलदान छोएका हुनाले तिमीलाई त्यो फुटालेको दोष लाग्यो । (२) = (ले) गर्दा भएको हो भन्नु । कालले मर्छ

जिब्रोलाई दोष लाउँछ। (३) =खोट लाउनु, खराब हो भन्नु। शम्भु हरे! यस् भेष्कन तिमिले, किन यो दोष लगायौ ॥—शम्भुप्रसाद (शम्भु भजनमाला)।

**दोषी घोडा**—हृदयसाल, कोखवत, काखवत, डङ्कउजार, इत्यादि जस्तो अशुभ लक्षण भएको घोडा (बिराम गर्ने घोडाको अर्थमा प्रयोग हुँदैन)।

**दोसल्ला ओढाउनु**— =हर्षबढाइ वा रीझवापत दिइने पुरस्कारको रूपमा किमती धुस्साविशेष ओढाउनु (आजकल प्रायः तोकिएको दाम दिई दोसल्ला फिर्ता लिइन्छ)। काजी पनि भित्रबाट सरासर आएर बिजुलीलाई दोसल्ला ओढाई पाँच असर्फी उनको हातमा थमाइदिए।—रुद्रराज (चप्पा काजी)।

**दोस्ती लाउनु**—मीत लाउनु (को दरबारतिर चलेको बोली; मीत, मीतिनी जस्तो यो सबै नातामा जोडिन्न, प्रायः दोस्ती आमा, दिदी वा बहिनी, दाइ वा भाइ मात्र, अरूमा मीत मीतिनी नै जोडिन्छन्)।

**दोहोरो आङको**—(१) =छाती फुकेको। काहिला दोहोरो आङको छ, मोटायो भने खूब ठूलो छाती देखिन्छ। दोहोरा आङको केटी रहिछ बुहारी त बेसै पायौ। (२) =(घोडाको बारे) दुइ फक्लेटा जस्तो देखिनेसम्मको चौडा आङ भएको। चढ्नु त दोहोरा आङकै घोडा हो बा!

**दोहोलो पार्नु, खुवाउनु**—(१) =तालावाला खेलाउनु। यी केटाकेटीहरूले त मलाइ दोहोलो पारिसके। (२) =चेताउनु। यो कुकुरलाइ दोहोलो पारेर पठाएपछि फेरि आउँदैन। (३) =फेरि नबल्झने गरी निको पार्नु। यो औषधिले तिम्रो व्यथालाइ दोहोलो पार्छ।

**दौड छाड्नु**— =दौड दिनु। मेरा दौड छाड्ने घोडाहरूलाई राम्ररी सह्यारसंभार गरेस्।

**दौडाहा गर्नु, जानु**— =सदरबाट गई मोफसलको अड्डाखाना जाँच्नु। इलाममा दौडाहा गर्ने कुरा उठेको छ।



**दौरा न सौराको खल्ती**— =आधारविनाको आश्रित वस्तु वा व्यक्ति। घरै छैन टेबिल किनेर के गर्छस्! यो त दौरा न सौराको खल्ती जस्तो भो।

**द्रव्यशाहका पालाको**— =जुगानजुगको, ज्यादै उहिलेको। घलेले त द्रव्यशाहका पालाको कोट लाएर आएछ।

## धृ

**धक फुक्नु, फुकाउनु**— =डर वा लाज पच्नु, पचाउनु, संकोच नमान्नु।....सानी बुहारी पनी माइत गएकी थिइन्, पण्डितनी बज्यैको धक फुकेको मौका थियो—खूब कुरा हुनलाग्यो।—रुद्रराज (रूपमती)।

**धक्का लाग्नु, पर्नु**—(१) =हानि गर्नु। यस्तो बानी गर्न लाग्यौ भने तिम्रो सुब्बाङ्गीमा धक्का लाग्ला। (२) साधारण अर्थ। मालिकलाइ धक्का लाग्ला छेउ लागेर हिंड।....के भो के एउटा ठूलो धक्का छातीविषे पर्‍यो, आजको घाम हामीले बद्ता मान्यौं सबै तिर, ....।—बालकृष्ण (प्रह्लाद)।

**धक्कु लाउनु**—(१) =बोक्रे आडम्बर देखाउनु। आमाचाहिंले साटनको चोलो लाइदिइछ, सानी धक्कु लाएर हिंडिरहिछ। (२) =आत्मप्रशंसा गर्नु। दुइटा श्लोक लेख्तैमा कवि हुँ भनेर के धक्कु लाउँछौ? (३) =झूटो प्रशंसा। देवरत्नले बनाएको फ्रेमलाइ मैले बनाएको भनेर धक्कु लाएछौ।

**धन**—कसैलाई प्यारो गरी यो नाउँले बोलाउँदा यसको उच्चारण कहिल्यै हलन्त हुँदैन, तर 'दौलथ, जोड्ने चिह्न, आदि' को अर्थमा चाहिं हलन्तै उच्चारण हुन्छ।

**धनकुटा (पोखरा वा धुनीबेंसी) को गेमरा उखु**—सबभन्दा मीठो ठहरिएको उखु।

**धपक्क बत्ती बाल्नु**—(१) =मापाको वा बाठो भई सबैलाइ थरहरी पार्नु। कान्छी दुलहीले आजकल धपक्क बत्ती बालि-

रहिंछ । (२) = रिसाएर उत्पात मचाउनु । हिजो बेलुका दाइले के कुरामा हो धपक्क बत्ती बाल्नुभयो । (३) = साधारण अर्थ ।

**धपक्क बल्नु, बले जस्तो देखिनु** — = देदीप्यमान हुनु । यी सबैले कस्सिएर, झकाझक भएर सुल्तानका वरीपरी बस्ता सारा दर्बारनै धपक्क बलेको जस्तो देखिन्थ्यो ।—रुद्रराज (भारत-वर्षको संक्षिप्त इतिहास, भाग २) । जेठी मैयाँसाहेब आउँदा त कोठै धपक्क बल्यो ।

**धर पाउनु, दिनु** — = सुक्ख पाउनु, दिनु, ('करबाट बच्नु, बचाउनु' को अर्थमा ; अकरणमा प्रयोग हुन्छ) । नबोली धर पाइनन् ।—रुद्रराज (रूप-मती) । निदान उनले पनि कुन्दको अनुसन्धानमा मानिस नपठाई धर पाइनन् ।—चन्द्रलाल (विषवृक्ष) ।

**धरो धर्म** — किरिया हाल्दा प्रयोग हुने (प्रायः नेवार जातिमा) । धरो धर्म! मेरो पनि ।—भीमनिधि(सहनशीला सुशीला)।

**धर्ना कस्नु, हाल्नु, बस्नु** — (१) = प्यादा लाग्नु । एक दिन तिनीहरू खोकेको सुनेर साना बाज्ये घरैमा छन् भनेर मुसल्मानले धर्ना कसेर कस्तो मुश्किलले उसलाई हटाउनु पऱ्यो ।—रुद्रराज (रूपमती) । (२) = आशाले कुरिरहनु । गोथे धर्ना हालिरहेछ (बसिरहेछ), त्यो झुत्रो कोट देऊन त ।

**धर्म कमाउनु** — (१) = धर्म गर्नु (प्रायः वक्रोक्तिमा) । एकादशी-मा चरा मारेर खूब धर्म कमायौ। (२) साधारण अर्थ (= धर्म हुने काम गर्नु) । उमेर छँदैमा धर्म कमाउन सके मात्र हुन्छ, बूढो भएपछि केही गर्न सकिन्न ।

**धर्म छाड्नु** — (१) = काम नदि-नेसम्म गरी बेकम्मा हुनु । यो फरिया, बग्गी, घडीले धर्म छोड्यो, अर्को नकिनी भएन । (२) = मर्नु । यो घोडाले धर्म छोड्छ क्यारे ! (३) = धर्म त्याग्नु । तिमीले समेत धर्म छोडेर बोल्छौ भने म त्यो जग्गामा दावी गर्दिन ।



**धर्म पुग्नु** — = पाप नलाग्नु । तिमीलाइ धर्म पुग्छ भने मलाइ कुट । हजूरले मलाइ अन्यायमा सजा गरिबकस्यो, हजूरलाइ धर्म पुगोस् (वक्रोक्ति) ।

**धर्मपुत्र लिनु, पाल्नु** — = (अर्काको छोरालाई) आफ्नो छोरा तुल्याउनु (पूरा हक दिई, प्रायः रीतभाँत पुऱ्याएर) । उनले मेरो कान्छा छोरालाई धर्मपुत्र लिएका छन् ।

**धर्म पोल्नु** — = पाप गर्नु । झूटो साछी बकेर किन धर्म पोल्नु ?

**धर्म फराक हुनु** — = कर्तव्य पूरा गरी त्यसबाट अलग भइ-सकेको हुनु ।

**धर्म भाक्नु** — = धर्मको नाम लिएर किरिया हाल्नु । मारवाडी-को गोडा परेर 'तिर्दछु' भनी धर्म भाकी जनै छोई तिर्न नसकेमा अनेकन अपमान सहन सक्तछ ।—रुद्रराज (चप्पा काजी) । धर्म भाकीकन राजाले यो जाहेरी गरेको हुनाले भोलि पल्ट सभा हुन लागेको बेलामा यज्ञरथ हाजिर भयो···· ···· ।—बोधविक्रम (दन्त्यकथा)।

**धर्म लिनु** — (१) = धर्म गर्नु । त्यो टुहुरालाइ पालेर तिमीले धर्म लियौ, बाबु । (२) = सतीत्व वा कुमारीत्व नष्ट गर्नु । अर्काकी छोरीको धर्म लिएर अलपत्र पार्न हुँदैन ।

**धर्म संझेर बोल्नु, धर्मसित भन्नु** — = झूटो बोले पाप लाग्छ भन्ने खयाल गरेर बोल्नु । धर्मसित भन, हामी दुइ जनामा तिमीलाइ कसको बढ्ता माया लाग्छ ?

**धर्म सुम्पनु** — = जे गर्न ठीक संझन्छौ त्यही गर भनी जिम्मा दिनु । तिमीलाइ धर्म सुम्पेको छु, मेरा छोराहरुलाइ राम्ररी पढाइदेऊ ।

**धसा (धसरा) पस्नु, पर्नु** — = शंका लाग्नु । अस्ति त्यसको छोराको कुरा सुन्दा मेरो मनमा धसरा पऱ्यो ।

**धसो (धसरो) जानु** — = ठाडो च्यातिनु वा धागो थुतिएर डोरो पर्नु । मेचको कीलामा अड्केर तिम्रो सारीमा धसरो गएछ ।

**धाक छोड्नु, लड़ाउनु** — = गुड्डी हाँक्नु । धाक लडाएर के

काम ?—श्री केसर(विक्रमोर्वशी)। खूब शिकारी हूँ भनो धाक छोड्थ्यौ नि, एउटा भँगेरो-सम्म पनि ल्याउन सकेनौ ।

**धाक लाउनु, देखाउनु**—=धक्कु लाउनु, रवाफ फूर्ति देखाउनु । उहाँ भने कस्ताकी छोरी भनेर धाँक लाउँछेस्, के तँलाई लाज छैन ?—रुद्रराज (रूपमती) । अघि अलि परबाट मैले देख्वा आफै गफ्फा लाउँदै थियौ ; अहिले मलाई समेत बाँड्नु पर्ला भनेर ज्वाईं बाजेको धाक लाउँछौ नि !—प्रेमराज (ससुराली) । सुब्बाको धाक देखाएर मलाइ तर्साउँला भन्दो हो ।

**धापको कीलो**—=जता लायो उतै लाग्ने निफर दिल भएको मान्छे ।

**धाप मार्नु**—=मानिसको आङमा वा घोडाको गर्धनतिर प्रसन्नता देखाएर लपेटाले नदुख्ने तर अवाज आउने गरी हान्नु । मास्टरले खुशी भई पहिलो लडकालाइ धाप मार्‍यो । ओर्ल्हने वेलामा घोडालाइ धाप मारेर मात्र ओर्ल्हने बानी गर ।

**धाम हुनु**—=चार धाम (जगन्नाथ, रामेश्वर, द्वारका, बद्री) मध्येका देउताको दर्शन हुनु । मेरो तीन धाम भइसक्यो, एक धाम बाँकी छ ।

**धार मार्नु, मर्नु**—=डिल सम्म्याउनु, भुत्ते पार्नु, हुनु । त्यसैले फलामको हाँगा काट्न खोज्दा बंचराको धार मर्ला भनेर इन्द्रहरू भागे होलान् ।—बालकृष्ण (प्रह्लाद) । यो सारा समय नदीमा घोटिंदा घोटिंदा उसका टुप्पा धारहरू मरेर उसको खस्रोपन मेटिएर त्यो चिल्लो चम्किलो भयो ।—जितेन्द्र (आधुनिक आविष्कार) ।

**धारा छुट्नु, लाग्नु, लाउनु**—(१)=वैरिनु वा ताँति लाग्नु, लाउनु, वैरनु ।····पहाडहरू धनको धारो लाउने साहु महाजन भइरहेछन् ।—श्री केसर (विक्रमोर्वशी) । तर सामान्य मानीसले खेलाउने राता मौरीको त धारो लाग्छ ।—लेखनाथ (लक्ष्मी-पूजा) । दाज्यै ! सदा चलिरहेछन लागि धारा । ट्राम्बे र साइकल, मोटर, रेल सारा । —ऐजन (सत्यकलिसम्वाद) । (२)=(पन्यालो चीजको बारे) अटूट प्रवाहमा चुहुनु वा आउनु, बगाउनु ।····आशामुखी माथि तपाँईको मातको अटूट धारा लागे झैं मेरो पनी दानको धारो लाग्छ ।—श्री केसर (विक्रमोर्वशी) । यो घिउको धारै लाग्दैन ।



**धारे हात**—=खुकुरीको बान्की पारेर काटे जस्तो गरी हल्लाउने हातको भाउ (मर् भन्दा वा सरापा प्रयोग हुने) । (धारे हातले ताकेर) क्या गाको मोरो पो रैछस् तँ त ।—भीमनिधि (सहनशीला सुशीला) । अस्ति तिमीले मलाई धारे हात लाएर 'मर्, मर्' भनेको बिर्सेको छु र ?

**धिपिक्क बत्ती बाल्नु**—=धपक्क बत्ती बाल्नु (हेर) ।

**धीत गुमाउनु**—=तिर्सना रोक्न नसक्नु (अर्काको मालमा वा खान नहुने कुरामा) । इन्दिरा अझ चोखी छ, छैन त्यो मूर्खले अझ आफ्नो धित गुमाएको ?—बालकृष्ण (मुकुन्द इन्दिरा) । दुइ दिनमा त जरोले छाडिहाल्थ्यो नि दुइ गाँस भातमा किन धीत गुमाउनुपर्‍यो ?

**धीत धरान हुनु**—=मन थाम्ने काम हुनु । यस्तो केही कुरामा धित धरान न भए पछि पनी व्यवहार चल्द छ ?—रुद्रराज (रूपमती) ।

**धीत मर्नु, मार्नु**—=तृप्त हुनु, अघाउनु । पछि सिङ्गै नखाई धीत मर्ने भएन ।—रुद्रराज (चप्पाकाजी) । धीत मर्ने गरी (मारेर) पानी खान पाइनं ।

**धुइँधुइँती खोज्नु**—=जतातत्तै मिहनतसाथ खोज तलास गर्नु । बरू हराएकी प्यारीलाई यो वनमा धुँईधुँईति खोज्दछु । —श्री केसर (विक्रमोर्वशी) ।

**धुइरो उठ्नु**—=धुरा उठ्नु ।

**धुइरो छुट्नु, लाग्नु**—=हूलका हूल आउनु वा जानु । सिम्भुमा आजकल एउटा लामा आएर बसेको हुनाले मानिसको धुइरो छुटिरहेछ ।

**धुकधुकी सास**—=मुटु ढुकढुक

गर्न मात्र नछाडेको अवस्था। अस्ति चामेलाइ धुकधुकी सास मात्र बाँकी राखेर छुटें।

धुन पत्ता[ल] लाएर (गरेर वा गरी) खोज्नु—=हद मिहनत गरी खोजतलाश गर्नु। एक् कै देस्तिर वाट एक भँवरो आयेछ भन्भन् गरी। धुन् पत्ताल् गरि खोजदो फुल असल् पायो कमल् पोखरी॥—मोतीराम (मनोद्वेग प्रवाह)। धून पत्ता लाएर खोजें, मेरो घडी हराएको हरायै भयो।

धुन सवार हुनु, चढ्नु—=खुरुन्धारसंग विचार उठिरहनु, निरन्तर चेष्टा गर्नु। सुल्तानलाई सहरका सहर उठाएर देवगिरिमा लगेर बसाल्ने धुन सवार भयो।—रुद्रराज (भारतवर्षको संक्षिप्त इतिहास, भाग २)। हविलाललाई पनी अङ्ग्रेजी पढ्ने धूनसवार भइसकेको थियो।—ऐजन (रूपमती)। मैन कपडा बनाउने धुन उसको टाउकोमा सवार भै सकेको थियो।—डार्विनलाई बालकै-देखि नै प्राणिशास्त्र एवं वनस्पति-शास्त्रको धून चढिसकेको थियो।—जितेन्द्र (आधुनिक आविष्कार)।

धुना पर्नु—=धोइनु। यो फरिया त एक धुना पनि नपरी यस्तो गति भयो।

धुरा उठ्नु—=ओड लाग्नु। अस्ति तिमी व्यर्थै पनि हलुमा-रतको धुरा उठेर मसित आइलाग्यौ।

धुरी चढ्नु—(१)=टुप्पिनु, बढ्नु। लोग्नेले सोझो मुखले बोलायो कि सेती धुरी चढि-हाल्छे। (२)=मूर्खतासँग (अर्कोभन्दा) बढ्ता वा बराबरी हुन खोज्नु। अर्काले हात्ती चढ्यो भन्दैमा धुरी चढ्नु हुँदैन। (३) साधारण अर्थ। स्वास्नीमान्छेले धुरी चढ्नु हुँदैन भन्छन्।

धुरी धुँवाएर बस्नु—=घर चलन गरेर बस्नु। बिचरी खसम मरे पनि छोराको धुरी धुँवा-एर बसेकी छन्।

धुरी मार्नु—=घर छाउन सि-ध्याउनु। धुरी मार्न मात्र बाँकी छ, भोलि त काम सिद्धिन्छ।



धुरुक्क रुवाउनु, पार्नु—=ज्यादै हैरान पार्नु। मैले भनेको नमानेर मेरो छोराले मलाइ धुरुक्क पार्‍यो (रुवायो)। यस पापीले मलाइ धुरुक्क रुवाएर छोड्यो।

धुरुधुरु रुनु—=आवाज नझिकी वा सुँक्सुँक मात्र गरी बरबर आँसु खसाल्नु।....बालकलाई आफ्नो काखमा लिइन् र त्यस-लाई जोरसित आफ्नो छातीमा टाँसेर धुरु धुरु रोइन्।—खड्गमान (अँध्यारोमा उज्यालो)।

धुर्रा उडाउनु—=हस्सी गर्नु। आजको सभामा पण्डितजी ले दयानन्दीको धुर्रा उडाइ-दिनुभयो।

धुलैाटो कोर्नु—=अबीर वा धूलोमा कोर्ने पाटीमा लेख्नु (प्रायः जैसीहरूले र बालखलाई अक्षर आरम्भ गराउँदा)।.... जैसीले धुलैाटो कोर्ने भन्दा पनि बुद्धिमानी सँग बोक्सीका आँखा फोर्ने।—प्रेमराज (ससुराली)।

धूनी जगाउनु—(१)=विरक्त, जोगी हुनु। संसार देखेर वाक्क भइसकें अब त सानो कुटीमा धूनी जगाएर बस्ने इच्छा छ। (२)=आफ्नो अगाडि मुढा जोतेर आगो बाल्नु (जोगीहरुको बारे)। अघिको रन्कामा विश्राम गर्छु भनेर कुटीमा गयें, आगो मगायें, धुनी जगायें....।—लेखनाथ (लक्ष्मी-पूजा)। अठ्याउँने हिमै चिटा मौकामा छन्छनाउँछ। जहां पनी धुवां-धार धुनि घोर जगाउंछ॥—ऐजन (ऋतु-विचार)। महा-पुरुषै हुन् भनेर त कसरी भन्ने, ....खोइ धुनि जगाएको, खोइ शिव बुटी धुतेको ?—रुद्रराज (प्रायश्चित्त)।

धूप बत्ती (बाती) गर्नु—=पूजाको अङ्गको रूपमा धूप बत्ती बालेर (देउताको अगाडि) घुमाउनु ('बाती' बत्तीको पाखे बोली हो)। यस पछि आँगनमा लिपेर बत्ती बाल्दछन्, झाँक्रीले धूप बाती गरी कुखुराको फूल फोर्दछ।—प्रेमराज (ससुराली)।

धूप हाल्नु—(१)=छुल्याइँ लाउनु। कान्छा बाकहाँ गएर मेरो नाउँमा धूप हाल्न

गइछस् नि । (२) = फलानो मरोस् वा बिरामी होस् भनी धूप बालेर देउतालाइ पुकार्नु । तँलाइ रिस उठ्छ भने मेरो नाउँमा धूप हाल्न त । (३) साधारण अर्थ । लौ, परमेश्वर धूप हालें, यो टुहुरीलाई जे गर्नु पर्छ गरिदिनु पर्‍यो ।—प्रेमराज (ससुराली) ।

**धूम मचाउनु**—= खैलाबैला गराउनु, राड़ो निकाल्नु । समय बित्यो सब फिर्न नपाई । किन तिमि धूम मचाउँछौ हाय! हरी ॥—शम्भुप्रसाद (शम्भु भजनमाला) ।

**धूल पाइलो गर्नु**—= पाइलो खेदो गर्नु ।

**धूली खेल्नु**—(१) = मसमण्डी गर्नु । बाबुको सम्पतिमा धूलो खेल्न पाइरहेछौ के धन्दा छ । (२) साधारण अर्थ (= धूलो उडाएर खेल्नु) ।

**धूले फागु**—= अबीरको सट्टा चीर पोलेको खरानीले खेल्ने फागु । मारवाडीहरुको धूले फागु रमाइलो हुन्छ ।

**धूलो झार्नु**—(१) = कुट्नु । भरे पाठ बुझाइनस् भने बेसरी तेरो आङको धूलो झार्नेछु । (२) = घमण्ड उतार्नु । धेरै बढेर नहिंड् तेरो धूलो झारेर छोडुँला । (३) साधारण अर्थ । टेबिलको धूलो झार ।

**धूवाँ उठ्नु**—= धूवाँ आउनु । हेर, धूवाँ उठ्यो आगो फुक ।

**धूवाँ उडाउनु**—= चुरोट वा तमाखु खानु । धूवाँ उडाऊ बसिरहू, तिम्रो अरू के काम छ र!

**धोको पुऱ्याउनु, फुकाउनु, फेर्नु**—(१) = तिर्सना मेट्नु । धोका सबै पुऱ्याऊ जाँदोछ जिन्दगानी गङ्गाजीमा बहेको माला सरी जवानी ।—भीमनिधि (सहनशीला सुशीला) । आज धोको पुऱ्याएर चुरोट खान्छु, अनि किरिया हालेर छाडिदिन्छु । (२) = इच्छा पूर्ण गराउनु । सखि हो! धोको फुकाएर अङ्गालो हाल ।—श्री केशर (विक्रमोर्वशी) । सुन्दरी अलिवार आफनो बहीनि सँग वसिन् र शैवलिनीलाई गालि गरि धोको पुऱ्याइन्, ......। गम्भीरध्वज (चन्द्रशेखर) ।



**धोखा(का) खानु**—= ठक्कर खानु, खराब फल पाउनु । शम्भू नछोड् तँ बाटो, छोड्दा छ खानु धोका ।—शम्भुप्रसाद (शम्भु भजनमाला) । गर्दैला अरूले र शान्ति मनमा मेरा त्यसै आउला । यस्तो भ्रान्ति लिएर काम गरदा धोका फगत् खाउला ॥—धरणीधर (नैवेद्य) ।

**धोखा(का) दिनु**—(१) = ठग्नु, छल्नु । कति चोटि दियो धोखा यो आँखाले, अझै पनि संसारका सबै दृश्य भन्दा प्यारो छ दृष्टि यो, के फुटालूँ म यल्लाई ? —बालकृष्ण (मुकुन्द इन्दिरा) । (२) = बेईमानी गर्नु, हानि गर्नु ।

**धोखा(का) पर्नु**—= झुकानमा पर्नु । जिन्दगीको भर गरेथें, भर भरैमा सब बित्यो । आज जुन् धोका पऱ्यो, कस्ले भनोस् कस्ले गरोस् ॥—शम्भुप्रसाद (शम्भु भजनमाला) । मलाइ धोका पऱ्यो, जानी जानी मैले तपाईंको अनादर गरेको होइन ।

**धोतीको जुम्रा कपालमा (टोपीमा) पुग्नु**—= पैतलामनि दबाएर राख्नुपर्ने मानिस शिर चढ्नु । धोतीको जुम्रा टोपीमा पुगेपछि तिम्रो भाउ राख्तैन ।

**धोती खुकुलो गर्नु, हुनु**—(१) = डरले कायल हुनु । सिपाही आएको देख्नासाथ ती पसलेहरुले धोती खुकुलो गरे । (२) = हिम्मत गर्न नसक्नु । दुइटा खुट्किला उक्लनालाइ धोती खुकुलो गरेपछि टुप्पामा कसरी पुग्न सकिएला ।

**धोती छेर्नु**—= डरले थर्कमान हुनु । गाउँमा हैजा पऱ्यो रे भन्ने सुन्दैमा त्यसै धोती छेर्दै भागेर आयौ ।

**धोती न टोपी हुनु, गर्नु**—(१) = अलपत्र हुनु, पार्नु, (प्रायः लुगा नभएको वा लाइनसकेकोले अथवा सिंगार नसिद्धिएकोले) । डोले आइपुग्न लागे अहिलेसम्म लुगा लाएकी छैन, सानूनानीको त धोती न टोपी हुन लाग्यो । (२) = लाज शर्म हराउनु । घरमा बसिरहेको सेतेले ता

साह्रूलाइ दश हात पर आइपुगेको देख्तैमा **धोती न टोपी गरेर** सुइँकुचा लिइहाल्यो। (३) = टाट उल्टनु, तनाहा हुनु, तुल्याउनु (यस अर्थमा 'न' लोप पनि हुन्छ)।····भाईले **धोती न टोपी** भएर खानै नपाई गल्ली चहारी लुते कुकूर जस्तै गरी हिंडेको हेर्नशक्ने के हजूरमा सामर्थ्य छ?—रुद्रराज (रूपमती)। सुनें सबै सुनें, बङ्कको पैसा सबै मोज-मजामा नै उडाउनु, अहिले **धोती-टोपी** भए पछि छोरा भनेर आउनु?—भवानी (यौवनको आँधी)। यसरी जुवा खेल्न लागिस् भने अलि दिनमा तेरो **धोती न टोपी** हुनेछ।

**धोती पछार्नु**—(१) = पछिल्तिर कुरा काट्नु। अस्ति म लामिछानेको घरमा पसेको त नानीचा दुलही बज्यैसित मेरो **धोती पछार्न** लागेकी रहछि। (२) = धोती धुनु। धारामा मेरो **धोती पछार्न** जान्छु, साह्रै मैलो भएछ।

**धोती फुस्कनु**—(१) = बेहोशीसँग भन्न नहुने कुरा चुहाउनु। यो मान्छे त कुरा गर्दागर्दै **धोती फुस्केको** पत्तै पाउँदैन। (२) साधारण अर्थ।

**धोती फेर्नु**—(१) = धोती बदल्नु। ज्यादै किट्ट भएछ, जाऊ **धोती फेरेर** आऊ। (२) = धोती लाउनु (साधारण अर्थ)। दुवै **धोती फेरेर** भान्सामा पुगे।—रुद्रराज (प्रायश्चित्त)। (३) = असल फल पाउनानिमित्त तयार हुनु। आज महाराजको सहस्र गोदानमा कति बाहुनले **धोती फेरिसकेका** थिए, तर पाउने वेलामा त एकै जनाले मात्र हात थापे।

**धोती लाइदिनु**—(१) = लङ्घन गर्नु, टेरै नलाउनु। मेरो अर्तीलाइ त तिमीले **धोती लाइदियौ**। (२) = फरिया लाइदिनु (१ को कम प्रचलित रूप)। (३) साधारण अर्थ। सानो बाबुलाइ **धोती लाइदेऊन**।

**धोबी जस्तो**— = ज्यादै कालो मान्छेलाइ दृष्टान्त दिने बोली। एक त छ्याक उसमाथि **धोबी जस्तो**, देख्तैमा घिनलाग्दो।



**ध्याउन्न लाग्नु**— = मनचित्त गइरहनु। तिमीलाइ त उठेदेखि खेल्नकै **ध्याउन्न लागिरहन्छ**, हगि?

**ध्यान जानु**—(१) = चित्त लाग्नु। तिमीले ताशको नयाँ खेल सिकाएदेखि पढ्नामा मेरो **ध्यानै जाँदैन**। (२) = याद हुनु। तिमीसित कुरा गरिरहेकी थिएँ चुनीपट्टि त **ध्यानै गएन**।

**ध्यान दिनु**—(१) = मन लाउनु। ····तालिमी फौजको बल पुगेका मुलुकलाई बाहिरका कसैले केही गर्न शकला भन्ने धन्दा रहँदैन, त्यस्तो धन्दा न रहेपछी आफ्ना मुलुक-भित्रका बरबन्दोबस्तका काममा पुरा **ध्यान दिन** शकिने हुन्छ।—श्री ३ भीम (नगर-प्रदक्षिणोत्सवको वक्तृता)। (२) = चित्त लाएर सुन्नु। **ध्यान देऊ**, कुरा मेरो दशै इन्द्रियले सुन, सत्य विश्वास भित्रै छ, विश्वास पहिले गर।—बालकृष्ण (ध्रुव)। मेरो कुरामा **ध्यान देऊ**।

**ध्यानमा हुनु**—(१) = ईश्वरको चिन्तनामा लागेको हुनु। जेठा बा **ध्यानमा हुनुहुन्छ**, पूजा सिद्धिएपछि तिम्रो कुरा भनिदिउँला। (२) = विचारमा लागेको हुनु। तिमी केको **ध्यानमा छौ**?

**ध्यान राख्नु, हुनु**— = संझना राख्नु, रहनु। मालिककहाँ जाँदा मेरो कुराको पनि **ध्यान राख्नुहोला**।

**ध्यान लाग्नु, लगाउनु**— = चित्त लाग्नु, लगाउनु, ('याद हुनु' को अर्थमा कहिल्यै प्रयोग हुँदैन)। ईश्वरको पाउमा **ध्यान लगाऊ**।

## न्

**नकटीको नाक काटे जस्तो**—हुर्मत गइसकेको मान्छेको हुर्मत लिनु फजूल हो भन्ने कुरालाइ दृष्टान्त दिने बोली। रत्यौलीकी नचुवी भइसकेकीलाइ फेरि त्यसको बयान गरेर किन **नकटीको नाक काटे जस्तो** पार्छौ?

**नक्शा खिच्नु, उतार्नु**—(१) = (मनमनमा) रूप रंग अनुमान गर्नु। तिमीले राजसिंहको बयान

गर्दा मैले मनमा **नक्शा खिचिसकेँ** । (२) = शकल लेख्नु । मेरो घरको **नक्शा खिच** ।

**नक्षत्र लाए(गे) जस्तो**—प्याक-प्याकती लाउँदा दृष्टान्त दिने (नक्षत्र = विश्वामित्रको अह्रोट-बमोजिम हरिश्चन्द्रलाई दुःख दिने पियादा) । **के नक्षत्र लागे जस्तो गरिरहेको**, एक छिनमा दिहाल्छु नि !

**नखाने चरो जस्तो**—ज्यादै दुब्लो मान्छेलाइ दृष्टान्त दिने । उस्तो मोटो मान्छे देख्ता देख्तैमा **नखाने चरा जस्तो** भइसक्यो ।

**नगद नारायण**—= दामपैसा (को ठटचौली नाउँ) । उनी **नगद नारायण**का परम भक्त थिए, सच्चा सेवक थिए ।—रुद्रराज (प्रायश्चित्त) । **नगद नारायण**को बेफ्वाँकमा खर्च हुंदा अलि चित्त पनि दुख्नेनै भयो ।—ऐजन (चप्पा काजी)।

**नगर्न झिंगा, भन्ला जस्तो**—ज्यादै लन्याङ्लुरुङ गरी काम गर्ने मान्छेलाइ दृष्टान्त दिने । हेर औंलाले खँगारेको हर्के, **नगर्न झिंगा भन्ला जस्तो** भइसक्यो ।

**नङ फुल्नु**—= नङमा सेतो टीका निकल्नु ( त्यसो भयो भने नयाँ लुगा पाइन्छ भन्छन् ) । तिम्रो **नङ फुलेछ**, अब नयाँ लुगा लाउन पाउली ।

**नङ [र] मासु जस्तो**—एक जीउ भई मिलेका मानिसलाइ दृष्टान्त दिने । तिमीहरु **नङ मासु जस्तै** मिलेका छौ, केही भने पनि मलाई पाप लाग्नेछ, तर मैले धेरै विचार गरें बुहारीको चाले बेग्लै छ ।—बालकृष्ण(कथा कुसुम) । यी दुइ भाइ **नङ र मासु जस्तै** छन्, एउटालाइ भन्यो कि अर्को धुरा उठेर आउँछ ।

**नचाहिने कुरा**—(१) = फजूल कुरा । यस वेला शिकार गएर कहिले भ्याउँथ्यो, तिमी **नचाहिने कुरा** गर्छौ । (२) = ढाँट कुरा ।····यस्तो विद्वान् मान्छेले पनि त्यस्तो छोटो काम गरिबक्सिन्थ्यो । **नचाहिने कुरा** ।—भीमनिधि (सहनशीला सुशीला) । **नचाहिने कुरा** गर्छौ, आज स्कूलमा बिदा नै छैन । (३) साधारण अर्थ । गृहस्थीलाइ **नचाहिने कुरा** केही छैन ।



**नचिन्हेको बिष्ट हुनु**—= राम्ररी चिन्हेको नहुनु, पूरा आनीबानी नपाएको हुनु ( नपत्याउँदा अकरण अर्थमा प्रयोग हुने ) । मलाइ लाहोरबाट फरिया ल्याउने रे, **नचिन्हेका बिष्ट हुन् र** !

**नछुने सुक्नु**—= रजस्वला हुन छोड्नु (उमेर पुगेर वा रोगले) । ठूली दिदीको **नछुने सुकेको** चार वर्ष भइसक्यो ।

**नछुने हुनु**—= रजस्वला हुनु । तिम्रो **नछुने हुने** महीना पुग्यो ? (२) साधारण अर्थ । दवाडीले त यो काम **नछुने हो** क्यारे ।

**नजर गराउनु**—= देखाउनु (को आदरार्थी) । चाँडो आज **नजर गराउ** भनि यो विस्तार् गर्‍या थ्या जसै । मन्त्रीलाइ हुकुम् दिया जनकले लौ ल्याउ भन्या तसै ॥—भानुभक्त (रामायण) ।

**नजर गर्नु, हुनु**—= हेर्नु (को आदरार्थी) । अथवा वाहाँ उर्वशीको सकल पाटीमा लेखेर **नजर हुँदै** दिल बहलाइ बक्सियोस् ।—श्री केसर ( विक्रमोर्वशी) । कोलाहल् अधिकै भयो प्रभुजिले सुन्या **नजर्** भो पनी । हूकूम् भो रघुनाथको किन तहाँ वानर् हटाया भनी ॥—भानुभक्त (रामायण) ।

**नजर दिनु, लाउनु**—= हेरचाह गर्नु, आँखा लाउनु । तैंले पनि त्यस काममा **नजर लाएस्** ।

**नजर पर्नु**—= देख्नु (आदरको बोली) । अब यहाँको **नजर पर्ने** ठाउँमा खडा भएर पर्खन्छु ।—श्री केसर (विक्रमोर्वशी) ।

**नजर बन्द गर्नु**—(१) = कैद गर्नु (को कोमल रूप) । उहाँलाइ त **नजर बन्द गरेछन्** । (२) = आँखा (आदरार्थी) चिम्लनु । पूजा गरिबक्सँदा **नजर बन्द गरिबक्सनु** बेस ।

**नजीक पर्न नदिनु**—= वर आउन वा जान नदिनु । फेरि यौटा भएको भैंसी पनि **नजिक पर्न दिँदैन** !—गुरुप्रसाद (कथा कुसुम) ।

**नदुखेको कपाललाइ डोरी**

लाएर दुखाउनु—=आनन्दसँग रहेको बेलामा जानी जानी दुःख बेसाउनु ।

**नन्दे भाइ**—=नन्दको लोग्ने ।

**नभन्दै**—(१)=साँच्चि नै (प्रायः आफूले ठानेको वा अर्कोले भनेको कुरा मिल्न आउँदा प्रयोग हुन्छ)। **नभन्दै** पाइला पाइलामा देखिरहेंछु ।—श्री केसर (विक्रमोर्वशी)। (२) साधारण अर्थ। तिमीले नभन्दै मैले त्यो कुरा गरिसकेको थिएं ।

**नमरी बाँचे, कालले साँचे**—=जीउँदै रहे। **नमरी बाँचे कालले साँचे** कोही दिनमा भेट होला ।

**नम्बरी नोट**—=सय वा त्यसभन्दा माथिको नोट (=लोट)।

**नम्बरी पण्डित**—=सरकारिया फिरिस्तमा दरिएको भाग पाउने। **नम्बरी पण्डितलाई** बोलाएपछि नम्बरी दछिना दिनुपर्छ ।

**नम्बरी सुन**—=नेशनल ब्याङ्कको छाप लागेको । **नम्बरी सुनको** औंठी लाएँ भन्दैमा गमक्क पर्ने को हो नि ?

**नरके चतुर्दशी**—=कार्तिक कृष्णचतुर्दशीको दिन (कृष्णले नरकासुरलाइ मारेको दिनको संझनामा यो दिन खोलामा बत्ती बगाउँछन्)। पोहोरको **नरके चतुर्दशीमा** नरक बगाउन पनि पाइनँ ।

**नरसिंह(घ) हुनु**—=ठूलूला स्वर झिकेर जाग्नु। भरे यो कुरा सुन्यो भने कोते **नरसिंह** हुनेछ ।

**नराम्रो मुख गर्नु**—=गालि वा फोहोर कुरा गर्नु। बज्यैको जिउ छउन्ज्याल तिनीहरूलाई कसैले **नराम्रो मुख गर्न** पाउँथ्यो ?—रुद्रराज (रूपमती)।

**नरिवल राख्नु**—=(दाम राख्नाको सट्टामा बाहुनबाहुनीले) सिङ्गो **नरिवल चढाउनु** । छट्टुले त **नरिवल** समेत राखे।—रुद्रराज (रूपमती)।

**नरो वा कुञ्जरो अश्वत्थामा हतोहत**—=तेल घस्ता वा कपालमा हाल्नुअगाडि दोष नलागोस् भनी हातमा तेल लिई औंलाले चारै दिशातिर छर्केर भन्ने बोलीमा चलती छ (मूलार्थ :—मान्छे हो कि हात्ती हो अश्वत्थामा मरे। युधिष्ठिरले द्रोणाचार्यलाई सुनाएको)।



**नशा झार्नु**—=शेखी वा अभिमान तोड्नु । धेरै नमात्तिई बेसरी चट्कन च्युरा दिएर तेरो **नशा** झारुँला ।

**नशा नशामा**—=सारा शरीरमा।

**नश्तर लाउनु**—=हार्न नहुने मान्छेद्वारा मनाएर वा अरू किसिमले नाइँनास्ति गर्ने मान्छेलाइ करमा पार्नु (साधारण अर्थ =चिरफार गर्नु; हाम्रो भाषामा यो अर्थ प्रायः प्रयोग हुँदैन)। लप्टनले यो घोडा दिन्न भनिसकेको थियो मैले अर्कैतिरबाट **नश्तर लाएर** ल्याएँ ।

**नस हाल्नु,पार्नु**—(१)=सहजै वा केही जति नमानी जित्नु । ....यिनीहरूलाई **नस पार्ने** बिजुलीले उल्टो लोथा चखाई तर मार्ने सम्म मारेर अब चुस्न सम्म चुसेर खोष्टा मिल्काइ दियो ।—रुद्रराज(चप्पाकाजी)। साहिँला दाइको छोराले तिमीलाइ **नस हालिदिन्छ** । (२) साधारण अर्थ। बिहान बिहान बासी पानीको **नस हाले** रुघालाइ फाइदा गर्छ । रुघाको शुरूमा **नस पार्न** ठीक हुँदैन ।

**नसीब खुल्नु**—=धेरैसम्म दुक्ख पाई कुनै सौभाग्यको कुरा घटित हुनु । बिचरा चतुरेको बल्ल **नसीब खुलेछ**—अस्ति महाराजबाट सुबिदारी बक्सेछ ।

**नाइँनास्ति गर्नु**—=हुन्न वा दिन्न भन्नु। त्यसमाथि पनि यहाँहरूको काम भने पछि कहिले **नाइ नास्ति गरेको** छ र ?—रुद्रराज (प्रायश्चित्त)।

**नाउँ(नाम) कमाउनु**—=कीर्ति फैलाउनु। लाखौं गरेर यश, **नाम** सबै **कमायें**। प्रारब्ध भोग सकियो र उठी म आयें॥ —लेखनाथ(सत्यकलिसम्वाद)। अङ्गस्फुरण् यो सजिलो बनाञा। राजीवलोचन् भनि **नाम् कमाञा** ॥—राजीवलोचन (केदारकल्प)। तिहिं बस्ता बस्तै तिनले ठुलो सम्पत्ति र त्यै अन्सारको **नाउँ** समेत **कमाये**। —शिवप्रताप (दुर्गेशनन्दिनी)। असल काम द्वारा तिमीले **नाउँ**

पनि कमाउन सक्ने थियो ॥ —काशीबहादुर (उषा)।

**नाउँ काट्नु**—=फिरिस्तबाट नाउँ झिक्नु ('नाउ काढ्नु'को सट्टामा यसलाइ प्रयोग गर्दा अशुद्ध हुन्छ)। खर्दार साहेबले हिजो नाउँ कटाउनुभएछ।

**नाउँ (नाम) काढ्नु**—=नाउँ उच्चारण गर्नु। तँ बैनी जस्तीलाई नाम काढ़ेर ता बोलाउनू पर्छ।—रूपनारायण (भ्रमर)। स्वास्नीले लोग्नेको नाउँ काढ्नु हुँदैन भन्ने शास्त्रको वचन छ।

**नाउँ गरेको**—=नामक, नाउँ भएको (यो वाक्यांश प्रायः कथामा प्रयोग हुन्छ)। विष्णुप्रसाद नाउँ गरेको बाहुन त्यस गाउँको ठालु थियो।

**नाउँ गोतै नलिनु**—=रिस उठी वा घृणाले पटक्कै नामै नछुनु। अस्ति झगडा भएदेखि म त्यसको नाउँ गोतै लिन्न।

**नाउँ (नाम) चल्नु, चलाउनु**—=प्रसिद्ध हुनु वा यश फैलनु, फैलाउँनु। स्वर्ग मर्त्य पाताल, तिनै लोक माहां। राजा भगीरथजी, नाम चल्यो जाहाँ॥ —शिखरनाथ (गंगामाहात्म्यको सवाई)। उनको काम देखेर कोही २ मानिस उसै पनी रीस डाहले भुतुक्क मरी रहेका थिए ....धाकै धाकमा नाम चलोस् भन्नेमा थिए।—रुद्रराज (रूपमती)। उनी यस्ता दानी थिए कि जताततै उनको खुब नाउँ चलेको थियो।—ऐजन (भारतवर्षको संक्षिप्त इतिहास, भाग २)। तेस्ता पापी नर्सको कसरी नाम चल्ला, यस कुरा लाई नर्सले खूब राम्रोसँग विचार गर्नू पर्छ।—राममणि (सह्यार-सुसार-संभार)। त्यसको नाम खूब चलेको थियो।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथा-संग्रह)।

**नाउँ चोर्नु**—=थाहै नदिई अर्काले भनेको वा अर्काको नाउँ आफ्नो हो भन्नु। अस्ति मेरो नाउँ चोरेर तिमीले कहरसिंह-सँग ९० रुपियाँ सापटी लिएछौ।

**नाउँ (नाम) थाम्नु**—=हुर्मत राख्नु। नाम थामने कीर्ति राखने काम गर्नु यो ज्ञानदानको....।—धरणीधर (नैवेद्य)। मलाइ त डर लागेको थियो, तर काना पहलमानले आफ्नो नाउँ थाम्यो।

**नाउँ न गाउँको**—=एकदम नचिन्हेको। नाउँ न गाउँको मान्छेलाइ कसले पुछनी गर्छ।

**नाउँ न निशान**—=अपरिचित, बेठेगानको। नाउँ न निशानको कुरा कसरी पत्याउनु!

**नाउँ पर्नु**—(१)=नाम दरिनु। निम्तो दिने मानिसको फिरिस्तमा ग्वांजेको नाम पर्‍यो? (२)=एकै नाउँ हुनु। तिम्रो छोराको त हरिसिंहले रचेको कथाको वैद्यको नाउँ परेछ।

**नाउँ(नाम) पाउनु**—(१)=जस पाउनु, सुनाम फैलनु। भावै ठूलो हुनाले जन सुजन भनी लोकमा नाम पाई। ज्ञानी ठूला कहाई विपुल तरहका कार्य्य लिन्छन् चलाई॥—धरणीधर (नैवेद्य)। (२)=दर्जा पाउनु। पैसा चाहिन्न नाम पाए पुग्छ। (३) साधारण अर्थ। चिट्ठामा मोती परेदेखि त्यसले मोती बहादुर भन्ने नाउँ पायो।

**नाउँ बिकाउनु, फ्याँक्नु**—=बदनाम गराउनु। बाह्रमासे खेलेर सर्दार बाजेको छोराले नाउँ नै बिकाए।

**नाउँ बिगार्नु**—(१)=नाउँलाइ छोट्याई वा अर्कै रूप दिई उच्चारण गर्नु। बलभद्र भन्ने नाउँ बिगारेर बले बले भन्न लागे। (२)=कीर्तिलाइ कलङ्कित पार्नु। तिमीले यस्तो कुकर्म गरेर आफ्नो बाबु बाजेको नाउँ नै बिगार्‍यौ।

**नाउँ मात्रको**—=छ भन्नुसम्मको, गनौटाको मात्र। नाउँ मात्रको छोरो भएर के गर्नु, केही कामको भर छैन!

**नाउँमा धब्बा लाउनु**—=कलङ्कित गराउनु (धब्बा अरू ठाउँमा प्रयोग हुँदैन)। यस्तो बेथितिसँग हिंड्न लाग्यौ भने तिम्रो नाउँमा धब्बा लाग्नेछ।

**नाउँ मेटिनु**—(१)=नाउँसम्म पनि नरहनु। आजकल संसारैमा कमारा कमारीको नाउँ मेटियो। (२)=यश वा

स्मारक नरहनु। यो धर्मशाला भत्कायौ भने हाम्रो बाको नाउँ मेटिन्छ।

नाउँ(नाम) रहनु—(१)= कीर्ति रहनु। यौटा इनार खनाई रहेंछ, सये पचास वर्ष सम्म फलाना घाँसीले खनायेको इनार भन्ने नाम ता रहला।—मोतीराम (भानुभक्तको जीवन चरित्र)। (२)=नाउँ राखिनु। चखेवा! रथको अङ्गबाट नाम रहेको तिमीलाई……यसले सोधेको; किन, को को भन्छ, त्यसोत होइन।—श्री केसर (विक्रमोर्वशी)।

नाउँ(नाम) राख्नु—(१)= कीर्ति राख्नु। सिद्ध गर्‍यौ तिमिले, नाम राखि दीयौ। डठी मर्ने हरूको, धर्म ठुलो लीयौ॥—शिखरनाथ (गंगामाहात्म्यको सवाई)। उनलाई विश्वास थियो कि एडिसनले ठूलो भए पछि हाम्रो नाउँ राख्नेछ।—जितेन्द्र (आधुनिक आविष्कार)। (२)= नाउँ निश्चित गर्नु। यो केटीको के नाउँ राख्यौ? 'सरस्वती' नाम ता राखुँला, गाली गर्दा 'मूर्खी सरस्वती' 'चोर्नी सरस्वती' भन्दा पाप लाग्दैन?—बालकृष्ण (अन्धवेग)। सागर्मा पनि हेर सेतु बलियो बाध्याँ र सागर् तर्‍याँ। रामेश्वर् भनि नाम राखि शिवको स्थापन् किनार्मा गर्‍याँ॥—भानुभक्त (रामायण)। उनले आफ्ना काल्पनिक पदार्थहरूलाई 'मूल तत्व' भन्ने नाम राखे।—जितेन्द्र (आधुनिक आविष्कार)। हुन त ज्वाईं गरीब र सरीब भनेर अनेक परिका नाउँ राख्थ्यौ अरे, तर गरीब भए पनि आज सम्म कसैका घरमा पोल्टो थाप्न गएको छैन।—गुरुप्रसाद (कथा कुसुम)।

नाउँ(नाम) लिनु—(१)= नाउँ काढ्नु। बाबू! कवित्व कविको बुझियो तमाम। भैगो, नल्यौ ति कविको अव फेरि नाम॥—लेखनाथ (सत्यकलिसम्वाद)। मेरो नाम लिए पछि त खुशीले उफ्रिन् कि?—रुद्रराज (चप्पा काजी)। पैले आठ दश दिन त चामे गौंथलीको नाउँ लिंदा पनि झम्टला भने जस्तो गर्थ्यो।—गुरुप्रसाद (कथा कुसुम)। (२)= नाउँ चोर्नु (को कम प्रचलित रूप)।



नाउँले बिक्नु— = बयान चलेको हुनाले पत्यार पार्नु। त्यो मान्छे नाउँले मात्र बिकेको हो, भित्र त तातो छारो केही छैन।

नाकका चालले— = चुइँक्क परेर। कस्को गर्नु दुहाइ तेस् बखतमा यै नाकका चालले। पर्ला मान्नु न मानि सुक्ख त कहाँ होला कउन् रीतले॥—मोतीराम (उषा चरित्र)।

नाक काटेको र सिंगान पुछेको थाहा नपाउने— = हुर्मत गएको र रहेको चाल नपाउने। तिमी त नाक काटेको र सिंगान पुछेको थाहा पाउँदा रहेनछौ, किनभने कालुले तिमीलाइ त्यहाँ भर्ना गरिदिनाले जर्साहैबकहाँ घुस्न नदिएको पत्तै पाएनौ।

नाक काट्नु— = हराएर वा परास्त गरेर लज्जित पार्नु। हो, भाउज्यूको नाक काट्न शक्तछ्यौ, जाऊँ यही गरौं।—चन्द्रलाल (विषवृक्ष)। तैंले लाएको बार हेर्, धनेले लाएको बार हेर्—उसले त तेरो नाकै काटिदियो।

नाकको सोझो— = कुना काप्ची वा वरपर होइन। माथितिरको जालो जस्ताको तस्तै छ, नाकको सोझो कुचो लायो, भो!

नाक घोक्र्याउनु, घोक्रिनु— = दिमाकले फुल्नु, फुर्फुरिनु, (फूर्तिले नाक फुलाउने, फुल्ने हुनाले)। रामे छोरा पाउँछु भनेर नाक घोक्र्याइरहेको थियो, छोरी पाउँदा त खिस्रिक पर्‍यो।

नाक चुमेर— = करैसित। नाक चुमेर त्यो काम नगरी सुख पाउनेछैन।

नाक चुल्ठो (कान) काट्नु— = स्वास्नीमान्छेलाइ गरिने सजा वा बेइज्जतीको रूपमा (अहिले यसको चलन हरायो)। लक्ष्मणले सुर्पनखाको नाक कान काटेर पठाइदिए।

नाक चुहिनु— = नाकको टुप्पो वा नाथ्री केही तल आउनु। नाक चुहिएकोलाई सुगाठुँडे पनि भन्छन्।

नाक चेप्र्याउनु—यो भावभङ्गी-

ले घृणा वा नफ्रत जाहेर गर्छ। ·····नार्सिसस एक ढङ्गीका थिए, आफूलाई कसैले प्रेम गरेको देखेर **नाक चेप्र्याउँथे**।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथा-संग्रह)।

**नाक छोडी कान, कान छोडी नाक**—(१)=एउटा न एउटा रोगले कहिले नछोड्ने, कहिले केही कहिले केही रोग लागिरहने। **नाक छोडी कान, कान छोडी नाक**, बूढा ससुरालाइ कहिले आराम नहुने भयो। (२)=एक काम सिद्धिएको छैन अर्को काम थ्याइलाग्नु। रामेलाइ फुर्सद भनेको छिनभर छैन **नाक छोडी कान, कान छोडी नाक** भइरहेछ।

**नाक ठाडो हुनु**—=इज्जत रहनु। हजूरबाट एउटा सुबिदारी निगाह भयो भने त दाइभाइको अगाडि मेरो **नाक ठाडो** भइहाल्छ नि।

**नाक थाप्नु**—=अर्कालाइ भनेकोमा आफैलाई हो भन्ने संझी उत्तर्सिनु। मैले त बूढालाइ पो भनेको थिएँ तिमी **नाक थापेर** किन बोल्न आयौ?

**नाक देखाउनु**—(१)=इज्जत राखेर देखापर्नु। कान्छोको कुरा सुनेर छोरालाइ यसरी अन्याय गर्‍यौ भने दाज्यूभाइको अगाडि कसरी **नाक देखाउँछौ**? (२) साधारण अर्थ। डाक्टरलाइ **नाक देखाऊ**।

**नाक फर्कनु**—(१)=नाक छोटो हुनु वा टुप्पो माथि फर्कनु। अक्सर मिमहरूको **नाक फर्केको** हुन्छ। (२)=नाक फर्काउने सजा पाउनु। अघि मात्र **नाक फर्केको** मान्छेले हामीलाई गिज्याउन लाज छैन!

**नाक फर्काउनु**—=सजाको रूपमा नाकको टुप्पा माथितिर फर्काउनु। लुगा लाउन नजान्ने मान्छेलाइ **नाक फर्काइदे**।

**नाक फाल्नु, जानु**—=लाजै मर्नु पार्नु वा हुनु, इज्जत गुमाउनु वा गुम्नु। पुस्तानपुस्तादेखि जहान बच्चा बढदै आएका आफ्ना करियाहरूलाई पनी पाल्न नशके **नाकै गयो** भन्छन्। —श्री ३ चन्द्र (अमलेख-भाषण)। वाणासुर् पनि भन्छ क्या भनु म ता मेरो त **नाकै गयो**॥ —मोतीराम (उषा चरित्र)। यस पाला पनि फेल भएर त बाबुको **नाकै फालिस्**।

**नाक फुट्ला जस्तो**—=अचाक्लि गन्हाउने। कसले त्यहाँ मरेको कुकुर फ्याकिदिएछ, गयो कि **नाकै फुट्ला जस्तो** हुन्छ।

**नाक फुरा(ला)उनु**—(१)=अभिमान वा हर्ष देखाउनु। घोडदौडमा पहिला भएँ भनेर कृष्णराज **नाक फुरा(ला)इरहेछ**। (२) साधारण अर्थ। **नाक फुराउने** बानी गरेपछि नाक ठूलो हुन्छ।

**नाक बङ्ग्याउनु**—=नाक चेप्र्याउनु।

**नाक भईँमा राखेर**—=वशीभूत भएर वा कायल भएर। अघि मैले डाक्ता आउन्न भन्थिस् अहिले बाले डाक्नुहुँदा त **नाक भईँमा राखेर** आउनुपर्‍यो कि?

**नाकमा गु[हु] लाग्नु**—=बेइज्जती हुनु, लाजै मर्नु हुनु। **नाकमा गु[हु] लागेको** पत्ता छैन, अझ हाँस्छौ।

**नाकमा ठेस (ठोस) लाग्नु**—लज्जित हुने गरी ठक्कर खानु। नबुझीकन बोलेपछि त्यसरी **नाकमा ठेस लाग्छ**।

**नाकमा ठेस लाग्ने**—(१)=ज्यादै ठाडो (उकालाको बारे)। त्यस्तो **नाकमा ठेस लाग्ने** उकालामा लट्ठी नभई चढ्न सकिन्न। (२)=लज्जित गराउने। त्यसरी **नाकमा ठेस लाग्ने** काम कसरी गर्ने?

**नाकमाथि बेसरी**—=लोप्पा। अझ घमण्ड गर्छ, देन **नाकमाथि बेसरी**!

**नाकमा नत्थी (बल्छी) लाग्नु**—=करमा परेर स्वीकार गराउनु, नत्थ्याउनु। मलाइ त अदालतमा भर्ना हुन मन थिएन, के गर्नु **नाकमा नत्थी लाग्यो**।

**नाक मुख देखाउनु**—(१)=देखापर्नु। कोठैमा बसिरहन्छे, **नाक मुखै देखिदैन**।—रुद्रराज (रूपमती)। सीताराम कता गए छन्, **नाक मुख नदेखाएको** महीना दिन भयो! (२)=ढाँचा पारी

अगाडि पर्नु। यो बदमास्नीलाइ त सन्तबहादुरलाई नाक मुख देखाउन पाए भइहाल्छ, कामसाम गर्नुपर्दैन !

**नाक राख्नु, रहनु**—=इज्जत वा हुर्मत थाम्नु, नजानु। प्रभु मेरो झुपडीमा सवारी होइबक्सिनाले मेरो नाक रह्यो।

**नाकवरिपरि बोल्नु**—=आफैले मात्र सुन्ने गरी बोल्नु। अलि ठूलो स्वरले भनन, नाकवरिपरि बोलेर कसले सुन्छ ?

**नाके पेच लाग्नु**—=नाकमा नत्थी लाग्नु। के गर्नु नाके पेच लागेपछि नगरी सुख पाइएन, गरियो।

**नाके स्वर**—=रुघा लागी नाक बन्द हुँदा निस्कने जस्तो स्वर। तिमीलाइ रुघा लाग्यो क्यारे, नाके स्वर छ नि ?

**नाङ्लो जत्रो छाती हुनु**—=अत्यन्त हर्ष लाग्नु। अरूको अगाडि तैंले नाउँ कमाएर आउँदा मेरो नाङ्लो जत्रो छाती भयो।

**नाडी(री) निमोठ्नु**—=पाखुरा निमोठ्नु।

**नाडी(री) हेर्नु**—=नाडी छामेर त्यसको चालबाट बिरामीको अवस्था वा रोगको अनुमान गर्नु। हाम्रा वैद्यहरूको जस्तो सूक्ष्म हिसाबले नाड़ी हेर्ने चलन डाक्टरहरूको हुँदैन।—राममणि (सह्यार-सुसार-संभार)। आयषा पलङ्मा बसेर आफ्ना हातले पंखा हाँकी रहेकी थिइन्, हकीम साहब छिन छिनमा नाड़ी हेरि रहेका थिए।—शिवप्रताप (दुर्गेशनन्दिनी)।

**नाता टुट्नु, जोड्नु**—(१)=आवत जावत, लेन देन, इत्यादि बन्द हुनु, शुरू गर्नु। तिमीले अधर्म बोलेको हुनाले तिमीसितको नाता टुट्यो, अब तिम्रो घरमा खुट्टा हाल्दिनँ। (२) साधारण अर्थ। बाबु आमा सबै नाता घरमा रहदा थिए, जब जङ्गलमा आयौ नाता संसारको टुट्यो,....।—बालकृष्ण (ध्रुव)। बहिनी मर्दैमा तपाईसँग मेरो नाता टुट्छ र ? (३)=मर्नु (यस अर्थमा 'जोड्नु' हुँदैन)। अब मेरो संसारसँग नाता टुट्ने वेला भयो।



**नाता तोड्नु**—(१)=संबन्ध छुटाउनु। मलाई गरज पर्दा उधारो दिएन उसैले त्यो साहूसंग नाता तोड़ें। (२)=साहिनु पर्ने मानिससित तोडिम गर्नु। चुक्ती सुनी युवतीको निजजन्म-दाता। माता पिता सित्त पानी सब तोडि नाता।—लेखनाथ (सत्यकलिसम्वाद)।

**नाथ्री फुट्नु**—=नाकमा ठक्कर लागी या अरू कुनै कारणले रगत बग्नु। ए हजुर ! नाथ्रो पनि फुट्यो, ए हजुर ! सारा रगताम्य भैशक्यो।—भीमनिधि (सहनशीला सुशीला)। नाथ्री फुट्ता नाकको डँडाल्नीमा अँगार घोटेर लायो भने रगत टप्पै थामिन्छ।

**नानीको** *ता*(पा)**ईँ**—=खूब काम गर्छु भन्ने घमण्ड। हेर्छू पाजि म नानिको अनि पछी मार्छू म टूक्टूक् गरी॥—मोतीराम (प्रह्लाद भक्ति कथा)। एक पल्ट गुलियो चटाइदिएको त निकै उफ्रन्छौ ए! हेरूँन त, नानीको ताइँ !—रुद्रराज (चप्पाकाजी)। यस पालि त हेरौं नानीको तांइ।—बोधविक्रम (दन्त्यकथा)। देखुँला नानीको ताईँ (हेर)।

**नानीमाथिको राती गेडी**—=ज्यादै प्यारो मान्छेलाई प्रयोग हुने। आजकल सानु भाइ आमाको नानीमाथिको राती गेडी भइरहेछ।

**नाफा खानु**—=किन्न दिने मानिसलाइ, थोरै मोल परेकोमा धेरै देखाई (किनिदिने मानिसले) बीचमा दाम पैसा चट्काउनु। कति नाफा खाँदा हो ! साना बाज्येलाई संघार पार्‍यो।—रुद्रराज (रूपमती)।

**नाफा झिक्नु**—(१)=नाफा खानु। (२)=फारो गर्नु। हेर हामोले खर्च गरिदिंदा ४४ रुपियाँ नाफा झिकिदियौं। (३)=नाफा गर्नु। हस्तेले गुलुप बेचेर वर्ष दिनमा निकै नाफा झिक्यो।

**नाभि काट्नु**—=नाल बेढाउनु। जन्मेको ३ दिन भयो अझ नाभि काटेको छैन ?

**नाम**—='नाउँ न गाउँको' बाहेक 'नाउँ' भएका वाक्यांशमा 'नाउँ'

को बदला 'नाम' हालेर प्रयोग गरे पनि हुन्छ, तर 'नाउँ' जति 'नाम' प्रचलित छैन ।

**नाल बेढाउनु, काट्नु**—(१) = साल र बालखको नाभि जोड्ने नलीलाइ नाभिपट्टि चार अङ्गुल छोडी काँचो धागाले बाँधी काटेर छुट्याउनु । **नाल बेढाएपछि** सुत्केरीलाइ छुन हुँदैन । (२) = ('बेढाउनु', यस अर्थमा प्रयोग हुँदैन) घोडाको टापको बढेको किनारा ताछतुछ गरी छाँट्नु । नालबन्दीले घोडाको **नाल काट्छ** ।

**नालिस लाग्नु**— = अड्डाले उजुरी सुन्नु । समर्थवान् भइसकेको छ—यस्ताको **नालिस लाग्छ** रे ।—रुद्रराज (रूपमती)।

**नासो राख्नु**— = केही दिनको निंति जिम्मामा सुम्पनु (व्यक्ति वा वस्तु) । नभन्दै जाने बेलामा जिऊ आफ्नो वशमा न भएकी तिनीले आफ्नो वशमा भएको मन छातिको कम्पले जनाएको लामो शास द्वारा ममा **नासो राखे** झैं लाग्यो । —श्री केसर (विक्रमोर्वशी) ।

**निकासा दिनु, हुनु**— = जवाफ दिनु वा हुनु, आदेश दिनु, (अखत्यारवालाले; प्रायः अड्डाको बोली) । आज तिम्रो कुरा बिन्ती त पर्‍यो तर केही **निकासा भएन** ।

**निकै हुनु**—(१) = अज्ञान वा सरलतामा अपत्यार गर्दा प्रयोग हुने । मैले त तपाईंलाइ पर्नै गरेर केही भने जस्तो त लाग्दैन ?—हो, तिमी **निकै** छौ । (२) = बेस हुनु । नानी कस्तो, **निकै छन्** ?

**निको गर्नु**— = मायाँ गर्नु । कान्छी आमाले मलाई **निको गर्नु** हुन्छ ।

**निको मान्नु, लाग्नु**—(१) = असल मान्नु, लाग्नु । मलाई त नजानुभन्दा जानु **निको लाग्छ**, है । (२) = रुचाउनु, मन पर्नु ।....के बेर प्रजाहरूले **निको मानोइनन्**; त्यसैले सवारी होओस् जाऔं ।—श्री केसर (विक्रमोर्वशी) । मलाई फतक्क गलेको आँप **निको लाग्दैन** ।

**निको रङ्गको हुनु, देख्नु**— = असल ढङ्ग हुनु, हुन्छ भन्ने ठान्नु (अकरणमा) । **निको रङ्ग देख्दिन** ए श्यामेदाई ! लौ ! बा ! आफै मात्र रसरङ्गमा डुब ।—रुद्रराज (चप्पा काजी) । म त तिम्रो बाको **निको रङ्ग देख्तिनँ**, एक पटक घाटे वैद्यलाइ ल्याएर सल्लाह गर ।



**निच मार्नु**— = हेलचक्र्याइँ गर्नु, वास्ता नगर्नु । ब्रह्माले बरको सुनेर अहवाल् मन्मा बिचार् क्यै भयो । **नीच् मारी** मनमा दयालु हुन गै बर्दान मर्जी भयो ॥ —मोतीराम (प्रह्लाद भक्ति कथा) । धेर भो प्रभो ! **नीच मारनू** योग्य छैन लौ पाप हर्नुहोस् ।—धरणीधर (नैवेद्य) ।

**निदाएको बेलामा** *पाउ दापे* झैं (**गोडा मिचे जस्तो**)—थाहा नपाई खेर जाने चाकरीलाई दृष्टान्त दिंदा ।

**निद्रा कचमचिनु**— = बीचबीचमा बिउँझनपर्नाले लगातारको निद्रा नपाउनु । आज राती छोरीलाइ संचो नभएर उठ्नुपर्‍यो उसैले मेरो **निद्रा कचमचियो** ।

**निद्राको पूरी**— = ज्यादै निद्रा लाग्ने । दमना **निद्राको पूरी** छ, उसलाइ सुत्न पाए भैगो ।

**निद्रा खुल्नु**— = बिउँझनु । पल्लो कोठामा केही गरुङ्गो चीज दुङ्ग गरी खसेको अवाजले रनेको **निद्रा खुल्यो** ।—ग्रन्थकार (कथा कुसुम) ।

**निद्रा पर्नु**— = निदाउनु । बिरामीलाइ आज त **निद्रा पर्‍यो** रे । **निद्रा पर्‍यो** ? —मुमा ! कस्तो शून्य निद्रा ! अवश्य यो कालको भाइ हो ।—बालकृष्ण (ध्रुव) । अब त्यस पापीको मनमा चाइने तिमीहरुलाइ पनि **निद्रा पर्‍यो**, चाइने लाहुरे पनि निदायो भन्ने पक्का भए पछि उठेर लाहुरेलाइ छप्कायो ।—ग्रन्थकार (कथा कुसुम) ।

**निद्रा मार्नु**— = निद्रा रोक्नु, थोरै समय मात्र सुत्नु । **निद्रा मारी मारी** पढेअनुसार ज्ञानवीर पास भएछ ।

**निधारमा गाँठो पार्नु**— = रिस उठेको जनाउने भावभङ्गी निकाल्नु । अलिकति बढ्ता काम गर्नपर्‍यो

कि चमेलो निधारमा गाँठो पार्छौं ।

*निमक*(निमेक)को **सोझो गर्नु वा चिताउनु**—=जसको जागीर, दाना वा ज्याला खाएको छ उसको असल गर्नु, होस् भन्ने ठान्नु ( निमक=नून ; निमेक =ज्याला ) ।....जुन वेला जहाँ जुन काम परिआयो तहाँ गई निमकको सोझो चिताई जहाँ जुन ठाउँमा गए पनि हाम्रो फौजले बहादुरी देखाई मुलुकको गौरब बढाएका छन् ।—श्री ३ जुद्ध (१९९८ जन्मोत्सवको स्पीच) । निमकको सोझो गर, तर सत्य बोल, झुठो नबोल । —भवानी (यौवनको आँधी) ।

*निमक* ( निमेक ) **खानु**—=खानादाना वा ज्याला पाउनु (शब्दार्थलाइ माथि हेर) । जसको निमक खाएको छ उतैपट्टि लाग्नुपर्छ ।

*निम(मे)क* **सझनु**—=निमकको सोझो गर्नु (दृष्टान्तलाई 'सोझो चिताउनु' मा हेर) ।

**नियम बाँध्नु**—=स्थिति, रूल बसाल्नु । यसमा हाम्रो मुलुकको परिस्थिति र आमदको विचार गरी बाँधी बक्सेको नियमको तपसीलवार यही हो :—श्री ३ जुद्ध (१९९८ जन्मोत्सवको स्पीच) । बिहान बिहान आधा घण्टा हिंड्ने नियम बाँधेको छु ।

**निराला गफ**—=अपूर्व वा पत्याउन नसकिने कुरा । सेते खत्रीको निराला गफ सुनेर को दङ्ग परोइन !

*निरा(ला)हार* **बस्नु**—=पानी-समेत पनि नखाई बर्त बस्नु । ....सात दिनसम्म त्यस नदीको किनारमा निराहार बसी ती फेरि हरिलो भरिलो पृथ्वीमा फर्के ।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह) । गुलाफ दी त निलाहार बस्नुभएको छ ।

**निर्वाह चल्नु**—(१)=जीवन धान्नु ।....अघी हाम्रा पहाड-तरफ उबजेका कपास-बाट कपडा बुनी आफ्नो निर्वाह चलेको थियो,....।—श्री ३ भीम (नगर-प्रदक्षिणोत्सवको वक्तृता) ।.... परिश्रम साथ उद्योगधन्दातिर लागे त्यसबाट बढी आर्जन



गरेको धनले आफ्नो निर्वाह चलाई थोड बहुत जो सकिन्छ सांच्दै जान सकिने भई देशमा उद्योग बढ्ने....। श्री ३ जुद्ध (भूकम्प-भाषण) । (२)=साध्य हुनु, काम चल्नु । परदेशमा एउटा भान्छे बाहुनले कसरी निर्वाह चल्ला ?

*निहुँ*(निउँ) **खोज्नु, थाप्नु**—(१)=(ठोक्न, रिस उठाउन, झगडा गर्न, इत्यादि) बहाना झिक्नु ( तलका अर्थहरुमा 'थाप्नु' प्रयोग हुँदैन ) । निहुँ दुर्बलको छैन, बलवान्को बलै निहुँ !-शक्तिमान् गर्छ अर्घेलो ! निहुँ खोजेर हिंड्छ जो त्यो नीच हो, विधर्मी हो, कुकर्मी हो, कुवाद हो !—बालकृष्ण (प्रह्लाद) । अब त तिनै मामाका छोरा छोरीहरूले पनी निहुँ खोजी २ कन फहराउँथे । —रुद्रराज (रूपमती) । राम्रा मुखले बोल्यो भने पनि बाङ्गा-बाङ्गा कुरा झिकेर निउँ खोज्थो । —गुरुप्रसाद (कथा कुसुम) । ....उनी द्रव्यशाह सँग निहुँ खोज्न थाले ।—सूर्य्यविक्रम (द्रव्यशाहको जीवन चरित्र) । तपाईंलाइ कुट्न मन लागे कुट्नुहोस्न किन निहुँ थाप्नुहुन्छ ? (२)=जोरी खोज्नु । कैंची, दिन्नस् त, निहुँ खोज्छस् ? (३)=(रोग) लाग्न जम्का गर्नु । हिजोदेखि रुघाले निहुँ खोजिरहेछ ।

*निहुँ*(निउँ) **गर्नु**—=बहाना गर्नु । ज्योतिषीले भनेको किला गाड्ने बेला भये पछी दिशा जाने निहुँ गरी........पानीमा हाम फाली काल्‌ जैसीले आफ्नू ज्यान जोगायो ।—सूर्य्य विक्रम(पृथ्वी-नारायण शाह) ।

*निहुँ*(निउँ) **झिक्नु**—=निहुँ थाप्नु । घर लगेर फेरि निउँ झिक्दै कुट्दै गर्नलाई ।—गुरुप्रसाद (कथा कुसुम) । आज काल ज्वाइँ बाजेको मन पनि बिग्रेको जस्तो छ, एउटा निउँ झिकेर झारफूक पनि गराउनु पर्‍यो ।—प्रेमराज (ससुराली) ।

**नियत सफा राख्नु**—=चोखो मनसाय हुनु । गौंडामा गएर नियत सफा राख्यौ भने तिम्रो दर्जा बढ्नेछ ।

**निरक्षर भट्टाचार्य**—=फुट्टी न-पढेको मान्छे (लाई भन्ने बोली)। ''''चाहे दिग्गज महा महोपाध्याय होस्, चाहे नोरक्षर भट्टाचार्य होस्, पत्नीको धर्मै सेवा र सतीत्व, प्रेम र भक्ति —त्यस्मैको आधारमा हिन्दू नारीको जीवन बित्तछ।—रुद्रराज (प्रायश्चित्त)।

**नीद टुट्नु**—=निद्रा खुल्नु (को काम प्रचलित रूप)। घाम नझुल्कुञ्ज्याल सम्म कसैले कस्तै टाउकै फोरे पनी कोठाबाट निस्कने हो र?—उनको नींदै टुट्तैनथ्यो।—रुद्रराज (रूपमती)।

**नील जम्नु, नीलडाम पर्नु**—=रगत जमी छालामा नीलो दाग देखिनु। वैद्यले उजिरलाइ नील जम्ने गरी कुटेछ।

**नीलो कालो हुनु, मुख लाउनु**—=डर वा रिसले। सिस्नु ले भन्नासाथ सानी छोरी नीलो कालो भई। नोकरले अपमान गरेको देख्ता बस्नेत काजीले नीलो कालो मुख लाए। एक बाजि झपार्दैमा नीलो कालो मुख भइहाल्यो।

**नूनको सोझो गर्नु वा चिताउनु**—=निमकको सोझो'''इत्यादि (हेर)। ''''नूनको सोझो चिताई सरकारको जय मनाई हरेक कुरामा बुद्धि पुऱ्याई काम गर्ने हुनाले उनको ठूलो नाम थियो।—रुद्रराज (चप्पाकाजी)।

**नून खाएको कुकुरा जस्तो**—झोक्राइरहने मानिसलाइ दृष्टान्त-दिने बोली। यहाँ तेसै नून खाएको कुकुरा झैँ झोक्रिन वा उँघन पाइँदैन।—लेखनाथ (लक्ष्मी-पूजा)। यारमण्डली नून खाएको कुकुरा जस्तै झोक्राएको थियो।—रुद्रराज (चप्पा काजी)।

**नून खानु**—=निमक खानु। मालिकको नून खाएको छु। उनको हरतरहबाट सोझो चिताउनुपर्छ।

**नूने जाउलो**—=बिरामीले खाने नून र अदुवा मात्र हालेको जाउलो। जुलाब लिएको भोलिपल्ट नूने जाउलो खाएथें।

**नूने ब्याज**—=एक रुपियाँको महीनाको एक माना नून लिने, म्याद नाघे ब्याज डबलिंदै जाने।



**नूर गिर्नु**—(१)=अनुहार बिग्रनु। यो कुरा सुन्ना साथ चक्र बहादुर काजीको चेहरा उड्यो—नूर उत्तिनै खेरि गिरिहाल्यौ।—रुद्रराज (चप्पाकाजी)। यसको नूर गिऱ्यो, अवश्य यसले चोरेको हो। (२)=तेजोबध हुनु। दाइचाहिंलाइ देख्नासाथ हनुमन्तेको नूर गिरिहाल्यो।

**नेकी बदी लेख्नु**—=यसले असल गरेको छ, यसले खराब गरेको छ भन्ने कैफियत लेख्नु (प्रायः पजनीको कागतमा अख्तियारवालाले)। हाकिमले नेकी बदी लेख्ता मेरो के लेखे होलान्!

**नेटो काट्नु**—(१)=आँखाले भेटिने फासला पार गर्नु। चोरले नेटो काटिसक्यो अब भेट्टाउन त्यत्तिकै हो! (२)=हद नाघी पर पुग्नु (कुरा)। बाठा मानीसका कुराले नेटो काट्यो, अब हामीलाई मन-चोरीको बात लाग्न आँट्यो।—लेखनाथ(लक्ष्मी-पूजा)।

**नेत्र बल्नु**—=इर्ष्याले जल्नु (यहाँ नेत्रको सट्टा आँखा, नजर, इत्यादि प्रयोग हुँदैन)। दाइलाइ एउटा बिस्कुट बढ्ता दिंदा तेरो नेत्र बल्यो, हगि?

**नेपालको पानी नखानु**—'कानमा कौडी झुण्ड्याउनु' जस्तै गरी प्रयोग हुने। तिमीलाइ बाइस्कलमा जितिन भने नेपालको पानी नै खान्नँ (अर्थात् नेपालमा बस्तिनँ)।

**नेल ठोक्नु वा हाल्नु**—=गोडामा फलामे कडा लाइदिनु (सँजाको रूपमा)। चोरी मुद्दामा नेल हालेछन्।

**नेवार्नीले तान लाए जस्तो**—बेग्लै ठाउँमा बसेको मानिसका बीचमा सवाल जवाफ धेरै पटक ओसार्दो दृष्टान्त दिने बोली। नेवार्नीले तान लाए जस्तो कति पटक ओहोरो दोहोरो गरूँ, उसले कुरा छिनिहाल्यो नि?

**नेवार्नीले पसल थापे[को] जस्तो**—अलपत्र पारी मालहरू छरिराखेकोमा दृष्टान्त दिने बोली। ठाउँ ठाउँमा माल थान्को लाइदेन, के नेवार्नीले

पसल थापेको जस्तो पारि-राखेको ?

**नैवेद्य लाउनु**—=(देउतालाई) फलफूल रोटी चढाउनु । नैवेद्य यतिको लगाइ सकियो त्यो सब् उडीगैगयो ॥—चक्रपाणि (श्रीमछिन्द्र नाथको कथा) ।

**नोक्सान उठाउनु**—( १ )= नोक्सान सहनु (हिन्दीबाट) । यिनै कारणबाट जर्मनीलाई यो काममा धेरै नोकसान उठाउनु पर्‍यो ।—जितेन्द्र (आधुनिक आविष्कार) । (२)=नोक्सानी उपर गर्नु । खसी किन्दा परेको नोक्सानी हामीसित उठाउने सुर छ कि ?

**नौनी झिक्नु**—=मही मथी नौनी तयार गर्नु ।

**न्याउरी मारी पछुतो (पछुताइ)**—=विचार नपुर्‍याई काम बिग्रिसकेपछिको पश्चात्ताप (न्याउरी मूसाले सर्पलाइ मारी आफ्नो मालिकको छोरो बचाएकोमा उल्टो न्याउरी मूसाको मुखमा रगत देख्ता त्यसले छोरो मार्‍यो होला भन्ने अड्कल गरी भित्र हेर्न नगई न्याउरी मूसालाइ मार्ने मालिकचाहिंको कथाबाट) । एक पटक जोरफोर गरेर मात्र कुटिबक्स्योस् नत्र न्याउरी मारी पछुताइ होला ।

**न्यासिचा पार्नु**—=लोलोपोतो पार्नु, चिप्लो घस्नु । भन्ने वेलामा आँखा देखेनौ, अहिले केलाई न्यासिचा पार्नुपर्‍यो ?

**न्यारान [देखि]को बल झिक्नु**—=छैंटीको बल झिक्नु (हेर) । ····गोहीको मुखमा भाँडा डोरी यो हातमा गरी थियो ता निरहेको जो झिकी न्यारानको बल, गोहीले च्वाट्ट छाड़ेर भाग्यो, त्यो हुत्तिँदै लड्यो पछिल्तिर जता अर्को गहीरो पोखरी थियो ;····। —बालकृष्ण (मुकुन्द इन्दिरा)। बायाँ हातले पौडँदै पौडँदै तलाउको माझमा पुगी आफ्नो न्यारानदेखिको बलले त्यो फटिकको खम्बामा गदा बजारे । —बोधविक्रम (दन्त्यकथा) ।



# प्

**पकुवा लगाउनु**—=तन्दुक बनाउनु । पकुवा लगाउन माफिकको मासु रहेछ ।

**पक्क पर्नु**—=टोलाउनु । इन्लाइ हेरि कन मुस्मुसु कोहि हास्छन् । कै कै कुना कुनि उभी कन पक्क पर्छन् ॥—मोतीराम (उषा चरित्र) ।

**पक्की घर, सडक, रङ, सेर**—यिनीहरूमा 'पक्का' प्रायः प्रयोग हुँदैन ।

**पक्ष लाउनु**—यो मेरो यो तेरो भनी दिनखानालाई छुट्याउनु । ठूलो मानिस भएर पनि यसरी नोकरलाइ पक्ष लाउनु कसरी ठीक होला ?

**पखेटा लाग्नु**—(१)=खुट्टा लाग्नु, हराउनु । मेरो शीशाकलमको त पखेटा लागेछ । (२)=उड्न सक्ने हुनु (चराको बारे) । अघि मात्र फुलबाट निस्के जस्तो लाग्छ, यो परेवाको बचाको कति चाँडो पखेटा लागिसकेको !

**पगरी बाँध्नु**—( १ )=(चाँदतोडाको किसिमले जनाएको) दर्जा पाउनु । आज सुनको पगरी बाँध्नेसम्मलाई उर्दी छ । (२)=फेटा गुथ्नु (यस अर्थमा आजकल उस्तो प्रयोग हुँदैन) ।

**पघा लाउनु**—=भाग्दा अल्झो होस् भनी लत्रने गरी पशुको घाँटीमा डोरी बाँध्नु । यो बदमाश बोकेलाइ पघा लाइदेऊन ।

**पङ्खा हम्कनु**—=पङ्खा डोलाउनु । मखना! तिमी पङ्खा हम्क ।—भीमनिधि (सहनशीला सुशीला)।

**पचका छुट्नु**—=( पन्यालो चीज ) जोडसँग निक्लनु । शिवदासको पिलो निचोर्दा त पीपको पचका छुट्यो ।

**पचका दिनु, हाल्नु**—=पचकाद्वारा ओखती आदि घुसाउनु । जीवराजकी छोरीलाइ ग्लिसरिनको पचका देऊ ।

**पच पार्नु**—=लिएको लियै पार्नु । जनकले मेरो किताब पच पार्‍यो ।

**पछिको बाटो हेर्नु**—=भविष्य-मा हुने फाइदाको ख्याल राख्नु । काहिला बालाइ नतोड, **पछि-को बाटो हेर्नुपर्छ** ।

**पछि परन्तु**—=कालान्तर[मा]। **पछि परन्तुको** पो मानिसले विचार राख्नु पर्छ ।—रुद्रराज (प्रायश्चित्त) ।

**पछि लाग्नु**—(१)=खेदो गर्नु । विमलालाइ मैले त केही गरेकी थिइनँ, बिनसित्ति मेरो **पछि लागिरहिछ** । (२)=देखा-सिकी गर्नु । अर्काको **पछि लाग्यौ** भने तिम्रो लेखको महत्त्व हुनेछैन, आफ्नो लेखमा मौलिकता देखाऊ । (३)=अनुसरण गर्नु, पीछा गर्नु । बुद्धि इन्द्रिय सबै, हुनेहुनामीकै **पछि पछि लाग्दछन्** ।—श्री केसर (विक्रमोर्वशी) । शङ्करका हिंड् छन् सबै **पछि लागि लागी** । तिन्ले पनि घुम्नु पर्छ, भिक्षा मागि मागी ॥—शम्भु-प्रसाद (शम्भु भजनमाला) । ठूलो मालिकको **पछि लागेको** हुनाले तिम्रो यस्तो उन्नति भएर आएको छ । (४)=पछिल्तिर हिंड्नु । त्यो मरेका मृगलाई उठाउना साथ त्यो पनी **पछी लागी** ।—लेखनाथ (भर्तृहरि-निर्वेद) ।

**पछि हट्नु**—(१)=(काम गर्ने इत्यादि) हच्कनु । त्यस्तै हामी-ले पनि उत्साह बढाई अगाडि बढ्नु पर्दछ, **पछि हट्नु** हुँदैन । —श्री ३ जुद्ध (भूकम्प-भाषण)। (२) साधारण अर्थ । अझ **पछि हटेको** भए तिम्रो खुट्टा फुस्कन्थ्यो ।

**पजनी गर्नु**—(१)=चंजा पंजा गर्नु । म आएपछि बाँडिहाल्थें नि तँलाइ यो मालको कसले **पजनी गर्नू** भन्यो ? (२) साधारण अर्थ ।

**पञ्च पखाल**—=(पन्यालो कु-राको बारे ; प्रायः पखाला लाग्दा प्रयोग हुन्छ) ज्यादै । तर्कारीमा **पञ्चपखाल** पानी हाल्न लागेपछि कसरी मीठो होस्! बासी मासु खाएथ्यौ नि, **पञ्च पखाल** झाडा लाग्यो कि ?

**पञ्च भलादमी**—=पञ्च। **पञ्च भलादमीले** भनेको कुरामा हिंड्नु वेस छ ।



**पञ्चम स्वर**—=सकेसम्म तीखो अबाज ।····केही बेर सम्म अ-रली **पञ्चम स्वर** पुऱ्याएर चिच्याउँदै कहालिएर रोई ।—बालकृष्ण (कथा कुसुम) ।

**पञ्च महापातक**—=किरिया हाल्दा प्रयोग हुने (गौहत्या, ब्रह्महत्या, स्त्रीहत्या, बालहत्या, भ्रूणहत्या गरेको महापाप) । तिम्रो वृत्ति हरिदिएँ भने मलाइ **पञ्च महापातक** लाग्ला ।

**पञ्चमीमा पाइला सारे जस्तो**—ज्यादै ढीलो हिंड्दा दृष्टान्त दिने बोली । रेलको सीटी लागि-सक्यो, अझ **पञ्चमीको पाइला सारे जस्तो** गरी हिंड्छौ ।

**पञ्चै बाजा**—कर्नाल, झ्याम्टा, टयाम्को, ढोलकी, दमाहा (बिहा इत्यादिमा नभई नहुने बाजा) । सानीको विहामा **पञ्चै बाजा** मात्र थियो ।

**पञ्जा खेल्नु**—=अर्काको एक हातका औंलासित आफ्नो एक हातका औंला जोल्टयाई निमोठ्न प्रयत्न गर्नु । मसित देब्रे हातमा **पञ्जा खेल्न** सक्ने कोही छैन ।

**पटके गयल**—=बीचबीचमा धेरै पटक परेको गयल । **पटके गयल** पऱ्यौ भने पजनीको कागतमा राम्रो देखिंदैन ।

**पटके चोर**—=एक पटक चोरी-मा पक्राउ खाइसकेको ।

**पट्टल बाँध्नु**—आँखा बन्द गर्नु । कोही काख-विषे राखी अग्निले पूर्ण अट्टल । योगी झैं परमा-ऽऽनन्दी बन्छन् **बाँधेर पट्टल** ॥ लेखनाथ (ऋतु-विचार) ।···· हेर्छत एउटा योगी **पटल बाँ-धेर** ध्यानमा मग्न भएको, एउटा केही चीजको पोको उसको सामुन्ने परिरहेको !—बोधविक्रम (दन्त्यकथा) ।

**पति भज्नु**—=पोइ तुल्याउनु (मन वा तनले) ।····जसलाइ उर्वशी र पृथ्वी दुवैले स्वयम्बर गरी **पति भजेका** हुन् (म) उही हुँ ।—श्री केशर (विक्रमो-र्वशी) ।

**पतिया लिनु, पाउनु**—=प्रायश्चित्तको पुर्जी लिई भात पानीमा चल्नु । अनजानमा भातमा परेको हुनाले शिवेले **पतिया पाउने** भयो

**पति राख्नु, रहनु**—=इज्जत

वा लाज बचाउनु, बच्नु । बिस्तामा जाने लुगै थिएन, तपाईंले ल्याइदिनुभएको फरियाले पति राख्यो । (२)= अप्ठ्यारो परेको अवस्था टार्नु, ठूलो काम दिनु । चटारो परिसकेको रहेछ मैले पठाएको चिठीले पति राख्यो ।

**पत्ता लाग्नु, लाउनु, पाउनु**—=कारण, ठाउँ, वा नाउँ थाहा हुनु, फेला पार्नु । सरकारले कसरी **पत्ता पाइबक्सियो** । —श्री केशर (विक्रमोर्वशी) । सबै चोर चोर भन्न थाले, तर रातको अन्धकारमा चोरको **पत्तै लागेन**,....।—बोधविक्रम (दन्त्यकथा) । त्यो नारायणको **पत्ता न लाई** अब छोड्दिनँ ; चुक्की कान्छी मुमाको यो उसैलाई म लाउँछु, दुखेको यो उसैलाई सुम्सुम्याउन लाउँछु । —बालकृष्ण (ध्रुव)। कालान्तरमा उनीहरूलाई यो तार खालि शब्दबाट उत्पन्न भएको बिजुलीका कम्पहरूलाई लैजाने चीज हो भन्ने **पत्ता लाग्यो** ।——जितेन्द्र (आधुनिक आविष्कार) । मेरी छोरीलाई लुकाइराखेको ठाउँ मैले **पत्ता लगाएँ** ।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह) ।

**पत्रुको भाउ**—(१)=चुनदाम ('बिक्नु' सित प्रयोग हुने) । **पत्रुको भाउमा** नबिक्ने मान्छे (अर्थात् साह्रै रद्दी मान्छे) । (२)=थोत्रो मालको दर । यी थोत्रा मालहरु **पत्रुका भाउमा** बेचेर एउटा गतिलो माल किन ।

**पथमा बस्नु**—=मुख बारेर रहनु । यसरी मुख छाडेर हुँदैन केही दिन **पथमा बस्नुपर्छ** ।

**पन्यूले खड्कुलो तान्नु**—खराब कामबाट आएको सानोतिनो कुराको लोभ गर्दा आफ्नो ठूलो कुरासमेत गुम्छ भन्ने जताउन प्रयोग हुन्छ ( जुवा जिती खट्टा भएको पन्यू किनिदिने छोराले 'जितेको बेलामा मैले तपाईंको खाँचो टारिदिएं, उसैले मैले हार्दा मदत दिनुपर्छ' भनी आमाचाहिंको खड्कुलोसमेत जुवामा होमेको कथाबाट) ।

**पयठ लाउनु**—=अचल वा जब्बर कुरामा अचेटेर (अर्को कुरामा) बल प्रयोग गर्नु । भित्तामा **पयठ लायौ** भने यो पेलु सर्छ कि ?



**पयमा लाग्नु**—=(अंक) को लहरमा लाग्नु (उमेरको बारे) । बा अस्तिदेखि साठीको **पयमा लाग्नुभयो** ।

**परत्र सुध्रनु**—=मरेपछि सुक्ख पाउनु । यस पालि महाकालीका तीरमा मैले सहस्र गोदान गरेको पुण्य तिनीहरूलाई दिन्छु, त्यस धर्मको प्रभावले तिनीहरूको **परत्र सुध्रियोस्** ।—श्री ३ जुद्ध (भूकम्प-भाषण) ।

**परम धाम जानु, पुग्नु**—(१)=मर्नु । तिम्रो बुवा त **परम धाम गएछ** । (२) साधारण अर्थ । पाप् ताप् साफभइ त्यो पुरुष विमल भै **पुग्ला परं धां** महाँ ॥—पद्मप्रसाद (श्रीमद्भागवत) ।

**परलोक हुनु**—=मर्नु (आदरार्थी) । बज्यैको खसम कहिले **परलोक हुनुभएको** ?—बालकृष्ण (कथा कुसुम) ।

**पर सर्नु**—(१)=नछुने हुनु । ठीक तीजको अघिल्लो दिन **परसरेर** बसिदिने, कस्ती नकचरी, लौ भन्नु होस् सबैले ? —रुद्रराज (रूपमती) । (२) साधारण अर्थ (यस अर्थमा सार्नु पनि प्रयोग हुन्छ) ।... बिना ब्याजमा चार वर्षको भाखा गरी सापट दिना निमित्त मोरु० ६० लाख रुपैंञा **परसारी** दिने काम पनि भयो ।—श्री ३ जुद्ध (भूकम्प-भाषण) ।

**परिपाठ लाउनु, पार्नु**—(१)=जान्ने वा बाठो हुनु (नगरोस् भन्ने इच्छा हुँदा अघिसरा भई गरेकोमा भन्ने) । मैले प्याण्टीलाइ छकाइराखेको थिएँ, गंगाले **परिपाठ लाएर** भन्न गइछ । (२)=बठ्याइँ झिक्नु । कस्तो **परिपाठ पार्न** जानेको !

**परी परी आउनु, परिआउनु**—=अघिल्लोमा 'दुक्ख वा सुक्खको संयोग' पछिल्लोमा 'दुक्ख वा दैवी' लोप भएका छन् ।....कहिले त्यस्तै **परी आयो** भने मिठो मसिनोको ख्याल छोडी स्वास्थ्यलाई हानि नगर्ने रुख्खा सुख्खा सादा चीज

जो पाइन्छ त्यै पनि आधा पेट् खाएर·····।—श्री ३ जुद्ध (भूकम्पभाषण)। नरुनुहोस्, नानी, रोएर के टाउकै फोरे पनि लेखिएको कुरा परीपरी आउँछ, पर्दछ, टर्दछ नानीले के कम सुसार गर्नु भएको हो र? —रुद्रराज (प्रायश्चित्त)।

**परेला बटारिनु**—=परेला जोल्टिनु (सातो जाँदा वा निद्रा नपाउँदा)। एकादशीको जाग्राम बसेको आज दिनभर **परेला बटारिरहेछ।**

**परै जाओस्, रहोस् वा राख्नु**—(१) ठूलो कुरालाई छुँदै नछोई सानै कुराको हकमा समेत आफ्नो भनाउ साँचो छ भन्ने देखाई आफ्नो उक्तिलाई जोड दिंदा प्रयोग हुन्छ। अरू कुरा **परै जाओस्**, रक्षामालामा मात्र कति चीज २ बस्तुहरू गुँथिएका थिए।—रुद्रराज (रूपमती)। यसरि किन बहुतै गर्दछस् सेखि धेरै। प्रभु कन त **परै राख्** जोरि छैनस् तँ मेरै॥ —भानुभक्त (रामायण)। (२) साधारण अर्थ।

**पर्ता पर्नु**—=बाँझो रहनु। यस पाला अलिकति जग्गा **पर्ता पऱ्यो।**

**पर्ती परे पचास**—=जे जस्तो होला। अहिलेको काम टरेपछि फेरिलाई **पर्ती परे पचास।**

**पर्दा खुल्नु**—(१)=गुप्त कुरा प्रकट हुनु। मुनियाँको **पर्दा खुलेदेखि** मलाइ माया लाग्न छोड्यो। (२)=शरम छोड्नु। हामीहरूको बीचमा **पर्दा खुलिसकेको छ**, गहना बालगिरी माग्न केही मान्दैनौं। (३) साधारण अर्थ। ठेटरको **पर्दा खुल्यो।**

**पर्दामा राख्नु**—(१)=उपरिया मर्दले जनानाको मुख देख्न नदिनु। हिन्दुस्थानका राजाहरू स्वास्नीमान्छेहरूलाइ अझ **पर्दामा राख्तैछन्।** (२)=छिपाएर राख्नु। तिमीसित केही कुरा **पर्दामा राखेको** छैन।

**पर्दा राख्नु, गर्नु**—(१)=खराब कुरा प्रकट हुन नदिनु, भेद छिपाउनु। हर्केले अझ त्यस कुरामा **पर्दा राखिछोडेको** छ। (२)=लाज मान्नु।



स्वास्नीमान्छे लोग्नेमान्छेसित **पर्दा राख्छन्।** (३)=दपनछपन गर्नु। हामीसँग के **पर्दा राख्छौ?**

**पर्म जानु, तिर्नु**—=(बालीनाली लाउँदा) ज्याला नलिई आफ्नो काम गरिदिएकोमा साटो फेर्न उसको काम गरिदिनु। आज जितमानकहाँ **पर्म जानु** छ।

**पर्सेको बोको**—=बलि दिनुअगाडि पानी छर्की जुरुक्क पारेको बोको; यसबाट (१) मर्न, झ्यालखान पर्न, आदि निश्चय भइसकेको व्यक्तिलाइ दृष्टान्त दिने, (२) जिरिङ्ग गर्दा दृष्टान्त दिने बोली। चामे त **पर्सेको बोको** भइसक्यो, झ्यालखानमा भोलि हाल्छन् कि पर्सि। यति तातो पानी हाल्दा पनि तिमी त **पर्सेको बोको** जस्तो हुन्छौ।

**पलट खानु, पल्टा खानु**—=उल्टिनु, हेरफेर हुनु। दैव-गतिले गर्दा त्यो मेरो तुच्छ बिचारले चाँडै नै **पलट खायो,**·····। —लेखनाथ (लक्ष्मी-पूजा)। तर तेस चिरस्मरणीय मुहूर्तमा मेरो विचार, मेरो सिद्धान्तले **पल्टा खाए।**—रूपनारायण (भ्रमर)। समयले **पल्टा खायो** उहिले जुङ्गा पाल्नामा गौरव मान्थे, अहिले खौरनामा।

**पलि(ले)सा पार्नु**—=मेजो पार्नु, बदला दिनु। त्यो पसलेले मलाइ एक रुपियाँ ठगेको थियो, यो लट्ठामा त्यसको **पलिसा पारें।**

**पलेंटी मार्नु, कस्नु**—(१)=दुबै खुट्टा मनि हाली पद्मासन गर्नु। **पलेंटी मारेर** बसन, किन असजिलोसँग बस्छौ? 'तिमी त्यहाँ बस' भनी राजकुमारलाई बस्ने ठाउँ खटाइदिई आफू पूजा गर्न भनी **पलेंटी कसे।**—बोधविक्रम (दन्त्य कथा)। (२)=धर्ना हाल्नु। अब मैले **पलेंटी कसें**, त्यति नलिईकन जाँदै जान्न।

**पशुपतिको हूल जस्तो**—तैं छाड् मै छाड् गर्ने घुइँचोलाइ दृष्टान्त दिने बोली। एक एक जना गरेर गए त भइहाल्छ नि किन **पशुपतिको हूल जस्तो गर्छौ?**

**पश्चिमबाट सूर्य उदाउनु** (घाम

लाग्नु)—(१)=असंभव हुनु। यस पाला तिमीले पास गर्नु त पश्चिमबाट सूर्य उदाउनु हो। (२)=धेरै दिनसम्म नआएको मानिस आउँदा गिज्याएर भन्ने बोली। ओहो! आज त पश्चिमबाट घाम लागेछ, कहाँबाट पाल्नुभयो? (३) धेरैसम्म नगरिरहेको काम गर्दा भन्ने। आज त पश्चिमबाट सूर्य उदाएछ ए, उजेलीले पनि सिंगार पारेकी!

**पसल उठाउनु**—(१)=पसल थाप्ने घर बनाउनु। रत्नबहादुरले त जुद्ध सडकमा **पसल उठाउने** रे। (२)=सारा माल बिक्री गरी पसल थाप्न छाड्नु। हर्षरत्नले नाफा भएन पसल उठाउँछु भन्थ्यो।

**पसल खोल्नु**—(१)=पसल थाप्न शुरू गर्नु। यहाँ औषधिको **पसल खोल्ने** कुरा छ। (२)=पसलको ढोका खोली गाहकको निमित्त तयार हुनु। सधैं म ९ बजे बिहान **पसल खोल्छु**।

**पसल थाप्नु**—(१)=माल छरेर राख्नु। के **पसल थापिराखेको**, काम सकिएपछि यी मालहरू थन्क्याइदेऊन! (२) साधारण अर्थ। दिनको एक रुपियाँ त **पसल थापेर** पनि कमाउँछु ए।

**पसीना काढ्नु**—=पसीना छिक्नु (यसबाट 'खूब परिश्रम गर्नु' पनि)। काढी 'तरक्क **पसिना** दिनरात डोको। बोके पनी उदरगर्त रहन्छ भोको॥—लेखनाथ (सत्यकलिसम्वाद)। नउ घण्टा पछि उ **पसिना काढेर** आइपुग्यो।—बालकृष्ण (कथा कुसुम)।

**पसीनाको कमाइ**—=परिश्रमको आर्जन।

**पसीनाले तर[बतर] हुनु**—पसिनाले निथ्रुक्क हुनु। त्यहाँसम्म पुगेर आउँदा पनि **पसिनाले जीउ तरबतर भइसक्यो**।

**पहरा दिनु, बस्नु**—=रखवारी गर्नु। सुन्तला पाक्यो, अब बगैंचामा **पहरा दिने** मान्छे खोज्नुपर्छ।

**पहरामा राख्नु**—(१)=हेरचाह गर्न पाले राख्नु। सेतेलाइ **पहरामा राखिदेऊ**, दलेको घरमा बिरामी छ रे। (२)=थुनुवामा राख्नु। यो बदमाशलाइ **पहरामा राख**।



**पहाड हुनु, पर्नु**—=साह्रै गाह्रो हुनु। तिमीलाई जाईको माला उन्न लाएको त **पहाडै भयो**।

**पहिचान काढ्नु**—=आनीबानी पत्ता पाउनु। तिम्रो मामासित दुइ दिन बसउठ हुँदैमा मेरो छोराले **पहिचान काढिसकेछ**।

**पहिलो नम्बरको**—=हद दर्जाको। **पहिलो नम्बरको** बदमासरहेछ।—भवानी (यौवनको आँधी)।

**पहेंलो घाम**—=सूर्य डुब्नुअगाडिको घाम (यसमा डुलाए केटाकेटीलाई भूत लाग्छ भन्ने चलन छ)। **पहेंलो घाममा** नानीलाइ बाहिर जान नदेऊ।

**पाँच औंला जोर्नु**—=मुखमा गाँस पार्नु। यहाँको निगाहले बल्ल **पाँच औंला जोर्नेसम्म** भएँ।

**पाँचदिने दाज्यू भाइ**—=तीनदिने दाज्यू भाइ (हेर)।

**पाँचमिल्दो हुनु**—=भाइसरह हुनु।····लोकको भनाइ हुन्छ, के गर्छौं। **पाँच मिल्दो हुनुपर्छ**।—भीमनिधि (सहनशीला सुशीला)।

**पाँचै औंला घिउमा हुनु, पर्नु**—=ज्यादै लाभैलाभ वा आनन्द हुनु। मावली गएपछि त कान्छको **पाँचै औंला घिउमा पर्छ**।

**पाइन चढाउनु, दिनु**—=धातुलाइ बराबर पोल्दै पानीमा डुबाउँदै कडा पार्नु। यो खुकुरीलाइ **पाइन चढाएदेखि** बिजुली भइरहेछ। (उपमा अर्थ) छल कपट त्याग्नु पर्ने पनि अरू कुराले होइन, बुद्धिलाई **पाइन चढाउन** मात्र हो।—रुद्रराज (प्रायश्चित्त)।

**पाइला हाल्नु**—=भित्र पस्नु, टेक्नु। **पाइला हाले** पापै लाग्ला जस्तो गरी ए!—रुद्रराज (रूपमती)। जीवनमा संधैका निमित्त दुःखले **पाइलो हाले** जस्तो मानी।—गुरु-

प्रसाद (कथा कुसुम)।

**पाइलो खेदो गर्नु**—=पछिपछि लागी दुःख दिनु, हैरान पार्नु। त्यस पाजीले मेरो **पाइला खेदो** गर्छ रे।

**पाउकष्ट उठाउनु, गर्नु**—= हिंड्नामा तकलीफ गरी आउनु वा जानु (तपाईं भन्नुपर्नेलाई प्रयोग हुने)। यहाँबाट यति **पाउकष्ट उठाइदिनुभए** मेरो काम बन्ने थियो।····कति कारणले यहाँ **पाउकष्ट गरेर** आफ्नी मातृभूमिलाई वियोग-वेदनामा पार्नु भएको हो?—बोधविक्रम (दन्त्यकथा)। अतः कृपापूर्वक यहाँ सवारी हुनमा **पाउकष्ट गरी** बक्से सच्चा इमानको पूरा दृष्टान्त देखाउन्छु ····।—भवानी (यौवनको आँधी)।

**पाउको धूलो**—=तुच्छ सेवक। **पाउको धूलो** हुँ एक पटक बिराएकोमा माफ पाऊँ।

**पाउ दाब्नु, ताप्नु**—=सुबिस्ता दिनालाई, गोडा मिच्नु। छातीमा भृगुपाउ चिह्नधरी शेष्का पलङ्मा जहाँ। सोयाका प्रभु लक्ष्मि **पाउ** खुसिभै **दाप्री** रह्याकी तहाँ॥—राजीवलोचन (केदारकल्प)।

**पाउ पर्नु**—(१)=घमण्ड छाडी उन्मुक पर्नु वा लाचार हुनु। तिम्रो **पाउ पर्छु** इन्दु! मलाई माफ गर, म निःश्वास छोडेर मर्न पाऊँ।—खड्गमान (दर्पचूर्ण)। मेरो **पाउ पर्न** आएको हुनाले कालुलाई माफ दिएँ। (२)= खुट्टामा घोप्टिनु, छाँद हाल्नु। ····क्रूर काल जस्ता मालिक संग रोई कराई **पाउ परिछ**।—श्री ३ चन्द्र (अमलेख-भाषण)। जति गर्दछु **पाउ परी** विनती समझीकन शोक लियेर उती॥—लेखनाथ (भर्तृहरिनिर्वेद)। फेरी लागे भन्न **पाऊ परेर**, सगद्गद—स्वरले कथै डरेर।—कोमलनाथ (कोनलगीता)।

**पाउ मल्नु**—(१)=खुशामद गर्नु। शम्भु छ एक् अति उत्तम शान्ति, त्यस्कै **मल् गइ पाऊ**॥—शम्भुप्रसाद (शम्भु भजनमाला)। छोरो फेल नभइदिएको भए मैले माष्टरहरूको **पाउ मल्नुपर्दैनथ्यो**। (२)=



चाकरीमा हद नीच काम गर्नु। म तिम्रो दास ऐले छु, **पाउ मल्न** तयार छु, नपाए अहिले फेरि 'दासी हुन्छु' भने पनि पछि यो लातले हान्न घीन मान्ने छु।—बालकृष्ण (मुकुन्द इन्दिरा)। पतिकै सँगमा म मर्दछु पतिकै **पाउ मलेर** बस्तछु···· !—गोपाल पाँडे (सुनीति-विरह)। (३) साधारण अर्थ। मैयाँ-साहेबलाई **पाउ नमली** निद्रा पर्दैन।

**पाउरखवारी गर्नु**—=हुन सकेसम्म शरीरमा तकलिफ न-पर्ने प्रयत्न गर्नु (आदरार्थी), सवारीसाथ जानु। हाम्रो भाइ जर्साहेबको **पाउरखवारी गर्न** खटिएका छन्।

**पाए दुइ हातले सोहोर्नु**—= पाएसम्म खूब आग्रहसाथ लिनु। पैसा छैन र पो चुप लागिरहेछ, तिम्रो छोराले **पाए दुइ हातले सोहोर्छ**।

**पाक लाउनु**—=बाहिरपट्टि ढाकेर मिस्री जमाउनु। **पाक लाएको** मसला तिमीलाई कत्तिको मन पर्छ?

**पाकेट गरम गर्नु**—=पैसा कमाउनु, नाफा झिक्नु, (खास गरी उपरचटबाट)। विशेको बिहामा त तिमीले पो **पाकेट गरम गर्‍यौ**।

**पाको ईंट**—=पोलेको ईंट (पक्का वा पक्की प्रयोग हुँदैन)।

**पाखा बारी**—=भीरको, उसैले पानी नलाग्ने बारी।

**पाखा लाग्नु**—(१)=हेला गरिनु। दमना चोथाले भएर **पाखा लागिछ**। (२)=जलाशय-बाट निस्कनु। पहिले त पानीमा मात्र यस्तो भएको हो कि भन्ने लागेर हत्तपत्त **पाखा लागिन्**।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)। हाँस **पाखा लागिसके** घर लैजाऊ। (३) =छेउ लाग्नु, हट्नु। यदि पागललाई इज्जत देखाउँछ्यौ भने मलाई पनि देखाउनू नत्रभने **पाखा लाग्नु** बेस।—चन्द्र-लाल (विषवृक्ष)।

**पाखुरा खैंचनु, निमोठ्नु**— =जोरी खोज्नु (साँचिकै भाउ लगाई वा उसै)। कन्नो ठाउँमा पारौंला भनेर राखेकी छोरीलाई

त्यो नाथेले माग्न पठाउने हुँ भनेर **पाखुरा खैंचे** छन् ।—रुद्रराज ( रूपमती ) । आजकलका बुहारीहरुलाइ सोझो कुरा गरे पनि **पाखुरा निमोठ्न** आइलाग्छन् ।

**पाटीको वास हुनु**—=घरबार नभएको वा मगन्तेको अवस्थामा पुग्नु । **पाटीको वास हुन्छ** । बेरामी परियो भने एक मुठी पानी खान दिने मानिस हुँदैन । —गुरुप्रसाद (कथा कुसुम) ।

**पात गाँस्नु**—=पातको टपरी, बोह्रोता, खोरी, इत्यादि बनाउनु । धाई बुढी धमिलो बत्तिको प्रकाशमा **पात गांस्न** लागेकी रहीछ ।—गुरुप्रसाद ( कथा कुसुम ) ।

**पात पनि नहल्लनु**—(१)=हावा एकजातै नचल्नु । उखुम गर्मी छ, एउटा **पात पनि हल्लिएको छैन** । (२)=केही गर्न नसक्नु । तिमी के गरौला, एउटा **पात पनि हल्लाउन सक्तैनौ** ।

**पात पातमा दगुर्नु**—=हाहामा दगुर्नु । त्यो बगमफुस खालि **पात पातमा मात्र दगुर्छ** ।

**पाता [फर्काएर] कस्नु, फर्काउनु**—=हात पछिल्तिर लगी बाँध्नु (बदमासी गर्नेलाइ) । नाती जो अनिरुद्ध छन् उछ कहाँ क्या गर्दछौ घर्बसी । बाणासुर् भनि जोछ तेहि खुनिले राखेछ **पाता कसी** ॥—मोतीराम (उषा चरित्र) । यस्तो गर्न लागिस् भने तँलाई **पाता फर्काएर कस्छन्** । यहाँ अर्ध नाङ्गा एकजना मानिस आएर ढोका खोल् भन्यो भने सोध पुछ केहो नगरेर उसलाई **पाता कसी** छिंडीमा थुनिराख्नु ।—बोधविक्रम (दन्त्यकथा) । अहिले गाउँभरीका मानिस गुहारेर **पाता फर्काएर** अड्डामा चलान गरे पछि पो थाहा होला त ।—प्रेमराज (ससुराली) ।

**पाता पिट्नु**—=पिटेर पातलो पत्र बनाउनु (धातुको बारे) । तिर्मा घाट वनी मणी सबजडी **पाता सुनैका पिटी** । पाटी छन् तिरमा सुनैमय तहाँ तिर्मा अनेक् छन् कुटी ॥—राजीवलोचन (केदारकल्प) ।



**पाती लाउनु**—=जस पाउनु (वक्रोक्ति) । मेरो कुरा लाउन गएको होइनस्, **पाती लाइनस्** के ?

**पाथी ब्याज**—=वर्ष दिनमा एक रुपियाँको एक पाथी अन्न तिर्ने । ····**पाथी ब्याजमा** ऋण काढेर बडो मुश्किल सँग भञ्ज्याङ्का पनेरूकी छोरी सँग विवाह भएको थियो ।—रुद्रराज (रूपमती) ।

**पानी काट्नु**—=पानी नचल्ने गराउनु । दोष लाएर मात्र हुन्न प्रमाण पुऱ्याउन सक्छौ भने मेरो **पानी काटन** त ।

**पानीको भेल**—एक चोटि हात आयो गयो हुने कुरालाइ दृष्टान्त दिने बोली । यहाँ सिनेमा ल्याएर पैसा कमाउँला भन्ने कुरा, **पानीको भेल** जस्तो हो ।

**पानीको मूल फुट्नु**—=जमीनबाट भुलभुल पानी निस्कनु ('मूल फुट्नु' पनि हेर) ।···· तिहिं एकाएक **पानी को मूल फुटेझैँ** जाइ लागेर शत्रुलाइ यौटा बाँकि न राखी सखाप पारेर छोडदथे ।—शिवप्रताप (दुर्गेशनन्दिनी) ।

**पानीको सामल**—=पानी खाएर मात्र, खानामा साह्रै कष्ट भोगी । हजूरको दर्शनको खातिर **पानीको सामल** गरेर त्यति टाढाबाट आएँ ।

**पानी खाएर मुत्ने(थुक्ने) घाँटी हुनु**—=ज्यादै प्यारो वा नभई नहुने मान्छे । बखतमान आजकल डिट्ठा बाजेको **पानी खाई मुत्ने घाँटी** भइरहेछ ।

**पानी खेदो गर्नु**—=पानीमनि गए पनि नछोड्नु । त्यस वैरीलाइ **पानी खेदो गर्छु** ।

**पानीघाट ननाघेको हुनु**—=आफू बसेको सीमानाबाहिर नगएको हुनु, कूवाको ब्याङ हुनु । **पानीघाट नाघेको छैन** हामीसित के कुरा गर्छस् ?

**पानी चढ्नु**—(१)=( आलु, पिंडालु, इत्यादिमा ) रोप्ने वेलातिर रस घुस्नु । आलुमा **पानी चढेछ**, अब त खिन्याउँछ । (२)=खटिरामा पानी पस्नु । दादुरामा **पानी चढेर** जलजलाउँदो भएछ । (३)=यौवन भरिनु । नौलीलाई **पानी**

चढ्न लागिरहेछ । (४)= रत्नहरूमा टलक निस्कनु । मेरो हीरामा पानी चढेको हेर ।

**पानी चल्नु**—=छोएको पानी सबै जातले खान हुनु । दमाईको पानी चल्दैन ।

**पानी छुनु**—=( पानी चल्ने जातकी नछुने, सुत्केरी भएकीले ) छोएको पानी सबै जातले खान हुनु । सानुमायाँले पानी छुने कहिले हो ?

**पानी जानु**—(१)=पानी नचल्नु । पर्मानेको त अस्तिको मुद्दामा पानी जाने भएछ । (२)=इज्जत जानु । हिजो जर्साहेबकहाँ पासा खेल्दा तपाईंको पानी गयो रे । (३)=फूर्ति हराउनु (घोडाको बारे) । अहिले त सुरुङ अर्बीको पनि पानी गइसक्यो ।

**पानी झार्नु**—(१)=शेखी झार्नु। उसले निको पार्न नसकेको वेथा मैले निको पारी वैद्यको पानी झारें । (२) साधारण अर्थ । यी गुलाफको फूलको पानी झार् ।

**पानी दर्कनु**—=ठूलो पानी पर्नु । वाहिर पानी झन बढ्ता दर्कन थाल्यो ।—रूपनारायण (भ्रमर)।

**पानी दिनु**—(१)=सबभन्दा मामूली सहायता दिनु (बिरामीलाइ)। घरको बिरामीलाइ पानी दिने मान्छे पनि छैन । (२) =श्राद्धको सबभन्दा मामूली रूपमा अँजुलीले पानीको तर्पन दिनु । भएको एउटा नाति पनि अस्ति खस्यो अब मरेपछि मलाई पानी दिने पनि कोही भएन । (३) साधारण अर्थ ।

**पानी पनेरो हुनु, गर्नु**—(१) =बराबर वा टुप्लुकटुप्लुक आइरहने वा गइरहने हुनु, गर्नु । (२) साधारण अर्थ । कति दिन पानीपंधेरो गरेर बस्ने भोली नै लिन जाउ ।—गुरुप्रसाद (कथा कुसुम) ।

**पानी पर्नु**—=पानीको वर्षा हुनु, झरी हुनु । दक्खिनी हावालाई कहिलेकहीं वर्षाको दूत पनि भन्दछन् किन भने यो हावा चल्ने बित्तिकै अक्सर पानी पर्दछ ।—खड्गमान ( ग्रीस र रोमको दन्त्यकथासंग्रह ) ।

**पानी पाउनु**—(१)=पानी चल्ने



हुनु । बल्ल बल्ल चैतेले पानी पाएछ । (२) साधारण अर्थ ।

**पानी पानी हुनु**—=पानी हुनु (हेर) ।

**पानी पारेको बोको**—=पर्सेको बोको (साधारण अर्थमा मात्र) ।

**पानी पिउन नदिनु**—=एक छिनको फुर्सद पनि नदिनु । यसले भेट्टायो भने पानी पिउन दिन्न ।—रुद्रराज (रूपमती) । कान्छा लप्टन पानी पिउन दिंदैन, त्यस्ताको काम गर्दिनं ।

**पानी फुकाउनु**—(१)=किरियामा बसेको मानिसले श्राद्धादि कर्म गरी पानी छुने हुनु । पुस्तक किन्न न पाएर पढ्न पाइन, पैसा नभएर पानी फुकाउन सकिन···भनेर कति धनीहरू कहाँ मानिसहरू गिडगिड़ाउन पुग्दछन् , यिनीहरू····सुनेको नसुन्यै गर्दछन् ।—रुद्रराज (चप्पाकाजी) । (२)=पानी छुनु (हेर)। (३)=पानी हटक भएकोमा सफाइ पाएपछि पानी चलाउनु ।

**पानी बाराबार हुनु**—=परस्परको घरमा गई पानीसम्म पनि खान्न भन्ने प्रतिज्ञा हुनु वा गर्नु (झगडा गर्दा) । आजकल मोतीलाल लप्टन र अधिकारीको पानी बाराबार भैरहेछ ।

**पानी बाहेक गर्नु**—=पानी काट्नु (हेर) । समाजबाट पनि अस्वीकार गरी पानी बाहेक गर्नै छन् ।—भवानी (यौवनको आँधी) ।

**पानी मन्त्रनु**—=कचौरामा हालेको पानीलाई मन्त्र पढेर फुक्नु (औषधीको रूपमा बिरामीलाई खुवाउनालाई) । पानी मंत्रेर मुखमा हालिदिन्छ, पैतालाको माटोको टीका निधारमा लाइदिन्छ ।—प्रेमराज (ससुराली) ।

**पानीमा आगो लाउनु, पानीमाथि आगो बाल्नु**—= शान्त भएको मानिसलाइ पनि उभाडी राडो मचाउनु ।

**पानीमा पर्नु**—( १ )=पानी नचल्ने जातले छोएको पानी खाएको, वा त्यस्तासित बोरिएको ठहरिनु । तिम्रो दाउरे बूढो पनि पानीमा पर्‍यो भन्ने हल्ला सुनें । (२) साधारण अर्थ । ओहो तिमी पनि पानीमा

परेछौ, कोट त निश्चुक भएछ ।

**पानी मार्नु**—=पकाएर (भात, तर्कारी, आदिमा) पानी सुकाउनु । तिमीले पकाएको भातमा पानी नै मरेको छैन ।

**पानीमा लेखेको**—=फास न फूसको । तिमी त पानीमा लेखेको कुरा मात्र गर्छौ ।

**पानी राख्नु**—=जस्तो शेखी गरेको छ उस्तै पुर्‍याउनु । आफ्नो पानी नराखी हुन्न । —रुद्रराज (चप्पाकाजी) । मैले त तिमी हार्छौ भन्ने ठानेको थिएँ, आखिरमा पानी राख्यौ ।

**पानी लाग्नु**—=भिन्न देशमा जाँदा त्यहाँको पानी नमिली बिसंचो हुनु । तिमीलाइ मदेसको पानी लाग्यो क्यारे !

**पानी सार्नु**—=(ठूलो भाँडाबाट सानोमा) पानी खन्याउनु । त्यो गाग्रोबाट अलिकति पानी सारेर ले ।

**पानी (पानी पानी) हुनु, पार्नु**—(१)=कण्ठ हुनु, पार्नु (पाठ) । दुइ घण्टा चित्त लाएर पढ्यौ भने त यति पाठ पानी पानी हुन्छ । (२)=(घोडा आदिको बारे) पसिनाले तर हुनु, कायल कायल पार्नु, हुनु । चिनियाँ च्याण्टालाइ बेसरी फेरी पानी पानी पारेर ल्याएँ । (३)=बेसरी दिल पग्लनु । तिनीहरूमध्ये ती सुन्दर राजकुमार र डरले थर थर कामिरहेका सफा कुमारीहरूलाई देखेर जस्तोसुकै मन पनि पग्लेर पानी पानी हुन्थ्यो ।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह) । (४)=(प्रायः लाजले) भुतुक्क हुनु, पार्नु । बिचरा बूढा लाजले पानी भए ।—गुरुप्रसाद (कथा कुसुम) ।

**पाप आइलाग्नु**—=घाँडो वा झमेला आइपर्नु । धन्य कलियुग! धर्म गर्न खोज्दा पाप आइलाग्ने !—रुद्रराज (प्रायश्चित्त) ।

**पाप उठ्नु**—(१)=पाप काम गर्ने मन आउनु । उसको मनमा पाप उठ्यो ; लाहुरेलाइ मारेमा दोष रनेको टाउकोमा चाइने परिहाल्छ, पोको सड्क्याएको सड्कायै हुन्छ ।—ग्रन्थकार (कथा कुसुम) । (२)=पाप चिताउनु (२ हेर) ।



**पाप काट्नु, पखाल्नु**—=पापमोचन गर्नु । तिम्रो यो पाप कहिल्यै काटिनेछैन ।

**पाप चिताउनु**—(१)=अपकार गर्न खोज्नु । अर्कामाथि पाप चिताउनु हुन्न । (२)=अपकार वा कुनै खराब कुरा गर्‍यो भन्ने ठान्नु । ममाथि तिमीले पाप चिताएछौ, तर म एकदम निर्दोषी छु । (३)=कामचेष्टा गर्नु । अर्काकी स्वास्नीमाथि पाप चिताउनु हुँदैन ।

**पाप छुट्नु**—(१)=(दुःख दिने मान्छेको) संगतबाट छुटकारा पाउनु । अब वल्ल राक्षसहरूको पाप छुट्यो ।—बोधविक्रम (दन्त्यकथा) । (२)=पापबाट मुक्त हुनु (साधारण अर्थ) । सम्बन्ध केहि रघुनाथ सित पर्न जाई । पाप् छुट्छ धर्म पनि बढ्दछ तेसलाई ॥—भानुभक्त (रामायण) ।

**पाप धुरीबाट कराउनु**—=अपराधीले बिचारै नगरेको कारण वा संयोगबाट अपराध प्रकट हुनु । पाप धुरीबाट कराउँछ भनेको पक्कै रहेछ, कताबाट त्यो बालकले कुरा खुल्काइदियो ।

**पाप बोक्नु**—=पाप गर्नु । बाहुन बालख, मारी देछ नारी । जीविका त गरेछ, बोकी पाप भारी ॥—शिखरनाथ (गंगामाहात्म्यको सवाई) । पाप् बोक्नु छ क्षणीक जीवन महाँ यस्तो अधं कां गरी ॥—पद्म प्रसाद (श्रीमद्भागवत) ।

**पाप लाग्नु**—=पापको फल भोग्नपर्नु । यो अंग्रेजी पढाएको पाप लागेको हो ।—गुरुप्रसाद (कथा कुसुम) । कतिको पाप लाग्यो बाबै !—ग्रन्थकार (कथा कुसुम) ।

**पापले बाटो नपाउनु**—=पापले साह्रै दुःख पाउनु । मेरो चित्त यसरी रुवाएको पापले बाटो नपाएस् !

**पापी केटो**—=लोग्ने (प्रायः विधवा बाहुनीले भन्ने बोली) । आफू त नउ वर्षकी थिएँ, लौ भनूँ भने पापी केटाको अनुहार पनि राम्रोसित देखेकी छैनँ । —बालकृष्ण (कथा कुसुम) ।

**पापी मन**—=मायामा फस्ने वा पाप चिताउने मन । पापी मन

ज्यादा बिह्वल भएकोछ बुझायेर पनी बुझदैंन फुल्यायेर पनी फुलिदैंन।—लेखनाथ (भर्तृहरि-निर्वेद)।

**पायो पियो पच**—सापटी वा उधारो लिएको नतिर्ने वा नफ-र्काउने मान्छेलाई भन्ने बोली। चार पैसा त हो नि **पायो पियो पच** गरिदेऊन।

**पार पाउनु, दिनु**—=अमलेख हुनु, गर्नु। मेरी छोरीको बिहेमा सबै कमारीलाई **पार दिएँ**।

**पार लाग्नु,लाउनु**—(१)=पूरा हुनु, गर्नु। यो पक्का काम **पार न लगाई** फर्केको हुनुपर्दैन। —श्री केसर (विक्रमोर्वशी)। अब त काम **पार लाग्ला** जस्तो छ।—रुद्रराज (प्रायश्चित्त)। एक काम शकी **पार लाएर** फल लीकन। अर्को काम-समारम्भ गर्नू हेरी बुझीकन।—बैजनाथ (उपदेश-शहस्री)। (२)=ठेगान लाग्नु, लाउनु। बिहाको कुराको **पार लाऊ** अनि तिमीले भनेको कुरा दिउँला। (३)=उद्धार हुनु, गर्नु। थै ज्ञान् लेउ र **पार लाग** भनि मो हे साथि हो भन्दछु॥—मोतीराम (प्रह्लाद भक्ति कथा)। हे परमेश्वर, मेरो डुंगालाइ **पार लाऊ**! (४)= निर्वाह गर्नु, गराउनु, हुनु। यस्तै अल्छी भयौ भने कसरी **पार लाग्लौ**!...दियो यो जन्म जसले उसले नै खुवाउला, जसले नाउमा हाल्यो उसैले **पार लाउला**;....।—बालकृष्ण (ध्रुव)। (५)=पल्लो किनारामा उत्रनु। अब एक घण्टामा हामी **पार लाग्छौं**।

**पाल हाल्नु, टाँग्नु**—(१)= पाल खडा गर्नु। भीमफेदीमा **पाल हालेछन्**। (२)= रूखमा फलहरूलाई रुमालले बाँधेर वा तन्नाले ढाकेर धेरै दिन राखनु। नाशपातीलाई **पाल हाल्ने** वेला भयो।

**पालाको पैँचो**—=अघि गरेको बदला। आज तिमीले पनि खाँचो टारिदियौ भने **पालाको पैँचो** म पनि तिरुँला।

**पालो पालो गर्नु**—(१ =आलो-पालो गर्नु। तिमीहरु १० जना-छौ, **पालो पालो गरेर** यहाँ सुत्नू। (२)=एक पटकमा एक जनाले मात्र गर्नु। किन हूल गर्छौ? **पालो पालो गरेर** टीका थापन।

**पालो बाँध्नु**—=यसलाई यसले, यसलाई यसले पालो दिनू भन्ने बन्दोबस्त मिलाउनु। बिरामी कुर्न छ जनाको **पालो बाँधेको** छ।

**पाल्सी कुरा**—(१)=अर्थ न-बुझ्ने कुरा, प्रहेलिका। तिम्रा **पाल्सी कुरा** हामी जस्ता लाटासुधाले के बुझौं। (२)= आफ्नो गफको मानिसले बुझ्ने अरू उपरियाले नबुझ्ने पार्नोलाई अक्षर अघि पछि पारी वा अरू किसमले बनाएको पद, जस्तोः —दान्तलासुडा=सुन्तला, रे-मका=केमरा, लीतपु=पुतली।

**पास गर्नु, हुनु**—(१)=मञ्जूर गर्नु। मेरो राय सुब्बा साहेबले पनि **पास गर्नुभयो**। (२)= जानु। जन्ती यतैबाट **पास भयो**। (३)=उत्तीर्ण हुनु (जाँचमा)। यस पाला **पास भयौ** भने घडी किनिदिउँला।

**पास दिनु**—=जाँच दिएर पास हुनु। तिमीले कति **पास दिएका छौ**?

**पासो पर्नु**—(१)=फसाद पर्नु। जनारले छोरी यहाँ छोडेर गई—ऊ भने रातभरी झगडा गरिर-हन्छे, मलाइ त **पासो पर्‍यो**। (२)=साधारण अर्थ। कालिज-लाई **पासो पर्दै परेन**।

**पासो लाग्नु**—=धाँडो लाग्नु। हामी दुइ जना मात्र जान आँटे-का थियौं, कताबाट चिनी **पासो लाग्न** आई।

**पाहा पसारिए जस्तो पसा-(छा)रिनु**—=लम्पसार परेर पछा(सा)रिनु। म पुग्दाखेरि त हनुमन्ते **पाहा पसारिए जस्तो पछारिइरहेको** थियो।

**पाही(हिक) पर्नु**—=सजिलो पर्नु। यो **पाही परेन**, के गर्छौ हेरन?—श्री केसर (विक्रमो-र्वशी)। मलाइ त राम्रोभन्दा **पाहिक परेको** घर मन पर्छ। तिम्रो घरबाट पोखरा निकै **पाहिक पर्छ** हगि?

**पाहुना मान्नु**—=पहुनालाइ सत्कार गर्नु। म खानेपछि हेर्छु, तिमी **पाहुना मान्न** जाऊ।

**पाहुना लाग्नु**—=(अर्का)को

अतिथि हुन जानु। उहिले कसैको घरमा **पाहुना लागे** भने अतिथि सत्कार गर्न पाएँ भनेर गृहस्थी खुशी हुन्थे भन्छन्। —रुद्रराज (चप्पा काजी)।

**पाहुर मार्नु**—=उग्राउनु। कैली गाई **पाहुर मारिरहिछन्।**

**पिंजरा हुनु**—=साह्रै दुब्लाउनु। रोज त **पिँजरा भइछ**, के बिघ्न दुब्लाएकी !

**पिंडी बारेर बस्नु**—पानी नचल्ने भएको हुनाले। अन्याय गरेर मलाई पानीमा परेकै ठहराउँछौ भने के लाग्यो, **पिंडी बारेर बसुँला।**

**पिउरी पर्नु**—=(कपालमा) लट्टा परेर कहींकहीं सेतो भूवाले समेत ढाक्नु। कपाल नकोरेको कति दिन भयो, **पिउरी पारेर** राख्ने हो ?

**पिण्ड छुटाउनु**—=पिरलोबाट छुटकारा पाउनु। यसको **पिंड** कहिले **छुट्ला** र आनन्द होला!

**पित्त [पानी] छान्नु**—=बेसरी काममा जोत्नु। आज त लप्टनले हाम्रो **पित्त पानी छान्यो**, बा!

**पित्तलको (पित्तले) नाक**—=विवाहिता वा उपपत्नी (जातकी स्वास्नीले कम जातकी तर लोग्नेलाई रिझाएकी सौतालाइ भन्ने)। लप्टनले तिमीहरूलाइ जति ठूला गराए पनि तिमीहरुको **पित्तलको नाक** छँदैछ, के घमण्ड गर्छौ?

**पिप्पलको पात फर्के जस्तो**—=सालको पात....इत्यादि हेर।

**पिसापले चाप्नु**—=पिसाप आउन जोड गर्नु। नानीलाई **पिसापले चाप्यो ?**

**पीङ खेल्नु**—(१)=झुल्नु। तिनका दुवै कान मा मोती जडेका कुण्डल **पीङ खेली** रहे का थिये।—शिवप्रताप (दुर्गेशनन्दिनी)। (२)=डोरीको कापमा बसी झुल्नु। टीकाको दिन **पीङ खेल्छन्।**

**पीछा पर्नु**—=शरणमा पर्नु। मेरो **पीछा पर्न** आएपछि तँलाई जसरी पनि बचाउँला।

**पीछा लाग्नु**—(१)=पछिपछि हिंड्नु। **पीछा नलाग** प्रह्लाद, यहीं बस, यहीं बन, बनाऊ पृथिवीलाई स्वर्ग, स्वर्गै छ स्वर्ग त।—बालकृष्ण (प्रह्लाद)। (२)=लखेट्नु।



**पीछा लिनु**—=शरण लिनु। दुःख परेको बेलामा तपाईंले मलाई **पीछा लिनुभयो**, त्यो गुन म कहिल्यै बिर्सन्नँ।

**पीठ देखाउनु, फर्काउनु**—(१)=हारेर भाग्नु। शत्रुको अगाडि **पीठ देखाउनुभन्दा** त मर्नु निको। त्यसै घङ्रक्क ढल्यो, **पीठ फर्काएन।**—रुद्रराज (चप्पा काजी)। (२)=हट्नु। दुनियाले चाहे जे सुकै भनून्; यसमा मैले **पीठ फर्काउनु** भूलै हो,....।—भवानी (यौवनको आँधी)। (३) साधारण अर्थ (प्रायः घोडाको बारे)।

**पीठ लाग्नु**—=(घोडाको) आङमा काठी रगडिएर घाउ हुनु। मेरो घोडाको **पीठ लागेको** छ, उसैले हिंडेर आएँ।

**पीठो खानु**—हद गरीबी खानाको रूपमा। स्वास्नी मान्छेले त **पीठो खाए** पनि हुन्छ,....।—भीमनिधि (सहनशीला सुशीला)।

**पीर पार्नु**—=सुर्ता लिने तुल्याउनु।....रुपैयाँ जमा गर्दा अरूहरूले गरे जस्तो रैतीहरूलाई **पीर पनी पारेनन्।**—विश्वेश्वर (कथा कुसुम)।

**पीर लाउनु**—(१)=झुक्याएर नभएको कुरामा अर्कोलाइ हेर्न लाउनु। 'ऊ कति सेतो घोडा' भन्दा तिमीले पुलुक्क त्यता हेर्‍यौ, उसैले एक **पीर लागिहाल्यो** नि! (२)=दुःख दिनु। मलाइ मात्र कति **पीर लाउँछौ।**

**पीर लिनु**—=सुर्ता गर्नु, फिक्री मान्नु। अब **पीर लिएर** के काम!—श्री अर्जुन (स्वप्नवासवदत्ता)। **पिर लिन्थिन्** कति ती त्यहाँ बसी किन सुन्थ्यो तर बाघ त्यो छुसी!—गोपाल पांडे (सुनीति—विरह)।

**पुगी सरी आउनु**—=सबै कुरा मौजूद वा पवल हुनु।....**पुगीसरी आउनेहरुसंग** पनि सबैका घरमा नगद महजुद नरहने,....।—श्री ३ जुद्ध (भूकम्प-भाषण)। **पुगि सरि नआउने** के थियोर!—रुद्रराज (चप्पा काजी)।

**पुगेस् पुगेस् गर्नु**—=बल्लतल्ल पुर्‍याउनु। मफतमा जनम भर

पुगेस् पुगेस् गरेर खाएर माखाको मुण्टो निचोर्दै सँगाल्दै गरेको पैसा के काम लाग्यो ? —रुद्रराज (चप्पा काजी)।

**पुच्छर निमो(म)ठ्नु, निमो(म)ठेर हिँड्नु**—=एक छिन नछोडेर पछि पछि लाग्नु। केटाकेटी भएसम्म तिमीहरुले सानो छोराको पुच्छर निमोठेर हिँड्नुपर्छ। कप्तान साहेबको पुच्छर ननिमोठी काम बनेन। किन उसको पुच्छर निमठेर हिँडुँ। —रुद्रराज(चप्पा काजी)।

**पुच्छर लाग्नु**—(१)=देखासिकी गर्नु। त्यो कवि अर्काको पुच्छर लाग्ने मात्र हो, नयाँ सिर्जना गरेर लेख्न सक्तैन। (२)=पुच्छर निमोठ्नु। कति दिन रिसाउल्यौ ? अब त पुच्छर लागेर जाइहाल्नु पर्ला।—प्रेमराज (ससुराली)।

**पुच्छर लुकाउनु**—(१)=डराउनु, हच्कनु। (२)=डरले कुनै काम वा इरादा छोड्नु। तिम्रा संधी।नीलकण्ठ जान तंसेका थिए, पिट्रोल हाल्नुपर्छ भनेको सुन्नासाथ पुच्छर लुकाए। (३) साधारण अर्थ। यी लाछी कुकुर लट्ठी देख्नासाथ पुच्छर लुकाएर भाग्छन्।

**पुच्छरे(छ्रे)तारो**—=धूम्रकेतु। पुच्छ्रे तारो उदायो भने देशमा उपद्रव मच्चिन्छ।

**पुच्छरे भाग**—=सबैले छोडेको वा थोरै भाग। ढीलो नगर पुच्छरे भागमा पर्लौ (दसैंमा दमाईँलाइ भाग दिंदा खसीबोकाको पुच्छरसमेत दिने चलनअनुसार)।

**पुतली उड्नु**—(१)=जिल्ला उड्नु (१ हेर)। (२)=तमाशा वा गफको अध्याय समाप्त हुनु। आजको कचहरीमा सेतेले एउटा पुतली उडायो।

**पुतली खेले जस्तो**—(१) खेलाँचीको काम वा सानातिना कामलाइ दृष्टान्त दिने बोली। लुगा बुन्नु पुतली खेले जस्तो होइन। (२) साह्रै थोरै खर्च लाएर गरेको कामलाइ दृष्टान्त दिने बोली। यस पाला पुतली खेले जस्तो गरी मन्त्रपचिष्टा गरें।

**पुतली नचाउनु**—=(बुद्धिमा



जिती) लाटो जस्तो पारेर जे जे भन्यो उही उही गर्ने तुल्याउनु। श्यामेले पायो भने तँलाई पुतली नचाइदिन्छ।

**पुतली बिहा**—=बालख दुलहा दुलहीको बिहा। मलाई त यो नातिको पुतली बिहा गरिदिन चौपट्ट रहर छ।

**पुतलीले जुनी फेर्नु**—=दिनहुँ सिंगार नगर्ने मान्छेले कोरी बाटी गर्दा वा राम्रो लुगा लाउँदा गिज्याउने बोली। हरिमायालाई हेर, आज पुतलीले जुनी फेरेछ ! (साधारण अर्थमा पनि)।

**पुत्लो गाड्नु**—=कसैलाइ बिगार गर्न वा आफ्नो मुट्ठीमा पार्न त्यस मानिसको पुरानो लुगा वा कपालको रौं भूइँमा गाड्नु। त्यसलाइ रिस नउठाऊ, त्यो त बोक्सी छ, पुत्लो गाडेर तिमीलाई बिताउली।

**पुनसको कमाइ**—=पूर्व जन्मको फल (यस जन्ममा भोग्नुपर्ने रूपमा)। मालिकलाई दोष नलाऊ, पुनसको कमाइ भनेर चित्त बुझाऊ।

**पुराण लाउनु**—=पुराण बाँच्ने, अर्थ लाउने काम हुनु वा गराउनु। यस पाला नन्दीकेश्वर बहालको पाटीमा स्कन्द पुराण लाउनुपर्छ।

**पुराण सुनाउनु**—(१)=नसीहत दिनु, वरपर देखाएर हप्काउनु। खसमलाई पुराण सुनाउन लाग्नु भयो,....।—रुद्रराज (रूपमती)। (२)=बेली बिस्तार लाउनु। कति पुराण सुनाइरहन्छौ मैले बुझिसकें। (३) साधारण अर्थ। मलाइ त तपाईंले पुराण सुनाउनुभएको राम्रो लाग्छ।

**पुर्जी काट्नु**—=छोटकरी पत्र वा लेखोट पठाउनु। तँ धिङ्न्याहा भयी जालास्, मुकद्मा फैसला होला। लिने भै जायदाद् शम्भु, तहाँ पुर्जी कटाउँला॥ —शम्भुप्रसाद (शम्भु भजनमाला)।

**पुल बाँध्नु**—(१)=कताकताको कुरा ल्याएर लम्बे चौडे कुरा गर्नु, लाम लगाउनु। फेरि तिमी पुल बाँध्न लाग्यौ, छोटकरीमा कुरा सिध्याऊ। तिमीले त प्रशं-

साको पुल बाँध्यौ । (२)= पक्की साँघु बनाउनु । यो खोलामा पुल बाँधेको दश वर्ष भयो होला ।

**पुस्ता गल्नु**—=पुरुखाभरी नै खप्नु । बीरे खूब खपाउन सक्छ, उसलाई यो कोट दियौ भने पुस्ता गल्छ ।

**पुस्तो फ्याँक्नु**—=सवारलाइ फ्याँक्न पछिल्तिरका दुवै खुट्टा उफार्नु (घोडाको बारे) । तिम्रो घोडा पुस्ती फ्याँक्तो रहेछ ।

**पूजा गरेर राख्नु**—(१)=काम नअह्राएर बसी बसी खान दिनु (गालिमा प्रयोग हुने) । ···तँलाई पूजा गरेर राख्न ल्याएको हो भने कोठैमा अन-भरी रहदिहोस्, यहाँ सवारी होस् भनेर कसले बिन्ती गरेको थियो र ?—रुद्रराज (रूपमती) । (२)=खूब कदर गरेर राख्नु । तिम्रा जस्तो सुबान भए पूजा गरेर राख्ने थिएं ।—गुरुप्रसाद (कथा कुसुम) । (३)= चलन नगरी थन्काएर राख्नु । (४) साधारण अर्थ ।

**पूठ पाउनु, दिनु**—(१)= समर्थन पाउनु, गर्नु । सानुले अघिसम्म मैले जे भन्यो उही मान्थ्यो, अहिले बाको पूठ पाएर चम्केको हेरन ! (२)= (ओखती आदिको बारे) खार्नु, संस्कार गर्नु, (यसमा 'पाउनु' हुँदैन) । यो औषधीलाइ पूठ दिएको छैन ।

**पूर्व मेची पश्चिम महाकाली-तक**—=महाकालीदेखि मेची-सम्म (हेर) ।····उहाँका साथ साथै पूर्व मेची पश्चिम महाकाली तकका पठित अपठित, सज्जन मूर्ख, स्त्री बालक बृद्धहरू-समेतले····रामनाम गानको ठूलो सौभाग्य लुटिरहेका छन्,····। —राममणि ( भानुभक्त स्मारक ग्रन्थ) ।

**पृथिवी पल्टनु**—=प्रलय हुनु (असंभव भन्ने जताउँदा मात्र प्रयोग हुन्छ) । पृथिवी पल्टे पनि तिमीले भनेको कुरा म पत्याउँदिनँ ।

**पेच काट्नु**—=ढोलो डण्डीलाइ यन्त्रद्वारा कपी भाले वा पोथी पेच बनाउनु । यो पाइपमा पेच काट्नुपर्‍यो ।



**पेच खानु**—=पेचले समाउनु वा कसिनु । तिमीले प्वाल ठूलो पारेछौ, यसले पेचै खाएन ।

**पेच खेल्नु**—(१)=थर्कैर वा अरू किसमले पेच खुकुलो हुँदै जानु । तिम्रो टपको पेच यसरी खेल्न दियौ भने त बाटोमा नखसी छोड्दैन । (२)=परस्परलाई गिराउनानिमित्त जाल गर्नु । आजकल ती दुइ दाजुभाइ पेच खेलिरहेछन् ।

**पेच पर्नु**—(१)=केही कुरा भन्दा नचिताएको मानिसलाई मर्म पर्न जानु । मैले त सोझै मनले घलेलाइ भनेको हुँ, तपाईंलाई पेच परेछ, म के थाहा पाऊँ ! (२)=कुनै कुरा वा ठाउँमा विपक्षीको जाल पुग्नु । घडीमा अबिरीको पेच परेछ, नत्र अस्ति मालिकले दिन्छु भनिसकेको आज नदिनु किन ?

**पेचमा हुनु, पर्नु**—=जालझेल गरी दवाइराखेको हुनु । मेरो 'रामायण' हरिकै पेचमा छ जस्तो लाग्छ ।

**पेच लडाउनु**—=पेच खेल्नु (२ हेर) ।

**पेच लाउनु, हान्नु**—=दुइ अर्थ पारी वा अर्को मान्छेलाइ भने जस्तो गरी वा 'एउटा मान्छेले' प्रयोग गरी लक्ष्य गरेको मान्छेलाइ मर्म पार्नु । अधर अति मजाको लालरङ्गी भयाको । तस ऊपर मजाको बिम्ब फल् ओठ् भयाको ॥ भनिकन किन भन्छन् हामिमा पेच लाइ । किन यसरि कवीले भन्दछन् हामिलाइ ॥—मोतीराम (मृगनयनी मनोहर वाक्य) । बिजुलीले खित्त हाँसेर भनिन्, बुद्ध पनि दाउ पेच हान्न जान्नुहुन्छ ! —खड्गमान ( अँध्यारोमा उज्यालो) । मेरो कोट च्यातिएको देखेर सानेले मिझारलाइ 'को सित चल्यौ हँ ?' भनेर मलाइ पेच लायो ।

**पेट कराउनु, छड्कनु**—= पेटमा वायु भरिएर काँल्ल कुल्लको आवाज निकल्नु । आज के एक घोगा मकै खाएको थिएँ पेट कराउन थालिहाल्यो ।

**पेट कस्नु**—( १ )=किफायत गर्नानिमित्त नअघाउने गरी

थोरथोरै खानु। हाम्री बज्यैको भई भईकन पनि पेट कस्ने बानी छ।

**पेट काट्नु**—(१) = (खास गरी) आउँ वा पतला दिसा हुनुअगाडि पेट दुख्नु। (२) साधारण अर्थ।

**पेट कालो हुनु**— = कपटी हुनु। सावित्रीले मुखले केही नबोलेर के गर्नु, त्यसको पेट कालो छ।

**पेटको कीरा मार्नु**—(१) = छेडपेचलाई मेख मार्नु। दुश्मन पेटका कीरा जति मार्छन् मारून्–म सानी हुन्न क्यारे। —रुद्रराज (रूपमती)। (२) साधारण अर्थ।

**पेटको कुरा**— = मनको कुरा। तिम्रो पेटको कुरा म के थाहा पाऊँ!

**पेटको प्रश्न**— = जीवन धान्ने समस्या।....अब ता पेटको प्रश्न भयो भारतप्रश्न नै पेटको निंतिमा हिन्दुधर्मै बन्छन् बरू बलि।—बालकृष्ण (अन्धवेग)।

**पेटको बह**— = मनको पीर (प्रायः अरूलाइ भन्न नहुने)। पेटको बह कसैलाई नकह (उखान)।

**पेटको बाठो**— = बाहिर हेर्दा केही थाहा नपाउने गल्ढ्याङ्ग्रो जस्तो तर मनमनमा सबै कुरा थाहा पाइराखेको। घिमिरेलाइ लाटो ठान्छौ, पेटको त बाठो पो छ।

**पेट खोल्नु**— = गाभ कत्ति नराखी यावत् गुह्य कुरा प्रकट गर्नु। सधैं मसँग कुरा लुकाउँथी, आज भने लुरीले पेटै खोलेर कुरा गरी।

**पेट तहलाउनु**— = खाएपछि (प्रायः) असजिलोपन हटाउनालाई आरामी लिनु वा टहलिनु। भात खाएर पेट तहलाउन पनि पाएको थिइनँ, पल्लो घरबाट बोलाउन आइहाल्यो।

**पेट दावा लाग्नु**— = खान नपाएर वा दुब्लाएर पेट ख्याप्प बस्नु।

**पेट पाल्नु**— = जीवन धान्नु। धेरै जस्ता गाउँलेहरूले मकै भटमास खाई पेट पाल्न थाले।–श्री ब्रह्म (महा भूकम्प)। ....पेट पालनाको निमित्त यो गेरुवा वस्त्र धारण गरेको पनि होइन।—श्री अर्जुन (स्वप्नवासवदत्ता)। पेट पालनाकन कूट पीट तिमिले हामी उपर गर्दछौ।—मोतीराम (प्रह्लाद भक्ति कथा)।



**पेट पोल्नु**—(१) = डाहले जल्नु। यो कोट मलाइ बक्सेको सुनेर नेप्टेको पेट पोलिरहेछ। (२) साधारण अर्थ। आज चारौटा हरिया खुर्सानी खाइदिएको पेट पोल्न थाल्यो। क्षुधाले भने सताउदै ओठ–मुख सुकाइसक्यो भोकले पेट पोल्यो, आन्द्रा आफुस–आफुसमा चुत्ती खेल्न थाले।—भवानी (यौवनको आँधी)।

**पेट फुट्नु, फुटाफुट हुनु**—(१) = (मिलेको मानिसको) झगडा भई परस्परबाट कुरा खुल्नु। के कुरामा झगडा परेछ कुन्नि, दुइ जना धाईको पेट फुटाफुट भयो (वा फुट्यो)। (२) साधारण अर्थ।

**पेट बाझ्नु**— = भिन्न भिन्न बेमेल हुनु। बाहिर देख्दा मेल छ तापनि यिनीहरूको पेट बाझेको छ।

**पेट बोक्नु**—(१) = गर्भवती हुनु। पेट बोकेकि हुँ नारी कै भनी तहाँ तिन्का नजिक् वस्तछु॥—पद्मप्रसाद (श्रीमद्भागवत)। (२) = अमिल्दो गरी तल्लो हिस्सा हुट्ट उठ्नु। यो डकर्मी जान्दो रहेनछ, हेर, त्यो गारोले पेट बोकेको!

**पेट भर्नु**-(१) = अर्काको धनमाल छली वा धुती खानु। जोगि भै गेरू रँगाई केशको पाली जटा। भर्न पेट् छाडेन जस्ले के गऱ्यो आई यहाँ॥—शम्भुप्रसाद (शम्भु भजनमाला)। (२) साधारण अर्थ। तँ ता साह्रै खञ्चुवा छस्, जति खाए पनि कहिले तेरो पेट भरिँदैन।

**पेटमा अड्नु**—(१) = गुप्त रहनु। वाग्मतीलाइ यो कुरा नभन, तिनको पेटमा कुरा अड्दैन। (२) = झाडा वा वमन नभएर पाकस्थलीमा रहनु। बिरामीको पेटमा दूधै अडिदिएन।

**पेट(मन)मा आउनु मुखमा नआउनु**— = संझेसंझे जस्तो हुनु तर नसंझनु। तिमीले भनेको केटीको नाम पेटमा आउँछ मुखमा आउँदैन।

**पेटमा आगो बल्नु**—=ज्यादै भोक लाग्नु। अर्काको **पेटमा आगो बलिसक्यो** म त नखाईकन काम गर्न सक्तिनँ।

**पेटमा** *काउली* **(कुखा) बास्नु, मूसा दौड्नु**—=भोकले सताउनु। ओहो, दुइ बजिसकेछ, उसैले पो मेरो **पेटमा काउली बास्न** थालेको रहेछ।

**पेटमा** *ढुङ्गा* **(पटुका) कस्नु, कसेर बस्नु**—=कष्टसाथ भोक खप्नु। **पेटमा ढुङ्गा कसेर** पनि यस पाला त छोराको बिहा गरी छाड्छु।

**पेटमा दया र आँखामा माया नहुनु**—=निठुरी, निर्दयी हुनु। **पेटमा दया र आँखामा माया नभएको** मान्छेसित रोएर के गर्नु!

**पेटमा धर्म हुनु**—=धर्मको संझना रहनु। मान्छया **पेटाँ धर्म** भे पो पानी पनि बखत बखताँ पर्छ।—भीमनिधि (सहनशीला सुशीला)।

**पेटमा धूवाँ छुट्नु**—=रिसले आगो हुनु। कान्छा दाइका सयसले मेरा घोडा चढेका सुन्दा **पेटमा धूवाँ छुट्यो।**

**पेटमा पस्नु**—(१)=पच पार्नु। तिम्रो घडी त लालेको **पेटमा पसिसक्यो**, तिमीले फिर्ता पाउनु त्यत्तिकै हो! (२)=मनको कुरा थाहा पाउनु (यो अर्थमा 'मा' लोप पनि हुन सक्छ)। अर्काको **पेटमा को पस्न सक्छ? पेट पसी** खुट्टा तान्ने (=मनको कुरा बुझिसकेपछि गिराउन खोज्ने)।

**पेटमा राख्नु**—=गुप्त राख्नु। तिमी **पेटमा** कुरा **राखन** सक्तैनौ।

**पेट मार्नु**—=(नअघाउने गरी खानु, भोकभोकै बस्नु। अर्काको **पेट मारी मारी** कमाएको पैसा सित्तैमा फ्याँक्छु? हेर्‍यो जतातिर उही छ बडो भिखारी। को दिन्छ भीख अनि आफ्नु **पेट मारी**? ॥—लेखनाथ (सत्यकलिसम्वाद)।

**पेटमा सारङ्गी बज्नु**—=साह्रै भोक लाग्नु।

**पेटमा हुनु**—(१)=दिलमा हुनु। तिम्रो **पेटमा** के छ के छ हामी के थाहा पाऔं, भने पो थाहा हुन्छ। (२)=सँग हुनु। यस सालको कूत मोहीकै **पेटमा छ**।



**पेट मिची मिची हाँस्नु**—=ज्यादै हाँस्नु। चिट्ठी सुन्दा सुन्दै कोही **पेट मिची मिची हाँस्न** लागेकी थिइन्।—रुद्रराज (प्रायश्चित्त)।……**पेट मिची मिची हास्ने**…उफ्रदै उफ्रदै आई टेलीफोन समाइराखेको दशरथकुमारको बाजा हात एकासी समातेर भनी।—भवानी (यौवनको आँधी)।

**पेट मिल्नु**—=दुवै जनाको एउटै मत एउटै विचार हुनु। अहिले त दुइटै बुहारीको **पेट मिलेका** छ, पछिलाइ कसो हुन्छ!

**पेट लाग्नु**—(१)=झाडा लाग्नु। एकादशीमा पानीरोटी खाएको **पेट लाग्यो**। (२)=पेटमा पच्ने हुनु। **पेटलाग्दो** गरी खाए पो हुन्छ, धेरै हसुरेर मात्र के गर्नु।

**पेटे भोटो**—=केटाकेटीले लाउने बाहुला नभएको कुममा तना बाँध्ने, खास गरी पेट छोप्नानिमित्तको।

**पै***ता***(त)ला चटाउनु**—=उहिलेको ज्यादै लज्याउने सजा दिनु (प्रायः जारलाई साधुले र धामीले बोक्सीलाइ दिने)। रिट्ठेले **पैताला चटाएर** छोडेकी बूढी।

**पै***ता***(त)ला[मनि]का धूलो**—=(१) दयामा निर्भर रहने, दास समानको व्यक्ति। त्यो तपाईंकै **पैतालामनिको धूलो** हो एक फेरा माफ दिनुहोस्। (२) साधारण अर्थ। बरु **पैतालामनिको धूलोको** भाउ छ, मेरो छैन।

**पै***ता***(त)लामनि दबाउनु**—=दमन गर्नु। माइतका आइमाईहरू पनी सबै **पैतला** मनी **दवाएर** राखिएका थिए।—रुद्रराज (रूपमती)।

**पै***ता***(त)लामनि हाल्नु**—(१)=भैगो भनेर सहनु। जे भए पनि भाइ हो भनेर कति पटक त्यसको वचन **पैतालामनि हालेका** छु। (२)=वास्तै नगर्नु। गाग्रो बरण्डामा नराख् भनेर सेतीलाइ कति पटक अह्राइसकें, मेरो कुरा **पैंतलामनि हालेर** हिंड्छे। (३)=दमन गर्नु (रिस)। मालिकसँग जोड

लागेर पुग्दैन, रिसलाइ पैतालामनि हालेर काम गर्न जाऊ ।

**पैयाँ उठ्नु**—=पैयाँ चाल शुरू गर्नु (घोड़ाको बारे) । यो घोड़ा छोटी पैयाँ मारी काटी उठ्तैन।

**पैयाँ खेल्नु**—=लम्बे पैयाँमा बेसरी दगुराउनु । आज त तिमीले घोडालाइ पैयाँ खेलेर लगेका थियौ, कवायदमा जान ढीलो भएर होला !

**पैयाँ जानु**—पैयाँ दगुर्नु । यो घोडा बडो हल्का पैयाँ जान्छ ।

**पैयाँ ठोक्नु**—=लम्बे पैयाँमा बेसरी दगुराउनु । ५।६ ओटा बाइस्कल पछि पछि लगाई आफू घोडा चढी पैयाँ ठोकेर पुग्दथे । —रुद्रराज (चप्पाकाजी) ।

**पैरो छुट्नु**—=भय शोकहरूले मुटु कलेजो हल्लनु । सम्झी त्यो घटना मलाइ अहिले पैरो छुट्यो पेटमा ।—भानुभक्त ।

**पैरो जानु, लड्नु**—=भिरालो जग्गा भत्केर तल झर्नु । अस्तिको पानीले त्यहाँ पैरो गएर एउटा घर भत्क्यो ।

**पैसा उठाउनु**—=लेना रुपियाँ असूल गर्नु ।

**पैसा उडाउनु**—=बेपरवाहसँग खर्च गर्नु । चैतैले त बाबुचाहिंले कमाएको धेरै पैसा उडायो ।

**पैसा कमाउनु**—=धन कमाउनु ।

**पैसा खानु**—(१)=अर्काको रुपियाँपैसा लिनु । त्यसरी अर्काको पैसा खाए पछि तिर्नु पर्छ भन्ने थाहा छैन ।—रुद्रराज (रूपमती)। (२) साधारण अर्थ ।

**पैसा चिन्नु(हु)**—=लोभ गर्नु, किफायती हुनु ।

**पैसा चिलाउनु**—=खती हुने मति लाग्नु (बेफ्वाँकमा धन जाने वा गएको देख्ता प्रयोग हुने बोली) । तिम्रो पैसा चिलाएको, नत्र यस्तो मारताल चलेको बेलामा किन थाप्न जान्थ्यौ !

**पैसा नछिराउनु**—=लोभ गरी दामपैसा दिंदै नदिनु ।''''कसैलाई एक पैसा न छिराई धर्म-कर्म नगरी,''''पैसा कुम्लाएर राख्नेहरूलाई पनि धिक्कार छ ।—रुद्रराज (चप्पा काजी) ।

**पैसा बग्नु**—=लगानीमा लाएको उपर नहुने हुनु । फत्ते मुग्लान पस्यो रे, उसलाइ सापटी दिएको पैसा त बग्ने देखियो ।



**पैसा लाउनु**—=धन लगानीमा लाउनु । यो काममा पैसा लाए त जरूरै नाफा हुन्छ ।

**पोइल जानु**—=बिहाबारी नगरी अर्काकी स्वास्नी हुनु । तल्लो घरकी कान्छी त खँडकासित पो पोइल गइछ ।

**पोखरी खेल्नु**—=पौडी खेल्नु (को बेठीक रूप) । अब आउने आइतवार आर्यघाटमा पोखरी खेल्न जाऔं ।

**पोट बाह्र पर्नु**—=पौ बाह्र पर्नु ।

**पोडे(ढे) भए**—किरियामा प्रयोग हुन्छ । पोडे भए जागिर नखाई छोड्डुँला ।—रुद्रराज ( रूपमती ) । अब पोढे भए क्यै गरुँला ।—गुरुप्रसाद (कथा कुसुम) ।

**पोडे(ढे) मल**—=गुहु हालेको ।

**पोतो बस्नु**—=चायाँको टाटो निस्कनु (मुख वा हातमा) ।

**पोथी बास्नु**—=पोइलाइ नटेरी स्वास्नीचाहिंले हैकम चलाउनु । पोथी बासेको घरमा काम गरेर जस पाइँदैन ।

**पोल खुल्नु**—=लुकाएको कुरा प्रकाश हुनु (यस वाक्यांशमा बाहेक अन्यत्र यस अर्थमा'पोल' प्रयोग हुँदैन भने पनि हुन्छ) । घरमा धेरै दिन राखुँ भने पोल खुल्ला भन्ने डर भयो ।—रुद्रराज (रूपमती) ।

**पोल लाउनु, हाल्नु**—=चुक्ली हाल्नु ।

**पोलेर खानु**—(१)=बिर्सनु । यसले अस्ति मात्रै कण्ठ गरेका श्लोक त आज पोलेर खाएछ । (२) साधारण अर्थ ।

**पोल्टामा हाल्नु**—(१)=पत्यार गरेर जिम्मामा सुम्पनु (अक्सर बालबच्चा) । घरमा पाको कोही छैन बालबच्चालाई तिम्रो पोल्टामा हालेर सवारीमा जान्छु, हेरचाह गरिदिए । (२) साधारण अर्थ । मेरो हात जूठो छ, मकै पोल्टामा हालिदिनुहोस्न ।

**पोल्टो थाप्नु**—(१)=मगन्ते हुनु ।''''गरीब भए पनि आजसम्म कसैका घरमा पोल्टो थाप्न गएको छैन ।—गुरुप्रसाद (कथा कुसुम) । (२) साधारण

अर्थ । चिउरा दिन्छु, खै **पोल्टा थाप** ।

**पोल्टा पोल्दै उम्केको जस्तो** —ज्यादा कालो मानिसलाइ हेला गरी दृष्टान्त दिने बोली ।

**पौँठे जोरी खेल्नु**—पालै पालो-सँग एउटाले अर्कोको नारी समात्ने, समातिनेले फुस्काउने गरी बल जाँच्नानिमित्त दुइ जनाले खेल्ने । पहाडका बलिया बलियाले **पौँठे जोरी खेल्दा** नारीको छाला खुतखुती जान्छ ।

**पौडी खेल्नु**—=पौडनु, पानीमा उत्रनु । देखिन्छन् जलमा **पौडी खेलने** ती थरी थरी । दिव्य आनन्द—गङ्गाका सजीव लहरी सरी॥—लेखनाथ (ऋतु-विचार)। सत्यलाई **पौडी खेलेर** नुहाउने ठूलो शौक थियो ।—खड्गमान (अँध्यारोमा उज्यालो) ।

**पौ(पोट) बाह्र पर्नु**—=सिंहलग्न पर्नु, भने जस्तै हुनु । तिम्रो त आजकल जताततै **पौ बाह्र परिरहेछ** ।

**प्याँख्ला फोड्नु**—=च्याँख्ला फोड्नु (हेर) ।

**प्याकप्याकती लाउनु**—=खुरुन्धार लागेर पेला दिनु । त्यति चिठी लेखिसकेपछि दिन्छु भनिहाल्यो नि, कति **प्याकप्याकती लाइरहेको** !

**प्याच्च पच्कार्नु**—=गुह्य राखेको वा राख्नुपर्ने कुरा मानिसको अगाडि छिचरो भई वा बेहोशसित खोलिदिनु । पार्वतीले मसँग कुरा लुकाएर गरिरहेकी थिई मुनियाँले **प्याच्च पच्कारिदिई** ।

**प्याच्च बोल्नु, भन्नु**—=भन्न अयोग्य वा नबुझेको कुरा विनाविचारी ध्वाट्ट प्रकाश गर्नु । राम्रो परोस् कि नपरोस् (वा बुझनु न सुझनु) **प्याच्च बोल्यो**, पुग्यो !

**प्यादा लाग्नु**—=धर्नो कसेर पछि लाग्नु । काबुलीको रुपियाँ दिन नसकेर **प्यादा लागिरहेछ** ।

**प्यास मेट्नु**—=पानीको तिर्खा साम्य गर्नु । दूध पिएर पानीको **प्यास मेटिंदैन** ।

**प्रतिवादी फिराउनु**—=फिरादीपत्र परेपछि त्यसको जवाबमा प्रत्युत्तर पत्र दाखिल गर्नु । **प्रतिवादी फिराउन** नसकेपछि तेरो बोल्ने ठावैं छैन ।



**प्रलय पर्नु**—=ज्यादै गाह्रो हुनु । एउटा सानो हिसाब गर्न दिएको रत्नबहादुरलाइ **प्रलय पर्‍यो** ।

**प्रशस्त**—=यसको अर्थ संस्कृतमा :—तारीफ गरिएको, तारीफलायकको, उत्तम, इत्यादि छन् ; हाम्रो भाषामा अएपछि ती अर्थ हराए, केवल 'छेलोखेलो, जति भने पनि पुग्ने, धेरै' को अर्थमा प्रयोग हुन्छ । यति जनालाइ यो रूखको सुन्तला **प्रशस्त** हुन्छ। लिंदैन किन यो फेरि हामिले झैं, **प्रशस्त** छ खास आकाशमा ! —बालकृष्ण (प्रह्लाद) ।

**प्राइभेट गर्नु**—=एकान्त गर्नु, अरूलाई नराखेर बातचीत गर्नु । हिजो उनीहरूले धेरै बेरसम्म **प्राइभेट गरे** रे ।

**प्राण छोड्नु**—=मर्नु । आर्य घाटमा **प्राण छोड्न** पाए पुग्छ । तेस्तै जीवात्मा तेसै पनि परमात्मामा मिलेकैछ, जीवले **प्राण छोडेपछि** पनि मिलेकै हुन्छ,……।—जयपृथ्वी बहादुर (तत्त्वप्रशंसा) । **छोड्छू प्राण्** म पनी मलाइ पतिका लङ्मा यसै रित् गरी । दग्धै गर्न लगाइ बक्सनु हवस् चाँडो हजुर यै घरी ॥—केदारनाथ (महाभारत आदिपर्व) ।…केही घण्टासम्म छटपटाएर तिनले **प्राण छोडिन्** । —खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह) ।

**प्राण जानु**—=मर्नु, ज्यान जानु (ज्यानै गए पनि हेर) । ठूलो पुण्य थियो र भेट् हुन गयो पायेर छोडू कहाँ । **जावस् प्राण्** वरु यो सहिन्छ अब ता यो दुःख साँचू कहाँ ॥—मोतीराम (उषा चरित्र) । उहाँलाई स्वास्नी आँखाबाट हटिन् कि उहाँको **प्राण गयो** भन्ने डर थियो ।—खड्गमान (दर्पचूर्ण) । **प्राणै जान्छ** भने पनि यति काम नगरी छोड्दिनँ ।

**प्राण त्याग्नु, त्यज्नु, त्याग गर्नु**—(१)=मर्नु (कुनै उद्देश्यको लागि भए यो, कालगतिले भए 'देह त्याग्नु' प्रायः प्रयोग हुन्छ)।

""जो मेरो हजूर सँग बसउठ गर्न प्राण त्यज्छौ, त्यस सँग म मिलीजुली बस्नेछु ।—श्री-केसर (विक्रमोर्वशी) । आज महारानी ले मेरो झूटो मरणको खवर सुनना साथ प्राण त्याग गरिन भने उनको यो प्रत्यक्ष मरण देखे पछी पनी भर्तृहरि जिउँदै रहन शकला ?—लेख-नाथ (भर्तृहरिनिर्वेद) । (२)= ज्यादै आग्रह गर्नु वा आसक्त हुनु, भुतुक्क हुनु । चुरोट भनेपछि लुरी प्राणै त्याग्छे । साहिँलो फूलमती भन्दा प्राणै त्याग्न खोज्छ ।

**प्राण राख्नु**—=ज्यान बचाउनु। पार वाला राजाले, सिधा दिये बाँडी । प्राण राखेँ सबले, लिइ सिधा हाँडी ॥—शिखरनाथ (गंगामाहात्म्यको सवाई) ।

**प्राण लिनु**—(१)=हैरान पार्नु । यी केटाकेटीहरूले मेरो प्राण लिइसके । (२)=मार्नु । आयाको छु म ज्या भनी जस बखत् तेस्ले त सुन्ला जसै । मेरो प्राण लिन्या छ कुन् तखतमा तिम्लाइ राख्ला तसै ॥—मोतीराम (उषा चरित्र) । एउटै पछारमा तेरो प्राण लिनेछु !!—काशी बहादुर (उषा) ।

**प्वाँख उम्रनु, लाग्नु, हाल्नु**—(१)=ठूलो हुनु, हात खुट्टा लाग्नु, (हुर्केको केटाकेटीले नटेर्दा प्रयोग हुने) । प्वाँख उम्रिसक्यो अब त हामीलाइ किन टेर्थिस् ! (२) साधारण अर्थ । परेवाको प्वाँख नउम्रेको बचा बडो घीनलाग्दो हुन्छ ।

## फ्

**फजिती(फजियत) खानु, पाउनु**—=दुःख पाउनु । अस्ति शिकारमा गएको मुसलधारे पानी परेर साह्रै फजिती पाएँ ।

**फट हुनु, पार्नु**—(१)=दुवै वा सबै पक्षबाट बाहेक हुनु, गर्नु । आफ्नो लोग्नेस्वास्नी मिलिहाले, मचाहिं फट भएँ । (२)=(ताशको खेलमा, प्रायः रङ खेल्दा) हातमा एक चक्की पनि



बाँकी नरहने गरी जित्नेलाइ तिर्नपर्नु ।

**फट्को मार्नु**—(१)=एउटा खुट्टाले जमीन नछुँदै अर्को खुट्टाले जमीन छोड्ने गरी केही फूर्तिसँग वा उफ्रेर जानु (प्रायः साङ्घे बचाउन वा खोलानाला नाघ्नालाई) । ए सानो बाहुन ! तलमाथि नगरीकन फट्को मारेर भान्सामा आऊ । (२)=खस्रो सिलाइ गर्नु । मसिनो गरेर सिउनुपर्ने मोहोजीलाइ तिमीले त फट्का मारेर सिएछौ । कत्रो कत्रो फट्का मारेर सिएको !

**फट्को हाल्नु**—=एक पाइलाले टेक्नु । त्यसको घरमा मैले फट्को हालेको छैन ।

**फट्याइँ लाउनु**—=नभएको कुरा सुनाउनु ।

**फट्याङ्ग्राको काल**—=जुम्राको घान (जस्तै प्रयोग हुने) । चिल्ने बारुलो भागिहाल्यो, नाहकमा फट्याङ्ग्राको काल भयो ।

**फतक्क गल्नु**—(१)=पाकेर गलत्त हुनु । उहांलाइ फतक्क गलेको केरा मन पर्छ । (२)= चलाउन मन नलाग्नेसम्मको शिथिल हुनु (हात खुट्टा) । हिजो बर्त बसेको थिएँ, आज भात खाइसक्नेसाथ हात खुट्टा कसरी फतक्क गले !

**फत्तूर थाप्नु, लाउनु**—=अत्तो लाउनु । हो हरूवाहरूले फत्तुर लाँउछन् ।—रुद्रराज (चप्पा काजी) । आफूले नखाए नबिराएको कुरामा त्यसले फत्तूर थापेर हुन्छ ?

**फड्याक फड्याक पर्नु**—(१)= भुटभुटिनु । परदेशमा छोरी बिरामी भएको सुन्दा लालसिङ फड्याक फड्याक पऱ्यो । (२)=(दुखेर) ज्यादै छटपटाउनु, लडीबडी खेल्नु । तिम्री भाउज्यू सुद्ध दुखेर फड्याक फड्याक परिरहिछन् ।

**फनक्क घुम्नु**—=पूरा चक्कर खानु । बरु चुल्ठो फनक्क घुमाएको भए तिमीलाइ सुहाउने थियो नि । जुनेली रातमा राम्रो सुन्दा चहचह-ध्वनि । फनक्क भुमरी मारी घुंछ आनन्द फन्फनी ॥—लेखनाथ

(ऋतु-विचार)। (२) = (रिसले) रन्थनिएर फन्न चक्का खानु। कान्छाले गालि गरेको सुनेर लक्ष्मी रिसले **फनक्क घुमी**।

**फन्को मार्नु**—(१) = एक पटक बेर्हु। उसैमाथी कालो बहुत डरलाग्दो विषधर। चल्यो **फन्का मारी** पलपल उकेल्दो छ जहर ॥—लेखनाथ (लक्ष्मी-पूजा)। (२) = एक चक्का घुम्नु। तिमीले डुँडीखेलको दुइ **फन्का मार्दा** म घर पुगिसक्छु।

**फन्दा पर्नु**—(१) = फस्नु। सूर्यप्रसादलाई **फन्दा पर्‍यो**, अब त्यो मगर्नीबाट उम्कन कठिनै छ। (२) = जाल पर्नु। शिकारलाइ **फन्दा परेन**?

**फन्दामा पर्नु**—(१) = धोखा वा वशमा आउनु। माहिलो तिम्रो **फन्दामा पर्ने** मानिस होइन। (२) = संकटमा पर्नु। यस पाला दशा रहेछ, म ठूलो **फन्दामा परें**। (३) साधारण अर्थ।

**फरक्क फर्कनु**—(१) = ठाउँ खुट्टाले फर्कनु। तिम्रो सिपाही त्यति भन्नेसाथ **फरक्क फर्केर** गयो। (२) = फुर्तिसँग वा छिटोसँग मोड्निु। खित्रिक्कको अबाज सुन्नेसाथ सान्छोराले **फरक्क फर्केर** हेर्‍यो।

**फरागत पाउनु, दिनु**— = छुटकारा पाउनु, दिनु (प्रायः स्रेस्ताको बोली)। बिहेको खर्च भएको फाँटवारी एक पटक हेरिदिनुभए त्यसबाट मैले **फरागत पाउने** थिएँ।

**फरियाको नाता**— = स्वास्नी वा आइमाईपट्टिको साहिनु (त्यस साहिनुको जरियाले दर्जा वा दौलत पाउँदा प्रयोग हुने हेलाको बोली)।···**फरियाको नातो** जस्तो बलियो अरू केही छैन भन्ने उसको विचार थियो।—रुद्रराज (चप्पा काजी)।

**फरियाको फेटा गुति(थि)दिनु, लाइदिनु, बाँधिदिनु**—नामर्द वा आफ्नी स्वास्नीको अधीनमा बस्ने मान्छेलाइ गिज्याउँदा प्रयोग हुने। यति कुरा पनि स्वास्नीचाहिंलाई नबक्साई नहुने, यस्ता मान्छेलाई स्वास्नीको **फरियाको फेटा गुतिदेऊन**!



**फरिया पछार्नु, पखाल्नु**—(१) = पछाडि कुरा काट्नु वा बदख्वाही गर्नु। अस्ति दिदीकहाँ गएर तैंले भलीभाँतिसँग मेरो **फरिया पछारेको** मैले सुनिनँ र? (२) साधारण अर्थ।

**फरिया फुस्कनु**—(१) = अनजानमा गुह्य कुरा खोलिदिनु। तिमी कुरा गर्दागर्दै आफ्नो **फरिया फुस्केको** पत्ता पाउँदिनौ, त्यसैले तिमीसित कुरा गर्न पनि डर लाग्छ।

**फरिया लाइदिनु**—(१) = पहिरनद्वारा आइमाई जताउने पार्नु (प्रायः नामर्दाईँ वा लाछीपन देखाउँदा लोग्नेमान्छेलाइ भनिने)। राती हिंड्न डराउने मान्छेलाइ त **फरिया लाइदिनुपर्छ**।

**फरेब थाप्नु, लाउनु**— = फत्तूर थाप्नु, लाउनु। तिमीले **फरेब थाप्नैमा** हुन्छ?

**फर्केर नहेर्नु, नआउनु, नजानु**—यहाँ 'फर्केर' ले 'एकदम' को काम दिन्छ। मलाइ अस्ति गालि गरेदेखि त्यो घरमा **फर्केर जान** मन लाग्दैन।

**फर्ज गर्नु**— = कल्पना गर्नु वा (बहसको लागि केही बेरको निमित्त) मान्नु (यो हिन्दी वाक्यांश यही अर्थमा मात्र हाम्रो भाषामा प्रयोग हुन्छ 'आज्ञा दिनु वा तरीका बताउनु' को अर्थमा प्रयोग हुँदैन)। **फर्ज गर**, यो किताबको लेखकले उल्था गर्न अनुमति दियो, त्यसो भए तिमी यो काम गर्छौ?

**फर्सी फुटे जस्तो फुट्नु**—मोटो मान्छे लड्दा दृष्टान्त दिने ठट्टाको बोली। ज्यादा नदगुर, अहिले लडेर **फर्सी फुटे जस्तो फुट्लाउ**।

**फल पाउनु, मिल्नु**— = कार्यको परिणाम हुनु। यस कामको अवश्य चाँडै नै **फल पाउनेछौ**।

**फल मासु**— = हाड नभएको सुप्लै सुप्ला भएको मासु।

**फलामको गु[हु]**— = कीट। **फलामको गु[हु]** घोटेर लाए बारुलाले चिलेको निको हुन्छ।

**फलाम जस्तो**—साह्रो चीजलाई दृष्टान्त दिंदा प्रयोग हुने। आपद्को पहाड बर्सँदा बर्सँदा मेरो हृदय **फलाम**

जस्तो साह्रो भइसकेको छ ।—रुद्रराज (प्रायश्चित्त) ।

**फाँकी मिलाउनु**—=छन्द बन्द मिलाउनु ( प्रायः कुराको ) । कुरा गरेर मात्र हुन्न, कुराको **फाँकी पनि मिलाउन** जान्नुपर्छ ।

**फाँको मार्नु**—=फुको कुरा धेरधेरै लिई टाढैबाट मुखमा हाल्नु । चिउराको बिरसिलो **फाँको मार्दा मार्दैमा** उसको समय बित्ता चौथो गुण्डाको आवाज आएको हुनाले उसले पनि···· बुइँगलवास गर्नुपर्‍यो ।—बोधविक्रम (दन्त्यकथा) ।

**फाँट खोल्नु**-(१)=फाँट लाउनु (२ हेर) ।

**फाँट लाउनु**—(१)=भाग लाउनु । पहिले यी ४ जनालाई कामको **फाँट लाइदेऊन** । (२)=विवरण दिनु, परी लाउनु । भाई ! भयौ किन तिमी सहसा उराठ ? यै बातको अब **लगाउ समस्त फाँट** ॥—लेखनाथ (सत्यकलिसंवाद) ।

**फाँसी आइलाग्नु, पर्नु**—=आपत्यारोमा पर्नु (फाँसीको चलन यहाँ नहुनाले त्यस अर्थमा हाम्रो भाषामा प्रयोग हुँदैन) । रामेको बा भने चाँडै भात खाएर ढोकामा जान्छु भन्छन्, आगो भने मारी काटी बल्दैन—मलाइ त क्या **फाँसी आइलाग्यो !**

**फाइँफुट्टी लाउनु, हाँक्नु**—=नभए नभए कुराको धाक छोड्नु । तैँले **फाइँफुट्टी लाएर** हुँदैन, मलाइ सबै कुरा थाहा छ ।

**फागुको गोठालो जस्तो**—फोहोर वा अश्लील कुरा बोल्ने मानिसलाई दृष्टान्त दिंदा प्रयोग हुने ।

**फागुने गीत**—=भँडुवा (लाज भाँडको) गीत । **फागुने गीत** गाएर हिंड्ने ठिटाहरूसँग जम्का भेट हुँदा त लाजले भुतुक्कै भएँ ।

**फागुन्या ताउलो**—जसलाई पनि बालिगरी दिइने माललाई दृष्टान्त दिने बोली (फागुने नाउँ गरेको कमाराको ताउलो त्यही किसिमसँग चलन हुने भएको दन्त्यकथाबाट) । यिनीहरूले मेरो नयाँ छाता **फागुन्या ताउलो** गराइसके ।



**फाजिल पर्नु**—=आयस्ता भन्दा बढी खर्च निक्लनु । तिमीले १७३ रुपियाँ दिएका थियौ २३ रुपियाँ **फाजिल पर्‍यो** ।

**फापेको देउता**—=शुभ फल दिने ठानिएको जुनसुकै वस्तु वा व्यक्ति । यो कलम मेरो **फापेको देउता** हो, यसले लेखेको बिन्तिपत्रबाट मलाइ धेरै पटक फलिफाप भएको छ ।

**फार्-धर्ती-दे-अन्तर हुनु**—=ज्यादै मुश्किल हुनु, यसो गरे पनि अप्ठ्यारो उसो गरे पनि अप्ठ्यारो पर्नु । पैसा नभएको वेलामा संधीले सापटी माग्नुभयो मलाई त **फार्-धर्ती-दे-अन्तर भयो** ।

**फाल खुस्कनु**—=मौका गुम्नु । अस्ति एउटा ठूलो **फाल खुस्क्यो**, नत्र निकै आमदानी हुने थियो ।

**फाल हाल्नु**—=उफ्रेर तल झर्नु । त्यो देखी उसको मित्र शीत वैरिन थाल्दछ । तत्कालै कुइरो सोझै फाँटमा **फाल हाल्दछ** ॥—लेखनाथ (ऋतुविचार) । राक्षस् स्वरूप भइगो जिब्रा निकाल्यो । वोडार् समान मुख बाइ त **फाल हाल्यो** ॥—राजीवलोचन (केदारकल्प) ।

**फास न फुसको कुरा**—=साररहित कुरा । केटाकेटीहरू **फास न फुसको कुरा** गर्छन्, त्यसमा लागेर तिमी किन तम्सिन्छौ ?

**फिक्री लिनु, मान्नु**—=सुर्ता लिनु (हेर) । नत शोकले ति रुन्छिन् नत केहि **फिक्रि लिन्छिन्** नत काल देखि डरछिन् गजबैकि छन् ति सती ॥—लेखनाथ (भर्तृहरिनिर्वेद) ।

**फियाको घाउ**—(१)=अविवाहित जवान छोरीलाई भन्ने बोली । यो **फियाको घाउ**लाइ नपन्छाई तिम्रो दिलको बोझ हट्तैन । (२)=अत्यन्त प्रेमको सन्तान । यो **फियाको घाउ** निको नहोउञ्जेल मलाई कुनै सुख छैन ।

**फिर्ती सवारी**—=(आदरको बोली) फर्कँदाको यात्रा (प्रायः ठाउँठाउँमा मुकाम गरी वास बस्ता) । यस पालाको फिर्ती

सवारीमा धेरै बाघ मरेनन्।

**फिस्टो तनाइ, दुहाइ**—ज्यादै थोरै वा सानो मालमा लोभ गर्दा भन्ने बोली।

**फीँज काढ्नु**—(१)=फीँज निकाल्नु। गोरे गजगजी **फीँज काढेर** मूर्छा पर्‍यो। (२)=बाछा बाछीले माऊको दूध खाँदा फीँज काढे झैँ स्वाद मानी मानी थूक निल्नु। रामेको चकचकी देखेर विनाइलम श्यामे **फीँज काढिरहेछ**।

**फुकी ढल्नु**—=ज्यादै दुब्लो हुनु। बुहारी पनि **फुकी ढल्नु** भइछन्, बिरामी भएर हो कि?

**फुकी फुकी खुट्टा राख्नु**—=(कुनै काम काजमा) ज्यादै होश गरेर चल्नु। त्यस गौँडामा बचेर हिँ ड्न साह्रै गाह्रो छ, **फुकी फुकी खुट्टा राख्नुपर्छ**।

**फुकी भाइ**—=जूठोसम्म लाग्ने टाढाको साहिनु पर्ने दाज्यु भाइ। तिनी **फुकी भाइ**सम्म त हुन् नि हामीलाइ के वास्ता गर्थे!

**फुङ्ग उड्नु**—(१)=रङ जानु वा खुइलिनु। तिम्रो फरिया त एक धुना पनि नपरेर **फुङ्ग उडेछ**। (२)=न्यास्रो वा नरमाइलो हुनु। यस्तो **फुङ्ग उडेको** ठाउँमा के बस्नु!

**फुटेको आँखाले [पनि] देखिनसहनु**—'एक आँखाले पनि देखिनसहनु' जस्तै प्रयोग हुन्छ।

**फुटेको कर्म**—=बदनसीब। कस्तो **फुटेको कर्म**—यस्तो अँध्यारो कुनामा सडिरहनु पर्ने।
—रुद्रराज (चप्पा काजो)।

**फुटेको पैसा**—=चुनदाम वा हद थोरै द्रव्य। सबै मतलबी आसपासका घरमा घुमे, **फुटेको** एउटा **पैसा** कतै पाइँन ;····।
—बालकृष्ण (मुटुको व्यथा)।
एउटा **फुटेको पैसाको** आमदानी थिएन।—रुद्रराज (रूपमती)।

**फुटेको पैसा [पनि] नछिराउनु**—=चुनदाम वा हद थोरै द्रव्य पनि नदिनु। ठूलो कान्छा साह्रै लुच्चो छ, कसैलाइ **फुटेको पैसा छिराउला** भन्नुपर्दैन।

**फुटेको हाँडी**—(१)=भिन्न



भएको दाज्यू भाइ। इष्टमित्र भने मिलजुल गरी बस भन्छन्, तर **फुटेको हाँडी** कहिले जोरिन्छ र? (२)=जोसँग पनि झगडा गरिरहने अमिल्दो मान्छेलाई भन्ने बोली।

**फुट्टी खाने बुद्धि**—=हद कम बुद्धि (प्रायः अकरण भएर प्रयोग हुने; तलको वाक्यांशबाट)। तेरो त **फुट्टी खाने बुद्धि** पनि छैन।

**फुट्टी गन्ने खेल**—=भूइँमा पल्टाएका चक्कीको फुट्टी गनेर खाने ताशको खेल।

**फट्टी नजान्नु, नआउनु**—=केही पनि नजान्नु, कत्ति पनि नआउनु। काल्छु मोटरको काम **फुट्टी जान्दैन**।

**फुलझ(ज)डी भर्नु वा हाल्नु**—(१)=(कुरामा) खूब सिफारिश गर्नु वा बुट्टा भर्नु, (कुरा) राम्रो पार्नु। तिमी जस्तो **फुलझडी भरेर** हामी कुरा गर्न जान्दैनौं। (२)=नभएको वा झूटो कुरा बीचमा घुसाउनु। ····रानीले आफूमाथि राजकुमारहरूले गरेका बनावटी अत्याचारको **फुलजडी भरिन्**····।
—बोधविक्रम (दन्त्यकथा)।

**फुल पार्नु**—(१)=नभएको कुरा जमाएर भन्नु। यसको **फुल पार्ने** बानी छ, म त यो कुरा यसै हो भन्न सक्तिनँ। (२) साधारण अर्थ। **फुल पार्ने** बेलामा पोथी मोटो हुन्छ। (३) जता ततै स्वास्नी बटुलेर धेरै छोराछोरी पाउनु। साठी वर्षको बूढो भएर पनि अझ कति **फुल पार्छौ**?

**फुलाएर राख्नु**—=बिहा गर्ने उमेर ढल्केसम्म बिहा नगरिदिएर राख्नु (छोरीको बारे)। ठुली छोरी १३ पुगी सकी, यति ठुली होइन्ज्याल पनी विवाह नगरेर **फुलाएर राख्ने** भन्ने बदनामी चारै तिर फैलिनलागेको थियो।—रुद्रराज (रूपमती)।

**फुलो पर्नु**—=(आँखाको) नानीमा सेतो बादल निस्कनु। त्यसको आँखामा **फुलो परेछ**। पति, पुत्र हुँदा थिए ममा दुइ आँखा पछि चट्ट एकमा कसरी कसरी **फुलो पर्‍यो**! अब अर्को पनि बन्दनै भयो!—गोपाल पाँडे

(सुनीति-विरह) ।

**फुल्न र डुल्नको ठेगान नहुनु**—=यो उमेरमा फुल्छ भन्ने र लोग्ने छोरो यहाँ डुल्छ यहाँ डुल्दैन भन्ने निश्चय छैन भनी जताउने वाक्यांश ।

**फुस्री राँड**—=छोराछोरी नभएकी राँड । म **फुस्री राँडलाइ** कसको माया छ र यहाँ बसूँ ।

**फुस्रो आँखा पल्टाउनु**—=मर्ने वेलाको चिह्न देखाउनु वा मर्नु । शास कण्ठमा आइपुग्यो । **फुस्रो आँखा पल्टायो** । व्यथित प्राणले व्यथाबाट छुट्टी पायो । —चन्द्रलाल (विष-वृक्ष) ।

**फू गर्दा ढल्ला जस्तो, फुके ढल्ला जस्तो**—=साह्रै दुब्लो वा निर्दो मान्छेलाइ दृष्टान्त दिंदा । **फुः गरेर ढल्ली जस्ती** थिइ —अहिले त मेरो घरको अन्नले स्वाँठिन सम्म स्वाँट्टी—किन मुख मुखै न लागोस् !—रुद्रराज (रूपमती) ।

**फूट पार्नु**—=झगडा वा बेमेल गराउनु । तिमीहरुको बीचमा **फूट पार्ने** चमेली नै हो ।

**फू मन्तरको बाचा**—=झारफूक गर्ने मन्तरको अन्तमा भनिने (भूत प्रेतहरूलाइ भगाउँदा यसो भनिने हुनाले 'भाग्नु, उड्नु, सिद्धिनु' जताउनालाइ पनि यो वाक्यांश प्रयोग गरिन्छ) ।···· आज सहानुभूति र दयामायाको महामन्त्रले—**फू मन्तरको बाचा**—भन्ना साथ भूतभागेका झैं नराम्रा विचारहरू भागे ।—रुद्रराज (रूपमती) ।····तिमीहरूले जस्तो सुकै धन-दौलत सँगालेर छाडि दिएपनि **"फू मन्तरको बाचा"** हुनेछ, इत्यादि जेठी मुखेनीको विचार थियो ।–रुद्रराज (चप्पा काजी) ।

**फूर्ति गर्नु**—(१)=छिटो गर्नु । चार बज्न लाग्यो **फूर्ति गर** । (२) साधारण अर्थ । मलाइ कसैले जित्न सक्तैन भनेर **फूर्ति गरेको** होइन ?–लगालग चार हात हार्‍यौ ।

**फूल**—=वाक्यको बीचमा फूलका नाउँ प्रयोग गर्दा हामी केवल 'जाई, केमरा, गुलाफ' वा कहिल्यै 'जाई फूल, गुलाफ फूल, इत्यादि' भन्दैनौं । उसैले-जय बहादुरले कोटमा गुलाफ घुसारेको रहेछ,



कसले टेबिलमा केमरा राखेछ, जाई फूल राम्रो हो, इत्यादि हाम्रो वाक्पद्धतिमा मिल्दैन । जाईको फूल, केमराको फूल, गुलाफको फूल भन्छौं, तर जाईको माला वा बोट, केमराको ट्वाक, गुलाफको थुँगा भन्ने चलन छ ।

**फूलको थुँगो जस्तो हुनु**—=(शरीर) ज्यादै हल्का वा चंगा हुनु । तपाईंको ओखती दुइ मात्रा पर्दैमा मेरो जीउ **फूलको थुँगो जस्तो भयो** ।....अब कपाल सब काँड़ा नै झिकेको **फूलको थुँगा जस्तो** छ हलुका ।—बालकृष्ण (मुकुन्द इन्दिरा) ।

**फेटा बाँध्नु, गुथ्नु (गुत्नु)**—=फेटा टाउकामा बेर्नु । नगीचको रुखो डाँडो हिम पर्दा हिमालको । देखिन्छ **फेटा बाँधेको** मूर्ति झैं उग्र कालको ।—लेखनाथ (ऋतु-विचार) । युवक ले शिर मा **फेटा बाँधे** का थिये,....। —शिवप्रताप (दुर्गेशनन्दिनी) ।

**फेद न टुप्पाको कुरो**—=आदि न अन्त्यको वा डोको न डालाको कुरो । बडा दिन त दसैंमा पर्छ रे, के **फेद न टुप्पाको कुरा गरेको** !

**फेद पसार्नु**—=पीठको तल्लो भाग (कण्डो) पसार्नु, अर्थात् मन नपरेको जाहेर गर्न पीठ फर्काउनु । एक वचन बोल्न हुँदैन दुलही **फेद पसारेर** हिंड्छे ।

**फेदै समात्नु**—=जडै भेट्टाउनु (प्राय: वक्रोक्तिमा प्रयोग हुन्छ)। दराजबाट तिम्रो टोपी मैले झिकें हैन के ?—**फेदै समातेछौ** ।

**फेर खानु, पर्नु**—(१)=फरक पर्नु । अलिकति बाटाको **फेर परेछ**, लालेसँग भेटै भएन । (२)=फाट्नु (कुरा) । त्यहीं नेर हामी दुइ जनाको कुराले **फेर खायो** ।

**फेरी लाउनु**—(१)=सबैलाइ भन्दै हिंड्नु । आनन्दलाइ यो कुरा भन्न हुंदैन, अह्तिको जस्तै **फेरी लाइदेला** नि । (२)=(साधारण अर्थ) कनफट्टाले रातमा घरघर फलाकेर हिंड्नु ।

**फेरो मार्नु**—(१)=बेर्नु । **फेरो मारेर** ओढे त त्यो खाष्टो खस्तैन नि । (२)=

लामो बाटो घुम्नु । पूर्व ढोकाबाट आएको भए नजीक पर्थ्यो, किन **फेरो मारेर** आयौ ?

**फेला पर्नु**—(१) = पक्राउ खानु। सँधै हुनु हुन्न, लौ कति हुनु हुन्न ? भन्दै माथि पुगेको त साना बाज्ये **फेला परे** ।—रुद्रराज (रूपमती) ।····अब त तिम्ले मलाइ के **फेला पारौला** ····। भीमनिधि (सहनशीला सुशीला) । (२) = पाइनु, भेट्टिनु (हराएको माल) । त्यस्तो बेलामा हाम्रा अफिसर, सिपाहीहरूले र स्वदेशी, विदेशीहरूले समेत····जिउँदै **फेला परे**कालाई बचाई, पुनर्जीवन गराइदिई जीव-दानको पुण्य लुटेका··· छन् ।—श्री ३ जुद्ध (भूकम्प-भाषण) । **फेला पारें**, रिसाहीको बाटो पहिल्याउने निस्सा । —श्री केसर (विक्रमोर्वशी) । (३) = रुघा, जरो, इत्यादिको वा कुनै व्यक्तिको पंजामा पर्नु । तिमी अमीलो नखाऊ भन्दा मान्दैनौ कुन दिन **फेला पर्छौ** ! विन्नै चतुर् कमलका **परियेछ फेला** । केवल् गफैगफ गरीकन जान्छ बेला ॥—मोतीराम (मनोद्वेग प्रवाह) ।····एक बाजि तेस्को **फेला परे** पछि उम्कन के मजाल ।—गम्भीर ध्वज (चन्द्रशेखर) । (४) = फसाद, अपठ्यारो, वा झंझटमा पर्नु । बोलाउँदा अघितिमी-कन कालवेला । पक्का रहेछ, **परियेछ** अवश्य **फेला** ॥—लेखनाथ (सत्यकलिसम्वाद) । **परें** हाय ! **फेला** मरें बीच वन्मा हरे ! दैव गर्नू गरिस् हाइ हाई ॥—ऐजन (भर्तृहरिनिर्वेद) । (५) = हारे' भनी सकार्नुपर्ने अवस्थामा पुग्नु (प्रायः बहसमा) । लौ, हजुर अब ता साँचै **फेला पर्नुभो** । —प्रेमराज (ससुराली) ।

**फेलो खानु**— = असफल हुनु । फेरि, म **फेलो खान्न** ।—नरेन्द्रमणि (यूरोपीय साहित्यको नमूना) ।

**फोका उठ्नु**— = पानी भरिएको फोको निस्कनु, उक्सनु । जुत्ताले खुट्टामा **फोका उठाएछ** । (हामी डाबरको सट्टा पनि 'फोका' प्रयोग गर्छौं) । तिमीलाइ



उपियाँले टोक्ता **फोका उठ्छ**?

**फोक्साको घाउ**— = फियाको घाउ ।

**फोक्से मायाँ**— = देखौवा प्रेम ।

**फोक्से मासु**— = धेरै दिन थलिएपछि तंग्रिंदा ताकत नभरिंदैमा लाग्ने, फुलेको जस्तो देखिने मासु । यिनलाइ त **फोक्से मासु** लागेछ ।

**फोक्से सिंगान**— = नाकबाट हतपति नझर्ने फींजै फींज भरिएको बाक्लो ।

**फोक्सो फुल्नु**— = दिल उठ्नु, मन लाग्नु (धेरैसम्म वा कहिल्यै नगरेको कुरा गर्दा प्रयोग हुने) । कहाँबाट **फोक्सो फुलेर** यस पाला संधिनीले पाँच रुपियाँ दर पठाउनुभएछ ।

**फोटु लिनु**— = तस्बीर खिंच्नु । यो त **फोटु लिन** लायकको जग्गा रहेछ ।

**फोस्रो कुरा**— = केही सार नभएको वचन । यस्तो **फोस्रो कुरा**ले समय खेर नफाल ।

**फोस्रो धाक**— = काममा परिणत नहुने । यस्ता जैरेले **फोस्रो धाक** लाएर हामीलाई नीचा गराउला भन्ने अब कस्तो बुद्धि हेर ।—रुद्रराज (रूपमती) ।

**फोहोर कुरा**—(१) = अश्लील, लाजभाँड कुरा । उहाँको अगाडि **फोहोर कुरा** गर्न लाज लाग्दैन ? (२) = घिनलाग्दो वा मैला चीज । **फोहोरं कुरा** कोठामा किन ल्याउँछौ ?

**फौजदारी मचाउनु**— = हात हालाहाल वा कूटपीट गर्नु । हजुरका घरमा त **फौजदारी मच्चिन** लाग्यो ए !—रुद्रराज (रूपमती) ।

## ब

**बकुल्लाको बथानमा** *कौवा* **(काग) बसे जस्तो**— गोरो मान्छेको हूलमा कालो मान्छे बस्ता दृष्टान्त दिने बोली ।

**बकुल्ला ध्यानी, भगत**— = कपटी, छली, बाहिर देख्ताको मात्र सच्चा । खूब **बकुल्ला भगत** बन्दथे, अब कुन चाहिने माछाः शिकारमा लागेका हुन्, थाहा पाइहालिएला नि !—रुद्रराज

(प्रायश्चित)। बकुल्ला भक्तको वेदान्ती कुरोझैं कुरा गर्ने त मैले पनि जानेकी छु;····।—भवानी (यौवनको आँधी)।

**बक्के(बक) फुट्नु**—=बोली निक्लनु। बिजुलीका ओठ त चले तर बक फुटेन।—खड्गमान (अँध्यारोमा उज्यालो)। छोरीको धर्मगाँठो बाँध्दा आमाबाहिको बक्के फुटेन।

**बक्के बस्नु**—=शिकिस्त बिरामी हुँदा बोली बन्द हुनु। सेतेको बक्के बसिसक्यो, मानिस हुन मुश्किलै छ।

**बखत आइपुग्नु**—=वेला आइपुग्नु (हेर)।

**बख्खुमा बल्भेको च्याँखे**—हात नपर्ने कुरा पाएँ, भनी फुलेकोमा दृष्टान्त दिने बोली।

**बगली मार्नु**—=खल्तीबाट चोर्नु। उनैले बगली मारेको ठहरिएछ।—रुद्रराज (रूपमती)।

**बङ्गारा झार्नु, फुकाल्नु, फोड्नु**—=बेसरी पिट्नु।

**बच्चा (चल्ला) काढ्नु**—=फुल कोरल्दा बच्चा निकाल्नु। यो माऊले कति दिनमा बच्चा काढ्छ?

**बजारको भाउ**—=बाजारहरूमा चलेको सरदर मोल। आइतेले यो टोपी मलाइ बजारको भाउमा दियो।

**बजार खोल्नु**—(१)=पसल खोल्नु। (२)=आइमाईले बेपरवाहसँग हिंड्नु।

**बजार लाग्नु**—=मेला वा त्यस्तै जमघटमा अस्थायी कैयन् पसल थापिनु, हाट लाग्नु। यही दिन जाउलाखेलमा ठूलो बजार लाग्छ।—रुद्रराज (चप्पा काजी)। यसकारणले सबजना बालबच्चाहरू समेत बजार लाग्ने ठाउँमा जम्मा भए।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)।

**बटैयामा कमाउनु**—=आयस्ता बराबर भाग लगाई खाने गरी कमाइ गर्नु। यो जग्गा मैले बटैयामा कमाएको छु।

**बट्टा लाग्नु**—=नाश हुनु, जानु। उस बखत मेरो बुद्धिमा बट्टा लागेको,·······।—भीमनिधि (सहनशीला सुशीला)। किन इज्जतमा बट्टा लगाउँछौ?



**बडा आमा, बा**—=आफ्नो बाबुकी आमा, बाबुको बाबु (यो वाक्यांशको ब्राह्मण जातिमा चल्ती छ)।

**बडा काजी**—=मुख्य काजी(बड़ा अरू दर्जामा रहँदैन)।

**बडा महारानी**—=महाराजधिराजका विवाहिता रानी र प्राइम मिनिष्टरका मुख्य रानी।

**बडी बात हुनु**—=ठूलो कुरा हुनु (अकरणमा प्रयोग हुने)। साइकल चढ्न जान्दैमा के बडी बात भयो र!

**बढ्ता हुनु, बढ्ता कुरा गर्नु**—(१)=आफ्नो मर्यादा नाघेर वा आफूभन्दा ठूलाको बारे नराम्रो काम वा कुरा गर्नु। तँ बढ्ता छस् कुन दिन फेला पर्छस्। (२) साधारण अर्थ। पढ्नामा त तिमी बढ्ता छौ। जे भए पनि तिमीले देखेका त रहेनछौ, त्यति त तिमीले बढ्ता कुरा गर्‍यौ?

**बत्तीको पुतली**—=रमझममा भुल्ने र आफ्नो नाशको कारण विचार नगर्ने अल्पजीवीलाइ दृष्टान्त दिने बोली। पैह्ले अक्षकुमार मारि अरु सब् सेना समेत नाश् गर्‍या। आउँदैमा तहिँ बत्तिका पुतलि झैं हूँदै अनेक् वीर् मर्‍या॥—भानुभक्त (रामायण)। फोड मस्तिष्कको आँखा जवानीको घमण्डले बत्तीको पुतली! हुन्छ, उडलौ, दिन आउला, पौडँदै थाक्नु पर्नेछ जलेको तैलसिन्धुमा,········।—बालकृष्ण (अन्धवेग)।

**बत्ती बाल्नु**—(१)=बिगबिगति लाउनु। सानो छोरो पसलमा गयो भने बत्ती बाल्छ। (२) =खलबली मचाउनु, हालाबाला खेलाउनु। गाइनेको लुगा फाट्यो; सत्र ठाउँमा टाल्यो। हाम्रो घरको ठकुरीले दिउँसै बत्ती बाल्यो।—बालकृष्ण (मुटुको व्यथा)। सानी छोरी मापाकी छ, उसको घर गएपछि बत्ती बाल्छे। (३) साधारण अर्थ।

**बत्तीस दन्तले बोलेको**—सबैको दाँत पूरा ३२ ओटा हुँदैन, उसैले ३२ ओटा दाँत भएको मानिसले बोलेको कुरा पुग्छ भन्ने चलन छ।

**बत्तीस लक्षण (लच्छिन) भए-**

को, ले युक्त (जुक्त) भएको —=कौनै कुराको खुन नभएको। त्यो गर्भबाट तिमीलाई **बत्तीस लक्षणले युक्त भएको** साह्रै राम्रो बाल पैदा हुनेछ। —बोधविक्रम (दन्त्यकथा)।

**बत्ती हाँस्नु**—=उसै (थाहा नपाइएको कारणले) बत्ती धिप धिप गर्नु (यसो हुनु कुलच्छिन हो भन्छन्)।

**बदमाशी खेल्नु**—=पेच खेल्नु। सर्सीले **बदमाशी खेलेको** उसलाई थाहा थिएन।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथा-संग्रह)।

**बदला लिनु, दिनु**—=साटो फेर्नु (दुवै वाक्यांशको एकै अर्थ हुन्छ)। नत्र अरूलाई **बदला दिंदा** अरूलाई तिम्रो जीवन भार हुन्छ, अरूसित **बदला लिंदा** तिमीलाई तिम्रै जीवन भार हुन्छ।—बालकृष्ण (प्रह्लाद)। म अवश्य त्यो संग **बदला लिनेछु**।—जितेन्द्र (आधुनिक आविष्कार)।....ती जम्ल्याहा दाजु बहिनी आफ्नी आमाको अपमानको **बदला लिन** थीब्जमा ओर्ले।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथा संग्रह)।

**बन्दरघुर्की, बन्दरमिजाज**—=फजुलको घुर्की, बाँदरको जस्तो बानी, (यी दुइ वाक्यांशमा बाहेक बन्दर हाम्रो भाषामा प्रयोग हुँदैन)। यस्ता **बन्दर घुर्कीले** पनि उसै विर्सन्छू काहाँ हरी॥—मोतीराम (प्रह्लाद भक्ति कथा)। त्यस्तो **बन्दरमिजाज** गरेपछि त्यो कोट कति दिनलाई हुन्छ?

**बन्धक पर्नु**—=धितो राखिनु। त्यस माथि घर खेत गहनापात सबै **बन्धक परिशकेका** थिए।—रुद्रराज (रूपमती)।

**बन्धक राख्नु**—=धितो राख्नु। सुनको औंठी **बन्धक राखेर** सय ओटा रुपियाँ ल्याएको थिएँ।

**बन्धन तोड्नु**—=बाँधने वा छेकथुन गर्ने कुरा हटाउनु वा पन्छाउनु (सबै अर्थमा)। आफ्नो मालिकको मायाले सारा **बन्धन तोडेर** उनको खोजमा आएको उनैको सब भन्दा मन परेको हात्ती पो रहेछ।—बोधविक्रम (दन्त्यकथा)।



**बरखी बार्नु, फुकाउनु**—=तोकिएको स्वजन मर्दा वर्ष दिन वा ४५ दिनसम्म सेतो एकसरो लुगा लाउनु, त्यति दिन पुगेपछि रीतभाँत गरी त्यस्तो लुगा लाउन छोड्नु। वराल्की छोरी पनी शशुराको **बर्खि बार्नु** परेकाले घरै आएर बसेकी थिइन्।—रुद्रराज (रूपमती)।

**बरबर (बरर) आँसु खसाल्नु, झार्नु**—=चाँडचाँडै आँसुका थोपा खसाल्नु। (मृग तिर हेरेर **बर बर आँसु खसालेर**) अहो! यस्तो यो कुन माजरा हो?—लेखनाथ (भर्तृहरिनिर्वेद)।

**बर्खे फल**—=काँक्रो (मंसीरमा नाउँ नकाटी काँक्रो खाने चलन हुनाले यही नाउँ प्रयोग हुन्छ)।

**बर्त (व्रत) बस्नु, लिनु**—=केही नखाने वा चोखो कुरा मात्र खाने बर्त गर्नु। पापी कुरा सुनें मैले प्रायश्चित्त म गर्दछु, जल मात्र पिई आज **व्रत बस्तछु**।—बालकृष्ण (मुकुन्द इन्दिरा)। अस्ति मात्र तिमी मूर्छा पर्यौ, भोलि **लिने व्रत**!—ऐजन (अन्धवेग)। सबै **व्रत लिन्छे**।—गुरुप्रसाद (कथा कुसुम)।

**बल छोड्नु**—=भात खाइसकेपछि नरकवासीलाई दुइचार सीता भात दिनु। अघि नै ल्याइदिएनौ, अहिले त **बल छोडिसकें** खान भएन।

**बल हाल्नु**—=पञ्च गाँस हाल्नु-अगाडि भातको बलि चढाउनु।

**बलिन्द्र धारा**—=निरन्तरको धारा (आँसुको मात्र)। अघि रनेले कुरा गर्दा पनि नगिरेको आँसुको **बलिन्द्र धारा** छुट्यो।—ग्रन्थकार (कथा कुसुम)।

**बलियो नसीप**—=ठूलो भाग्य। ईश्वरले कस्तो **बलियो नसीप** दिएको, जेमा पनि पास?—रुद्रराज (चप्पा काजी)।

**बली पाढे सेकिए जस्तो**—ज्यादा आगो ताप्न खोज्ने मान्छेलाइ दृष्टान्त दिने बोली (पूर्वको एउटा रैतीपिराहाले रैतीहरूलाइ अहाई आफ्नो चारैतिर धूनी लाउन लगाई तातो आगो दन्कँदै गई भाग्न नपाएर पोलिई मरेको बयानबाट)।

**बलेको (बल्दो वा बल्न लागेको) आगोमा घिउ हाल्नु**

(थप्नु)—=रिसाएको वेलामा झन् रिस उठाउने कुरा थप्नु। **बल्न लागेको आगोमा घिउ थपिदिनामा** खुशामदीहरू बडा पोख्त (सिपालु) हुन्छन्।–रुद्रराज (चप्पा काजी)।

**बल्छी खेल्नु**—=बल्छीले माछा शिकार गर्नु। पोखरीमा एउटा मान्छेले **बल्छी खेलिरहेको** थियो।

**बल्छी लाउनु**—=करमा पार्नु।

**बल्दो आगोमा हामफाल्नु**—=डरलाग्दो वा जोखिमी काम कुरामा हात हाल्नु।

**बसाइँ सर्नु, जानु**—=अर्को घर, देश, इत्यादिमा सर्नु, (कुनै ठाउँ, देश, इत्यादिमा) बस्तै गरी जानु, (यही दुइ वाक्यांश र अर्थमा मात्र 'इ' मा अनुस्वार रहन्छ, अन्यत्र खालि 'इ' प्रयोग हुन्छ, जस्तो :–अब धेरै वेरको बसाइ छैन)। ज्यादा **बसाइँ जाने** यौटा बाटो यही करियाको चलन हो।—श्री ३ चन्द्र (अमलेख-भाषण)।....त्यो श्यालले अब **बसाइँ सर्ने** विचार गर्‍यो।–बोधविक्रम (दन्त्यकथा)।....आफ्नू वासस्थान छोडेर मध्य एशियाको पश्चिम र दक्षिणतिर **बसाइँ सर्न** लागे।—वासुदेव (भारतवर्षको इतिहास)।

**बसी बियाँलो**—=दिन कटनी। जानेर गीत गाएको होइन, एउटा **बसी बियाँलो** मात्र गरेको हो।

**बस्ता बाँध्नु**—=कागज पत्रको पोको बाँधेर उठ्नाको तयारी गर्नु।

**बस्तै गरी जानु**—(१)=केही दिन वास बस्ने गरी जानु। यो पाला त ७ दिन **बस्तै गरी** जान्छु भनेर बिदा मागेर आएँ।—ग्रन्थकार(कथा कुसुम)। (२)=बसाइँ सर्नु। रघुवीर त पाल्पा **बस्तै गरी** जाने रे।

**बहाना लाउनु**—=बिझा लाउनु।

**बहुबङ्गाली चाला**—=जथाभावीको अवस्था। आजकल त्यस घरमा **बहुबङ्गाली चाला** छ रे।

**बाँकटे हान्नु**—=पौडँदा आलोपालोसँग पानीबाहिर हात झिकी चाल्नु। दिले काजी खूब राम्ररी **बाँकटे हान्छन्**।



**बाँकी राख्नु**—=त्यसै छोड्नु (प्रकरणबमोजिम—नखानु, नमार्नु, नपछार्नु, नकुट्नु, नजित्नु, इत्यादि अर्थ दिन्छ; अकरण अर्थ दिने वाक्यमा प्रयोग हुन्छ)। दुखी मारें निर्धा मारें मारें साहु ठालू केको **बाँकी राखथें** मैले त्यस्तो पाजी भालू।—लेखनाथ (भर्तृहरिनिर्वेद)।

**बाँको लाग्नु**—अड्डाखानाको कामकाजमा वा हिसाब किताबमा नोक्सानी पर्नु।

**बाँझीको छोरो जस्तो**—=हुन नसक्ने कुरालाइ दृष्टान्त दिंदा प्रयोग हुने बोली। तिनीबाट फाइदा उठाउने कुरा त **बाँझीको छोरो जस्तो** छ।

**बाँदरको घाउ**—=बराबर चलाई वा कोट्याई निको हुन नदिएको घाउ (बाँदरले चिथोरेर आफ्नो घाउ आफै ठूलो पार्छ भन्ने भनाइअनुसार)।

**बाँदर नचाए जस्तो नचाउनु**—=उठ् भने उठ् बस् भने बस् पार्नु। तिम्री छोरीले पम्लेलाई **बाँदर नचाए जस्तो नचाउँछे**।

**बाँध फुट्नु**—=बाँध (तल हेर) भत्कनु (उपमा अर्थमा पनि प्रयोग हुन्छ)। योता खाली दिकदारिको **बाँध फुटेको** मात्र हो।—लेखनाथ (भर्तृहरिनिर्वेद)।

**बाँध बाँध्नु**—=खोला नाला बढ्दा पानी आउन नदिनालाई घोचा इत्यादि गाडी बार लाउनु। **बाँद बाँधीदिंदा** सोझै चढ्यो पानी कुला-भरी। चित्त रोकी सुषुम्णामा लगेको प्राण झैं गरी॥—लेखनाथ (ऋतुविचार)।

**बाँधा पस्नु**—=कर्जा नचुकाएसम्म साहूको नोकरी गरी बस्नु। **बाँधा पसेर** गहना दिनुहोस नाथ!—लेखनाथ (सत्यकलिसम्वाद)।

**बाँसको ठानामा सारैँ वास बसे जस्तो**—=धेरै जना मिलेर कल्याङमल्याङ गर्दा दृष्टान्त दिने बोली। यस घरमा त सधैं **बाँसको ठानामा सारैँ वास बसे जस्तो** छ।

**बाँस जस्तो**—अति अग्लो र दुब्लोलाइ दृष्टान्त दिने।

**बाँसमा झुण्ड्याउनु (झुण्डाएर कोर्रा ठोक्नु)**—ठूलो सजाको रूपमा। ज्ञानवीर र पार्वतीलाई बाँसमा झुण्ड्याएर कोर्रा ठोके रे।

**बाउन्न कुरा**—=बाहृ सत्ताईस कुरा।

**बाउन्न घुस्सा, ठक्कर**—(१)=नाना प्रकारको ठक्कर। बाउन्न घुस्सा नखाई मानिस बुज्रुक हुँदैन। (२)=बाउन्न वर्षको उमेर। (३) साधारण अर्थ। बाउन्न घुस्सा नखाएको माल (=गाँजा) मीठो हुँदैन।

**बाकूलो कान**—=हतपती नसुन्ने कान। सय चोटि बोलाउँदा पनि नसुन्ने तेरो त खूब बाकूलो कान रहेछ।

**बाकूलो गिदी**—=कम मगज।

**बाकूलो दाल खानालाई छुट्टिनु**—बाबुआमा वा दाज्यूभाइसँग भिन्न हुँदा भन्ने बोली (ठूलो जहानमा पातलो दाल हुने हुनाले)।

**बाखाको मुख जस्तो**—छिनछिनमा खाने कुरा खाई मुख खाली नरहँदा दृष्टान्त दिने बोली। तिम्रो त बाखाको मुख जस्तै छ, भात खाएर एक छिन भएको छैन काँक्रो खायौ, फेरि अहिले मालपुवा खान थाल्यौ।

**बाखा बाँध्ने वेला**—=बेलुकी पख (३ बजेतिर)।

**बाखी (बाखा)को पुच्छर खाए जस्तो**—चकचक गर्ने मान्छेलाई दृष्टान्त दिने बोली (बाखाको पुच्छर खाए चंचल हुन्छ भन्ने विश्वासबाट)।

**बाखी(बाखा)को पुच्छरमा कीरा परे जस्तो**—एक छिन स्थिर गरेर बस्न नसक्ने (प्रायः केटाकेटी)लाइ दृष्टान्त दिने बोली।

**बाघभालू लाग्नु**—=बाघ भालूले खानु, दुःख दिनु।''''छोटो बाटोमा बाघ भालू लाग्दछन्।—बोधविक्रम (दन्त्यकथा)।

**बाघ र बाखालाइ एकै ठाउँमा पानी खुवाउनु**—=वैरभाव भएका ठूला साना मानिसलाई सरोबर गराउनु।

**बाघ हुनु**—(१)=रिसले चुरिनु।



कसैले उनका छोरालाई छुनु हुँदैनथ्यो—बुढी बाघ भएर आइलाग्थिन्।—रुद्रराज (रूपमती)। (२) साधारण अर्थ।

**बाङ्गो मुख गर्नु**—=नराम्रो वचन भन्नु। त्यो करुवा अघि नै राखिदिनुपर्दैनथ्यो, थिनीहरूलाई बाङ्गो मुख नगरी नहुने!

**बाछिटा हान्नु**—=हावाले हुत्त्याएर पानी ल्याउनु। बाछिटा हान्यो, त्यो झ्याल लाइदेऊ।

**बाजा बजाएर ल्याएकी स्वास्नी**—=विवाहिता पत्नी। बाजा बजाएर ल्याएकी स्वास्नी पो घरकी रानी हुन्छे।—गुरुप्रसाद (कथा कुसुम)।

**बाजी खानु**—(१)=पल्टाबाजी खाने गरी पछारिनु। यसरी साइकल नबढाऊ बाजी खाउलौ। (२)=उड्दा उड्दै हावामा पल्टाबाजी खानु (अक्सर परेवाको बारे)। आकाशमा बाजी खाने परेवा भए माथि सम्म उड्दै अल्पिने हो भने उनी जति रुपियाँ हाल्न पनि तैयार हुन्थे।—रुद्रराज (चप्पा काजी)। (३)=(कुरामा) उल्टा खानु। ठेगान नलागेको कुरा गर्दा बाजी खाउलौ।

**बाजी ठोक्नु, थाप्नु**—=बाजी राख्नु। आउ बाजी ठोकौं, अट्ठारवटा छन्।—गम्भीर ध्वज (चन्द्रशेखर)।

**बाजी माथ गर्नु, माथ गर्नु**—(१)=साह्रै तारीफलायकको काम गर्नु। तिम्रा श्लोक सबै हेरें, बाजी माथ गरेछौ। (२)=एकदम जित्नु। चाहिने कुरो भने अर्काको लिंदैनौ नचाहिने कुरामा बाजी मात गर्न भने खूब अघि सर्छौ।—रुद्रराज (रूपमती)। (३) साधारण अर्थ। उसले यो बाजी माथ गर्‍यो।

**बाटो काट्नु**—(१)=हिंड्नुपर्ने बाटो हिंडिसक्नु। यस्तै कुराको प्रवाहमा बहँदै शर्माजी घर पुगे—बाटो काटिएको थाहै पाएनन्।—रुद्रराज (रूपमती)। तिनलाई बाँकी बाटो एउटै जुत्ताले काट्नु पर्‍यो।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)। (२)=हिंड्न लागेको मान्छे

इत्यादिको अधित्तिरबाट बाटो नाघी वारका पार (=क्रस गरी) जानु, तेर्सिनु । खाल्टाखुल्टी बचाउन खोज्दा मोटर आफूतिर आउन लाग्यो भन्ने ठानी मूर्खह-रूले स्वाट्ट **बाटो काटि-दिन्छन्** । हिजोको हुरीले हाम्रो घरनेरको रूख **बाटो काटेर** ढलेछ । (३)=बाटो बनाउना-लाई जग्गा छुट्याउनु । फूलबारीको बीचमा दुइ हातको **बाटो काटे** राम्रो होला । (४)=बाटो मास्नु । यो पर्खाल बढाए त एक हात जति **बाटो काटिन्छ** । (५) =असक परी कोठैमा खानुपर्दा भान्सादेखि कोठासम्मको बाटो लिपी भात लगिसकेपछि कोठा-लाई बेग्लै भान्छा संज्ञनालाई भूइँमा डोरो कोरेपछि सो बाटो सरोबर गर्न हुने पार्नु । मैले **बाटो नकाटेसम्म** लिपेको ठाउँमा कसैलाई आउन नदेऊ ।

**बाटो गरेर**—=पट्टिबाट, भएर । ····कोही राक्षस यही **बाटो गरेर** आउन लागेछ क्यारे भन्ने विचार गरेर ताँदोमा काण चढाएर तयार भइरहे ।—बोध-विक्रम (दन्त्यकथा)। घण्टाघरको **बाटो गरेर** जाऊ ।

**बाटो तताउनु**—(१)=जानु । ····उसले अरू सबैलाई छोडिदिई त्यो एउटालाई मात्र बेसगरी समातेर बजारको **बाटो तताये** ।—*बोधविक्रम (दन्त्य-कथा)*। विन्ती छ मान्यवर ! औसर माफ पाऊँ । **बाटो तताऊँ**, उठिबक्सनुहोस जाऊँ ॥ —लेखनाथ (सत्यकलिसम्वा-द) । उसमानले········घोडामा सवार भई झट्पट् दुर्गतिरको **बाटो तताये** ।—शिवप्रताप (दुर्गेशनन्दिनी)। (२)=भाग्नु । ····आफूहरूको रहन-सहन इत्या-दि एङ्लो इन्डियनको ढाँचा गरी चोर बाटो बाट दार्जलिङ्गको **बाटो तताए** ।—भवानी (यौवनको आँधी) । (३)= मर्नु । यो बिरामीले त **बाटो तताउँछ** क्यारे !

**बाटो देखाउनु**—(१)=अघिबाट गरेर तरीका सिकाउनु, शिक्षा-दिनु ।····उद्योग परिषद स्थापन र स्वदेसी चीजको प्रदर्शनी आदिको प्रबन्ध गरी **बाटो**



**देखाउने** उपाय भएको हो ।—श्री ३ जुद्ध (भूकम्प-भाषण) । अति माया भए त्यसैले **बाटो देखाउँछ** ।—श्री केसर (विक्र-मोर्वशी) । परमेश्वर, हामीलाई बिजुली चम्काएर सब भन्दा राम्रो **बाटो देखाइदियौ**,....! —बालकृष्ण (प्रह्लाद) । (२) साधारण अर्थ । विरहमा परेका-को शरण लिने एकान्त विना अरू छैन, त्यसैले तिमी प्रमद वनको **बाटो देखाऊ** ।—श्री केसर (विक्रमोर्वशी) । जहाज-हरू र हवाई जहाजहरूमा **बाटो देखाउने** तथा अनेक आवश्यक कुराहरूको पूर्ती यसै यंत्र द्वारा हुन्छ ।—जितेन्द्र (आधुनिक आविष्कार) ।

**बाटो नाप्नु**—(१)=ज्यादै बि-स्तारै बिस्तारै हिंड्नु । यसरी **बाटो नाप्न** लाग्यौ भने झमक्क हुँदा पनि घर पुग्दैनौ । (२) साधारण अर्थ ।

**बाटो पक्रनु**—(१)=इलम वा पेशामा लाग्नु । जे भए पनि माइलाले त एउटा **बाटो पक्रे-को** छ, यो कान्छोचाहिं तर लागेन । (२)=नियम वा सिद्धान्तको पछि लाग्नु । एउटा **बाटो पक्रेर** चल्यौ भने यो काम सिध्याउन गाह्रो पर्दैन । (३)=साधारण अर्थ । उसको कुरामा विश्वास गरेर राजाले पनि उत्तरको **बाटो पक्रे** ।—बोधविक्रम (दन्त्यकथा) ।

**बाटो बथान्नु**—=बाटामा ढुकेर बस्नु । शरिर सब छिपाई आइ **बाटो बथानी** । शिवजि जब बस्याथ्या साधकी वृद्ध जानी ॥ —राजीवलोचन (केदारकल्प) । खेल्दा खेल्दै कैऔं फेरा अडीई बालिकाका मुखतिर हेरेका होलान् र कैऔं फेरा चियाउनाका लागि **बाटो व-थानेका** होलान् ।—गम्भीर ध्वज (चन्द्रशेखर) । रनेको **बाटो बथानी** उसको मुद्दा के भयो उसैबाट सुन्न सेती पहिले लुमडीमा कुरिरहेकी थिईं,····। —ग्रन्थकार (कथा कुसुम) ।

**बाटो बिराउनु, बिर्सनु**—= झुक्किएर आउनु (सधैं आउने मान्छे धेरै दिनपछि आउँदा भन्ने ठट्टाको बोली) । आज

कसरी बाटो बिराउनु भो, काजी ?—गुरुप्रसाद (कथा कुसुम)। वीणालाई देखेर मुसुक्क हाँसेर भनीन्, "आज कसरी बाटो बिरायौ नि ?"—रूप-नारायण (भ्रमर)।....किन आज आश्चर्यसङ्ग बाटो विर्सेर यतातिरको सफर गर्नमा ठूलो कष्ट उठाउनु भएको हो ?—भवानी (यौवन को आँधी)। (२) साधारण अर्थ। यस किसिमले जाँदा जाँदा एकाएक युवकले बाटो बिराएको थाहा पाएर "यहाँ कोही छ ?" भनी कराए।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)। संसार लहरिमा धेरै गोता खाइस्। कठै! मन मेरा तैंले बाटो ता बिराइस् ॥–धरणीधर (नैवेद्य)।

**बाटोमा पाएको बाटैमा हराए जस्तो गर्नु**—=सित्तैंमा आएको कुरा सित्तैंमा जाँदाको जस्तो बेवास्ता देखाउनु। बाटोमा पाएको बाटैमा हराए जस्तो गर्नु भयो।—भवानी (यौवनको आँधी)।

**बाटो लाग्नु**—(१)=खर्च भएर जानु, सिद्धिनु। सय रुपियाँ ल्याउन बेर न बाटो लाग्न बेर। (२)=बाटो लिनु (१ हेर)। ....हामीमा जो जहाँ पुग्ला, जो गिर्ला अन्धगर्तमा उही गिर्ला, दुवै लागौँ आफ्नो बाटो दुवैतिर अर्कोलाई पर्‍यो केको चासो!—बालकृष्ण (प्रह्लाद)। (३)=भत्कनु, फाट्नु। तिम्रो खाष्टो कति चाडो बाटो लागेछ। (४)=निक्लनु।.... आफ्नो भाग लेउ, बाटो लाग भनि दिए त आनन्दै भयोनी। —रुद्रराज (रूपमती)। (५)=मर्नु।....बाबु बालक कालमै बाटो लागिसकेको, अरू छोरा छोरी कोही नाइँ,....।—रुद्रराज (चम्पाकाजी)। (६)=प्रस्थान गर्नु (पुग्नुपर्ने ठाउँ धेरै टाढा हुँदा)। भोलि बिहान ९ बजे बाटो लाग्छौं। (७)=बाटो हिंड्नु वा जानु। लौ भन, कुन बाटो लागौँ ?—बोधविक्रम (दन्त्यकथा)। त्यहाँ पुगे पछि ती पैदलै टाइगर हिलको उकालो बाटो लागे।—रूप-नारायण (भ्रमर)।



**बाटो लिनु**—(१)=नियम वा धर्मको अनुसरण गर्नु (साधारण अर्थमा पनि प्रयोग हुन्छ)। दशतिर लागेर हुँदैन एउटा बाटो लिनुपर्छ। उसले बालिकालाई समातेर पिठ्यूँमा बोकी जंगलको बाटो लियो।—काशी बहादुर (उषा)। (२)=मशानमा मुर्दा लैजादाँ अघि अघि बसेर बाटो हटाउनु।

**बाटो समात्नु**—=बाटो पक्रनु (साधारण अर्थमा प्रयोग हुँदैन)। जेहोस् एउटा बाटो समातेर हिंड्नुपर्छ, जथाभावी गर्न हुँदैन।

**बाटो सोझ्याउनु**—(१)=हुँदो गर्नु। सबै आफ्नै बाटो सोझ्याउनपट्टि लाग्छन्। (२)=बाटो लाग्नु (७)। कसैको शोक सुर्ताको वास्ता नगरी राजकुमारलाई साथमा लिई फेरि आफ्नै बाटो सोझ्याए। —बोधविक्रम (दन्त्यकथा)।

**बाटो हेर्नु**—(१) चाल विचार गर्न पर्खनु। कप्तान साहेबको बाटो हेरेर भएन, एउटा बोको किन्नैपर्‍यो। (२)=कहिले आउला भनि पर्खनु। यसले मलाई ता कस्तो भाव हुन्छ भने हामी-हामी खालि केही कुराको बाटो हेरेर यहाँ पर्खिरहेछौं। —नरेन्द्रमणि (यूरोपीय साहित्य-को नमूना)। उ केवल गौंथली आउँछे कि भनेर बाटो हेरी रहेको थियो।—गुरुप्रसाद (कथा कुसुम)। (३) साधारण अर्थ। बाटो हेरेर हिंड खाल्टामा जाकिएलौ।

**बाढीको मुढो**—=आपत्कालको सहारा। मेरो बाढीको मुढो तपाइँ नै हुनुभयो।

**बातको बातमा**—=छिनको छिनमा। बातको बातमा मेरो किताप हरायो।

**बात मार्नु**—=गफ गर्नु। दुवै तल फुपू भदा बात मारिरहेकाछन्, म त त्यै झ्यालमा बसी कान थापिरहें माथि यहाँ; ....।—बालकृष्ण (अन्धवेग)। हाम्रा त अस्ति मझारेको डिलमा बसेर सन्ती संग खूब बात मार्न लागेका रहेछन्।—रुद्रराज (प्रायश्चित्त)। यसै बात मारिराको।—भीमनिधि (सहन-

शीला सुशीला)। जान्छु, अर्काको काम कति बिति रहेछ, तँ सँग को बात मारि रहोस् ।—ग्रन्थकार (कथा कुसुम)।

**बात लाउनु, लाग्नु**—=कलङ्क वा दोष लाउनु, लाग्नु। बात-लागी खोसिएमा वा सर्कारबादि हुने र चोरी डाँका घुसमुद्दा परी सजाय पाएकाहरु जतिले पेंसन पाउने छैनन् ।—श्री ३ जुद्ध (१९९८ जन्मोत्सवको स्पीच)। बात लागेको मानिसलाइ जागीर दिन हुँदैन। कराएर के गर्छौं? सब सोद्धछन्, म बात लाउने नै छु,···· ।—बालकृष्ण (मुकुन्द इन्दिरा)। बाठा मानीसका कुराले नेटो काट्यो, अव हामीलाई मन—चोरीको बात लाग्न आँट्यो।—लेखनाथ (लक्ष्मी-पूजा)।

**बातै(त)न पीछे**—=जे कुरामा पनि, हरेक कुरा गर्नासाथ। किन छोरालाइ बातैन पीछे पिटि-रहन्छौ? त्यसो गर्दा थेचरो हुन्छ।

**बादल उठ्नु**—=क्षितिजबाट बादल बढेर माझतिर आउनु। हरे! मेरो पापको फलले गर्दा उठेको बादल पनी विना बिजुलीको भइरहेछ,···· ।—श्री केसर (विक्रमोर्वशी)।

**बादल फाट्नु**—=बादल हट्नु। बादल फाटेर आकाश स्वच्छ भयेको थियो, चन्द्रमा पनी उदाइ सकेका रहेछन् ।—शिव-प्रताप (दुर्गेशनन्दिनी)।

**बादल लाग्नु**—(१)=बदली हुनु। बादल लाग्न लाग्यो मस्यौरा कसरी सुक्छ? (२)= धमिलो हुनु (ऐना इत्यादिको बारे)। तिम्रो चश्मामा बादल लागेछ। (३)=(आँखामा) जालो बस्नु। दमनाको आँखामा बादल लागेछ।

**बादलले घेर्नु**—=वरिपरि बादल देखिनु।

**बाधा खानु**—बाधा वा अडकाउ पर्नु। शास्त्रमा बाधा खाँदैन भने त्यस्ता रीत रिवाजहरू फेर्न हुन्छ····।—श्री ३ चन्द्र (अम-लेख-भाषण)।

**बाधा फुकाउनु**-(१)=अड्काउ नरहने पार्नु, अप्ठ्यारो वा विघ्न हटाइदिनु। गटिन्न बर्ग सारा



बाधा फुकाउँदै छापा गर्ने काम चलाउँदै थिए।—जितेन्द्र (आधुनिक आविष्कार)। (२) =धर्मसम्बन्धी बन्धनबाट फुक्का पार्नु (प्रायः विधि गरी)। सेतीको पास्नीमा पैसाको दुःखले बाधा फुकाउने जुक्ति मात्र गर्‍यौं। (३)=शपथ वा प्रतिज्ञाको बन्धनबाट फुक्का हुनु। तिमीले चुरोट खानू भनेर किरिया हालेका थियौ, मैले ओठमा छुवाएर बाधा फुका-इहालें नि।

**बान लाग्नु**—=पक्षवातले ढल्नु। असीनालाई बान लाग्यो रे झारफुके डाक्र पठाऊ।

**बानी पर्नु, लाग्नु, बस्नु**—= आदत बन्नु। अमलेख भएका करियाहरुलाई पनी आफ्नो नयाँ स्थितिमा बानी पर्दै जानेछ। —श्री ३ चन्द्र (अमलेख-भाषण)। मितव्ययीको बानी बसाली सकेसम्म चाँडो स्वाव-लम्बी हुने धन्दामा पनि दत्तचित्त हुने बेला थियो।—श्री ३ जुद्ध (भूकम्प-भाषण) ।········उहिले देखिन् लागेको बानीले मेरो मुखबाट त झट्ट उहो बोली निकालिदिएछ ।—श्री अर्जुन (स्वप्नवासवदत्ता)।········साँचो ठहरेको कुरो मात्र, मन्मा लिने बानि पार्नाले मात्र, मनले नभयाको कुरामा पनि भयो भन्न्या वासना ली, सुखदुःखको भोग गर्दैन।—जयपृथ्वि बहादुर (तत्त्वप्रशंसा)। तेस कारण डाक्टर वैद्य र सेवकहरूले बहुतै होसि-यारी साथ शान्त भयेर काम गर्ने आफ्नू बानी लाउनू पर्दछ।—राममणि (सह्यार-सुसार-संभार)। लौ, चाँडै नै तिमीलाई बानी पर्नेछ; एक घण्टा नजाँदै यहाँ बसौं बसिसकेकाछौं कि भने जस्तो लाग्नेछ।—नरेन्द्रमणि (यूरोपीय साहित्यको नमूना)।

**बाप(फ)का पूत**—=आफ्नो बाबुको छोरो अर्थात् बहादुर (हाँक दिंदा वा प्रशंसा गर्दा प्रयोग हुने)। बापका पूत भए मेरो जीउमा हात हाल्न सक्लास्! यस्तो घोडा पनि चढ्न सक्यो, बापका पूत रहेछौ!

**बाफ रे बाफ**—=दुःख वा आश्चर्यसूचक वाक्यांश (हिन्दीको

'बाप' यहाँ प्रयोग हुँदैन)। जनाना पाइखाना, वरुणाले साफ। पारि दिंदा हुन गो, वा-फ रे वाफ॥—शिखरनाथ (गंगामाहात्म्यको सवाई)।

**बाफ(प) वैरी साध्नु**—=बाबुको शत्रुलाइ बदला दिनु।.... मैले वर माङ् भंदामा **वाफ बैरी साधन** पाऊँ भंन्या तैले मसित बर माग्याका हुनाले यो घटना मैले गराायाको हो.......।—होमनाथ (श्रीमद्भागवत कृष्ण-चरित्र)।

**बाबाजीको कन्था जस्तो**—=घेरै ठाउँमा भिन्न भिन्न रङका टालाले टालेकोको थाङ्ने लुगाको बारेमा उपमा दिने।

**बाबु (बाबु आमा) उड्काउनु**—=बाबु (बाबु आमा) को नाउँ काटेर निन्दा गर्नु। 'तेरो बाबुको टाउको, त्यो गाग्रो किन थन्क्याएको ?' भनेर सेतेले बाबु **उड्कायो**।

**बाबुकी छोरी**—=आफ्नो बाबु-की छोरी (हाँक दिंदा वा कोही महत्त्वको काम गर्दा प्रयोग हुने)। बाबुकी छोरी भए मात्र मेरो घरमा आउन सक्ली! म त उस्तै **बाबुकी छोरी** भएर पो, लरतराले यो दुःख सहन सक्तैनन्, बुझिस्?

**बाबुको बिहा देखाउनु**—=जात्रा देखाउनु (१ हेर)।

**बाबुले जन्माएकी(को)**—=बाबुकी छोरी(छोरा), जारले जन्माएकी(को) होइन (दुवै लिङ्गमा प्रयोग हुन्छ)। ७ दिन भित्र काजीको पाऊ मिचाउन ल्याउन सकिन भने मेरो मुखमा थुकिदिनु, मलाई मेरा **बाबुले जन्माएकै** होइनन्....।—रुद्रराज (चप्पाकाजी)।

**बाबु साक्षी राखेर**—=नाक भूइँमा राखेर। यो काम तैंले **बाबु साक्षी राखेर** गर्नुपर्छ, नगरी सुक्ख!

**बाम पुड्के**—=ज्यादै पुड्को। साने त **बामपुड्के** हुन लाग्यो।

**बामे चरी**—=बाहुन चरी।

**बामे सर्नु**—=हात खुट्टाको भरले घिस्रनु (प्रायः बालखको बारे)।........आगोमा उसका हात जब कक्रेर चलदछन् संझनेछु त्यही **बामे सरेको** कालु राहुले! —बालकृष्ण (प्रह्लाद)। हिंड्थ्या लड्बडिदै पनी कहिं कहीं काहीं त **बामे सरी**।—डिल्ली शम्शेर (यूरोपयात्रा)।



**बायाँ हातको खेल हुनु**—=ज्यादै सजिलो काम हुनु। पासामा धर्मेलाइ जित्न त मेरो **बायाँ हातको खेल हो**।

**बार झैं तके दूबो झैं मौलाए**—आसीक दिने बोली।

**बारना (बादना) छैन**—आचारको कडा नियमलाई खुकुलो पार्ने बोली। जूठामा बसेको झिङा भान्सामा उडेर गएकोमा **बादना छैन**।

**बार हाल्नु, बार्नु**—=अघिल्लो-चाहिं उपमा अर्थ(=हट्कनु) मा मात्र प्रयोग हुन्छ, पछिल्लो-चाहिं साधारण अर्थमा मात्र।.... पुरेतको कीरा परेको मुखले के के लाइदियो—त्यसरी **बार न हालि दिएको** भए यो दुर्दशा हुने नै थिएन।—रुद्रराज (रूप-मती)। **बार बारे** तुल जोगिन्छ (उखान)।

**बारुलाले टोके (चिले) जस्तो**—पटल फुलेको जस्तो देखिने गरी मोटाएको वा त्यस्तो अनुहार परेको मान्छेलाइ दृष्टान्त दिने बोली।

**बारुले कम्मर**—=बारुलाको जस्तो चटक्क छिनेको कम्मर। **बारूले कम्बर** भएकी तिनी संग विछोड भएको मलाई तिमीले भेट्टाइदियौ भने...तिमी-लाई आफ्नै चूडामणी तुल्या-उनेछु।—श्री केसर (विक्रमोर्वशी)।

**बालख**—ठूलो मानिसलाइ चिट्ठी लेख्ता नामको सट्टा बालक वा बालख लेख्ने चलन छ (उमेर औकात बुद्धि विचारमा कम देखा-उनालाइ विनयको रूपमा)। निगाहले **बालखलाई** संचो छ।

**बालुवा बुकाउनु**—डाह जताउने वाक्यांश। जेठीले छोरा पाएकी सुन्दा अब कान्छीले **बालुवा बुकाउली**।

**बालुवामा पानी पोख्नु वा हाल्नु, बालुवामा मुते झैं**—असर नदेखिने हुँदा वा चाँडै नै हराउँदा दृष्टान्त दिने बोली। बैगुनीलाई गुन गर्नु **बालुवामा पानी पोख्नु** मात्र हो। यहाँ जति आमदानी भए पनि दुवै

दिनमा ज्वाईं हुन्छ, बालुवामा पानी हाले जत्तिकै छ ।

**बासट्टी हरण**—१८६२ सालमा सरकारबाट भएको जग्गाको खोसमोसलाई बासट्टी हरण भन्दछन् ।

**बासी मुख**—=मुख नधुँदाको । यस वेलासम्म **बासी मुख** लिएर हिंड्न लाज लाग्दैन ?

**बास्ना (वास) चल्नु, आउनु**—=सुवास रम्मञ्जिनु ।....**बास्ना** नआउने फूल न मीठा फूल छन् जहाँ ओर्ली ओर्ली उहीं जाओस् नीचा शिर गरेर यो आँखा तल लतारेर जसको दिल नीच छ ।—बालकृष्ण (मुकुन्द इन्दिरा) । आहा, क्या मीठो हसिनाको **बास्ना चलिरहेछ** !

**बाहाँ जोड्नु**—=कुम जोड्नु (मीत लाउँदाको विधि ; अन्यत्र 'बाहाँ' सदरिया बोलीमा प्रयोग हुँदैन) ।

**बाहान लाउनु**—=दोस्रो तेस्रो पटक पकाउनु । आज भात नपुगेर **बाहान लाउनुपर्‍यो** ।

**बाहुन चरी**—=(होच्याएर वा माया लाग्दो रूपमा भन्दा) ब्राह्मण । अब म **बाहुनचरीले** जिम्रो सह्याल्न शक्छु के ?—श्री केसर (विक्रमोर्वशी) ।

**बाहुनले श्राद्ध खाए झैं**—धेरै खाँदा दृष्टान्त दिने ।

**बाह्रमासे खेल्नु**—=नफुकेको वेलामा जुवा खेल्नु । उत **बाह्रमासे खेल्नलागेको** रहेछ ।—रुद्रराज (रूपमती) ।

**बाह्र वर्षमा (को) खोलो फर्कनु**—कैयन् वर्षपछि पनि मनको प्रवृत्ति बदलिन्छ भन्ने जताउँदा प्रयोग हुने । **बाह्र वर्षमा खोलो त फर्कन्छ** भन्छन्, पतिको सुदृष्टि पनी जरूर फर्केला किन फर्कोइन भन्दै भरशक आफूलाई बुझाउथिन् ।—रुद्रराज (रूपमती) ।

**बाह्र सत्ताईस (बीस) कुरा गर्नु**—=लम्बे चौडै कुरा गर्नु । आइमाईको नाम लिन हुन्न, दश ओटा अर्थ निकाल्न लाग्दछौ —**बाह्र सत्ताइस कुरा गर्न** थाल्दछौ—रुद्रराज (चप्पा काजी) ।.......घरवालाले **बाह्र सत्ताइसको कुरा गरेर** ती अतिथिहरूका मनसमेत



दुखाए ।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह ) ।

**बाह्र हातको टाँगोले पनि नछुनु**—(१)=एकदम नाम गोतै नलिनु । अस्ति झगडा भएदेखि तँलाइ त **बाह्र हातको टाँगोले पनि छोएको छैन** । (२)=निर्धक्कसाथ रहन पाउनु । अब मलाई सौताले **बाह्र हातको टाँगोले पनि छुन सक्तिन** ।

**बाह्रै काल**—=सधैंभरी ।.....बीचबाट एउटा नदी **बाह्रैकाल** बगिरहन्थ्यो.....।—खड्गमान(ग्रीस र रोमको दन्त्यकथासंग्रह) ।

**बिँडो थाम्नु**—(१)=इजत वा कुलधर्म कायम राख्नु । बाबु बाजेको **बिँडो थाम्ने** तिमी नै भयौ । (२)=सिको लिनु । सरलाले इन्दिराको **बिँडो थाम्न** लागी ।

**बिख झार्नु, उतार्नु**—(१)=विषालु जीवले टोकेको घाउबाट त्यसको बिख वा शरीरबाट अरू बिख निकाल्नु । शर्पैको बिष झार्नलाइ तिमि झैं कै छैन दोश्रो भनी । सुन्दामा तिमिलाइ डाक्न म जहाँ दौडेर आजा पनी ॥—होमनाथ(श्रीमद्भागवत कृष्णचरित्र) । (२)=मात्तिएकाको मात झार्नु । रामेले चामेको **बिखै झारेर** छोड्यो ।

**बिख मार्नु**—(१)=बिख नलाग्ने पार्नु । चूक अमिलाले दर्सने पीपलको **बिख मार्छ** । (२)=डाहा निको पार्नु । घिउले खुर्सानीको **बिख मार्छ** ।

**बिख हुनु**—=खराब वा अप्रिय लाग्नु । मेरो ई उपदेश **बिख् सरि हुनन्** यो बात मान्लास् कहाँ ।—मोतीराम (प्रह्लाद भक्ति कथा) ।

**बिगबिगती लाउनु**—=ज्यादै चकचक गर्नु, छुकछुक गर्नु । च्यान्टीले **बिगबिगती लाएर** हैरान पारी ।

**बिगो कस्नु**—=दावी गरेको धनमालको रुपियाँ किट्नु । १३०० को **बिगो कसेका** छन्रे ।—रुद्रराज (प्रायश्चित्त) ।

**बिङ्गा लाउनु**—=टालटुल गर्ने बनावटी नचाहिंदो कुरा गर्नु, बहाना गर्नु । त्यो सधैं अड्डामा ढीलो आउँछ, सोध्यो भने एउटा **बिङ्गा लाइदिन्छ** ।

**बिच्छुक लाग्नु, हुनु**—=अलच्छिन लाग्नु, अफाप हुनु, (खास गरी जुवामा)। हाम्रो यस्तो हर्षमा यो पाजी त रोएर बिच्छुक पो लाउँदो रहेछ....। —बोधविक्रम (दन्त्यकथा)।

**बिछ्याउना लाउनु**—=लम्पट वा डसना ओछ्याएर बस्न वा सुत्नाको निंति ठीकठाक पार्नु (प्रायः आदरको बोली)। त्यो दीपक लिएर सब काम गर—अन्न पकाऊ, बिच्छ्याउना लाऊ इत्यादि सब काम गर परन्तु शरीरमा ठक्कर न लागोस्, नत्र त दाग लाग्ला।—शिवप्रताप (दुर्गेशनन्दिनी)।

**बिजुलीको बाहन**—=ज्यादै बाठो। उनी बिजुलीको वाहन थिइन्—शाशूको रीसले किन आफ्नो पेट भोकै राख्थिन् रे....।—रुद्रराज (रूपमती)।

**बिजुली चंकनु**—=अकास बिजुली देखापर्नु। बिजुली चंक्यो अब गड्याङगुडुङ गर्छ। दुइटा बिजुली चम्के! गई दिल जलाउने जलाएर, अनी आर्को चाहीं देह जलाउने दाउ हेर्दै छ,....।—बालकृष्ण (मुटुको व्यथा)। उपरको त्यो गमलाको चमेलि जस्तो बादलको बिच बिजुलि चम्केको जस्तो,.... मैले किन बूझिन छु!—गम्भीर ध्वज (चन्द्रशेखर)।

**बिजुली दौडनु**—=रोमाञ्चित हुनु, रन्न हुनु। आज पनि चार आँखा जुधे, आज पनि तिनको सारा शरीरमा बिजुली दौड्यो,....। खड्गमान (अँध्यारोमा उज्यालो)।

**बिजुली पर्नु**—=चट्याङचुटुङ लाग्नु। उसको सत्तलमा बिजुली पर्‍यो।

**बिट मार्नु**—(१)=किनाराको धार दोब्र्याउनु। बिट मारेको कचौरामा जूठो अड्कन्छ। (२) =अम्टार्नु। यो तन्नाको बिट मारेर सेऊ।

**बित्ते मानिस**—=पुड्को मान्छे (लाइ गिज्याउने बोली)।

**बित्यास खानु, पर्नु**—=बिगार वा भूल हुनु। मैले त एक पत्र नछोडेर लेखेछु, बित्यास खायो।

**बिदा दिनु, पाउनु**—(१)= केही दिनको निमित्त जान दिनु, छुट्टी दिनु, पाउनु। हामीलाई मास्टरले बिदा दिए। (२) =सदाको निमित्त पठाउनु, खारिज गर्नु, हुनु।....चली दिन्छु आनन्द वनमा सिधा खुशी साथ देऊ मलाई बिदा, अरू बात सुन्दीन तिम्रो अब जती सुन्नु पैले सुनेछु सब।—लेखनाथ (भर्तृहरिनिर्वेद)। कि सिधा पाऊँ कि बिदा पाऊँ। (३)=(परदेश जाँदा) विधिपूर्वक (प्रायः फलफूल दिएर, माला टीका लाएर) बिदाबादी दिनु (यस अर्थमा 'पाउनु' प्रयोग हुँदैन)। छोरालाई बिदा दिएर आएको?



**बिदा हुनु**—(१)=(सित) बिदाबादी हुने काम हुनु। भुसुनी दृष्टिमा पर्ली, आँखा चिम्लेर बस्नुहोस्, म दर्शन गरी मर्छु, बिदा हुन्छु, नरोक्नुहोस्!— —बालकृष्ण (अन्धवेग)। (२) =छुट्टी हुनु। आज स्कूलमा किन बिदा भयो?

**बिनु बादल वज्रपात**—= अबूझटको विपत्। बेसै थियो सब कुरा, तर एक बात। फेरी भएछ बिनु बादल वज्रपात॥—लेखनाथ (सत्यकलिसम्वाद)।

**बिन्ति चढाउनु, गर्नु**—= (मान्य मानिसलाइ) भन्नु। सरकारमा केही बिन्ति चढाउन चाहन्छु। यहीं बिन्ती गरूँ कि?—श्री अर्जुन (स्वप्रवासवदत्ता)। दैत्यराज्कहाँ जान्छु, बिन्ति गर्छु यिनै कुरा, उखेल्याउँछु ती केश—सेखीका सब आँकुरा!—बालकृष्ण (प्रह्लाद)। भाई! यहाँ जति कुरा विनती चढायौ। छाती भसक्क उतिले तिमिले डढायौ॥—लेखनाथ (सत्यकलिसम्वाद)। तेस वेला मैले सरकारबाट हुकूम भये मोताविक सब कुरो विन्ती चढायें त्यो सुनिबक्सना साथ.... (रुन्छ)—ऐजन (भर्तृहरिनिर्वेद)।

**बिन्ति बिसाउनु**—=कुरा भनिदिनु (विनीत भावको पाखे बोली)। त्यै ता मैले बिन्ति बिसाएको—शहरियाले होइन, पहाडियाले खेती गर्ने।—प्रेमराज (ससुराली)।

**बिन्ति लाग्नु**—=भनेको मान्नु (आदरको बोली ; तर फकाउँदा अरूलाई पनि प्रयोग हुन्छ)। महाराज ! मेरो एक विन्ती लागोस ।—लेखनाथ (भर्तृहरिनिर्वेद)। यी मेरा साथीहरू रातभरि यहीं पटाङ्गिरीमा सुतेर भालिमात्र आउन्, यति मेरो बिन्ति लागोस् ।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)।

**बिरला कोटी**—=कोटीमा एउटा पाइने, ज्यादै कम । यस्ता मान्छे त बिरला कोटी मात्र पाइन्छन्।

**बिरालाको काट्टो**–=अति निकृष्ट वस्तु (अभावलाई जोड दिन किरियामा आउने)। एक पैसा कम्मरमा भए बिरालाको काट्टै होस् !

**बिरालाको चालले**—=कत्ति पनि अवाज नआउने गरी चाल मारेर ।····थीस्यूस बिरालाको चालले मिनटरको पछिल्तिर पुगेर आफ्नो धारिलो तरवारले त्यसको टाउको गींडबाट छुट्ट्याइदिए ।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह) ।

**बिरालाले गु[ह्रु] लुकाए जस्तो**—कुनाकाप्चामा माल घुसारेर राख्ता दृष्टान्त दिने बोली । सानेकी आमाले बिरालाले गुह्रु लुकाए जस्तो अलिकति घिउ लुकाएकी रहिछ ।

**बिरालाले सात घर बच्चा सारे जस्तो**—डेरा, घर, वा ठाउँ सारी सारी वास कायम गर्दा वा माल लुकाइराख्ता दृष्टान्त दिने बोली । बिरालाले सात घर बच्चा सारे जस्तो कति डेरा सारेर जहानबच्चालाई दुःख दिन्छौ ?

**बिरालो तर्साउने दूध जस्तो**—ज्यादै तातो दूधलाई दृष्टान्त दिने बोली।

**बिर्के टोपी**—=पेटारीको बिर्को जस्तो टोपी। राँडीको ढङ्ग हेर, माल पाएर के गर्नु चाल पाए पो हुन्छ, आफना बाबु बराज्यूले बिर्के टोपी लगाएको भए पो थाहापाउँथी, ····।—गुरुप्रसाद (कथा कुसुम) ।

**बिस्तार मालुम भयो**—=सबै कुरा बुझें (चिठीमा मात्र प्रयोग हुने बोली) ।

**बिस्तुर जानु, खानु**—=फेलो



खानु, फरक पर्नु । ती परी देखेदेखि नै कहिल्यै बिस्तुर नजाने कामदेवको बाणले प्वाल पारेको मेरो मुटुमा पसी रहेकीछन् ।—श्री केसर (विक्रमोर्वशी)। मेरो लखले बिस्तुर खाँदैन ।—बोधविक्रम (दन्त्यकथा)। बूढा पाकाले गरेको कुरा किन बिस्तुर जान्थ्यो । —गुरुप्रसाद (कथा कुसुम) ।

**बिहाको सिंदूर**—=गुमाउन नहुने कुरा । यो कागतलाई बिहाको सिंदूर जस्तै गरेर राख ।

**बिहा खानु**—=विवाहको निम्तामा गएर भोजभाग पाउनु वा भोज खानु। अब त नानीको बिहा खाने वेला आयो ।

**बिहा देखाउनु**—(१)=जात्रा देखाउनु (१ हेर)। आज पढिनस् भने तेरो बिहा देखाउँछु ! (२) साधारण अर्थ । राम्रोसँग पढिस् भने हाम्रो कर्साबको छोराको बिहा देखाइदिउँला ।

**बीच[मा] पार्नु, पर्नु**—(१)=यता न उता पार्नु, पर्नु। भवनाथ ! अनाथ परें बिचमा। झिक झट्ट डुबें भवसागरमा ॥—धरणीधर (नैवेद्य)। मलाई बीचमा पारी दिलाई यातना भारी गरौली चैन स्वर्गमा पनी के एकलै जाई ॥ —लेखनाथ ( भर्तृहरिनिर्वेद )। अर्काको छोरी बिहा गरेर बीच[मा] पार्नु हुँदैन। (२)=अप्ठ्यारामा पार्नु, पर्नु । पछी लागदैछू महाराजलाई न भेटाइ बीचै परे आज हाई ॥—लेखनाथ (भर्तृहरिनिर्वेद)। हिजो तिम्रो कुरामा भर परेर मोटर नल्याउनू भनें, आखिरमा नआइदिएर बीच[मा] पार्‍यौ । (३) साधारण अर्थ (यहाँ ‘मा’ लोप हुँदैन) । त्यो बुट्टालाई बीचमा पारे राम्रो हुन्छ ।

**बीज नछाड्नु**—निस्सन्तान हुनु।

**बीडा उठाउनु**—=(कामको) अभिभारा लिनु। तिमीले छोडेको कामको बीडा उठाउन मलाई कर लाग्यो ।

**बीरबलले पालेको बोको जस्तो**—=जति सुक्ख दिएको छ उत्ति नै दुक्ख दिइएको मान्छेलाई दृष्टान्त दिने (बादशाहले

बीरबलको पत्ता लाउनालाई तौलमा घटी बढ़ी नपारी पाल्न सारा रैतीलाई जनही एउटा बोके दिए। बीरबलले मात्र आफ्नी घरपट्टीको बोकालाइ दिनभरी खुवाउने रातभरी तर्साउने गरी तौल जत्तिका तत्ति राख्न सकेकाले निजको पत्ता लाग्यो भन्ने कथाबाट)। पेटभरी खान दिएर के गर्नु, कुट्न एक दिन बिर्सिन—म त बीरबलले पा-लेको बोको जस्तो भइरहेछु।

**बीसको उन्नैस हुनु**—=ज्यादै कम फरक हुनु (प्रायः घटेर)। आज बिरामीलाइ बीसको उन्नैस छ।

**बीसासय आयु होस् !**—=एक सय बीस वर्षको आयुर्दा होस्! (आसीक दिंदा प्रयोग हुने)। बाबु, तिम्रो बीसासय आयु होस्!

**बुच्चे गबुवाको पानी झैँ**-पेटमा कुरा राख्न नसक्ने मान्छेलाइ दृष्टान्त दिने बोली (बुच्चे गबुवाको पानी अलिकति हल्लिँदैमा पोखिने हुनाले)। यस्तो बुच्चे गबुवा-को पानी झैँ पोखिनेसँग के विश्वास गर्नु !

**बुजो मार्नु**—=ठेडीले बन्द गर्नु।

**बुट्टा काट्नु**—(१)=कुँदेर वा खोपेर बुट्टा बनाउनु। जूपिटरले प्याण्डोराका पतिलाइ मसिनो बुट्टा काटेको एउटा राम्रो बट्टा सौगात पठाए।—खड्गमान(ग्रीस र रोमको दन्त्यकथासंग्रह)। (२)=बुट्टा पारी कागत, कपडाहरू छाँट्नु। कागत दिन्छु बुट्टा काटेर फुल बनाइदेऊ।

**बुट्टा भर्नु**—(१)=(कुरामा) खूब सिफारिश गर्नु, (कुरा) राम्रो पार्नु। (२) साधारण अर्थ। के दीपावलीको प्रकाशले पोतिएको आकाशको भित्तामा राग रागिनीहरुका राम्रा राम्रा बुट्टा भर्छौ ?—लेखनाथ (लक्ष्मी-पूजा)।

**बुढ़ेस काल**—=बूढो उमेर। ····जसरी पालन पोषण गरेथे उस्तै उनका बुढेसकालमा उनीहरूलाई गरीरहने होलाऊ।—श्री ३ चन्द्र (अमलेख-भाषण)।

**बुद्धि कमाउनु**—=अकल बढाउनु। यत्रो बडोमा भइसक्यौ अब त बुद्धि कमाउनुपर्छ।



**बुद्धि खियाउनु, लड़ाउनु**—=अकल लडाउनु (हेर)।

**बुद्धि छिप्पिनु**—=बुद्धि पाको हुनु (ठिटाको बारे)।

**बुद्धि पस्नु**—=समझ आउनु (बालखको बारे)। अहिले उस्तो बुद्धि पनी कहाँ पसिसकेको छ र ?—रुद्रराज (रूपमती)।

**बुद्धि पुग्नु, पुर्‍याउनु**—=गर्नुपर्ने कुरा जान्नु। प्रभु, मेरो बुद्धि पुगेन माफ पाऊँ ! यही आफ्ना मुलुक-भित्रका राज-काजमा पुरा मेहनत र अक्कल बुद्धि पुर्‍याई कामगरी आफ्ना जातित्व खडा राखी रैति दुनियाका उन्नतिमा मन लगाई रहनु आवश्यक छ।—श्री ३ भीम (नगर-प्रदक्षिणोत्सवको वक्तृता)।

**बुद्धिमा डढेलो (आगो) लाग्नु, सल्कनु**—=बुद्धि भ्रष्ट हुनु (रिसको बोली)। म पनि उस्तै बुद्धिमा आगो सल्केको—किन दिनु पर्थ्यो।—रुद्रराज (चप्पा काजी)।

**बुद्धिले देख्नु**—=मनमा हो भन्ने लाग्नु वा योग्य ठहरिनु। ····अैले सम्म मलाइ भयाका अनुभव विचारले र आफ्नु भित्र भयासम्मको बुद्धिले देखेको लेखि, प्रकाश गरेको छु····।—जयपृथ्वी बहादुर (तत्त्व-प्रशंसा)। सानि बुद्धिले देखि बात यो। गर्छु बिन्ति यो सुन्नु होस् कुरो ॥—धरणीधर (नैवेद्य)।

**बुरुज छाड्नु**—=हार्ने पशु वा पक्षी जित्नेका धनीले पाउने गरी बाजी राखेर पशु वा पक्षी लडाउनु (प्रायः बट्टाइ, कुखुरा, चाखुरा, भेँडा)। यति भनेर भाजूले बुरुज छोड्यो।—रुद्रराज(चप्पा काजी)।

**बुर्कुसी मार्नु**—(१)=उफ्रेर दगुर्नु वा उफ्रनु। ····घोडाहरू परस्पर आँखा लडाउँदै बादललाई आफ्नै पैरले चूर्ण २ गर्दै बुर्कुस्सी मारिरहेका छन्, ····।—चन्द्रलाल (विष-वृक्ष)। (२)=गइसक्नु। मेरो किताप लानुपर्थ्यो धनेले त बुर्कुसी मारिसकेछ।

**बूझ न सूझको (सूझसँग)**—=नबुझेको, नबुझेर। **बूझ न सूझ-**

को मान्छे उसै बोल्न आउने ! फेरी बालखहरू पनी बुझ्न सुझ्सँग तेसै रोइरहेछन् ।— शिवप्रताप (दुर्गेशनन्दिनी) ।

**बूझ पचाउनु**—=थाहा पाउँदा पाउँदै पनि थाहा नपाएको जस्तो भान पार्नु ।·····माया गरेको आफ्नो खुपिले जानी जानीकन पनी बुझ पचाएर मलाई हेला गरेको हो,······।—श्री केसर (विक्रमोर्वशी) । यसरी बुढीको नियत बुझे पछि पनी बुझ्-पचाएर बस्नशक्ने ।— रुद्रराज (रूपमती) ।

**बूझ पेल्नु**—=बूझ पचाउनु (प्रायः खराब काम गरेकोमा प्रयोग गरिने) । तिम्रा दाइले मेरो किश्ती बूझ पेलेर लिइ-दिए ।

**बूझ हार्नु**—=अन्दाज ठीक नहुनु (नकसको खेलबाट आएको वाक्यांश) । यो किताप खूब बिक्री होला भन्ने लागेको थियो, मैले बूझ हारें । यो खेल जितिसकेको थिएँ, बूझ हारियो ।

**बूढी औँला, औँली**—'औंला' हेर ।····अब खालि यो ओठको घेरा औंठी बन्न त पाउला पाउमा एउटा बूढी औंलाको···· !— बालकृष्ण (प्रह्लाद) ।

**बूढी जाडो**—अल्छी मान्दा भन्ने । तिम्री बुहारीलाइ अरू केही भएको होइन बूढी जाडो लागेको ।

**बूढी रूढी**—=उहिलेदेखि चलि-आएको अन्धविश्वास । भन्दथे दाहिने नेत्र हामी स्त्रीको फुर्‍यो भने खराबी निश्चयै हुन्छ,—यो रहेछ बूढो रुढी ; नत्र यो लाभ के मेरो हानि हो ?—बालकृष्ण (मुटुको व्यथा) ।

**बूढीले झ्यालबाट हेर्नु**—फाटेको वा प्वाल परेको मोजाबाट (प्रायः बूढी) औंलो देखिंदा गिज्याउने बोली ।

**बूढी सासू**—=सासूकी सासू । तेरी बूढी सासूलाई चिह्निस् ?

**बूढो हाड घोट्नु**—=बूढो उमेरमा परिश्रम गर्नु । राम, राम, त्यसरी बुढो हाड घोटाए पछि त अलि दया माया हुनु पर्छनी ।—रुद्रराज (रूपमती) ।

**बूढो हाड भाँच्नु**—(१)= बेसरी चुट्नु (बूढो मान्छेलाई भन्दा प्रयोग हुने) । (२)= बूढो मान्छेले सकी नसकी काममा लदिनु । ६० वर्षको उमेरसम्म पनि कति बूढो हाड भाँचूँ ?



**बेगारी पक्नु**—=बाटो हिंड्ने खाली मान्छेलाइ (प्रायः ज्याला नदिने गरी) थोरै बेरको वा सानो कामको निमित्त मिजासले वा करबलले बोलाएर ल्याउनु । शर्माजी यता उतीबाट मान्छे खोजेर काम चलाउँथे, बेगारी पकडेर कति दिन निर्वाह हुने ! —रुद्रराज (रूपमती) ।

**बेटर सुन**—=नम्बरी वा बंकको छाप लागेको सुन ।

**बेथा पाल्नु**—=उपाय नगरी रोग रहिरहन दिनु । अपरेशन गर्न डराउँछौ, बेथा पालि-राख अब ।

**बेथा लाग्नु**—(१)=छोराछोरी पाउने वेलाको वेदना हुनु । अलि दिन पछि रानीलाई व्यथा लाग्यो ।—बोधविक्रम (दन्त्य-कथा) । (२)=रोग लाग्नु (हेर) । बूढेस कालमा बेथा लाग्यो भने हत्तपत्त निको हुँदैन ।

**बेर छैन**—(१)=ज्यादै संभव छ ।·······मालिकका मौजमा साथका जहान बचाको बिचली हुन जानु बेर छैन भनी सम्झनैले मात्र पनी त्यसको दिलको आन-न्दले आधा ठाउँ छोडिहाल्दो होला ।—श्री ३ चन्द्र (अमलेख-भाषण) । यस्तै भइरह्यो भने— यस्तै भइरह्यो भने अब आउने ग्रीष्म ऋतुसम्ममा मैले आफैलाइ बिर्सन बेर छैन,····।—बाल-कृष्ण (मुकुन्द इन्दिरा) । आंखा अनौठाको भावसित घुम्न लागे ; आयषाले विचार गरिन्—अब यमग्रास हुनामा बेर छैन ।— शिवप्रताप (दुर्गेशनन्दिनी) । जोगीलाई गुरु थापे—अब जोगी हुन पनि बेर छैन भन्थ्यो ।— प्रेमराज (ससुराली) । (२)= विलम्ब छैन । अब बेर छैन म ५ मिनेटैमा आइपुग्छु, तिमी ओर्ह्लिदै गर ।

**····बेर न····बेर**—=एउटा काम हुनासाथ उतिनखेरै त्यसको विपरीत काम हुँदा प्रयोग हुने । रामुले दिएको कोट उही दिन खोस्यो, दिनु बेर न खोस्नु

बेर।

**बेर नलाउनु**—(१) = ज्यादै संभव हुनु। तेही डरै डरले तेसका प्राण जान बेर लाउँ-दै न।–राममणि (सह्यार–सुसार-संभार)। मनमा कुरा लागे पछि मान्छे सिद्धी हुन त बेर लाउँदैन....?—रुद्रराज (रूप-मती)। (२) = ढीलो नगर्नु। यस साँचोले सेनापतिको ठूलो काम सिद्ध गर्दै छ भन्ने बुझ्न बाठी विमललाइ बेर लागेन। —शिवप्रताप (दुर्गेशनन्दिनी)। कुन्दले उत्तर दिनालाई यत्तिका बेर किन लगाएकी, कमलले थाहा पाइनन्।—चन्द्रलाल (विष-वृक्ष)।

**बेरुवा औंठी**— = सुनको तार फनफनी घुमाएर बनाएको। बेरुवा औंठी दाइजो दिएको थियो।

**बेली बिस्तार लाउनु, गर्नु**— = खलिकपुर कुरा भन्नु, विवरणमा बयान गर्नु। अस्तिको कुरा तिम्रो छोराले दामोदरकहाँ गएर बेली बिस्तार लाएछु।.... यो चलन त्यहाँदेखि चलेको हो भन्ने कुराको यहाँ बेलिविस्तार गरिरहनाको प्रयोजन छैन। —श्री३ चन्द्र (अमलेख-भापण)। हर बंग्याउँदै बिचरा लाटो घर फर्क्यो र आमासङ्ग बेली बिस्तार गर्न लाग्यो।—बोधविक्रम (दन्त्यकथा)।

**बेलौती गेडा**— = अम्बा (लाइ भन्ने पाखे बोली)।

**बेसार घस्नु**—(१) = चेप्याइँ पार्नु, लोलोपोतो पार्नु। तिमीले बेसार घस्तैमा मेरो माया गर्छौ भन्ने ठान्छु र? (२) साधारण अर्थ। खसी खुइल्याएपछि बेसार घसेर माथि ल्याऊ।

**बैँस चढ्नु**— = जवानीमा प्राप्त हुनु। छिप्पिएपछि बैँस चढेर आउने, कस्तो गजब!—रुद्रराज (प्रायश्चित्त)।

**बैना मार्नु**— = अरूले किन्न वा नियुक्त गर्न नपाओस् भनी मोल वा ज्यालाको थोरै अंश अघिबाटै दिई पक्कापक्की गर्नु (गाहकीले बन्दोबस्त तोड्यो भने उसले दिएको दाम पैसा पच हुन्छ)। मैंले बुझें, यो टेबिललाइ तपाईं



५ रुपियाँ बढ्ता दिनुहुन्छ, तर के गर्नु हिजै देवरलले बैना मारिसकेको छ।

**बोकटीको थाङ्नु भैँ**—सह्या-लिनसक्नु वा टालिनसक्नु कुरा-लाइ दृष्टान्त दिने बोली (कुनै बोकटी छेत्रीको थाङ्नाबाट यो वाक्यांश उत्पत्ति भएको हो)। बोकटीको थाङ्नु तुने भैँ कति कुरा तुनिरहन्छौ?

**बोकालाई गीता पढाउनु**— = भालूलाइ पुराण सुनाउनु (हेर)। अबूझलाइ अर्ति दिनु बोकालाई गीता पढाउनु जस्तै हो।

**बोके गह्नाउनु**—यौवनावस्थाको लोग्नेमान्छेको टाउको वा पसिनाको गन्ध बोकाको जस्तो हुन्छ भनी आइमाईहरू भन्छन्। सानुकान्छा त बोके गह्नाइसकेछ, अब यसलाइ केटाकेटी ठान्न हुँदैन।

**बोके दाह्री**—(१) = चिउँडामा मात्र आएको दाह्री (बोकेको जस्तो हुनाले)। आजकल बोके दाह्री राख्ने चलन हरायो। एउटा बूढो रुपौला माछाले आफ्नो बोके दाह्री हल्लाउँदै डोको जत्रो मुख बाएर भन्यो 'यो रौं सुनकेशरी मैयाँको हो'। —बालकृष्ण (अन्धवेग)। (२) फूलको नाउँ।

**बोक्रे धाक**— = फोस्रो धक्कु। तिम्रा बोक्रे धाकले कोही डराउँदैनन्!

**बोक्सीको सास**— = हुरी, बतास (रिसको बोली)। यो बोक्सीको सास कति आइरहन्छ, बत्ती बल्नै दिंदैन!

**बोक्सी चढ्नु**— = बिरामी बेहोशमा काँप्तै पटापट मनपरी बोल्नु (हिस्टेरियाको एक किसिम; प्रायः आइमाईलाइ हुने)। कान्छी बुहारीलाइ बोक्सी चढ्दा थामिनसक्नु भयो, उसैले झारफुकेलाई बोलाउन पठाएँ।

**बोक्सी बकाउनु**— = बिरामीको आङ्मा बोक्सी चढेको वेलामा बिरामीले बोलेको बोक्सीले बोलेको ठहऱ्याउँछन्, उसैले त्यस वेला मन्त्रद्वारा बिरामीको आङ बाँधी बोक्सीलाई उम्कन नदिई बिरामीलाई साबित गराई बोक्सी साबित भएको ठहऱ्याउनु। आज पल्ला घरकी बूढीकहाँ बोक्सी

बकाउँने रे ।

**बोक्सी मन्त्र**—=बोक्सीको मन्त्र (अरू 'मन्त्र'को अगाडि 'को' लोप हुँदैन) ।

**बोक्सी लाग्नु**—=बोक्सीको करामतले बिरामी हुनु ।

**बोझ उठाउनु**—(१)=झंझट वा भार लिनु । अवस्थाले गर्दा फेरि विवाहको **बोझ उठाएँ**····।—श्री अर्जुन (स्वप्नवासवदत्ता) । (२)=गह्रौं माल उचाल्नु । अपरेशन गरेको महीना दिन पनि भएको छैन, **बोझ उठाउन** अघि सर्ने !

**बोध पार्नु**—=बुझाउनु, मनमा गड्ने तुल्याउनु, प्रतीत पार्नु । तिमीले राम्ररी **बोध पार्न** सकेनौ कि क्या ?

**बोल फुक्नु**—=बोलचाल बन्द भएकोमा बोल्न थाल्नु ।

**बोलाउन जानु**—(१)=(किरिया बसेको मानिसलाई)भेटी सान्त्वना दिन जानु । रनध्वज बाबुको किरिया बसेको छ रे, फुर्सत नभएर **बोलाउन जान** पनि भ्याएको छैन । (२) साधारण अर्थ ।

**बोली फुट्नु**—(१)=बोली निस्कनु । 'म तेरो पोइ' यो **बोली फुट्नु** भन्दा अगाडि नै अगुल्टो लाजको ठाडै आई टम्म हुने गरी मुखभित्र बुजो हाल्छ ।—बालकृष्ण (मुकुन्द इन्दिरा) । वदली दिनको स्थल कमल झैं **बोली फुट्न फुट्न** खोज्छ तर फुट्तैन ;····।—गम्भीर ध्वज (चन्द्रशेखर) । (२)=(बालकले) एक दुइ पद बोल्न थाल्नु । मेरो छोराको बल्ल अस्तिदेखि **बोली फुट्यो** ।

**बोल्न पनि गाह्रु जाला जस्तो गर्नु**—=ठस्केर कुरा गर्न गाह्रो मान्नु । **बोल्न पनि गाह्रु जाला जस्तो गर्ने** मान्छेलाइ के 'आराम छ' भन्नू !

**बोल्ने देउता**—=राजा (खुकुलो अर्थमा :—अन्नदाता, मालिक) । हाम्रो **बोल्ने देउता** प्रभु नै होइबक्सिन्छ ।

**बोल्ने बाटो**—=भन्ने ठाउँ । के जवाफ दिउन्, **बोल्ने बाटो** राखेको भए पो ।—रुद्रराज (रूपमती) ।

**बोसे आन्द्रो**—=(प्रायः खसी



बोकेको) बोसो भरिएको आन्द्रो । परिकारमा तारेको **बोसे आन्द्रो** पनि थियो । **बोसे आन्द्रो** खाएपछि छेरपट्टी लाग्दैन त ?

**बोसो लाग्नु**—(१)=पुष्टिएर जाऊँ जाऊँ लाग्नु वा मात्तिनु (प्रायः नोकरचाकरको बारे) । अरू केही होइन, यसलाई **बोसो लाग्यो** बस्न मन लागेन नाइँ । (२)=रोगी किसिमले मोटाउनु, बोसो बढ्नु ।····तेसको ज्यूमा **बोसो** पनी धेरै **लाग्दछ**, ज्यू जस्तो राम्रो ताकतिलो देखिन्छ, उस्तो बलपराक्रम तेसमा हुन्दैन,....।–राममणि (सह्यार-सुसार-संभार) । (३)=खसि इत्यादिको बोसो हात लुगाहरूमा लाग्नु । हातमा **बोसो लागिरहेछ**, धूँ भनेको पानी नै पाइनँ ।

**ब्याएकी कुकुर्नी जस्ती**—=खानाको निमित्त ठाउँ ठाउँमा गएर ढुक्ने मानिसलाई दृष्टान्त दिने बोली । खाने कुरा देख्यो कि दशतिर ढुक्क जाने, छिः **ब्याएकी कुकुर्नी जस्ती !**

**ब्याजको स्याज**—=ब्याजको पनि ब्याज । हाम्रो जेठा कर्साब परेको वेलामा सापट त दिनुहुन्छ, तर **ब्याजको स्याज** लिएर भुतुक्कै पार्नुहुन्छ ।

**ब्याजमा लाउनु**—=ब्याज लिने गरी (रुपियाँ) सापटी दिनु ।

**ब्वाँसाले आन्द्रा थुते झैँ**—फकाई फकाई कुरा धुत्ता दृष्टान्त दिने बोली (आन्द्रा भुँडी दुहुनु 'हेर') । लाटो सुधो पाएर मेरो छोरासित पद्मबहादुरले **ब्वाँसाले आन्द्रा थुते झैँ** सब कुरा धुतेछ ।

**ब्रह्मले देखेको**—=अन्तस्करणमा लागेको ।····अर्काका कुरा···· सुनेपछि पनि आफु बिचार गर्छ, साँचो कुरो आफ्नु **ब्रह्मले देखेको** लिन्छ, ····।—जयपृथ्वी बहादुर (तत्त्वप्रशंसा) ।

**ब्रह्मा आए पनि नहुनु**—असंभव कुरालाई जोड दिन प्रयोग हुने ।

**ब्रह्माण्ड खलबलिनु**—=रिसले आगो हुनु । मेरो बन्दूक भाँचिएको सुन्दा **ब्रह्माण्ड खलबलियो** ।

**ब्रह्माण्ड जल्नु**—(१)=रिसले आगो हुनु । (२)=डाहले

भुतुक हुनु । ताजा शत्रुको नयाँ किसा देखेर क्रोधी दानवहरूको ब्रह्माण्ड जल्यो ।—बालकृष्ण (कथा कुसुम) । मलाई त मुख देख्तैमा ब्रह्माण्ड जलेर आउँछ ।—रुद्रराज (रूपमती) ।

## भ्

**भँगेरालाइ मख्याङ्ग्रा हान्ने जत्रो**—ठूलो अक्षर लेख्ता दृष्टान्त दिने बोली ।

**भइँमा……इत्यादि**—=भूइँमा ….*इत्यादि हेर* ।

**भई खाएको, भई खाई बढेको**—=हुने खाने, सम्पन्न, सुखमा पालिएको । हाम्रो त छैन बेग्लै कुरा, भई खाएको मान्छेको पनि त्यो चाला छ । म राजाको छोरो भई खाई बढेको साष्टाङ्ग दण्डवत् गर्ने काइदा मलाई थाहा छैन,….।—बोधविक्रम (दन्त्यकथा) ।

**भई नभई**—=हर तरहसित, खोजमेल गरी । बिरामीलाइ भई नभई चारौटा अनार किनिदिएको थिएँ, त्यही पनि कुहिएका रहेछ ।

**भए खा गर्नु**--=(नकसको खेलमा चक्की बाँड्नेले) १।२ पत्ती थुतेपछि अर्को नथुत्ने पक्का गरी नवाँडैको तङ्गी पल्टाउँदा भन्ने बोली । बादशाह पन्ध्र पुगेपछि के हेर्छस् ? भए खा गरिदेन ।

**भए हुन्छ नभए हुन्न**—हक गरेको हुनाले परिणामको वास्ता गर्दिनँ भन्ने जताउँदा प्रयोग हुने । आफूले देखेको कुरा बोलिदिन्छु, भए हुन्छ नभए हुन्न ।

**भकिअमिलो [को काठ] पड्के जस्तो**—पड्के, रूखो मान्छेलाइ दृष्टान्त दिने बोली । मौका नबुझीकन त्यसै बोल्ने, तँ कस्तो भकिअमिलो पड्के जस्तो !

**भक्कानु पर्नु पार्नु**—=(दिक्कले) घाँटी कस्सिनु, मुटुमा गाँठो पार्नु । इन्दुको छातीमा घनले ठोके जस्तो भयो, तिनी छोरालाई छातीमा टाँसेर भक्कानु पारी पारी रुन थालिन् ।—खड्गमान (दर्पचूर्ण) । त्यो कुरा सुन्नासाथ भक्कानु परेर बोल्नै सकिनँ ।



**भटमास खाए जस्तो मुख गर्नु**—=नचाहिंदो कुरा पटपट बोलिरहनु (हेलाको बोली)। त्यस्तो भटमास खाए जस्तो मुख गरेर कसरी निर्वाह हुन्छ ?

**भटियार्नीको चटाइ**–ज्यादै छुत्रो कुरालाइ दृष्टान्त दिने बोली ।

**भट्टी परोस्**—=भर्सेलै परोस् ।

**भडखाल(रा)मा पर्नु**—(१)=ठूलो आपत् वा हानि हुनु । नाफा हुन्छ भनेर बेपारमा चलेको त भडखालमा परें । (२) साधारण अर्थ ।

**भंडाफोड हुनु, गर्नु**—=पोल वा भेद खुल्नु, खोल्नु । आखिरमा हेमेले ती बदमाशहरूको भंडाफोड गरिदियो ।

**भतेर (भत्यार) उतार्नु**—=धेरै भात तरकारीहरू पकाउनु । मलाइ एउटा साथी चाहिन्छ, म एकलैले यतिका भतेर उतार्न सक्छु ?

**भतेर(भत्यार)को कुकुर कुटे जस्तो**—जति कुटे पनि नचेती उस्ताको उस्तै हुँदा दृष्टान्त दिने बोली (भतेरमा कुकुरलाई जति चोटि कुटेर धपाए पनि फर्की फर्की आउने हुनाले) ।

**भदौको राँगो**—=ज्यादै चण्डाल (त्यस महीनामा राँगोलाई खूब मात चढाई भक्कुलाई दिने चलेकोबाट) ।

**भदौरे गाई**—भदौमा ब्याएको गाईले मालिकलाई पिर्छ भन्छन्, उसैले भदौरे गाई अलच्छिना भन्नें चलन छ ।

**भदौरे घाम**—=पोल्ने चर्को घाम।

**भदौरे झरी**—=एक छिनमै झार्र पर्ने चाँडै नै थामिने ।

**भनाइ खानु**—=गालि खानु, वचन सुन्नु । अर्काको घरमा नगएको भए भनाइ खानुपर्दैनथ्यो ।

**भनावैरी हुनु**—(१)=मुखको झगडा वा भनाभन हुनु । तिम्रो निति शंकरेसित भनावैरी भयो । (२)=भनाभनद्वाराको शत्रु । सित्तैं चुनु आज मेरो भनावैरी भई ।

**भनी उठ्नु**—=कचिंगल झिक्नु, दोष लाउनु ।

**भनी बिझाउनु**—=मर्म पर्ने कुरा भनेर चिढ्याउनु वा चित्त दुखाउनु । आजसम्म अम्बिकाले

कसैलाइ भनी बिझाएको थाहा छैन ।

**भनी बिराउनु**—=अयोग्य कुरा बोलेर बिराम गर्नु । मैले केही **भनी बिराए** जस्तो लाग्दैन, किन रिसाउनु भयो ?

**भनेको त कल्लाई कल्लाई मारेको त मलाई**—पेच लाउनेलाई उसले हानेको पेच बुझियो भन्ने जताउँदा प्रयोग हुने ।

**भने जस्तो**—(१)=मनमाफिकको, चाहे जस्तो । आजकल **भने जस्तो** चुरै पाइन्न । (२) साधारण अर्थ । मैले **भने जस्तो** गरेर नभन नि । उसले **भने जस्तो** काम हामीले गर्न सकेनौं ।

**भनेर बस्नु**—=(अमुक मालिक, लोग्ने, वा स्वास्नी) सिवाय अरू लिन्न भन्ने निश्चय गरेर अड्नु । हजूर **भनेर बसेकी** थिएँ, हजूरले जा भन्नुहुन्छ भने जान्छु ।

**भन्टा(भ्यान्टा)को बोटमा झटारो हान्ने मान्छे जस्तो**—खुर्सानीको बोटमा····*इत्यादि* हेर ।

**भन्न नपाउनु**—=ममता वा भोग गर्न नपाउनु ।····गरीब आमा बाबुले छोरा छोरी **भन्न नपाई**, ····मरे पछी मात्र हुने वियोग तिन्का जिन्दगीका बीचैमा हुने गर्थ्यो ।—श्री ३ चन्द्र (अमलेख-भाषण) ।····भोग दिऊँ भने कि आफू **भन्न नपाइने** कि छोरो भन्न नपाइने कि बुहारी भन्न नपाइने ।—बोधविक्रम (दन्त्यकथा) ।

**भन्नु नभन्नु भन्नु**—(१)= जथाभावी मुख छोड्नु वा गालि गर्नु । शम्भाजी र इनका मन्त्री कलुषले औरंगजेबलाई **भन्नू न भन्नू भने** ।—वासुदेव (भारतवर्षको इतिहास) । (२)= भएभरको गोप्य कुरा प्रकट गर्नु, मनपरी लाजभाँड कुरा बोल्नु । ठूलेले जेठाज्यूकहाँ गएर **भन्नु नभन्नु भनिदिएछ** ।

**भन्ने कुरा मात्र**—=काममा परिणत नहुने वा असत्य कुरा । त्यो पनी **भन्ने कुरा मात्र** हो ।—रुद्रराज (रूपमती) ।

**भमरा जस्तो**—=दश जनासँग प्रेम गरी गरी हिंड्ने मान्छेलाइ



दृष्टान्त दिने । लोग्नेमान्छे **भमरा जस्ता** हुन्छन् ।

**भर पर्नु**—(१)=विश्वास गर्नु । भीत्री-स्वभाव नबुझी जस्को जुन मनुष्यले । **भर पर्दछ** सो हुन्छ अति दुःखी बिहोशले ॥—बैजनाथ (उपदेश-शहस्री) । (२)= आड लिनु । यो लट्ठीमा **भर परेर** उभिएको थिएँ चोइटिएछ ।

**भरबित्त(त्तो), भरसक, सकभर**—=सकेसम्म (यी शब्दहरू 'भर' विना एकलै प्रयोग हुँदैनन्) ।

**भ[घ]रमको टट्टी**—(१)=झूठो समझ, भूल खयाल । हाम्रो धर्मलाइ **भरमको टट्टी** हो भन्नु तिम्रो मूर्खता हो । (२) =ज्यादै निर्बलियो वा सत्ता मात्र बाँकी भएको वस्तु । तिमीले किनेर ल्याएको मोजा **भरमको टट्टी** रहेछ, एक दिन लाउँदैमा तिनौटा भ्वाङ पर्‍यो ।

**भरमग्दूर**—=यथाशक्ति (उर्दूमा—मकदूर=शक्ति ; हाम्रो भाषामा यो शब्द 'भर' विना एकलै प्रयोग हुँदैन) ।····आफ्नी प्यारी जन्म-भूमिको रोब-रवाफ बढाउनाको कोशिश **भरमग्दूर** गर्नेछु,····।—श्री ३ भीम (नगर-प्रदक्षिणोत्सवको वक्तृता) । **भरमग्दुर** तिम्रो खुश चाहने त्यस्तो दासलाई तिमीले केको रिझाउनु ?—श्री केसर(विक्रमोर्वशी) । तपाईंको भलो हुने कामका निमित्त म **भरमगदूर** कोशिश गरुँला ; अनि तपाईंको जे इच्छा हुन्छ, गर्नु होला ।—खड्गमान (काशीनाथ) ।

**भरे भोलि हुनु**—(१)=(सिकिस्त भएको मधौरुको बारे) अहिले मर्छ कि भोलि मर्छ भन्ने अवस्थाको हुनु । बिचरा दिले काजी **भरे भोलि भइरहेछन्** । (२) =(गर्भवतीको बारे) अहिले पाउँछे कि भोलि पाउँछे भन्ने अवस्थाकी हुनु । कान्छी बुहारीको **भरे भोलि भइरहेछ** ।

**भर्तीमा जानु**—(१)=केही दिन वा महीना नोकरीमा भर्ना हुनु । कालुथापा ज्यामीबाट **भर्तीमा गएछ** । (२)=रिक्रूटमा भर्ना हुनु । **भर्तीमा जान्छस्** भने म कर्नेल साहेबलाई भनिदिन्छु ।

**भर्सेलै जाओस्, परोस्**— = जेसुकै होस्, जतासुकै जाओस् (भर्सेलो = चुलो ; यो शब्द यस वाक्यांशमा बाहेक सदरिया बोलीमा प्रयोग हुँदैन)। तर यो सब **भर्सेलै परोस्** नन्द, आफ्नै मुखले आफूलाई नोकर्नी भनेर स्वीकार गर्न तपाईंलाई लाज लाग्दैन?—खड्गमान (दर्पचूर्ण)। आफूले भोग गर्न नपाएपछि सुनै भए पनि **भर्सेलै परोस्**।

**भलाकुशारी हुनु, गर्नु**— = भेट भई परस्परको संचो बिसंचो सोधपूछ हुनु, गर्नु ('कुशारी' एकलै प्रयोग हुँदैन)। संधी आए रे, **भलाकुशारी गर्न** जानुपर्‍यो। (वक्रोक्ति) बाटामा चोरसित **भला-कुशारी भयो** भने आफू भाग्ने कि? तोडा घिच्याउन लाग्ने?—लेखनाथ (लक्ष्मी-पूजा)।

**भली भाँतिसंग**— = पूरापूरसँग, विवरणसहित (प्रायः मन नपरेको कामसित प्रयोग हुने)। मेच बालगिरी दिएको त **भली भाँतिसँग** बिगारेर ल्याएछ। अस्तिको कुरा त तिम्री छोरीले **भली भाँतिसँग** घलेकी स्वास्नीलाई भनिदिइछ।

**भलो वस्तु (वस्त्र) कपडा**— राम्रो वा असल लुगा लाउनेलाई मानिसहरू सन्मान गर्छन् भन्ने उक्ति (यो उखानमा पनि प्रयोग हुन्छ)।

**भलो सुन्नू भलो लाउनू**— संक्रान्ति सुनाउँदा अन्तमा भन्ने बोली।

**भल्को उम्लनु**— = पटकमा भुलभुल भई उम्लेर माथि आउनु (गन्तीसित आउँछ)। यो दूध २।३ **भल्को उमालेर** ल्याऊ।

**भसक्क (भसभींस) डढ्नु**— = बेसरी वा कालै भएर डढनु। फूलकोपी तार्न दिएको त **भसक्कै** डढाएर ल्याइछ।

**भस्म खरानी**— = सत्यानाश (प्रायः सराप्ता प्रयोग हुने ; दुवै पर्यायवाची साथसाथै आउँछन्)। दुवैलाइ **भस्म खरानी** पार्ला। —रुद्रराज (चप्पा काजी)। मलाइ यसरी कुट्ने, तेरो **भस्म खरानी** होस्!

**भस्म्या ठुटो**— = डढेलामा परेको कालो ठुटो (ज्यादै कालो मान्छेलाइ भन्ने हेलाको बोली)। आफू **भस्म्या ठुटो** छ, अर्कालाइ गिज्याउँछ।



**भाँजी (भाँजो) हाल्नु**— = बाधा गर्नु, रोक्नु। छोरीको बिहाको कुरा मिलिसकेको थियो, कहाँबाट माहिला कार्की आएर **भाँजो हालिदियो**।

**भाँड भैलो**— = अति अनाचार वा बेथितिको बदमाशी चालचलन। त्यस्तो **भाँड भैलो** भएको ठाउँमा को जान्छ?

**भाइसरह**— = आफ्नो औकात वा हैसियतका मानिसअनुसार (यो स्त्रीलिङ्गमा पनि प्रयोग हुन्छ)। चमेलीले **भाइसरह** मैले पनि चोलो पाउनुपर्छ भनेर दावी गरी।

**भाउ ओर्लनु**— = भाउ घट्नु, बढ्नु (साधारण अर्थमा)।

**भाउ काट्नु**— = अर्काको देखासिकी गरी नकल गर्नु। लौ त प्यारीको **भाउ काट्ने** लहरामा छाँद हाली प्रेम देखाउँछु।—श्री केसर (विक्रमोर्वशी)।

**भाउ घट्नु, बढ्नु**—(१) = कदर घट्नु, बढ्नु। मालिकले मेचमा बस भनेपछि किन भूईँमा बसेर आफ्नो **भाउ आफै घटाउँछौ**? (२) साधारण अर्थ (रसदको बारे—भाउ घट्नु = महँगो हुनु ; भाउ बढ्नु = सस्तो हुनु। लत्ताकपडा र अरू मालतालको बारे—भाउ घट्नु = सस्तो हुनु ; भाउ बढ्नु = महँगो हुनु)। हिजो आज चामलको **भाउ बढेको** छ—अस्ति अस्ति साढे ९ माना थियो अहिले ६ मानासम्म दिन्छ। कपडाको **भाउ घटेको** छ, १४। पनें रानी मारलाइ आजकल ११७९ मा पाइन्छ।

**भाउन्न छुट्नु**—(१) = (रिसले) आँखा नदेख्नु। मलाइं मन परेको फूलदान फुटालेको सुन्दा रिसले **भाउन्न छुटेर** आयो। (२) = रिङ्टा लाग्नु। पित्त चढेछ क्यारे आज मलाई **भाउन्न छुटिरहेछ**।

**भाउ बस्नु**— = मोल वा दरको स्थिति बस्नु। अहिले चामलको **भाउ बसिसकेको** छैन, मङ्सीरमा बस्छ।

**भाउ राख्नु**—(१) = कदर गर्नु,

गिन्ति राख्नु । यो पुरानो नोकर हो, हामीले यसको भाउ राख्नुपर्छ । ( २ ) = मोल तोक्नु । साहु, यी धोतीहरूको भाउ के राखेका छौ ?

**भाउ लाउनु**—(१) = नाच्ता वा कुरा गर्दा त्यही अनुसार अङ्ग (मुख्य गरी हात) चलाउनु ।····कल्पवृक्ष धेरै प्रकारको बहुतै राम्रो भाउ लाएर नाच्तछ । —श्री केसर ( विक्रमोर्वशी ) । ( २ ) = भाउ काट्नु । अरूको भाउ लाएर गिज्याउन त खूब जान्दछौ, आफ्नो कसले भाउ लाइदेओस् नि !

**भाकल राख्नु**— = देउतालाइ गरेको पूजा बली इत्यादिको प्रतिज्ञा पूरा नगरेर टङ्ग्याइ-राख्नु । दक्खिनकालीको भाकल राख्नु हुँदैन, पर्सि सन्सर वार एक भाग पूजासामा पठाइ-हाल ।

**भाका लाउनु, हाल्नु**— = (गीत वा श्लोकमा) लयले युक्त गर्नु । हाम्रा हवलदार साहेब भाका लाएर रामायण भनिरहेका थिए ।

**भाग लाउनु**— = विभक्त गर्नु लोभी मान्छे भाग लाउन अघि सर्दैन ।

**भाग्य पल्टनु, खुल्नु** — = दुःख-पछि सुक्ख आउनु, सौभाग्य शुरू हुनु । दाज्यै ! सबै बितिसक्यो उसको अभाग्य । अंग्रेजबाट दिनहूँ खुलदोछ भाग्य ॥—लेखनाथ (सत्यकलिसम्वाद) । त्यसरी चाहना गरिदिने भए त भाग्य खुलिहाल्यो नि !—रुद्रराज ( प्रायश्चित्त ) । हाम्रो भाग्य खुल्यो कृपा हरिजिले गर्नूं हुँदा यस्घरी ।—पद्मप्रसाद (श्रीमद्भागवत) ।

**भाग्य फुट्नु**—बनिबनाउ हुने वा भएको कुरा बिग्रनु । रूप शीलको गहिरो खानी आज उसै दवियो दैव वन्यो अति निष्ठुर पापी भाग्य फुटाइ दियो—लेखनाख (भर्तृहरि-निर्वेद) ।

**भाङ पेलाइ**— = जुन तरहले हुन्छ आफ्नो मतलब साध्य गर्नु । भाङ पेलाइबाट पनि म यो काम पटाई छोड्डुँला ।

**भाटी हाल्नु**— = (धोबीले) लुग



पकाउनु । धोबिनीले मेरो त्यति राम्रो फरिया भाटी हालेर खुइल्याइदिइछ ।

**भात [पानी] काट्नु, हटक गर्नु**— = छोएको भात (र पानी) नखानु ।····यो जातले यस्तो रोजगार गर्‍यो भनी भात पानी काढ्न हुँदैन भन्ने ऐनहरू वनेको हुनाले बाधा पर्ने-हरुले मनपरी अरुलाई सताउन नपाउने त्यही ऐनबाट भइराखे-कैछ ।—श्री ३ चन्द्र (अमलेख-भाषण) ।····मेरो भात काट्न खोज्ने भएकी भन्दै ज्वाइँ नारानले मुख च्याति दिनु भएछ—बुढिया कुत्थुर भइछन् । —रुद्रराज (रूपमती) ।

**भात चल्नु**— = छोएको भात भताहाले खानु ।

**भात भान्छा(न्सा) मिल्नु**— = समान जातिको हुनु । काले खत्रीसित तिम्रो भात भान्छा मिल्दैन भने उसकी छोरी बिहा गरेर के काम ?

**भातमा पर्नु, बोर्निनु**— = पतित वा घटी जातको हातको भात झुकानमा परी वा हिमायती गरी खानु वा त्यसरी खाएका मान्छेहरूले छोएको खानु । सुबिदार बाजे पनि भातमा परेछन्, आज पतिया लिन गएका थिए ।

**भातमा सीङ जुरो उम्रनु**— = भात सेलाएर चीसै हुनु । भातमा सीङ जुरो उम्रिसक्यो, अझ अर्को हात पासा खेल्न तम्सिन्छौ ।

**भात लाग्नु**—(१) = (प्रायः केही दिन नखाई वा धेरै ) भात खाएपछि लस्त हुनु वा निन्द्रा लाग्नु । मेरो त हात खुट्टामा भात लाग्यो एक छिन नपल्टी काम गर्न सक्तिनँ । (२) = खान नपाउनेले भात खान पाएर मात्तिनु (प्रायः अलि दिन भात खान पाएर नटेर्ने वा घर जान्छु भन्ने नोकरको बारे प्रयोग हुने) । यी केटीहरूलाई भात लाग्छ अनि घर जान्छु भन्छन् । (३) साधारण अर्थ । सानो नातिको बाहुलामा भात लाग्यो ।

**भात हुनु**—(१) = ज्यादै कमजोर र दुब्लो हुनु (बिरामीको बारे) । तिम्री फुपू भात भइ-

सकिछन्, अब बांचन कठिनै होला। (२)=ज्यादै (चाहिने-भन्दा बढ्ता) गल्नु, फत्तलफाँडो हुनु, (प्रायः साह्रो कुरा)। ज्यादा बसालेछौ, मासु त भात भइसकेछ।

**भाते निद्रा**——=सुत्नासाथको पहिलो निन्द्रा (यो सबभन्दा गाढा हुन्छ भन्छन्)। म त्यस वेला भाते निद्रामा थिएँ, छोरी रोएकी पत्तै पाइनँ।

**भान पर्नु**——=भ्रान्ति हुनु। बानो बेहोर थाहा नपाएकाहरूका मनमा त क्या धर्मात्मा छन् भन्ने भान पार्नलाइ कस्ती पास् ?—रुद्रराज (रूपमती)। बहुतै अग्लो भएको हुनाले यसका शिखरले बादलमाथि आकाशलाइ नै छेडेको छ कि भन्ने भान पर्दथ्यो।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)।

**भान्छा(न्सा) उठाउनु**—=(खाने काम सकिएपछि) भान्सेले चुल्हो छाड्नु। अरूले खाएपछि भान्छा उठाइदिए हुन्छ, मलाइ कुर्नु पर्दैन।

**भान्छा(न्सा) कुर्नु (ह्नु)**—=भात इत्यादि पाकिसकेपछि तातो राखी खाने मान्छे नआएसम्म पर्खिरहनु। जो किन्नु पर्छ यसैले किन, बत्ति बाल, खानपिन गर, मलाई भान्सा कुर्नु पर्दैन। —लेखनाथ (लक्ष्मी-पूजा)।

**भान्छा(न्सा) गर्नु**—(१)=भात खानु (मध्य कक्षाको आदरको बोली)। ज्वाइँ बाजेलाइ भान्सा गर्न अलि अग्लो ठाउँ बनाउनु पर्छ भन्थे ; म ता बिर्सिरहेकी।—प्रेमराज (ससुराली)। (२)=पच पार्नु। दुइ दिनलाई भनेर लगेको मेरो किताप त भान्छा गरिदिइस्, हैन ?

**भान्छा(न्सा) तयार हुनु**—(१)=दालभात तरकारी पाकी ठीकठाक हुनु। यो कुरा चल्दै थियो, भान्सा तयार भयो भन्ने आवाज आयो।—रुद्रराज (प्रायश्चित्त)। (२)=भान्साघर बनिसक्नु।

**भान्छा(न्सा) पस्नु**——=भात पकाउन धोती फेरी चुल्होमा जानु। ज्येठी दुलही बज्यै आफै भान्सा पस्नु भएको छ।—रुद्रराज (रूपमती)।



**भाम्लो मचाउनु, उठाउनु**—राडो झिक्नु। हिजो तिमी गएपछि ठाहिलाले भाम्लो मचाएन र ?

**भार (भारा) उठाउनु, लिनु**——=अभिभारा लिनु। यो कामको भार उठाएअनुसार तिम्रो सफलता भयो भने हामी खुशी हुन्छौं।

**भारत गर्नु**——=परिभ्राट गर्नु। मेरो स्वागत गर्न तिमीले ठूलो भारत गरेछौ।

**भारत पर्नु, हुनु**——=मुश्किल पर्नु, हुनु। धेरै धन् मिलन्या हरी खुस हुन्या भारत् नपर्न्या कसै ॥—राजीवलोचन (केदार कल्प)।

**भार हर्नु**——=दुःख मोचन गर्नु (पृथ्वीको ; धर्मसंबन्धी कुरामा प्रयोग हुने)। अघि भार हरेर पृथ्विको। प्रभुले धर्म प्रचारि लोकको ॥—धरणीधर (नैवेद्य)।

**भारी बिसाउनु**—(१)=ठूलो अभिभारा पूरा गर्नु। हिजो बिस्नु प्रसादलाइ उनको धनमाल जिम्मा लाइदिएर भारी बिसाएँ। (२)=सुत्केरी हुनु। दिदीले भारी बिसाउने कहिले हो ? (३) साधारण अर्थ। काठ तीरका दाउरा बेच्ने आईमाइहरू देवलमा भारी बिसाएर मकै खान लागेका थिए।—गुरुप्रसाद (कथा कुसुम)।

**भारी हुनु**—(१)=(राम्रो, मज्जा, इत्यादि लोप भएर) ज्यादै राम्रो, मज्जाको हुनु। तिमीले लेखेका तस्बीर भारी भएछ (यहाँ 'राम्रो' लोप भएको छ)। हिजो पासामा भारी भयो (यहाँ 'मज्जा' लोप भएको छ)। (२)=एउटा मान्छेलाइ मस्त कुम्लो हुनु। सबैले किनेको माल जम्मा गर्दा त एक भारी नै भयो। (३)=बेचैनी हुनु (जीउ, कपालको बारे)। आएँ, कपाल साह्रै नै भारी छ किन हो किन····।—बालकृष्ण (मुटुको व्यथा)। (४)=गरुङ्गो हुनु (साधारण अर्थ)। यो टेबिल भारी छ मलाई हलकाचाहि दिनुभए हुन्थ्यो। (५)=गठरी राखिएको हुनु (साधारण अर्थ)। त्यस सत्तलमा मेरो भारी छ।

**भाले आइलाग्नु**—(१)=झंझट-

को काम पर्नु । हिजो तिमीकहाँ आउन लागेको थिएँ, एउटा भालू आइलागेर निस्कनै पाइनँ । (२)=मागेर वा अरू किसिमले दुःख दिने मान्छे लूतो लाग्नु । पैसा नभएको वेलामा कहाँबाट यो भालू आइलाग्यो । (३) साधारण अर्थ । दाउरा बटुल्दै थिएँ पछिल्तिरबाट भालु आइलाग्यो ।

**भालूको कंपट[समाए झैँ]**—यसो गरे पनि सुक्ख नपाइने उसो गरे पनि सुक्ख नपाइने काम [लाइ दृष्टान्त दिने] (भालूको कम्पट समातिराख्ता हात गल्ने भयो, छाडिदिऊँ भने आफूलाइ फह्र्याउने भयो—यही अर्थबाट)। यो अड्डा त मलाई भालूको कंपट भइरहेछ—छोडूँ भने के खाने ? नछोडूँ भने उजुरका उजुर परिरहेछन् ।

**भालू छेराए झैँ**—कायल कायल पार्दा दृष्टान्त दिने बोली ।

**भालू पन्छाउनु**—=झंझटको काम वा मागेर वा अरू किसमले दुःख दिने मान्छेबाट छुटकारा पाउनु । अलिकति दिएर यो भालूलाइ पन्छाइहालन ।

**भालूलाई पुराण सुनाउनु**—=अबूझ वा अर्ती नलिने मूर्खलाइ अर्ती दिनु (अर्ती दिएर काम नलाग्दा प्रयोग हुने)। तिम्रा छोरालाइ शिक्षा दिनु र भालूलाई पुराण सुनाउनु एकै हो ।

**भालूलाई बन्दूक पड्काए जस्तो**—=बराबर आउने मान्छे केही कुराले डराएर वा चिढिएर आउन बन्द गर्दा दृष्टान्त दिने । उपेन्द्रलाई सापटीको कुरा गरेको त भालूलाई बन्दूक पड्काए जस्तो भयो ।

**भालू हुनु**—=मन नपर्दो भार हुनु । यो रोगी घोडा भालू भइरहेछ ।

**भिडुङ्गाको बतास**—कडा हुरीलाइ भन्ने बोली । के बिग्र बतास चलेको !—भिडुङ्गाको बतास जस्तो ।

**भित्ता पुर्‍याउनु**—=हदैसम्म पुर्‍याउनु । नराम्रोमा भित्तैसम्म पुर्‍याई यो कुरा गरियो ।—श्री ३ चन्द्र (अमलेख-भाषण)। बेजाय कुरा कसैले गर्थो



कि भित्ता पुर्‍याएर जवाफ दिन्थिन् ।—रुद्रराज (चप्पा काजी)।

**भित्तामा लेखेको मुजुरले** *हीराको हार* **(मोतीको माला) खायो भने जस्तो**—बरु असंभव कुरा पनि हुन्छ, हुनेहार कहिले टर्दैन भन्ने जताउन दृष्टान्त दिने (कर्मरेखा सत्य पार्नालाइ भित्ताको मुजुरले साँच्चि नै मोतीको माला वा हीराको हार निल्यो भन्ने कथाबाट)।

**भित्ता लाग्नु**—(१)=पन्छाइमाग्नु, हेला गरिनु । रामदासको मन परेकी स्वास्नी त भित्ता लागी रे । (२)=हटेर वा टरेर जानु, नहुने हुनु । यस पालालाई सानीको बिहाको कुरा भित्ता लाग्यो । (३) साधारण अर्थ । जसहिब सवारी भयो, अलि पर भित्ता लागेर बस ।

**भीड पर्नु**—=(कामको) मिचामिच हुनु । सत्याललाइ कामको भीड परिरहेछ, उसैले नआएका होलान् ।

**भीड लाग्नु**—=हूल जम्मा हुनु । मानिसको भिड लागिगो तिरमहाँ जात्रा समानै गरी ।—डिल्ली शम्शेर (यूरोपयात्रा)।

**भीमसेन भारत निकाल्नु**—=ठूलो झैझगडा, कुटपीट, वा राडो मचाउनु । रङ्ग न ढङ्ग संग उल्फत २ कुरा निकालेर त्यसै भीमसेन भारत निकालि रहने ।—रुद्रराज (रूपमती)।

**भीर जानु कि गाँडा जानु**—एकदम बेवास्ता जाहेर गर्दा प्रयोग हुने बोली । मैले अर्ती दिंदा मेरै निमित्त भने जस्तो गर्छौ, अबदेखि बोल्दिनँ—भीर जाऊ कि गाँडा जाऊ । अब ती बैरीहरू भीर जाऊन् कि गाँडा जाऊन् मलाई के वास्ता !

**भुँडी ठटाउनु**—=बेसरी खानु । दिउँसो भुँडी ठटाइहालेको छ अहिले भात किन रुच्थ्यो !

**भुँडी फुटाफुट गर्नु**—=परस्परको गुह्य कुरा प्रकाश गर्नु । यिनीहरूले झगडा गरी भुँडी फुटाफुट नगरेको भए हामीलाई यो कुरा थाहा हुँदैनथ्यो ।

**भुँडी भर्नु**—(१)=(प्रायः नराम्रो

कामले) पैसा बटुल्नु । शिवेको बिहामा श्यामप्रसादले खूब भुँडी भऱ्यो । (२) साधारण अर्थ । जत्ति खाए पनि यसको भुँडी भरिँदैन, कति खान सकेको !

भुक्त वैरागी—=भोगी भोगी संसार राम्ररी चिह्नेको मान्छे । खोइ नानी, म त भुक्त वैरागी भइसकेको छु र यो यस्तो कुरा निस्कन्छ ।—रुद्रराज (प्रायश्चित्त) ।

भुङ्ग्रे (भुब्रे) जरो—=बाहिरै उग्र तातो थाह्रा हुने ।

भुजा चलाउनु—(१)=भान्छाबाट खाने ठाउँ(प्रायः टाढा हुँदा) सम्म भात लैजानु (आदरको बोली ) । जसाहेबको भुजा चलाउनू रे ! (२)=(कसौंडीमा) भात हुँडल्नु ( आदरको बोली ) ।

भुटै काटिनु—=दशौ पन्छिनु, ठूलो चिन्ता हट्नु ।

भुतुक्क हुनु-(१)=ज्यादै आसक्त हुनु । सेतेसित पार्वती भुतुक्कै थिई । (२)=मरेतुल्य हुनु । माया लाजले भुतुक्क भई, तर तेस्ले पितालाई केहि भनीन । —रूपनारायण (भ्रमर) । त्यति लामो बाटो, दिन भरीको हिंडाइ, त्यस्तो कडा भदौरे घाम, भुतुक्क भएको छु ।—भीमनिधि (सहनशीला सुशीला) । म ता भोकले पनि भुतुक्क भएँ ।—प्रेमराज (ससुराली) । (३)=(रिसले) चूर हुनु । छुरी रिसले भुतुक्कै भई । (४)=तत्कालै खुसुक्क पर्नु वा मर्नु । एक गोलीमै यो भुतुक्क भयो (वा भएर) मऱ्यो । उसकी स्वास्नीको 'नमार ! नमार !' लाइ टेरै नलाई एकै चोटमा भुतुक्क पारिदियो ।—ग्रन्थकार (कथा कुसुम) ।

भुरुक्क उठ्नु—=विरक्त भएर जुरुक्क उठ्नु । सबै दुःख विचार गर्दा त भुरुक्क उठेर जङ्गलतिर जाऊँ जस्तो लाग्दछ ।

भुलुक्क उम्लनु—=एकै भल्को उम्लनु । हिजो मैले तोरीको गुन्द्रुक भुलुक्क उमालेर भात खाएं, भोक लागेको हुनाले औधी मीठो लाग्यो ।

भुसुक्क—=एकदमै ( यो पद 'ढल्नु, बिर्सनु, निदाउनु, सिध्याउनु' सँग प्रयोग हुन्छ ) । के रे नाम ? हिजो मात्र तिम्रो नाम सुनें, तर आजै भुसुक्क बिर्सेंछु, के ?—बालकृष्ण ( मुकुन्द इन्दिरा ) ।



भू(भ)इँमा खुट्टा नहुनु—(१)=ज्यादै मात्तिएको हुनु, गमक्क पर्नु । अभिमान र धनसम्पत्तिले जयचन्द्रको भइँमा खुट्टा थिएन ।—रुद्रराज (भारतवर्षको संक्षिप्त इतिहास, भाग २) । (२)= फुरुङ्ग पर्नु । हो, नाइँ; आजकाल ता हाम्री ठुलानीका भैमा खुट्टै छैनन् ।—प्रेमराज (ससुराली) ।

भूतको (ले) खाजा खाने वेला—=आपत्, दुक्ख, वा नोक्सानको फेला परिने मौका । कहाँबाट भूतले खाजा खाने वेलामा पुगेछु, चौकाले दुइ सय मारिदियो । भूतले खाजा खाने वेलामा सोध्न गएँछु, झन् अर्को भुर्तीडलोमा परें ।

भूत चढ्नु—( १ )=एकनास लग्‌गू हुनु, धुन सवार हुनु । चन्द्रेलाइ बाइस्कलको भूत चढिरहेछ—चन्द्रे छ कि बाइस्कल छ ! (२)=रिस उठ्नु । धाईसित झगडा भएदेखि गुलाफलाइ भूत चढिरहेछ, नजिल्क्याऊ ।

भूत मन्सा(न्छा)उनु—(१)=खान दिई वा भाग पर सारी (पिरल्ने मान्छेलाई) पन्छाउनु ( हेलाको बोली ) । एउटा मान्छे बिहानदेखि कराएर छुट्टी !—बल्ल भूत मन्छाएर आएँ । ( २ ) साधारण अर्थ । भूत मनसाउँ वा डाक्टर-वैद्यलाई बोलाउन पठाउँ ?—भवानी ( यौवनका आँधी ) ।

भूतलाई पाल्लो फाले झैँ—हेला गरेर वा अनादरसँग दिएकोमा दृष्टान्त दिने बोली ( पाल्लो= खिचडी; यस वाक्यांशमा बाहेक यो पद सदरिया बोलीमा प्रयोग हुँदैन ) । भला रामुकी आमाले एक दोटा ठुन्का भूतलाई पाल्लो फाले झैं गरी फालिदिइन् भने त बेसै भो,····।—लेखनाथ ( लक्ष्मी-पूजा ) ।

भूतले पापको मधौरु—निस्सन्देह छोड्दैन, बाँकी राख्तैन भन्ने कुरालाई दृष्टान्त दिंदा ।

भूत सवार हुनु—=धुन सवार

हुनु। यसमा फिरोजलाई अर्को भूत सवार भयो।—रुद्रराज ( भारतवर्षको संक्षिप्त इतिहास, भाग २ )।

**भूत हुनु**—(१)=ज्यादै परिश्रमी हुनु । लक्ष्मीदीको मुख भने चण्डाल छ, तर कामको त भूतै छ बा ! ( २ ) साधारण अर्थ । सोधेको कुराको पटक्कै जवाफ दिंदैन, यो भूत हो कि मान्छे हो ?

**भूल पर्नु**—=झुक्किनु, झुकानमा पर्नु । भूल परेर पार्वतीको भाग मोहनमायालाई दिएँछु ।

**भूसको थैली**—( १ )=हलम्बू, मगज नभएको। यस्ता भूसको थैलीलाई काम अह्राएको कहिले हुन्थ्यो ।

**भूसमाथिको लिउन**—सार नहुने वा नटिक्ने कुरालाई दृष्टान्त दिने बोली । जबरजस्ति गरी फोष्टरले शैवलिनी लाई खवास भने यतिन्ज्यालको मेहनत भूस माथिको लिउन हुन्छ।—गम्भीर ध्वज ( चन्द्रशेखर ) ।

**भेंडाको हूलमा बाखा मिसाए जस्तो**—अमिल्दोपनलाइ दृष्टान्त दिने बोली ।

**भेंडा[को] जस्तो**—जति सम्झाए पनि नमान्ने एकोहोरो मान्छेलाई दृष्टान्त दिने बोली। भैंडा जस्तो एकोहोरो मान्छेलाइ संझाएर किन कपाल दुखाउँछौ। त्यसैले भेंडाको जस्तो बुद्धि लिएका छन्।—रुद्रराज ( प्रायश्चित्त ) ।

**भेंडा बनाउनु**—( १ )=भेंडा पार्नु । कलकत्तामा छः महीना मात्र बस्ता मानिस भेंडा बन्दछन् रे।—चन्द्रलाल (विष-वृक्ष ) । ( २ )=भेंडा काटी खुइल्याई पकाउन वा मासु बेच्न तयार पार्नु। भेंडा बनाइसके-पछि हामीलाई खबर देऊ। ( ३ ) साधारण अर्थ । मलाइ मायाको भेंडा बनाइदेऊन ।

**भेंडा बाखा जस्तो**—गम्यागम्य-को छ्यानविचार नराख्ने भ्रष्टा-चारीलाइ दृष्टान्त दिने बोली । त्यस्ता भैंडा बाखा जस्ता मानिसको कुरै नगर ।

**भैंडिगोठ पसे जस्तो**—हुरुरुरु थुप्रै भई पस्ता (प्रायः हानि गर्दा) दृष्टान्त दिने हेलाको बोली । अस्ति लप्टन्नीका केटाकेटीहरू आएका थिए मेरो बारीमा भेंडि-



गोठ पसे जस्तो गरी काँक्रा फर्सीहरू सखाब पारेछन् ।

**भैंडिगोठमा बाघ पसे जस्तो** — धेर मान्छेहरूको बीचमा पसी हन्ड्याङहुन्डुङ पार्दा दृष्टान्त दिने बोली ।

**भैंडो पार्नु, तुल्याउनु**—=उठ् भने उठ् बस् भने बस् पारी आफ्नो इशारामा चल्ने गराउनु । यो रखौटाले पण्डित बाजेलाई भैंडो पारिसको । बिजुली जहाँ घुसे उहाँ एक लौटी पार्दथे, मालिकलाई भेंडा तुल्याउँथे, ....।—रुद्रराज (चप्पाकाजी) ।

**भेट खानु**—=एकमिलानको हुनु। हेरि ! त्यहाँनेर बस्नेत र आनन्द-को कुराले भेट खाएन ।

**भेडिया धसान**—=फल नसोची अर्काको पछि लाग्ने काम ( हिन्दीबाट ) ।

**भेद खोल्नु**—=हित खोल्नु (हेर)।

**भेद लिनु**—=गुप्ती कुरा पत्ता लाउनु । पद्मनिधिले त तिम्रो भेद लिइसकेछ ।

**भेद हाल्नु**—=( बोक्सीले ) मन्त्रद्वारा वा कुफत खुवाएर रोग लाउनु (प्रायःआइमाईमा प्रचलित छ ) । चमेलीलाई त गौरीले पो भेद हालेकी रे ।

**भेष बदल्नु**—आफ्नो रूप लुकाएर अर्को रूप लिनु, छद्मभेष धारण गर्नु । भेष बदलेको चोरलाई पुलिसले पनि चिन्न सक्तैन ।

**भैँचालो जानु**—=भूकम्प हुनु । ....कैले हुरिचल्छ, कैले भैँचालो गयाको थाहा हुन्छ ।—जयपृथ्वी बहादुर ( पदार्थ तत्व विवेक ) ।

**भैँसी आहाल बसे जस्तो**—जथाभावीसँग धेरै बेर पानीमा बस्ता दृष्टान्त दिने बोली । पूस-माघमा भने आङभरी मयल थुप्रिन्छ, जेठ वैशाखमा भने भैँसी आहाल बसे जस्तो गर्छौ ।

**भैलो खेल्नु**—=लक्ष्मीपूजाको दिन एउटाले भट्याई अरूहरूले स्वर मिलाई ‘ भैली राम ’ भनी भैलो माग्नु ।

**भोक मर्नु, टर्नु**—=भोकले सताएकोमा थोर बहुत खाई भोक शान्त हुनु । भात नप-काएको भए दुइटा आलु पोलेर खाए एक छिनलाई भोक टरि-हाल्छ नि ।

**भोकले चेत पार्नु**— =भोकले आकुलव्याकुल पार्नु । देवालीको पूजा ढीलो भयो, मलाई त भोकले चेत पार्‍यो ।

**भोकले मर्नु**— =भोकले मरेतुल्य हुनु । ( साधारण अर्थमा पनि ) ।

**भोकै मर्नु**— =भोकले मर्नु ( साधारण अर्थमा पनि ) ।.... संझ—के फायदा हुन्छ म यो जान्दिनँ, तैपनी संझ—संसारमा भोकै मर्‍यो माधव ।-बालकृष्ण ( *मुटुको व्यथा* ) ।

**भोटे कुकुरको छाउरो जस्तो**— भाकलभुकुल परेका मान्छेलाई दृष्टान्त दिने बोली ।

**भोटे कुकुर लाए जस्तो**—ज्यादै मापाको मान्छेलाई पुच्छर निमोठ्न वा पैसा इत्यादि उठाउन लाउँदा दृष्टान्त दिने बोली । म दसैँपछि त जो सकेको दाखिल गर्छु भनिहालें नि, किन भोटे कुकुर लाए जस्तो यो मान्छेलाई पठाउनुभएको ?

**भोटो अगाडि** (बढ्ता) **फटाउनु**— =(अङ्कसित) वर्ष जेठो हुनु । जे भए पनि तिमीभन्दा मैले एउटा भोटो अगाडि फटाएको छु ।

**भोटो देखाउनु**—(१)=मछिन्द्रको जात्रामा रथमा चढेको मान्छेले बहुमूल्य भोटो चारैतिर देखाउनु । करीब एक लाख मानिस जम्मा नभई भोटो देखाइँदैन भन्ने लोकोक्ति पनि छ ।—रुद्रराज (चप्पाकाजी) । (२) साधारण अर्थ ।

**भोरमा पर्नु**— =अनजानमा भातमा बोरिनु । भोरमा परेपछि *पतिया पाइन्छ* ।

**भोलानाथ हुनु**—( १ )=साह्रै सुधो मिजाजको हुनु । हाम्रा दुलहा बाजे भोलानाथ हुनाले साह्रै सजिलो छ. जे पकाइदियो उही खानुहुन्छ । ( २ )= अबोला या गोज्याङ्ग्रो हुनु (ठट्टाको बोली ) । भोलानाथ छ, यस्ताबाट यो काम चल्दैन ।

**भ्यागुता जोखाइ, भ्यागुता-[को] धार्नी [पुऱ्याउनु]**— = एउटालाइ ल्यायो अर्को जाने, अर्कोलाइ डाक्यो फेरि अर्को नआउने भई चाहिए जति ठिक्क कहिल्यै जम्मा नहुँदा दृष्टान्त दिने बोली ( भ्यागुतालाई जोख्ता एउटालाइ समातेर ल्याउँदा नल्याउँदै अर्को उफ्रेर भागिसक्ने, अर्को समात्ता अर्को भाग्ने हुनाले)। तत्कालमा उहि असम्भव भ्यागुताको । धार्नी समान सब हालत भो प्रजाको॥—लेखनाथ (सत्यकलिसम्वाद ) ।

**भ्यागुताले सर्प देखे जस्तो**— ज्यादा डराउँदा दृष्टान्त दिने बोली ।



**भ्रामरीको दशा**— =यता र उता भौंतारिइरहनुपर्ने अवस्था। आजकल मलाई भ्रामरीको दशाले छोएको छ क्यारे, एक ठाउँमा बस्न भनेको एक छिन पनि पाउँदिन । बिचरा पान्थका लेखा भ्रामरीकै दशा सरी । लागी-रहन्छ रस्तामा दुःखदायी चिसो हुरी ॥—लेखनाथ ( ऋतु-विचार ) ।

## म

**मकै बारीमा भालु पसे झैं**— =उखुबारीमा चोर पसे झैं (हेर) ।

**मकै भुटे जत्तिकै हुनु**—परर बोल्दा दृष्टान्त दिने बोली । पण्डितजीको व्याख्यानशक्तिलाई के भन्नुपर्छ—मकै भुटे जत्तिकै छ !

**मखी राख्नु**—काँको बाँडेर खाँदा हरेक मान्छेले काँक्राको सानो टुक्रा लुकाइराख्छन्, त्यही टुक्राको नाउँ मखी हो । काँको खाइसकेपछि सबैले आफ्ना आफ्ना मखी देखाएको वेलामा मखी राख्न बिर्सी देखाउन नसक्ने मान्छेले कि अर्को काँको तिर्नुपर्छ कि अरूले राखेको मखी खानुपर्छ । त्यो खानु झिंगा खानुसरहै ठानिन्छ ।

**मगज उड्नु**— =मगज खाली हुनु ।

**मगज खलबलिनु**—( १ )= मगज खाली हुनु । (२)=बहुलाउनु ( को कोमल रूप ) । सुर्जेको मगज खलबलिएको थियो, अब त ठीक भयो । (३) साधारण अर्थ (=गिदी खलबलिनु ) । घोडाबाट लडेर धनवीरको मगज खलबलिएको बल्ल बल्ल निको भयो ।

**मगज खानु**— =टाउको खानु ( हेर ) ।

**मगज** *खाली*(**शून्य**) **हुनु**—= संझने, बुझ्ने, विचार गर्ने शक्ति हराउनु। यिनीहरूको कचकचले मेरो मगजै खाली भइसक्यो।

**मगज खियाउनु**—=मगज लडाउनु ( हेर )।

**मगज गर्माउनु**—=रिसाउनु, रिस उठ्नु। त्यसका निमित्त नन्द, तपाईंले यतिको मगज गर्माउने के जरूरत?—खड्गमान ( दर्पचूर्ण )। तिम्रो कुरा सुनेर मेरो मगज गर्मायो।

**मगज बिग्रनु**—=बहुलाउनु।

**मगजमा घुस्नु**—=बुझ्नु, खयाल चढनु। केवल तरवारको बलले चलाएको राज्य धेरै काल सम्म अडदैन भन्ने कुरा अलाउद्दीनको मगजमा घुसेन।—रुद्रराज (भारतवर्षको संक्षिप्त इतिहास, भाग २)।

**मगजमा चढ्नु**—=दिमागमा चढ्नु (हेर)।

**मगज लडाउनु**—=बुद्धिप्रयोग गर्नु।....रोगैको पत्ता लाउने काम डाक्टरबाट ठीक भएको रहेन छ भनी बुझी तेसपट्टी डाक्टरैले मगज लडाउनू पर्छ।—राममणि (सद्वार-सुसार-संभार)। फूलहरू र झारपातहरु ल्याई उद्यानसेवकको मगज लडाई सिंगारेका बगैंचाहरुमा पहिले त्यस्तै रङ्गका पुतलीहरु मात्र कहिले लुकामारी कहिले लघारालघार गरी खेलिरहेका देखिन्थे,...।—ग्रन्थकार ( कथा कुसुम )।

**मगज सड्कनु, हिंड्नु**—= हावा खुस्कनु। तिम्रो मगज पो सड्केछ कि?—बोधविक्रम ( दन्त्यकथा )।

**मगर्नी बूढी फतफताए जस्तो**—ज्यादा फतफताइरहँदा दृष्टान्त दिने बोली। हाम्री आमाको अगाडि अलिकति बिराउनु हुँदैन मगर्नी बूढीले फतफताए जस्तो फतफताइरहनुहुन्छ।

**मङ्सीरको मूसाको जोई जस्ती-हुने** खाने वेलामा जम्मा गरेकी स्वास्नीहरूलाई दृष्टान्त दिने ( मङ्सीरमा धान ओसार्न पाई हुने खाने अवस्था आउने हुनाले मूसाले धेरै स्वास्नी बटुल्छ भन्ने चलेकोबाट )।

**मचक्क टेक्नु**—=जीउको पूरा



भार दिएर टेक्नु। कठपाउ हुनेले मचक्क टेके पनि पैतलामुनिबाट घाम (=उज्यालो) छिर्छ।

**मजा (ज्जा) आउनु**—=रमाइलो हुनु। नजान्नेहरूसँग नकश खेलेर केही मज्जा आएन, कौडै खेलूँ।

**मजा(ज्जा) उडाउनु**—=आनन्द लुट्नु। यो सब मजा उडाउनाका लागि तपाईंलाई कतिसम्म खर्च भए यथेष्ट पुग्थ्यो होला?—प्रेमराज (ससुराली)।

**मजा (ज्जा) चखाउनु**—=अपराधको दण्ड दिनु, शत्रुताको बदला दिनु। आज पाठ बुझाइनस्, भरे तँलाइ यसको मज्जा चखाउँछु। लोग्ने भनेर सबै कुरा त्यागेर 'त्वं शरणं' भएर बसेको मजा चाख्नु लागिरहीछु।—रुद्रराज ( रूपमती )।

**मजा(ज्जा) लिनु**—=चैन काट्नु, सुखभोग गर्नु। सुखमा सब छन् मजा लिने! अब दुःखीकन साथ को दिने?—गोपाल पाँडे (सुनीतिविरह)।

*मट्टी* ( **माटो** ) **दिनु**—=गाड्नु (मुर्दालाइ)। लालसिंह दृदालाई मट्टी दिन हामी पनि गएका थियौं।

**मट्टी बिसाउनु**—=मर्नु। बिचरा छबी द्वारेदीले पनि अस्ति मट्टी बिसाइछन्।

**मट्टीले तान्नु**—=जहाँ मर्नु भन्ने कर्ममा लेखिएको छ त्यही ठाउँमा मर्ने संजोग पर्नु। हरिमाया उसको घर पुगेको दुइ महीनाभित्रैमा मरिहाली—उसको मट्टीले तानेको रहेछ।

**मढिया मार्नु**—=निस्फिक्रीसँग बस्नु। बिहाको कामले छोपिसक्यौ यसरी मढिया मारेर बस्यौ भने त भो लौ!

**मणि हराएको सर्प जस्तो**—= चिन्ताले वा टोलाएर मलिन मुख लाएकोमा दृष्टान्त दिने। म मणि हराएको सर्प जस्तो भएर रन्थनिंदै थियें।—लेखनाथ (लक्ष्मी-पूजा)।

**मण्डल मार्नु**—( १ )=ढौटरी मार्नु। (२)=चारैतर्फ घुम्नु। हेर त्यो चंगाले मण्डल मारेको!

**मतलब निकाल्नु**—( १ )= इरादा हासिल गर्नु। तिमीलाइ

जताबाट पनि आफ्नो मतलब निकाल्न पाए पुग्छ। (२) =अर्थ लाउनु । तिमीले यो श्लोकको के मतलब निकाल्यौ?

**मतलब पुऱ्याउनु, पूरा हुनु**— (१) = मतलब साध्य गर्नु, हुनु। मतलब पूरा गरिहाल्यौ, अब हामीलाई किन संझन्थ्यौ? (२) =अर्थपूर्ण गर्नु, हुनु। हरेक वाक्यमा मतलब पूरा हुनुपर्छ।

**मतलब साध्य गर्नु, हासिल गर्नु**— =काम फत्ते गर्नु, इरादा पूरा गर्नु। श्यामेले १६०० रुपियाँ हात पाऱ्यो. आफ्नो मतलब साध्य गऱ्यो ।—रुद्रराज (चप्पाकाजी)। आफ्नो मतलब साध्य गरेपछि हस्त बहादुर यहाँ किन बस्थ्यो !

**मतो बाँध्नु**— =केही कुरा गर्नालाई सल्लाह मिलाउनु । सबैले यही मतो बाँधी आधाझ्याल खोली पालैसङ्ग पथिकहरूमाथि फुलको वर्षा वर्षाउन थाले,....। —भवानी (यौवनको आँधी)।

**मधु बिमिरो लडाए जस्तो**— हृष्टपुष्ट दन्दनाउँदो केटाकेटीलाई दृष्टान्त दिने बोली ।

**मन आउनु**— =विचार वा बुद्धि आउनु। छोरीलाई माया गरौं भन्ने मन आयो, हात बढ्न शकेन।—रुद्रराज (रूपमती)। के मन आयो के मन आयो, बाबुसाहेबको खल्तीका दाम चोरें।

**मन उठ्नु**—(१)=जाँगर लाग्नु। आजकल तस्वीरको काम गर्न मनै उठ्तैन। (२) =इच्छा लाग्नु। मलाई ताश खेल्नु भनेपछि मनै उठ्तैन।

**मन उड्नु**— =मन भरङ्ग हुनु, बस्न मन नलाग्नु। सूर्य भगवान्को उपस्थान गरेर फर्किबक्से देखिन्, महाराज मन उडे झैं देखिइबक्सिन्छ ।—श्री केसर (विक्रमोर्वशी)।

**मनको कुरा**— =आफ्नो निजी विचार, आफ्नो गुह्य कुरा। गन्थन् यी मनका कुरा चरणमा बिन्ती गरौंला सब ॥—भानुभक्त (भानुभक्त स्मारक ग्रन्थ)। ....तपाजी सित कती कति आफना मनका कुरा गरौंला भन्ने थियो, अब के भनौं खोइ ?



—शिवप्रताप (दुर्गेशनन्दिनी)। मलाई आफ्नो मनको कुरा भन त!!—काशीबहादुर (उषा)।

**मनको [कुरा] मनैमा रहनु**— =धोको पूरा नहुनु। अघि मनको कुरा मनैमा रहँदा तीन प्रहरे रात पनी मेरो लेखा शय दोवर जस्तो भएर वित्तथ्यो ।—श्री केशर (विक्रमोर्वशी)। मनको कुरा मनमै रह्यो, म यहीँ रहें; उ उहीं रह्यो;....।—बालकृष्ण (मुटुको व्यथा)।

**मनको मैलो**—(१)=मनको कपट। धर्म गरेर के गर्छौ, तिम्रो मनको मैलो जस्ताको तस्तै छ। (२)=मनको शंका। तिम्री बहिनीको सबै कुरा सुनें, तर मेरो मनको मैलो गएन।

**मनको लड्डूको पुल बाँध्नु**— =सुखको दिवास्वप्न देख्नु। मानिस यसो गरौंला उसो गरौंला भनेर मनका लड्डूको पुल बाँध्दछ—कल्पना जगतमा नाच्न थाल्दछ ।—रुद्रराज (रूपमती)।

**मन खस्कनु, खिस्रिक पर्नु**— =हतोत्साह हुनु। पहिले त मान बहादुरले खूब हौसला बढाएर काम गरिरहेको थियो, एउटा कुराले उसको मन खस्क्यो। यो फरिया मलाई खूब राम्रो लागेको थियो, रङ जान्छ भनेको सुन्दा मेरो मन खिस्रिक पऱ्यो।

**मन खोल्नु**— =खुला दिल गर्नु, गाब नराख्नु। तिमीले मन खोलेर कुरा गरेको हुनाले मैले पनि आफ्नो यथार्थ कुरा भनें।

**मन चञ्चल हुनु**—(१)=मन छटपटाउनु, तुलबुलाउनु। मन झन् पकाएको पानी जस्तै चञ्चल भइरहेछ, त्यसको वाष्प श्वासमा आउँछ ।—बालकृष्ण (प्रल्हाद)। (२)=मन स्थिर नहुनु, अध्यवसाय नहुनु। एउटा किताप नसिध्याईकन अर्को किताप किन शुरू गर्यौ ? —तिम्रो मन त साह्रै चञ्चल रहेछ। तिम्रो मन त साह्रै चञ्चल रहेछ—हिजो रोजेको फरिया आज दमनासँग साटिसकिछौ।

**मनचिन्ते झोली**— =जे चितायो उही पाउने ठाउँ वा जे माग्यो

उही दिने व्यक्ति। तिम्रो दराज त **मनचिन्ते** झोली छ, जे खोज्यो उही पाइन्छ। हजूरको बुवा **मनचिन्ते** झोली होइबक्सिन्छ, हजूरलाई केही कुराको खाँचो हुँदैन।

**मन चोर्नु**—(१)=थाहा पाएकै जस्तो गरी कुरा बनाएर सोधी शंका परेको मानिसलाई साबित वा कायल पार्ने कोशिश गर्नु, अर्काको मनको आशय पत्ता लगाउन खोज्नु ('मन हेर्नु' पनि हेर)। आमा चाहिंले सिकाएर पठाएको होला भनेर दुइ जनाले कुरा गरे, **मन चोरेर** सोधे, केटाकेटीको खुकुलो गाँठो फुस्कि हाल्यो, हो रहेछ। —बालकृष्ण (कथा कुसुम)। अर्काको **मन चोर्न**, अर्काको मनको भाव बुझ्न त्यसको अनुकूल चल्न गाह्रै पर्दछ।—रुद्रराज (चप्पाकाजी)। आमै! मैले त तपाईको कोट छोएकै छैन, उसै **मन चोरेर** सोध्नुभएको। (२) =मन हर्नु। महारानीले बक्सेको भनेर यो मेरो जिउमा हातहालेको भए, पहिले कसको मञ्जुरीले तिमीले मेरो **मन चोरेको** त हैँ ?-श्री केसर (विक्रमोर्वशी)।

**मन छटपटाउनु**—=तुलबुलिनु। जर्साहेबकहाँ नाच लाग्छ भनेको सुनेदेखि मेरो **मन छटपटाइ**रहेछ।

**मन जल्नु**—=मन पोल्नु। चिन्ताले **मन जलेकी** सङ्गातिको दर्शनको लालचा गर्ने हंसी...हिंडिरहिछ।—श्री केसर (विक्रमोर्वशी)।

**मन जानु**—(१)=ध्यान वा विचार आकर्षित हुनु। अमलेख हुन पाउने भनी अघि भनेको ऐनबाट फाइदा उठाउनाका तिर तिनीहरूको **मन जाँदैन**....। -श्री ३ चन्द्र (अमलेख-भाषण)। रामलाई अब राज्य द्यूँ भनि उसै **मन् यस्** लहड्मा **गयो** ॥—भानुभक्त (रामायण)। खानपट्टि **मन गइरहेछ**, मैले भनेको कुरा किन सुन्थ्यो! (२)= लहसिनु।....उर्वशीमा **मन गए** पनी महारानीको भाउ जस्ताको तस्तै छ।—श्री केसर (विक्रमोर्वशी)।

**मन ठेगानमा नहुनु**—=चित्त ठेगानमा नहुनु (हेर)।....तै पनी मेरो त **मनै ठेगानमा नहुँदा** धर्मराइरहेछ।-श्री केसर (विक्रमोर्वशी)।

**मन डुलाउनु, घुमाउनु**—= यसो गरूँ कि उसो गरूँ भनी दोमन गर्नु, मनको अठोट वा पसन्द चाँडचाँडै बद्ल्नु। अधर-रस भरीलो होस्त के हामिलाइ। अरु असल मिठाई खानु के **मन् डुलाई** ॥-मोतीराम (मृगनयनी मनोहर बाक्य)। तिमी धेरै **मन डुलाउँछौ**, तिमीले रोजेको खाष्टो राम्रै त छ नि!

**मन ढुक्क हुनु, गर्नु**—=निर्धक्क हुनु, चित्त शान्त हुनु। बल्ल भान्छे बाहुनको चिठी आएपछि पो **मन ढुक्क भयो**। तँलाई त्यसको के धन्दा; **मन ढुक्क गरेर** बस, म त्यसै मर्दिन।—बोधविक्रम (दन्त्यकथा)।

**मन तोडिनु**—=चित्त तोडिनु (हेर)।

**मन थाम्नु**—=इच्छा लागेको कुरा नगर्नु, मनको प्रवृत्ति दमन गर्नु। हजूरैले **मन थाम्न** नसकी विवाह नहुँदै हरण गरिबक्सियो।—श्री अर्जुन (स्वप्नवासवदत्ता)। ताहीं नाच जब हेर्न गो वरिपरी श्री देवकन्याहरू। एकू चाहीं पनि एक छन् तहिं भन्या **मन् थाम्न** गाह्रो वरू ॥—राजीवलोचन (केदारकल्प)। इनको यो करुण क्रन्दन सुन्दा पत्थर रुन्छ, वज्रको पनि छाती धर्कन्छ, म त मानिस ठहरें, म कसरी **मन थाम्न** शक्तछु ?—लेखनाथ (लक्ष्मीपूजा)। आखीर तीं युवकलेनै **मन थाम्न** शकेनन् र आफुसङ अँध्यारामा कुरा गर्ने स्वास्नी मानिस पट्टि फर्केर भन्न लागे....।—शिवप्रताप (दुर्गेशनन्दिनी)। यस्तो घरको दुर्दशा देखेर पनि **मन थामेर** बस्न सक्ने!—रुद्रराज (चप्पाकाजी)।

**मन दिनु**—(१)=लहसिएको देखाउनु (प्रायः आइमाईले लोग्नेमान्छेलाइ)। तिम्री बहिनीले **मन दिएपछि** रघुनाथ किन अघि नसरोस् ? (२)= भक्ति गर्नु। **मन दी** हरिमा हरि ली मनमा। तजि मोह र संग पनी भवमा ॥—धरणीधर

(नैवेद्य) । (३) = ध्यान दिनु । ती आफ्ना चारैतिरका सुन्दरता-माथि पनि बिलकुलै **मन** दिंदैन थिइन् ।—खड्गमान ( ग्रीस र रोमको दन्त्यकथासंग्रह ) ।

**मन दुख्नु, दुखाउनु**—= चित्त दुख्नु, दुखाउनु ( हेर ) । मेरो कुराले तिम्रो **मन** त—अवश्य दुखनेछ, तर म लाचार छु ।—प्रेमराज ( ससुराली ) । त्यस्तरी सुखी भएर बस्न पाएको घर छोड्न ल्याटोनाको **मन** अवश्य दुख्यो ।—""एउटा जुत्ता खोलामा खसिसकेको थाहा पाएर अलि **मन** दुखाए ।—खड्गमान ( ग्रीस र रोमको दन्त्यकथासंग्रह ) ।

**मन पग्लनु, पगाल्नु**—= दया उठ्नु, (को) दिलमा करुणारस पैदा गर्नु । तिनको यो आफ्नो करुण कहानीले कसैको **मन** पग्लेन ।—बालखहरूको त्यस्तो टिठलाग्दो अवस्थाले पनि ती निर्दयी मानिसहरूको **मन** पगाल्न सकेन—खड्गमान ( ग्रीस र रोमको दन्त्यकथा-संग्रह ) ।

**मन पर्नु**—= निको लाग्नु (२), प्रिय लाग्नु, ( यो वाक्यांशसित कर्ता प्रथमा विभक्तिमा प्रयोग हुँदैन, जहिले पनि कर्म प्रथमा कर्ता द्वितिया विभक्तिमा प्रयोग हुन्छ, जस्तोः—मलाइ यो कलम मन पर्दैन; 'म यो कलम मन पर्दिनँ' हुँदैन । स्कूलमा अंग्रेजी I like को माने पढाउँदा 'म मन पराउँछु' भन्ने गरेको छ तापनि यो एकदम अशुद्ध हो) । सँगो ! **मन पर्‍यो** त तिमीलाई,....।—श्री केसर(वि-क्रमोर्वशी) । तपाईलाइ ज्यादै **मन परेको** छ त ?—ग्रन्थकार ( कथा कुसुम ) ।

**मन पलाउनु**—= चिढिइसकेको मनमा दया जागृत हुँदै जानु ( 'मन पग्लनु' चाहिं साधा-रणमा प्रयोग हुन्छ, योचाहिं एक पटक भाँचिइसकेको मनलाई मात्र प्रयोग हुन्छ ) । अब त्यसमाथि मेरो **मन** कहिल्यै पलाउँदैन ।

**मन पल्टनु**—= मन फर्कनु ( हेर ) ।....त्यो असर्फीको टल-कले उसको **मन** पल्टाइः



हाल्यो ।—बोधविक्रम (दन्त्य-कथा) ।

**मन पुग्नु**—= मन जानु (१हेर) । न रोकि बक्सियोस्, मेरो **मन** जङ्गलमा पुग्यो, त्यहाँको एउटा अग्लो वृक्षमा अब बाँधियो;....। —बालकृष्ण ( ध्रुव ) ।

**मनपेट दिनु**—= आँत दिनु, भित्रको आनीबानी थाहा दिनु । त्यसैले **मन पेट दिएर** त आज यसरी अकाशमा चढेकी–जाओस् न स्वास्नीको काखमा लडिबडी खेलि रहोस् ।—रुद्रराज ( रूप-मती ) ।

**मन पोल्नु, पाक्नु**—= मन भुट-भुटिनु ।....पछिबाट पछुताई **मन पोले** पनी प्यारा उपरको पछितो देखाउन साह्रै शर्माउँछन्, ....।–श्री केसर (विक्रमोर्वशी) । यसैले मेरो **मन** ज्यादा **पाकी** रहेछ ।—लेखनाथ ( भर्तृहरि-निर्वेद ) ।

**मन फर्कनु, फिर्नु**—( १ ) = खायस हुनु, मन पर्न वा माया लाग्न थाल्नु । तेस्का बुद्धि फिरेर धर्मतिर **मन् फर्कन्छ** कस्तै नहोस् ॥—मोतीराम ( प्रल्हाद भक्ति कथा ) । त्यसले हजुरको **मन** पनि अवश्य **फर्काउनेछ** । —प्रेमराज ( ससुराली ) । एक ताक मलाई धन्यूँको साग हेर्नै मन लाग्दैनथ्यो, आजकल **मन फर्क्यो** । आजकल त सान्चाको जेठीपट्टि **मन फर्कछ** । (२) = राय वा मनको प्रवृत्ति बदलिनु । राजर्षि स्वास्नी पियारो मान्ने रहेछन् **मन फर्काउँन** त शक्तिनँ ।—श्री केसर ( विक्र-मोर्वशी ) ।

**मन फस्नु**—= प्रेमासक्त हुनु । अबिरीसित नारायण प्रसादको **मन फसे** जस्तो छ ।

**मन फाट्नु**—= चित्त फाट्नु (हेर) । यो चलनमा सबै भन्दा घिनलाग्दो सुन्दैपनी साह्रै **मन फाट्ने** कुरा यही हो । —श्री ३ चन्द्र (अमलेख-भाषण) ।

**मन फेर्नु**—= विचार बद्लनु । वृद्ध राजाले तिनको **मन फेर्न** कति कोशिश गरे, तर केही लागेन ।—खड्गमान ( ग्रीस र रोमको दन्त्यकथासंग्रह )

**मन बढ्नु, बढाउनु**—= हौसला वा आग्रह बढ्नु, बढाउनु ।

मन बढाएर काम गरेदेखि एक न एक दिन मालिकबाट विवेक रहन्यैछ। खराब कामपट्टि मन बढ्न दिनु हुँदैन।

**मन बलियो गर्नु, हुनु, मन बाँध्नु**—(१)=मनले जित्नु। यसरी तिघ्रा कमाएर हुँदैन, मन बलियो गर्‍यौ भने अवश्य तिमी यस काममा सफल हुनेछौ। (२)=मनको प्रवृत्ति रोक्नु। ....मन बाँधेर मलाई बिदा-देऊ।—श्री केसर (विक्रमोर्वशी)। किन यो मन बाँधी आज भइ वक्सिन्छ ममाथी पर॥—लेखनाथ (भर्तृहरिनिर्वेद)। यसैले जबर-दस्ती संग मन बाँधेर बसिन्। —रुद्रराज (रूपमती)।

**मन बाँध्नु**—=मन बलियो वा कडा गर्नु (माथि हेर)।

**मन बिगार्नु**—(१)=मन उडा-उनु। यसरी मन नबिगार, अलि दिनमा त छोरोसँग भेट भइहाल्छ नि। (२)=(बोक्सीले) मन तरङ्गी पार्नु। गौरी द्वारेले मेरी छोरीको मन बिगारिदिइछ, रोइ मात्तै रहन्छे। आजकाल ज्वाइँ बाजेको मन पनि विग्रेको जस्तो छ, एउटा निहुँ झिकेर झारफूक पनि गराउनु पर्‍यो।—प्रेमराज (ससुराली)।

**मन बुझाउनु**—=चित्त बुझाउनु (हेर)।....दुःखि आशकलाई यस्तै मन बुझाउने कुराले जिनतिन शास अड्याई रहन्छन् भन्ने कुरा....तिमीले जानेकैछौ नि।—श्री केसर (विक्रमोर्वशी)। जानदा जानदै पनी मन बुझ्दैन भने के गरनू भन्नु हुन्छ ? —लेखनाथ (भर्तृहरिनिर्वेद)।

**मन भरङ्ग हुनु**—=मन विरक्त हुनु, सबै कुराबाट मन हट्नु। ....त्यसको मनमा अनेक तरहको कुरा बराबर खेल्न थाल्दो हो, मन भरङ्ग हुँदो हो,...।—श्री ३ चन्द्र (अमलेख-भाषण)। ओहो ! यो के गरिस् तैँले, मनै मेरो भरङ्ग भो !—बालकृष्ण (अन्धवेग)। भाई ! भयो मन भरंग, रहेन ह्याऊ। राखूँ गईकन तहाँ कसरी म पाऊ ? ॥ -लेखनाथ (सत्यकलिसम्वाद)।

**मन भाँचनु, भाँचिनु**—(१)= मन तोड्नु, तोडिनु।



अरूको ता के कुरा खुद आफ्नै भानीज जङ्गबहादूरको पनि यिनी माथवरसिंहसित पटक्कै मन भाँचिएको थियो।—अम्बिका-प्रसाद (नेपालको इतिहास)। (२)=(अरूको) मनमा जे परोस् वास्ता नराख्नु। अर्काको मन भाँची आफ्नो मन राखी के काम गरेको ?

**मन भाँडिनु**—=मन भरङ्ग हुनु (हेर)।

**मन भुटभुटिनु**—=चिन्तित हुनु, तुलबुलाउनु। जाँच नजीक आएको हुनाले मेरो मन भुट-भुटिइरहेछ।

**मन मन**—(१)=मनभित्र। मन मन हर्के, डोली चढी लर्के (उखान)। (२)=पाठा पाठीलाइ डाक्ने बोली।

**मन मर्नु, मार्नु**—(१)=हतो-त्साह हुनु। मैले भनेको कुरा कसैले खाएनन्, उसैले मेरो मन मर्‍यो। (२)=अघाउनु (सबै अर्थमा)। जुन दिन देखि शाशूको ,दल उनको दुर्वा-च्यले दुखेको थियो उनी संग पटक्कै मन मरिसकेको थियो। —रुद्रराज (रूपमती)। ज्वाइँ बिचरो त्यसै मन मारेर ब-स्तथे।—खड्गमान (काशीनाथ)। (३)=निच मार्नु। गर्छस् अझ सैय्या संग प्रीती, नउठि उसै मन मारी। जानुछ दूर कसो-गरि पुग्लास्, ले अब चदर उतारी॥—शम्भुप्रसाद (शम्भु भजनमाला)। (४)=अमन हुनु। अचेल त रायोको सागमा मन मर्‍यो, खानै मन लाग्दैन।

**मनमा आउनु मुखमा नआउनु**—=पेटमा आउनु....इत्यादि हेर।

**मनमा कपट हुनु, राख्नु**—=कपटी हुनु।

**मनमा कुरा लाग्नु**—=(पीर पर्दा) मनमा तर्क वितर्क उठ्नु। मनमा कुरा लागे पछि मान्छे सिट्ठी हुन त बेर लाउदैन भने उनको मुख निन्या-उरो भयो भन्नामा के आश्चर्य ? —रुद्रराज (रूपमती)।

**मनमा क्लेश लिनु, हुनु**—=मनमा कपट वा रिस लिनु, हुनु (यहाँ 'क्लेश' भाषाको मामूली शब्द भएर प्रयोग हुन्छ)।

अतः यस विषयमा तपाइँबाट कति पनि क्लेश **मनमा** लिई बक्सनु पर्दैन ।–भवानी (यौवनको आँधी ) ।

**मनमा गाभ राख्नु**— =कुनै गोप्य कुरा नखोल्नु । मलाइ थाहा छ तिमीले **मनमा गाभ** राखेका छौ ।

**मनमा चढ्नु**— =दिमागमा चढ्नु ( १ हेर ) ।

**मनमा चिसो पस्नु**— =(नराम्रा कुराको ) शंका उठ्नु । त्यहाँ बसेका स्वास्नी मानिसहरूको **मनमा चिसो पस्यो** ।—रुद्र-राज ( रूपमती ) ।

**मनमा जौ** *तील* ( *तील* जौ ) **पाक्नु**— =मन भुटभुटिनु । अहिले मेरो **मनमा** खाली पौने दुई शयेको वखले नै तिल **जौ पकाएकोछ** ।—लेखनाथ ( लक्ष्मी-पूजा ) । चन्द्रशेखरको **मनमा जौ तिल पाक्यो** र तिनिलाई यो असल लक्षण होइन भन्ने थाहा थियो । *—गम्भीर ध्वज (चन्द्रशेखर) ।*

**मनमा पाप उठ्नु**—( १ )= अपकार वा कुनै खराब कुरा गऱ्यो भन्ने शंका गर्नु । मैले चोऱ्यो भन्ने तिम्रो **मनमा पाप** उठेछ र पो हिजो त्यसो भनेका रहेछौ । (२)=काम चेष्टा गर्नु वा खराब कुरा गर्ने विचार उठ्नु । त्यस्ती परम सुन्दरी युवतिलाई देखेर पसलेको **मनमा पाप उठ्यो** ।—बोधविक्रम (दन्त्यकथा) ।

**मनमा बिझ्नु**— =चित्त दुख्ने वा चिढिने गरी मनमा असर पर्नु । तिमीले ठट्टा गरेको त उसको **मनमा** बिझेछ ।

**मनमा भिज्नु**— =राम्रोसँग बु-झ्नु । यो माष्टरले लडकाहरूलाई **मनमा** भिज्ने गरी हिसाब पढाउँछ ।

**मनमा राख्नु**—( १ )=गोप्य राख्नु । यो कुरा **मनमा राखे**, कसैलाई नभने । ( २ )= संझिराख्नु । भक्तिभाव **मनमा राखि**, राम नाम गाउँला ॥— शम्भुप्रसाद (शम्भु भजनमाला)।

**मनमा लिनु**—( १ )=विचार गर्नु । *तिन्मा मेरो तेरो भन्न्या* ब्यबहार पनिहुदैन, केहि चिज-लाइ यो मेरै हो भनि **मनमा**



लिदैनन्,....।—जयपृथ्वी बहा-दुर ( तत्त्वप्रशंसा ) । तपाइँको घरमा छउन् ज्याल केकेन सोधौंला भन्ने **मनमा लिएर** आउँछु, वहाँको मुख....देख्ना-साथ मेरा मनका शंका आफै—आफ विलाउन लाग्द-छन् ।—प्रेमराज ( ससुराली ) । (२)=संझिराख्नु, मनमा धारण गर्नु । हरएकले आफूसमा बन्धु-भावको समझ **मनमा लिई** परस्पर सहायता गर्ने गर्नु पर्दछ । —श्री ३ जुद्ध (भुकम्प-भाषण)। ....यस्तो विचार **मनमा लिएर** अध्यात्म रामायणको पद्यानुवाद प्रश्नोत्तर पञ्चाशिका प्रभृति ग्रन्थको रचना गरे ।—कुलचन्द्र (भानुभक्त स्मारक ग्रन्थ ) ।

**मनमा ल्याउनु**— =चिताउनु । तिमीले यस्तो कुरा **मनमा ल्याउनै** हुन्न ।

**मन मिल्नु**—( १ )=मेल हुनु । जहाँ **मन मिलेन** उहाँ जस्तै राम्रो भए तापनि मन पर्दैन । —रुद्रराज ( चप्पाकाजी ) । ( २ )=एउटै राय हुनु । हाम्रो **मन मिलेछ**, मलाई पनि त्यही किताप मन पऱ्यो ।

**मन मैलो हुनु, गर्नु**— =कपटी हुनु ।

**मन मोडिनु**— =मन हट्नु । अब जुवाबाट मेरो **मन मोडि-इसक्यो** ।

**मन रहनु, राख्नु**— =चित्त बुझ्नु, बुझाउनु । आफ्नो मूर्ख-ताले त्यस्ता धीर, वीर, गुणी राजाको प्राण गएको संझदा उनको **मन के रहन्थ्यो**....।— योगीको **मन राख्ना** निमित्त मन्त्राले दुइ चार सर्को के ताने-थे उनको टाउको घुम्नथाल्यो; ....।—बोधविक्रम(दन्त्यकथा)।

**मन रुनु**— =साह्रै मन दुख्नु । दुर्घटनामा अकालमृत्यु भएका प्यारा ती प्रजाहरूलाई संझदा **मन** झन् साह्रै **रुन्छ** ।—श्री ३ जुद्ध ( भूकम्प-भाषण ) । कस्ता भये हुन ? कठै ! जड काव्दिामा । रोईरहेछ **मन** त्यो सब संझदामा ॥—लेखनाथ (सत्यकलिसम्वाद) । त्यो कुरा संझदा मेरो **मन** असाध्य **रुन्छ** ।—ऐजन (लक्ष्मी-पूजा)। तडपि तडपि **मन रून्छ** घडी

घडी। किन छर्नु नसंझि नर्जांचि जहर ॥—शम्भुप्रसाद ( शम्भु भजनमाला )। हवाले लगे मनको चीठी, मन रुने थियेन ! तिमी छौ पर, म रुन्छु घर विन्ती नै पुगेन ?—लक्ष्मीप्रसाद ( मुना-मदन )। उकुस मुकुस भारी भै बडो आतिएर। घरि घरि मन मेरो रुन्छ साह्रै दुखेर। —धरणीधर ( नैवेद्य )। सर्कारका पुरायले, विगार् किन हुन्थ्यो। के के हुन्छ भनेर मन सबै रुन्थ्यो॥—शिखरनाथ ( गंगामाहात्म्यको सवाई )। म आफ्नी दिदीलाई भन्दा तपाईलाई बढ्ता माया गर्दछु, त्यसैले मेरो मन वारंवार रुन्छ। —खड्गमान ( दर्पचूर्ण )।

**मन रोक्नु**— =मन थाम्नु (हेर)। जस्ले यो मन रोक्दैन, तेस्को दुर्लभ योग छ;....।—कोमलनाथ ( कोमलगीता )। कति गर्दा पनि मासुमा मन रोक्न सकिनँ।

**मन लाग्नु, लाउनु**—( १ )= दिल जानु, दिनु। राम्रो बिचार-गरि सत् बस्तुमा मन् नलागेको हुनाले, कुकर्म छोड्न पनि शक्तैनन्।—जयपृथ्वी बहादुर ( तत्त्वप्रशंसा )। मन लाएर एक भारी घाँस ल्याई भने भैंसी डम्म अघाउँथ्यो।—गुरुप्रसाद ( कथा कुसुम )। ( २ )= इच्छा लाग्नु। कुमारको दर्शन-गर्न मन त सारै लागेको थियो।—शिवप्रताप ( दुर्गेशनन्दिनी )।....उनी संग भेटघाट गरेर दुइ चार बात गर्न सबलाई मन लाग्थ्यो।—रुद्रराज ( चप्पाकाजी )। केही काम पनी गर्न मन लाग्यो भने नर !। पहिले बुझ अत्यन्त उस्का हाल बराबर॥—बैजनाथ ( उपदेश-शहस्री )। वीणा, यौटा कुरा मलाई भन्न मन लागेको छ।—रूपनारायण ( भ्रमर )। मैले सोधेको कुराको जवाफ देऊ; अनि जता मन लाग्छ, जाऊ।—प्रेमराज ( ससुराली )। एउटा कुरा तपाईं संग सोध्न मन लागेको वर्षौं भयो....।—ग्रन्थकार(कथा कुसुम )।

**मन लिनु**—(१)=गुह्य कुरा हासिल गर्नु। मेरो मन लियो



लियो अहिले मलाई चटक्क छाडेर मुनियांसंग मिल्न गयो, कस्तो बेईमान ! (२)=मन हर्नु। पाऱ्या नी सपना बिषे मन लिन्या यै हो नि यै हो भनिन्॥ —मोतीराम (उखा चरित्र)।

**मनले खानु, खाम्नु**— =मनले ठमाउनु, पत्त्याउनु।····भिन्न रस नभए पछि प्याराको शयकडौं लोलोपोतोको परिपाठ पनी स्वाभीमानिसको मनले खाँदैन। —श्री केसर (विक्रमोर्वशी)।

**मनले देख्नु**— =विचार गर्दा ठान्नु।····तिनिहरूलाई निर्मूल पार्न शकियेला भन्ने मेरा मनले देख्तैन।—शिवप्रताप (दुर्गेशनन्दिनी)।

**मनले नमान्नु**— =जति विचार गरे पनि चित्त नबुझ्नु। शङ्का बढ्यो बहुत, छाडन ठीक छैन,। लागूँ चुपै अब भने मन मानदैन॥—लेखनाथ (सत्यकलिसम्वाद)।····एता वाट जान मनले मानेनर अझ सम्म जीही अड़ियेको छु।—शिवप्रताप ( दुर्गेशनन्दिनी )। आखिर जस्तो सुकै यसका बाटा बाट दुःख सहनु परे पनी ठहरियो छोरो—कहाँ मनले मान्छ र ? —रुद्रराज (रूपमती)।

**मन सम्हाल्नु**— =धैर्य्य गर्नु। यसै लाई हेरेर मन सम्हालिबक्सेला।—श्री अर्जुन (स्वप्रवासवदत्ता)।

**मन हच्कनु**— =इच्छा हट्नु। गौंडामा जान म खूब तम्सिएको थिएँ, दीप बहादुरको कुरा सुनेदेखि मेरो मन हच्कयो।

**मन हट्नु**— =लहसिन, पेसिन, वा रुचाउन छोड्नु। बिस्नुप्रसादसित उसको मन हटिसक्यो, अहिले हो ?

**मन हुनु**— =इच्छा हुनु। मलाइ त पढुन्जेल बिहा गर्ने मनै कत्ति थिएन,....।—बालकृष्ण(अन्धवेग)। प्रेम गर्ने मन् भए, प्रेम गर्नुहोस् शङ्कर्महाँ।—शम्भुप्रसाद(शम्भु भजनमाला)। यस्तो मन् हुन गो र डाकि गुरुथ्यैं यस्तो हुकुम् भो पनी। —भानुभक्त (रामायण)।

**मन हेर्नु**— =राय वा विचार जाँच्नु ( यो वाक्यांश र 'मन चोर्नु' कहिलेकहीं एउटै अर्थमा

प्रयोग भएको सुनिन्छ तापनि प्रायः —केही कुरा पत्ता लाउनालाई हामी मन चोछौं, खालि के भन्दो रहेछ भनी बुझ्नालाई हामी मन हेछौं )। नानीको मन हेरेको पो त, नानीलाई छाडेर म कहिले जान्थें ?

**मनैले गर्नु**—( १ )=मनसीपले गर्नु, आफ्नै बुद्धिले गर्नु। उसो भने मङ्लेले सिकाएको होइन, तिमीले आफ्नो **मनैले** गरेको हो त ? (२)=कल्पनामा मात्र गर्नु। तिमी त सबै कुरा **मनैले** मात्र गर्छौ, पहिला कुरा के-बाट खर्च पुऱ्याउँछौ ?

**मनैले नमान्नु**—=आखिरमा विवेकलाई इच्छाले जित्नु। हुन त अझ ताकत भरिएको छैन, तर आजको दिनमा प्रभुको दर्शन नगरी घर बस्न **मनैले मानेन**।

**मनोमान खुशीराजीसँग**—=अरूले करकाप नगरी आफ्नै खुशले ( तमसूक, कबूलियत, इत्यादिमा लेखिने बोली )।

**मन्तर जप्नु**—=(मालाको सहाराले वा औंलाका रेखा गनेर) नियत संख्या पुऱ्याउनालाई मनमनमा मन्त्र दोहोऱ्याउनु। आफ्नो **मन्तर नजपी** भात खान हुँदैन।

**मन्तर सुनाउने खेल**—=आफ्ना आफ्ना तर्फका मानिसहरूलाई कानमा सुटुक्क भनी नाउँ राख्ने र दुइ थरीले जित हार गर्ने खेल।

**मरी जानु न गरी खानु**—=यसो पनि नसक्नु उसो पनि नसक्नु, मरूँ भने काल नआउने, काम गरूँ भने नसकिने। बिचरालाई **मरी जानु न गरी खानु** भइरहेछ, बेथाले कहिल्यै पनि नछो ने भयो।

**मरी मरी हाँस्नु**—=ज्यादै हाँस्नु। ऊँट हराएको सुन्दा मालिकचाहिँले 'म चढेको भए म पनि हराउने रहेंछु' भनेको कथा पढ्दा म **मरी मरी** हाँसें।

**मरी मेट्नु**—=ज्यादै खुरुन्धार लाग्नु, ज्यादै चाह गर्नु।.... उनका सौन्दर्यको अङ्कुरमा घातकी आँखा घुमाएर **मरी मेट्ने** भ्रमरजाति !—लेखनाथ ( लक्ष्मी-पूजा )। तर एक दिन किन लैलाको निमित्त यसरी **मरिमेट्छस्** भनेर एउटाले सोद्धा....मजनूको आँखाले हेर भनेथ्यो रे उस्तै पो हो कि ? —रुद्रराज ( प्रायश्चित्त )।



**मरी लानु के छ**—=मर्दा साथमा केही जाँदैन ( खर्च गर्न वा दिनामा मन ढल्काउने बोली )। आज ता एउटा रुपियाँको मासु नखाई भएन, **मरी लानु के छ** ?

**मरेको बाघको जुङा तान्ने वा उखेल्ने**—शक्तिवान् पुरुष सारसौंदो हुँदा दुम लुकाउने, अशक्त हुँदा अधि सरी फूर्ति देखाउने नामर्दलाई भन्ने बोली। मेरो हात मर्केको वेलामा पंजा खेल्छु भन्न लाज लागेन ? **मरेको बाघको जुङा तान्न** जो पनि सक्छ।

**मरेको बिरालो काखी च्यापेर ठिमी जाने बाटो कता हो भनेर सोध्ला जस्तो**—ज्यादै मरनच्याँसे मान्छेलाई दृष्टान्त दिने बोली। छि, तिमीले रोजेको मान्छे त **मरेको बिरालो काखी च्यापेर 'ठिमी जाने बाटो कता हो ?' भनेर सोधूला जस्तो छ**।—ग्रन्थकार (कथा कुसुम)।

**मरेको भोलिपल्ट**—( कुनै मानिसबाट ) कहिल्यै नहुने कुरालाई मिति तोक्ता भन्ने बोली। सावित्रीले त्यो सुनको घडी दिनु त **मरेको भोलिपल्ट**।

**मरेको भोलिपल्ट दुइ दिन [ हुन्छ ]**—( १ ) भनें मान्छे चाँडै नै टाढा हुन्छ भन्ने कुरालाइ जताउँछ। ( २ ) मौकामा गरेको गर्‍यै हुन्छ भन्ने कुरालाई जोड दिंदा। पैसा साँचेर मात्र के गर्छौ, मजासित खानु लाउनु-पर्छ। **मरेको भोलिपल्ट दुइ दिन** भइहाल्छ, यो जिन्दगी कति रहने हो र ?

**मरेको मान्छे बाँच्छ ( बिउँझन्छ) भने पनि**—अभावलाइ जोड दिंदा प्रयोग हुने। **मरेको मान्छे बाँच्छ भने पनि** मसंग एक पैसा निस्कंदैन।

**मरेको(का)लाइ मार्नु**—=दुःखले आकुल भएकालाइ दुःख दिनु। आगाको ज्वाला कताको होला ? डढ्यौलो उठ्योकि ? **मरेकालाइ** झन् **मार्न** भनी, डढ्यौलो उठ्यो

कि ?—लक्ष्मीप्रसाद (मुना-मदन) ।

**मरे दाखील**—जिउँदै मरे दाखील (मा हेर)।

**मर्दा पर्दा काम लाग्ने, चाहिने**—मरेको बखतमा र कामकाज पर्दा मदत दिने (नातेदार, बाहुनहरूको बारे)। दाइ भाइ गरीब भए भनेर हेला नगर, मर्दा पर्दा तिमीलाई यिनै काम लाग्छन् । मर्दा पर्दा चाहिने तपाईं बाहुनबाजेहरु, आँट आफ्नो सल्लाहा आर्काको भन्छन् के गरूँ त ख्वै ।—भीमनिधि (सहनशीला सुशीला)।

**मर्न नसकेको**—सराप्ता प्रयोग हुने । मर्न नशकेकी रामुकी आमा बुढी मरी हालोस् ।—लेखनाथ (लक्ष्मी-पूजा)।

**मर्नु न मार्नु**—आफू बिग्रनु कि अर्कालाई बिगार्नु जस्तो असजिलो पर्दा दृष्टान्त दिने । मलाई यस टुहुरीको के हत्ते आइलाग्यो ? मर्नु न मार्नु भइरहेछ ।

**मर्नू नमार्नू**—=बरु आफू पर्नू, अर्कालाई बचाउनू ।

**मर्ने काल आउनु**—कालको अर्थ समय पनि हुने हुनाले 'मर्ने' थपेको होला । म अभागिनीलाई मर्ने काल पनि आउँदैन ।

**मर्म पर्ने कुरा**—चित्त दुख्ने वा बिझ्ने वचन । मर्म पर्ने कुरा गरेर ठट्टा गर्दा झगडा पर्न जान्छ ।

**मलको मूला सप्रे जस्तो**—ज्यादै फस्टाएको र हलक बढेको मान्छेलाई दृष्टान्त दिने बोली । विचरा कालीको छोरो मलको मूला सप्रे जस्तो थियो, गएछ ।

**मलाई (म) मारेको पाप**—किरिया हाल्दा प्रयोग हुने । अँ यहाँलाई म मारेको पाप, बुद्ध साँचि भन् त साहेब मलाई तैंले के ठानेको थिइस् ?—खड्गमान (अँध्यारोमा उज्यालो)।

**मलामी जानु**—=मलामी बनेर मुर्दाको पछि पछि लागी पोल्ने वा गाड्ने ठाउँमा जानु । हिजो मलामी जानुपर्‍यो उसैले तपाईं-कहाँ हाजिर हुन पाइनँ ।

**मसक्क आँट्नु**—दृढ संकल्प गर्नु । यो मेरो लाज शरम छाडिसकेको मसक्क आँटेको काम हो ।—श्री केसर (विक्रमोर्वशी) । आज म मर्न मसक्क आँटेको छू ।



—गम्भीरध्वज (चन्द्रशेखर)।

**मसक्क मस्कनु**—(१)=बेसरी कसिनु । (२)=मस्त भएर मुस्कुराउनु ।·····कैले आफ्नो नितम्ब हेरेर आफै मसक्क मस्कन्छे ।—भीमनिधि (सहनशीला सुशीला)।

**मसान जगाउनु, उठाउनु**—=वीरसाधन वा अरू मन्त्रद्वारा मसाने पिशाच आदिको आवेश गराउनु (कसैमाथि अनिष्ट गर्नालाई)। मेरो करामत ? मैले कुन मशान उठायें ?—लेखनाथ (लक्ष्मी-पूजा)। तल्लो घरको बोक्सी बूढीले मेरी छोरीमाथि मसान उठाएर लाइदिइछ ।

**मसिनो कुरा (बोली)**—(१)=नम्र वचन, नरम बोली । मसिनो बोलीले जति काम साध्य हुन्छ त्यति डाँकोले खाएर हुँदैन । (२)=(माथिको अर्थलाई नराम्रोपट्टि लगी) लोलोपोतो, चेपारे कुरा । हाम्रा त खस्रा कुरा छन्, तिमी जस्तो मसिनो कुरा गर्न जान्दैनौं ।

**मसी फुल्नु**—=(लेख्ता वा छाप्ता) मसी कागतमा फिंजारिनु । पिटर स्कूफरले धातुको अक्षर ढालेर यो दोषलाई हटाए, छाप्ता खेरि मसी पनि बेहिसाब फुल्दथ्यो ।—जितेन्द्र (आधुनिक-आविष्कार)।

**मस्ती झार्नु**—=शेखी तोड्नु । दिलेले पो भँडारीको मस्ती झार्छ त ।

**मस्यौरे बादल**—=मस्यौरा पार्ने मात्र बिथोलिदिने हलका बादल । यो मस्यौरे बादल हो पानी त परोइन कि !

**मह काढ्नु**—=महको चाका झिक्नु । जसले मह काढ्छ उसले हात चाट्छ (उखान)। जूवाको भोलीपल्ट घारधनीले मह काढेर खान्छ ।—लेखनाथ (लक्ष्मी-पूजा)।

**मह पार्नु**—=(मौरीले) चाकामा मह जम्मा गर्नु । ती सेता मौरी जम्बै त्यै घारमा बटुलिन्छन् र गुलियो मह पार्छन् ।—लेखनाथ (लक्ष्मी-पूजा)।

**महले छोपेको बिख**—=देख्ता भने असल भित्र भने ज्यादै खराबीले भरिएको कुरालाइ दृष्टान्त दिने बोली ।

**महाकालीदेखि मेचीसम्म**— =भरनेपाल (नेपालको पश्चिम र पूर्वको हद सीमा हुनाले)। **महाकाली देखी ली, मेचि सम्म धन्दा।** जगतले जान्दछन्, शिखर नाथ भन्दा ॥—शिखर-नाथ (गङ्गामाहात्म्यको सवाई)॥

**महाराजको दुहाई**— =महा-राजको पुकारा गर्दछु (गुहार गर्दा प्रयोग हुने)।

**महीना ठोक्नु**—महीना महीनामा रजस्वला हुन थाल्नु। सानी **महीना ठोक्ने** भइसकी बुद्धि भने तीन कौड़ीको छैन।

**महीनादिन**— = एक महीना (एकभन्दा बढ्ता महीनामा 'दिन' जोडिदैंन; त्यस्तै वर्षदिन, सातादिन, हफ्तादिन—दुइ वर्ष-दिन, चार हफ्तादिन, आदि हुँदै-न)। यो औषधीले **महीना दिनै**-मा मेरो रोग निको पारिदियो।

**मही पार्नु**— =(दहीमा) पानी हाली बेसरी घोलेर पानीसँग एक जीउ पार्नु।

**माउरी झुम्मिए जस्तो**—धेरै मान्छे एकै ठाउँमा एकत्रित हुँदा दृष्टान्त दिने बोली। फेरी यसरी मोज मज्जा गर्न न पाउने भए **माउरी झुम्मिएको जस्तो** झुम्मिन्थे ?—रुद्रराज(रूपमती)।

**माकुराको जालो जस्तो**— जटिल कपटप्रबन्धलाई दृष्टान्त-दिने बोली। माया त **जालो हो माकुराको**, झिंगाहरू बुद्धिमान् जति छन् ती त जेलिन्नन्।—बालकृष्ण (मुकुन्द इन्दिरा)।

**माकुराको बच्चा जस्तो**—आमा बाबुको अनिष्ट चाहने छोराछोरी-लाई भन्ने (माकुराका बच्चाहरूले माऊलाई खाने हुनाले)।

**माकुराले छेर्नु** —=माकुराले हाम्रो छालामा मसिनो बिमिरा उछ्रने विष झार्नु।

**माखी बसाल्नु**— =धातुको भाँ-डामा टीकाटीका दिएर बुट्टा भर्नु।

**माखे साङ्लो**—=(माकुराको जालो, उसैले) दुइतिरबाट बीचमा च्यापेर जकड्याउने काम। सबै जना मिलेर यिनलाई **माखे साङ्लामा पारेछन्**।

**माखो निचोर्नु**—झिङ्गाको बोसो झिक्नु (हेर)।

**माखो मर्नु**— =सबभन्दा सानो काम, जाबो काम। परेको वेलामा तिमीबाट **माखो मर्दैन**, के धाक लाउँछौ ?



**मागल गाउनु**—(१) =यो पनि छैन उ पनि छैन भनी हाहाकार मचाउनु (प्रायः माल हुँदाहुँदै पनि)। पिर्का पनि त्यागी पनि माथि बुइगलमा छ हेर्नु छैन, तैं उसै **मागल गाउँछस्**। (२) =विवाह आदि उत्सवमा मङ्गलको गीत गाउनु।

**मागी ल्याएको कोदालो जस्तो** —जतन नगरेर फालाफाल गर्दा प्रयोग हुने। त्यो कितापलाई **मागी ल्याएको कोदालो जस्तो** नगरन, आलमारीमा थन्काइदेऊ।

**मागेर ल्याएको मुख (थुतुनु) जस्तो**—चोथालो चलाउँदा वा तथानाम भनी गालि गर्दा भन्ने बोली। हाम्री नन्दको **मागेर ल्याएको मुख जस्तै** छ।

**माछा माछा भ्यागुता**—'माछा माछा' भनी चोर औंला ठड्याई हल्लाउने, अर्कोचाहिंले समात्न हात लम्काउँदा सो औंला दोब्र्याई 'भ्यागुता' भनी बूढी औंला समात्न दिने खेल। केही गरी अर्कोले माछा अर्थात् चोर औंला समातेको खण्डमा समातिनेले कैयन् जोडी कुरामा एक एक थोक रोज्नुपर्छ, जस्तो :— ढिकी कि जाँतो, सियो कि धागो, बच्छ्युँ कि अरिङ्गाल (यी जोडीमा जुन जुन रोजे पनि पकाउ खाने-ले दुख्ने सँजा पाउँछ, धेरै थोरै मात्र हो), ओकल कीरा (=भात) कि तातो जाउली (=गुहु), धारा पानी कि कुवा पानी (दुवै पिसाप), लपटा(=थप्पड) कि खपटा, थाङ्ने कि माग्ने।

**माछा मार्नु**— =लोट्नु, पछारिनु (केटाकेटी लड्दा गिज्याउने बोली)। नानी, आज त खूब **ठूलो माछा मार्‍यौ**।

**माछा र मासु, छोप लाएको सिन्की, लहरे दही, कनिके घिउ**—नेपाली स्वादेहरूका निमित्त उत्तम भोजन।

**माझी औंला**—औंला (मा हेर)।

**माटामा मिल्नु, मिलाउनु**— =फोसो हुनु, पार्नु। यिनले त आज बिहानको सारा मजा **माटोमा मिलाइदिए**।—

खड्गमान (अँध्यारोमा उज्यालो)।

**माटो खानु**—(१)=मर्नु (हेलाको बोली)। जैमाने मसंग जोरी खोज्थ्यो अस्ति भीरबाट लडेर **माटो खाएछ**। (२) 'च्यापुले माटो खानु' को छोटकरी रूप।

**माटो दिनु**—=मट्टी दिनु (हेर)।

**माटो पार्नु, हुनु**—=काम नलाग्ने रद्दी पार्नु, हुनु, खेर फाल्नु। राजवैद्य सर्वेश्वरानन्दको औषधी गरें, **माटै भयो**, जुजु वैद्यले औषधी गरे छुँदै छोएन, सनक बाबुको बोतलका बोतल औषधी धोकें।—रुद्रराज (प्रायश्चित्त)।

**माटो मर्नु**—=उब्जा नहुने हुनु।

**माटोमुनि जानु, घुस्नु**—(१)=मर्नु (च्याहानमा गाड्ने चलनबाट)। हाम्रा बाजे बज्यै त उहिले नै **माटोमनी घुस्सिसके**। (२) साधारण अर्थ।....रूखहरू....पात खसाल्दछन्, फूलहरू पनि **माटो मनि घुस्सन्छन्**।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)।

**माटो लाग्नु**—=हराउनु, सखाब हुनु। भएको अन्न **माटो लागि हाल्यो**, किंनू भने पनि पैसा छैन—कस्तो आपत् पर्‍यो होला!—श्री ब्रह्म (महा भूकम्प)। (साधारण अर्थमा पनि)।

**माणो घुम्नु**—=(दुलहा दुलहीले) बिहामा जग्गे घुम्नु। **माणो घुमेको** हेर्हेँला भनेको त अघिनै घुमिसकेछन्।

**मात चढनु**—=(१) तमक चढ्नु। छोटाको मिजास पनी कहिले असल हुन्छ? अबुतालीले **मात चढेको**।—रुद्रराज (रूपमती)। (२) (हात्तीको बारे) साधारण अर्थ।

**माथ गर्नु**—=बाजी माथ गर्नु (हेर)।....राम्री छु भनी फुर्केकी श्रीगौरीलाई **माथ गर्ने**,.... उर्वशी र चित्रलेखा दुइजनालाइ....कोही दानवले कैदीलाई झैं गृफतार गरेर लग्यो।—श्री केसर (विक्रमोर्वशी)। अमृत धारालाई, **माथ गर्छ** यस्ले। पढि लिंदा आनन्द, पारि दिन्छ जस्ले॥—शिखरनाथ (गंगामाहात्म्यको सवाई)। बरालनी बज्यैलाई पनी **माथ गर्ने** उनकी छोरी निक्लीन्।—रुद्रराज



(रूपमती)।

**माथिको देउता**—=आकाशदेवी (केटाकेटीको अगाडि नाउँ लिन नहुने हुनाले)।....**माथिको देवतालाई** पुजा सामा सारेर, गुभाज्यूको भुँडी भरेर मात्र हुने हो र!—रुद्रराज (चप्पाकाजी)।

**माथिको देउता लाग्नु**—अकासको रोग(मा हेर)। पक्का पनि यिनलाई **माथिको देउता लाग्यो**।—प्रेमराज(ससुराली)।

**माथिल्लो दाउ (पेच वा हात) पर्नु**—(१)=खटन गर्ने हुनु। अहिले उसको **माथिल्लो हात परेको** छ हामीले बोलेर साध्य छैन। माथिल्लो जसको हात माथिल्लो उसको कुरा।—बालकृष्ण (मुटुको व्यथा)। (२)=सर्दो पर्नु। यो खेलमा तिम्रो **माथिल्लो पेच पर्‍यो** मैले हार्ने भएँ। (३)=(चङ्गा लडाउँदा) माथितिरको धागोले तलको धागालाइ जेल्नु।

**मानमाथिको भुक्तमान**—=ज्यादै हैरानी(लाई भन्ने अलङ्कृत बोली, 'मान' मा श्लेष परेको छ)। **मान् माथी पनि भुक्तमान्** थपिदिया कैल्हैं नखोस्न्या गरी॥—भानुभक्त (भानुभक्तको जीवन चरित्र)।

**मान राख्नु**—=आदरभाउ गर्नु। आफ्ना घरमा आएका पाहुनाको **मान राख्नुपर्छ**।

**माने बुद्धि**—=खालि साँझ बेहान पेट भर्न पाए हुँदो हो भन्ने विचारमा मात्र लागिरहने मति। **माने बुद्धिले** ढाकेपछि मानिसले कताबाट इलम उद्योग गर्छ र?

**मान्छेको घर नहुनु**—=मानिसमा हुनुपर्ने गुणको नहुनु। यो **मान्छेको घरै** होइन, यस्ता मान्छेलाई काम अह्राएको कहिले हुन्थ्यो!

**मान्छेको भाँडो**—=लाजसरमको खयाल भएको मान्छे (अकरण अर्थमा मात्र प्रयोग हुन्छ)। बीरे **मान्छेको भाँडै** होइन, लाज घीन भनेको रत्ति छैन।

**मान्छे खाने कुरा**—=नबुझिने भाषा। **मान्छे खाने कुरा** नगर, पर्वते बोलीमा भने भइहाल्छ नि।

**मान्छे तोड्नु**—=कसैलाइ चि-

ल्याउनु । **मान्छे तोड्नु** हुँदैन, कहिले कस्तो कहिले कस्तो ।

**मान्छे दिनु**—(१) = कुरा सुनाउने मान्छेको नाउँ भन्नु । मैले तिम्रो किताप छोएको देख्ने को छ, त्यो मान्छे दिन सक्छौ ? (२) साधारण अर्थ । एउटा मान्छे दिए घर गएर त्यो किताप पठाइदिन्छु ।

**मान्छे नगन्नु**—(१) = नीच संझनु, टेर नलाउनु । अहिले त उनीलाई कोही पनी नचाहिने भएको छ—कसैलाई मान्छे नै गन्दिनन् ।—रुद्रराज (रूपमती) । (२) साधारण अर्थ । मान्छे नगनेर उसै भाग लाउँदा पुग्ने नपुग्ने अन्दाजै हुँदैन।

**मान्छे बन्नु** — = गुणी वा पुगीसरी आउने मान्छे हुनु । सानु काले बिग्रिसकेको थियो लौ, अहिले साहिला लप्टनसँग लागेर एउटा मान्छे बन्यो । मान्छे, मान्छे बन ! तिमी उहीं जानैपर्छ, यताबाट ऐले भागी गयौ भने संसारमा तिमीलाई भागीरहनुपर्दछ, कहीं ठाभन पाउन्नौ !—बालकृष्ण (अन्धवेग) ।

**मान्छे राख्नु**—(१) = इष्ट मित्र तुल्याउनु । मान्छे राख्न जाने बखतमा काम लाग्छ । (२) साधारण अर्थ । मोटर आयो कि भन्नू भनेर ढोकामा मान्छे राख ।

**मान्छे हुनु**—(१) = रोगबाट उत्री बाँच्नु । दिले काजी ज्यादै गलेर गइसके, मान्छे हुन त मुश्किलै छ । (२) = मान्छे बन्नु, लायक व्यक्ति हुनु । पछिसम्म ढोका छाडेनौ भने एउटा मान्छे भएर खान पाउलौ ।

**मान्छे हेर्नु**—(१) = मान्छेको मिजाज, बानी, इत्यादि विचार गर्नु । मान्छे हेरी कुरा, देउता हेरी पूजा (उखान) । मान्छे हेरी ? कन उनै बाँड्दथिन् ।—रुद्रराज (रूपमती) । (२) = मान्छे जाँच्नु । हरिले ल्याएको मान्छे तिमीले हेर्‍यौ ?

**मामाचेला फुपूचेला**— = दाज्यू बहिनी वा दिदी भाइका छोराछोरी (प्रायः बिहाबारीको प्रश्नमा)। अब त झन् मामा चेला फुफू चेलाहरू पनी एकै घरमा जम्मा



भएका थिए ।—रुद्रराज (रूपमती) । तिमीहरूको मामाचेला फुफूचेला चल्छ रे, हो ?

**माया गड्नु**— = खूब माया हुनु । हाम्रो कर्साबको ज्वाजी साव माथि किन त्यस्तो माया गढेको होला ।—भीमनिधि (सेहनशीला सुशीला) ।

**माया बस्नु**— = पीर्ति लाग्नु । तिमीमा माया बसाल्नेको प्यारो बोल्ने, मागेको कुरा नहार्ने, माया टुट्ला भन्ने डरले त्यस्ता कुरामा आँखै नलाउने त्यस्तो मेरो बिराम लेशभर के देख्छ्यौ ? —श्री केसर (विक्रमोर्वशी)।.... कालो मान्छे कसरी मन पर्नु, उस माथि कसरी माया बस्नु !—ग्रन्थकार (कथा कुसुम)। नबस्ता तिमीमाथि माया बसिहाल्यो अब मलाइ छाडेर किन जान्छौ ?

**माया बाँडिनु**— = माया गरिने धेरै जना हुनु । पहिले सेतीको पोइमाथि अगाध प्रेम थियो, अहिले छोराछोरी भएपछि माया बाँडियो ।

**मायामा काया फाल्नु**— = मायामै लीन भएर आफ्नो स्वार्थको कत्ति परवाह नगर्नु । आफ्नो जीउको पनि विचार राख, मायामा काया फाल्नु हुँदैन ।

**माया मार्नु**—(१) = माया गर्न छोड्नु, बिर्सनु (यस अर्थमा 'माया मर्नु = माया हराउनु, नलाग्नु' पनि प्रयोग हुन्छ) । माया न मार्नु होस् मेरो पनी माधव, माधव ।—बालकृष्ण (मुटुको व्यथा) । अब त राक्षसलाई कोहो वीर पुरुषले मारे भन्ने सुनेर हजुरको माया मार्न नसकी फर्केर आएँ ।—बुबामुमाको माया पनि अब त मरिसक्यो ।—बोधविक्रम (दन्त्यकथा)। (२) = छाडिदिनु, (दाम) बग्नु दिनु ।....त्यतिको दाम माया मार्न त भएन ।—रुद्रराज (चम्पाकाजी) । (३) = बाँच्छ भन्ने आशा छोड्नु ।....असाध्य भनी माया मारे पछि बेरामीलाइ वैद्यले झैं झट्टै सरकारलाई चाहांबाट छोडिदिइबक्सियो ।—श्री केसर (विक्रमोर्वशी) ।

**माया लाग्नु**— = प्रेम गर्नु ।

मुकुन्दको तिमीलाई माया लाग्दछ ?—बालकृष्ण (मुकुन्द इन्दिरा)। मलाई त साह्रै माया लाग्यो ।—लेखनाथ (भर्तृहरिनिर्वेद)। उसकी पनि त बैह्री हो नि, उसलाइ पनि त माया लाग्छ नि।—भीमनिधि (सहनशीला सुशीला)।

**मायाल घुँडाबाट आँसु आउनु**—माया गर्दैन भन्ने जताउन प्रयोग हुने (वक्रोक्ति)। हो तिमी मेरो चौपट्टै माया गर्छौ, **मेरो मायाले घुँडाबाट आँसु आउँदो होला।**

**मायाले पछिल्लो गाँस नरुच्नु**—माथिकै जस्तो। **मेरो मायाले** तिमीलाइ **पछिल्लो गाँस** रुचेन, हगि ?

**मार खानु**—(१)=दुक्ख झेल्नु, ठक्कर खानु। सुखी हूँ भनी गर्दछा लाख दाऊ। उसैमा छ **मार्खानु** पर्ने विपत्को ॥—शम्भुप्रसाद (शम्भु भजनमाला)। **कति मार खाइसक्यौ** तैपनि तिमीले चेतेनौ। (२)=चुटाइ वा गालि पाउनु। भक्तेले अस्ति **खूब मार खायो।**

**मार हान्नु**—=(प्राय: राँगो, बोकाहरूलाई) एकै चोटमा गर्धन छिन्ने गरी काट्नु। हिजो कालरात्रीमा **मार हान्ने** कुन कँवर हो ?

**मारी काटे नगर्नु**—=जे गरे पनि वा जति गरे पनि नगर्नु। **मेरो छोरो मारी काटे स्कूल जाँदैन।**

**मारी मेटी**—=भएभरको सबै, सिरीखुरी। खल्तीमा **मारी मेटी** साढे आठ रुपियाँ रहेछ त्यही पनि चौकाले मारिदियो।

**माला फिराउनु**—विरक्तिको भाव जनाउने (=मालाको दानामा गिन्ती राखी परमेश्वरको नाम जप्नु)। सबै कुरा गइसक्यो अब त जोगी भएर **माला फिराउने** वेला भयो।

**मावली बाजे**—=आमाको बाबु।

**मासी नभएको हात**—भाँडा खसाल्ने फुस्काउने मान्छेलाई भन्ने। त्यत्ति जाबो रिकापी पनि राम्रोसंग समाउन नसक्ने, छि: कस्तो **मासी नभएको हात !**

**मासु अमिलो पार्नु**—=पिरल्नु, आजित पार्नु। यो नानी कति रोइरहन्छ, मेरो त **मासु नै अमिलो पारिसक्यो !**

**मासु काटेर** *दिएको* **(लगेको) पनि थाहा नपाउनु**—अतिशय मेल वा खुशी जताउन प्रयोग हुने। कसैले फुक्र्याई दियो भने **मासु काटेर लगेको पनि थाहा नपाउने।**—रुद्रराज (रूपमती)। शिवहरि मिल्न परेपछि **मासु काटेर दिएको पनि थाहा पाउँदैन।**

**मासु खानु**—(१)=हैरान पार्नु। यो कवायद्को पाठले **मासु खाइसक्यो।** (२) किरिया हाल्दा प्रयोग हुने। **मेरो मासु खाने** भनन रूपे ?—रुद्रराज (चप्पाकाजी)। **मेरो मासु खानु** तपाजीले भात खानै पर्छ।—शिवप्रताप (दुर्गेशनन्दिनी)। (३) साधारण अर्थ। यो अस्ति थलिएकी थिई, विचरालाई **मासु खान** मन लाग्यो होला।

**मासु पर्नु**—(१)=मोलअनुसारको मासु हुनु। सात रुपियाँको **खसीको मासु परेकै** भन्नुपर्छ। (२)=मासु खानु (साधारण अर्थ)। आजकल मलाई **मासु पर्नै** हुँदैन झाडा लागिहाल्छ। (३) साधारण अर्थ। बर्त बसेको मान्छेलाइ **मासु परेको** तर्कारी दिने हो ?

**मासु लाग्नु**—(१)=मोटाउनु। तिम्री छोरीको त खूब **मासु लागेछ,** ए! (२)=मासु बिक्नु। कसकसकहाँ कतिकति **मासु लाग्यो,** त्यसको फाँटवारी पठाइदिनुहोला। (१) साधारण अर्थ। मेरो बाहुलामा **मासु लाग्यो** मुसारिदेऊन।

**मासु हाल्नु, राख्नु**—(१)=लुगाहरूको सिउनी अलि बढाउनु। मयलपोस साँघुरो नगराए, अलि **मासु हालेर** सिउनुपर्ला। (२) साधारण अर्थ। डबकामा **मासु हाल।**

**माहुर खुवाउनु**—=बिहाको जग्गेमा दुलहीले माहुर वा दही चिनी कान्छी औंलाले काटी भाग लाउनासाथ जसले सक्यो उसले अघिबाट परस्परका ओठमा सो दल्नु (दुलहीले जिते छोरा, दुलहाले जिते छोरी अघिबाट पाउँछ भन्छन्)।

**माहुर लुकाउनु**— = दुलही ल्याएको भोलिपल्ट पानी पातहरू हालेको बाटाभित्र वरबधुको आशीर्वाद लेखेको कागत दुलहा दुलहीले पालैपालोसंग लुकाउने खोज्ने गर्नु। कान्छा बाबुसाहेबको बिहामा मैले **माहुर लुकाएको** हेर्नै पाइनँ।

**माहुरीले मह साँचे झैँ**—अलि अलि गरेर जम्मा गर्दा दृष्टान्त दिने बोली। **माहुरीले मह साँचे झैँ** पैसा साँचेर मात्र के गर्छौं ? घरमा छोराछोरीको आङ नाङ्गै छ।

**मिति कस्नु**— = मन्तिर मिति हालेर लिखतपत्र टुङ्ग्याउनु। त्यति लेखे पुग्छ, अब **मिति** कस्दिदेऊ।

**मिति चढाउनु**— = मिति लेख्नु। अस्तिको जस्तो **मिति** चढाउन बिर्सलाउ नि।

**मिति पुग्नु**—(१) = आखिरीको समय आउनु; मर्नै, खारिज हुने, इत्यादि वेला पुग्नु। 'कति भाग्लास्, अब त तेरो **मिती पुग्यो**' भन्दै राजा पनि अगाडि बढ्दै गए।—बोधविक्रम (दन्त्यकथा)। (२) = भत्कने, काम नदिने वेला हुनु। **तिम्रो मोटरको मिति पुग्यो**, अर्को किन्दैनौ ? (३) साधारण अर्थ (= अवधि पुग्नु)। **यो तमसूकको** अब **मिति पुग्यो**।

**मिति पुऱ्याउनु**—(१) = हद पुऱ्याउनु। एकै मासेले **मिति पुऱ्याए** पछि बाह्रमासे किन चाहियो ?—लेखनाथ (लक्ष्मीपूजा)। सिङ्घवीरले कालुपाँडेलाई **मिति पुऱ्याएर** भनिदिएछ। (२) = भुतुक्क वा अशक्त पार्नु।….मेरो **मिती पुऱ्याउने** तिनीलाई फेरी जङ्गलमा पसाल्न्यैछैन।—श्री केसर (विक्रमोर्वशी)।….त्यो के अगाडि दौडेथ्यो सत्तलसिंहको बाणले बीचैमा उसको **मिति पुऱ्याइदियो**।—बोधविक्रम (दन्त्यकथा)। (३) साधारण अर्थ। तमसूक हेरन. हामीले **मिति पुऱ्याएर** दाम मागेका छौं।

**मिल्के बाँदर**—पल्याकपुलुक पल्याकपुलुक हेरिरहने चुलबुले मान्छेलाइ दृष्टान्त दिने।



***मीत* (मित्यारो) लाउनु**— = विधिविधान गरी मित्रताको सम्बन्ध बाँध्नु ( मित्यारी लाएपछि नाउँ काढ्न हुँदैन, नजीकका नातेदारमा पनि लिङ्ग मिलाई 'मीत वा मीतिनी' शब्द जोडिन्छ, जस्तो:—मीतिनीदी, मीतबा, मीतिनी छोरी, इत्यादि ), दोस्ती लाउनु ( पनि हेर )। भेट् सुग्रीव सित भो पछि प्रभुजिको **लाया मित्यारी** पनी। वाली मारि रजाञ्जि बक्सनु भयो **मित् हुन्** इ मेरा भनी॥—भानुभक्त (रामायण)। देखेर आफनै जस्तो पुष्पको रूप-गौरव। **मित्यारी लाउँदै** फिर्छन् बागमा पुतली सब॥ —लेखनाथ ( ऋतु-विचार )। आयेर वसी के जानु चाँडै ? न वुझी नौलो चाल, **मित्यारी लाई** मदन वसे घरको विर्सी हाल। —लक्ष्मीप्रसाद ( मुनामदन )। हामी दुवैलाई बाघको भय छ, तसर्थ हामी **मित्यारी लाऔं** र निर्धकसङ्ग यसै रुखमा बसिरहौं।—बोधविक्रम (दन्त्यकथा)।

**मुकुन्दसेनले मुलुक मारे जस्तो**—व्यक्ति वा वस्तु छेलोखेलो वा धेरै हुँदा त्यसको केही बन्दोबस्त गर्न नसकेकोमा दृष्टान्त दिने ( पाल्पाका प्रथम मुकुन्द सेन राजाले धेरै मुलुक जित्तै गए तापनि त्यहाँ केही बन्दोबस्त मिलाउन नसकेकोबाट )।….**मुकुन्द सेनले मुलुक मारे जसतो** बेबंदोवस्त भयो भन्ने प्रजामा आहान चल्यो।—सूर्य विक्रम ( रामशाहको जीवन चरित्र )।

**मुक्का (क्की) कस्नु, जमाउनु**— = मुक्कीले बेसरी हान्नु। अनि यो चोर श्याल रहेछ भनी उसमाथि **एक मुक्की कस्तो** रहेछ। —बोधविक्रम (दन्त्यकथा)।

**मुखका बाबुको के जान्छ**— = मुखले बोल्दैमा के नोकसान हुन्छ। उ त पाँच सय हाँकिदिन्छ **मुखका बाबुको के जान्छ** र, उ किन्ने होइन। **मुखका बाबुको के जान्छ** र, एक पटक 'तिमीलाई संचो छ' भनिदेऊन।

**मुख कालो तुल्याउनु**—(१) = इज्जत फ्याँक्नु, बेईमान हुनु।

यस पापी पोइको मुख कालो तुल्याइ तिमि सङ भागेर जाउँ भन्ने मलाइ साह्रै नै मन लागी रहेछ,....।—शिवप्रताप (दुर्गेशनन्दिनी)। लिएको दामलाइ लिएकै छैन भनेर किन मुख कालो तुल्याउँछौ ? (२)= अँध्यारो मुख लाउनु। (३) साधारण अर्थ। यो मलहमले मेरो मुख कालो तुल्यायो।

**मुख केलाउनु**—=खाऊँ कि नखाऊँ गर्नु। आज तिमीलाई तरकारी मीठो लागेन क्यारे, मुख केलाउन लाग्यौ नि ?

**मुखको कुरा**—(१)=भनेको कुरा (लिखित वा साक्षी नभएको, वा आफूले देखेको होइन भन्ने जताउँदा)। त्यस्ता मुखका कुराले हुँदैनन्, बाबै ! (२)=साक्षात्—ले भनेको वचन। अड्डाबाट सिपाईहरू जाँच्न गोका रैछन् उनैका मुखको कुरो।—भीमनिधि (सहनशीला सुशीला)।

**मुखको तीतो पोख्नु, फ्याँक्नु, वा फाल्नु, मुखको स्वाद फेर्नु**—=चित्तमा गड्दा वा रङ्ग उठ्ता कडा वचन भनी मनलाइ शान्त गर्नु। त्यति झटारो हानेर उ गइगयो, मुखको तीतो पनि फाल्न पाइएन।

**मुख खानु**—=गालि पाउनु, दुर्वचन सुन्नु। अर्काको माल नचलाउनू भनेको होइन, अहिले कत्तिको मुख खानुपर्‍यो ?

**मुख खोल्नु**—(१)=मुख बाउनु (१)। भरसक मुख खोल्न खोज्दथिन् तर केही गरेपनी मुखले मानेन।—गम्भीरध्वज (चन्द्रशेखर)। (२)=मुहान, द्वार, टुटी, इत्यादि खुला पार्नु। पाइपको मुख खोल्नुपर्‍यो।

**मुख चल्नु, चलाउनु**—(१)= चोथालो चलाउनु (हेर)। जे भए पनि सासूलाई मुख चलाउन जानिनौ। (२)=धेरै कुरा गर्नु। मुख चलाउनेको हात चल्दैन (यसका दुइ अर्थ हुन सक्छन्:—१, गालि गर्ने मान्छेले हम्मेसि कुट्तैन; २, धेरै कुरा गर्ने मान्छेले काम गर्दैन)। (३)=छिटो बोल्नु। पण्डितजीको के बिध्न मुख चलेको, एउटा कुरा पनि अड्कँदैन। (४)=च्यापु चलाउनु (चपाउँदा)। सानीको अगाडि मुख चलाउन हुँदैन के खायो भनेर प्याकप्याकती लाउँछे।

**मुख चिलाउनु**—(१)=मुख जिस्किनु। तिमीले दिएको मासुले त मुख मात्र चिलायो, बिनसित्ति मासु खान पो मन लाग्यो। (२) साधारण अर्थ।

**मुख च्यात्नु**—(१)=मुख चलाएको सँजामा दुइपट्टिका तल्ला गाला समाती वा मुखभित्र दुइ औंला हाली दुइतिर बेसरी तानेर मुख फट्याउनु। अझ ? मुख च्यातूँ ?—बालकृष्ण (ध्रुव)। (२) ज्यादा हाँस्ता वा रुँदा हप्काउने बोली। म दुःखी कहाँ हाँस्न पाउँछु र ? हजुर सुखले हाँसिबक्सिन्छ, सँधै हजुरकै मुहाड च्यात्तिन्छ।—बालकृष्ण (ध्रुव)। एक छिन पनि चुप लागेर बस्न नसक्ने, कति मुख च्यातिरहेको ?

**मुख छोड्नु**—(१)=चोथालो चलाउनु (हेर)। दुलही, सासूलाई मुख छोडन जानिनौ....।—बालकृष्ण (कथा कुसुम)।.... जब चुल्टो समाएर घिसार्दै आँगनमा पुग्यायो अनी गौंथलीले मुख छोडी।—गुरुप्रसाद (कथा कुसुम)। (२)=जेतेमेते खानु (मुख बारेपछि)। रोगले भने छाड्दै आएको मुख भने छोड्न नदिएको वेलामा रोगीले जसरी वैद्यको प्रतीक्षा गर्दछ....।—रुद्रराज (चप्पा काजी)।

**मुख जिस्किनु, जिस्क्याउनु**—=खाने आग्रह आकर्षित हुनु, आकर्षण गर्नु। अलिकता मकै खाएको त मुख पो जिस्कियो। थोरै मासुले मलाई पुग्दैन, मुख जिस्क्याउनु मात्रै हुन्छ, बरु खान्न।

**मुख जूठो पार्नु**—=(खान मन नलागे तापनि) खाएँ भन्नेसम्म पार्नु। खालि सानी बुहारीले भने मुख मात्र जुठो पारेर उठेकी थिइन्।—रुद्रराज (रूपमती)।

**मुख जोगाउनु**—=गाल पर्ने वा अनुचित कुरा ननिकाल्न होश गर्नु। दरबारमा मुख जोगाउनुपर्छ।

**मुख जोड हुनु**—(१)=मुखाले हुनु । मुख जोड भएको नोकर काम लाग्दैन। (२)= डाहना दाँतले टोकी लगाम जोड-संग तान्नु, रोक्न गाह्रो हुनु, ( चढेको वा जोतेको घोडाको बारे )। यो घोडा साह्रै राम्रो छ तर मुख जोड हुनाले हामी-लाई हुँदैन ।

**मुख टाल्नु**—(१)=उसले चाहे-माफिक गरिदिएर (केही कुरा) न-भन्ने पार्नु। यस्तै काम सँधै हुने भए घर घरमा कचकच गर्नेहरूको मुख कति टालिने थियो ?—रुद्रराज ( रूपमती )। (२)= अलिकति दिएर नमाग्ने तुल्या-उनु । ठूलै रकम नपरिकन उनीहरूको मुख टाल्न गाह्रै पर्ला ।—रुद्रराज (रूपमती)। (३)=चुप लागेर बस्नु (रिसको बोली) । तेरो मुख टालेर बस्न सकिनस्, अर्काको कुरामा किन बाठो भएर बोल्न गइस् ? (४) मौकामा नभनेमा झाँट्ने बोली । भोक लागेको भए अघि नै किन भनिनस्, तेरो मुख टालेको थियो ? (५)=बोल्ने ठाउँ नराख्नु । तिमीले बोल्ने कुरै छैन, आफ्नो मुख आफैले टालिसकेका छौ । (६) साधारण अर्थ । सिर्का हालिसकें, शोशीको मुख टाल्न मात्र बाँकी छ ।

**मुख थाक्नु**—( १ )=भन्दा भन्दा आजित हुनु। मेरो मुख थाकिसक्यो, बरण्डामा माल नराख् भनेको यी केटीहरूले टेरेनन् । ( २ )=( चपाउँदा चपाउँदा ) च्यापु गल्नु । कस्तो साह्रो मासु पकाएको, चपाउँदा चपाउँदा मुखै थाकिसक्यो ।

**मुख थाम्नु**—( १ )=आग्रह लागेको कुरा नखानु । हिजो तिमीले काँक्रो काटेको देख्ता मलाइ साह्रै खान मन लागेको थियो, मुश्किलसँग मुख थामें र पो नत्र आज शूलै हुन बेर थिएन। (२)=रिस उठे तापनि खामोश गरी कडा वचन ननि-काल्नु । कसो भएर श्यामेले मुख थाम्यो र पो नत्र ती दुइजनाको नराम्रो झगडा पर्थ्यो ।

**मुख थुन्नु**—=मुख बन्द गर्नु



( हेर )।

**मुख दुखाउनु**—=दोहोऱ्याई दोहोऱ्याई भन्न परिश्रम गर्नु । बुझाएर भन्दा आफू नसुन्ने, म दशचोटि मुख दुखाएर भन्न सक्छु ?

**मुख देखाउनु**—=देखापर्नु, अ-गाडि आउनु । आजकल किन हो, लीले दिलेहरू पनि उस्तो मुख देखाउँदैनन् ।—रुद्रराज (चप्पाकाजी) । तेस्ताले देश र समाजमा मुख कसरि देखा-उने ?–रूपनारायण(भ्रमर)। अब कसरी मुख देखाउनु ।—गुरु-प्रसाद (कथा कुसुम) । सब कुरा थाहा पाएपछि बिचरो ग्लकसले ....फेरि सर्सीकहाँ मुखै देखा-उन गएन ।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह) ।

**मुख देख्नु**—( १ )=( उठ्ने बित्तिकै) चेहरामा आँखा पार्नु । आज एकाबिहानै एउटा मान्छेको मुख देखेको थिएँ अलच्छिन लागेछ—रानीसाहेबले कुटिबक्स्यो। ( २ )=फेरि भेट हुनु । यसरी फेरी पनी सखी-हरूको मुख देख्न पाउँला भन्ने मलाई सत्तो आशै थिएन ।—श्री केसर ( विक्रमोर्वशी ) । (३)=जन्मनु (छोराछोरी;= मुख हेर्नु, ३ हेर) । सन्तानको मुख अब देख्न पाइं । गर्थे पियारो अति पुत्रलाई ॥—पद्म प्रसाद (श्रीमद्भागवत) । (४) =(धन, दाम, पैसा, इत्यादि वा अरू मालसित आउने) हात पार्नु, छुनु, खेलाउनु, वा देख्नु (लाई अकरण गरी जोड दिने; प्रायः कदर नजान्दा वा अति लोभ, आग्रह, हेला, पाखेपन, इत्यादिलाई तिरस्कार गर्दा प्रयोग हुने)। दामको मुखै न-देखे जस्तो किन गर्छस् ? घडीको मुखै देख्न नपाए जस्तो गरी यी केटाकेटीहरूले मलाई घेरेको हेरन । आजकल त पैसाको मुख पनि देख्न पाइन्न ए ! (५)= अनुहार वा खाने मुख देख्नु ( साधारण अर्थ ) । आफू उज्यालोपट्टि फर्के पो (ऐनामा) राम्रोसंग मुख देख्छौ ।

**मुख धुनु**—(१)=( नित्यकर्मको रूपमा ) भात खानुअगाडि अक्सर उठ्ने बित्तिकै दाँत घोट्नु,

जिभ्री लाउनु, र चेहरा (मात्र वा कपालसमेत) पखाल्नु । मुख धोइसकें भन्छयौ, भान्छामा जान्छु भन्दछयौ, कैले कपाल कोरेर कैले श्रृङ्गार पार्दछयौ ? —बालकृष्ण (मुकुन्द इन्दिरा) । (२) =जूठो पर्दा खल्को हाल्न वा ग्रहण लाग्दा नुहाउन नसक्ता चेहरा ( मात्र वा कपालसमेत ) पखाल्नु । जरो आएको हुनाले तल गएर मुख मात्र धोऊ ।

**मुख नहेर्नु**—ज्यादा रिस उठ्ता । तँ अशुद्ध नपार् मेरा कान यी नीच शब्दले, बोली सुन्दिन तेरो म, म तेरो मुख हेर्दिन । —बालकृष्ण (प्रह्लाद) ।

**मुख पर्नु, पार्नु**—(१) =अगाडि पार्नु ( यहां 'मुख' को उच्चारण हलन्त हुँदैन ) । लप्टन साहेब आएर खल्लबल्ल गर्दा सबैले मलाई पो मुख पारे । (२) =बोली निक्लनु, निकाल्नु, (छुचो, दुच्छर, इत्यादिसित मात्र ) । नरकझैं छुचो मुख पारेर यो पापी कुरा झिक्नु भयो,....।—बालकृष्ण ( मुकुन्द इन्दिरा )।

**मुख फर्काउनु**—( १ ) =आफू-भन्दा ठूलो मानिसले जे जे भनेर गालि गर्‍यो त्यही त्यही टिपेर चोथालो चलाउनु । कसरी मुख फर्काउँछन् नि ! एउटा कुरा बोल्यो भने दसौटा ओठे जवाफ दिन्छन् ।—रुद्रराज ( प्रायश्चित) । तर आफुले त यो उमेर भो कैल्यै मुख फर्काएको था छैन ।—गुरुप्रसाद (कथा कुसुम)। (२) साधारण अर्थ ।....आधा पाखा मुख फर्काएकी कंराँइ आँखाले हेरेकी यिनीलाई फेरी पनी मैले देख्न पाएँ ।— श्री केसर ( विक्रमोर्वशी ) ।

**मुख फुट्नु**—(१) =बक्के फुट्नु । (२) =चेहराको छाला खस्रिनु । हावाले तिम्रो मुख फुटेछ ।

**मुख फेर्नु, फेरिनु**— =खाने चीज बदल्नु, बदलिनु । आज मुख फेर्न पाएको हुनाले धेरै भात खाएँ । (मुख फेरिनु =चेहरा मोटाउनु, पनि हुन्छ, जस्तोः— मुख त फेरिएको देखिन्छ, जीउ त उस्तै लाग्यो) ।

**मुख फोड्नु**— =पच्कार्नु । सबैको मनमा यो अन्याय हो भन्ने परेको छ, तर मुख फोड्न भने कोही सक्तैनन् ।



**मुख बढ्ता हुनु**— =आफ्नो औकातलाई नाघेर कुरा गर्नु । अलि तेरो मुख बढ्ता छ, त्यसो गर्न लागिस् भने सेतो घरमा पुग्लास् ।

**मुख बनाउनु**—( १ ) =मनको भाव लुकाई खुशी लाग्दा दिक्क, दिक्क लाग्दा खुशीको अनुहार पार्नु । म त तिमीहरू जस्तो मुख बनाउन जान्दिनँ, मनको कुरा चाँडै नै थाहा हुन्छ । ( २ ) =मुखको भावभङ्गीद्वारा लज्जत झिक्नु । जनार साह्रै उत्ताउली छ, मुख बनाई बनाई बोल्छे । ( ३ ) = गिज्याउनु ।

**मुख बन्द गर्नु (थुन्नु)**—(१) =नबोल्नु । मन पोल्न थालेपछि को मुख बन्द गरेर बस्न सक्छ ? (२) =बोल्न नदिनु (यस अर्थमा 'पार्नु' पनि) । मुख म बन्द पार्छु ती लाखौं, ठेडी कोचेर एउटै ।—बालकृष्ण (प्रह्लाद)। मेरो मुख बन्द गर्ने तिम्रो ताकत छैन । (३) साधारण अर्थ । मुखमा हाल्नू छ भने जिभ्राको तलतीर हाली मुख बन्द गर्न लाउनू, काखीको डिग्री भन्दा मुखमा सधैं १ डिग्रीको फरक हुन्छ ।—राममणि (सह्यार-सुसार-संभार) ।

**मुख बाँध्नु**— =(टर्रोले) मुख कक्रक पार्नु । काँचो हलुवाबेद खाएको त एकदम मुख बाँध्यो ।

**मुख बाउनु**—(१) =चुँक्क बोल्नु, कुरा उठाउनु । तेस्वेलामा पनी तेस्वेला पछि पनी फेरि दलानीले मुखै वाउन सकीनन् ।—गम्भीर ध्वज (चन्द्रशेखर) । (२) =आस गर्नु । तिम्रा मुख बाउने मान्छे धेरै छैनन्, तिनीहरूलाई पनि त थोरबहुत दिनुपर्छ । (३) साधारण अर्थ । धर्मप्राणा सरला बुढ़िया मुख बाएर शेखर पट्टि हेरी रहीन् । —रूपनारायण (भ्रमर) ।

**मुख बाङ्गो हुनु**— =(खुशी नभएको देखाउन) ओठ लेप्याउनु । माग्नेको मुख बाङ्गो । (२) =बित्यास पर्नु (सधैं नमीठामा परिरहने मान्छेले घुर्क्याउने बोली) । मीठो खान हुन्छ र, हाम्रो मुख बाङ्गो

भइहाल्छ नि !

**मुखबाट गु[हु] आउने गरी**— =बेसरी ( खँदाइको बारे ) । फेरि यस्तो गरिस् भने मुखबाट गु[हु] आउने गरी खाँद्नेछु ।

**मुखबाट चुहाउनु, खसाल्नु**— (१) =उच्चारण गर्नु । यो कुरा मुखबाट चुहाइस् कि फेला पर्लास् । (२) साधारण अर्थ । नानीले मुखबाट खसालेको सुपारी म कहिले खान्थें !

**मुखबाट छोराछोरी पाउनु**— हुन नसक्ने वा नचाहिने कुरा भयो भन्ने मान्छेलाई भन्ने । अब अलिक दिनमा यिनीहरू मुखबाट छोराछोरी पनि पाउँछन् ।

**मुखबाट झिक्नु, निकाल्नु**— =मुखबाट चुहाउनु, खसाल्नु ।

**मुखबाट पाउनु**— =धर्मपुत्र लिनु ।

**मुख बार्नु**— =खानामा परहेज गर्नु । मुख बारें, गयो रोग स्वास्थ्य छोडेर देहमा, अब मीठो कुरा जेते मेते आए पनी भयो । --बालकृष्ण (मुटुको व्यथा) । दूध न छुटाउंज्याल सम्म छोरोको बिमारीमा कुपथ परेर बिग्रन जाला भन्ने डरले मुख बारेर बस्ने, ....आज....आमा-लाई उल्टो दोष लगाएर जान शक्ने !—रुद्रराज (रूपमती) ।

**मुख बिग्रनु**—(१) =अश्लील वा अनुचित कुरा भन्ने हुनु । छोटा मान्छेको सङ्गतले आजकल तिम्रो मुख बिग्रेछ, उहाँको अगाडि त्यसो भन्नु हुन्छ ? (२) =ठीक स्वाद नपाउने हुनु । यो अचार यति चर्को छ, तैपनि नून पुगेन भन्छौ ; तिम्रो मुख त बिग्रेछ । (३) =चेहराको पोतो नराम्रो हुनु ( खटिरा, चायाँ, इत्यादिले ) । के बिग्न डण्डीफोर आएको, तिम्रो मुख त बिग्रेछ । (४) =चेहराको भाव बदलिनु । अनारको मुख बिग्रेको हुनाले उसैले चोरेको हो भन्ने लागेको थियो । ( ५ ) =चेहरा चेप्रिनु, बाङ्गिनुटिङ्गिनु ( यस अर्थमा प्रायः 'बिगार्नु' प्रयोग हुन्छ) । सुत्केरी हुने स्वास्नी मानिसका अगाडी कसैले पनी आत्तिनू, घबडाउनु, मुख बिगार्नू हुँदै न ।—राममणि ( सह्यार-



सुसार-संभार ) । परन्तु खाने वेलामा मुख बिगार्दै खोइ यो उत्तिको असल त भएन ××× पनि भन्दै थिए, थप्दै पनि थिए । —रुद्रराज ( चप्पा काजी ) । परदेशी आए कि केटाकेटीहरू मुख बिगारी बिगारीकन गिज्याउँदै तिनीहरूका पछि लाग्दथे ।—खड्गमान ( ग्रीस र रोमको दन्त्यकथासंग्रह ) ।

**मुख बिटुलो पार्नु, बिटुल्याउनु** — =ज्यादै थोरै कुरा खानु । मेरो घरमा आएपछि खान मन नभए पनि मुख त बिटुलो पार्नुपर्छ । जहिले पायो उहिले भात छोड्नु हुँदैन, मुख बिटु-ल्याएर आऊ ।

**मुख बोले पनि पेट नबोल्नु**— =बोलचाल भए पनि मनोमा-लिन्य हुनु । त्यत्रो झगडा परेपछि त्यो मान्छेसँग मेरो मुख बोले पनि पेट बोल्दैन ।

**मुख बोल्ने**— =कुरासम्म गर्ने (साथीको बारे) । मुख बोल्ने साथी एउटा तँ थिइस् तँ पनि जान लागिस् ?—भीमनिधि ( सहनशीला सुशीला ) ।

**मुखभरीको (अनुसारको) मूला** — =कुराअनुसारको जवाफ । भाइसित घरको कुरा गर्न आएको थियो, हर्कले मुख-भरीको मूला पायो ।

**मुखमा आउनु**—(१) =जवाफ सुझनु । आमा, जवाब त मुखमा आएको थियो, तर सत्य कुरो होस् सही....।— ग्रन्थकार (कथा कुसुम) । उहाँले त्यसो भन्दा मुखमा त आएको थियो के गर्नु भन्नु भएन । (२) =पाउनै लागेको हुनु, पहुँचभित्र पर्नु । मुखमा आइसकेको कमानी पनि तैंले हिंडाइस् ।

**मुखमा आएको ( मुखको ) गाँस**— =पाउन लागेको (पाइ-आएको ) चीज वा दाना । अर्काको मुखमा आएको गाँस तिमीले हरिदियौ ।

**मुखमा आगो लाउनु, मुख पोल्नु**—(१)=दागबत्ती दिनु । किस्नेको छोरा मरेछ, बिचराको मुखमा आगो लाउने पनि कोही भएन । (२) साधारण अर्थ ।

**मुखमा झुरिङनु**—(१)=बराबर उच्चारण हुनु। हाम्रा कविले मानिस र समाजको चर्चा गर्न थाल्ने बखत यी कुराहरू सबैको **मुखमा** जरूर **झुरिङएको** होलान्।—श्री मृगेन्द्र (भानुभक्त स्मारक ग्रन्थ)। (२) साधारण अर्थ। तिम्रो **मुखमा** के **झुरिङएछ** धागो हो कि?

**मुखमा डाँक [आएर] बस्नु**—=डाँक बसेको मुख (हेर)।

**मुखमा थुक्नु**—सँजाको रूपमा साधारण अर्थ। त्यो बदमाशलाई सारा पल्टनले **मुखमा थुके** रे। (घमण्ड गर्दा पनि प्रयोग हुन्छ) ७ दिनभित्र काजीको पाऊ मिचाउन ल्याउन सकिन भने मेरो **मुखमा थुकिदिनु**,....।—रुद्रराज (चप्पा काजी)।

**मुखमा दही जमाएको हुनु**—=बोल्न नसक्ने गरी मुख बन्द भएको हुनु। अह्राएको भए हुन्थ्यो क्यारे। **मुखमा दही जमाएको** थिएन।—रुद्रराज (चप्पा काजी)। उसले भन्दा म भन्न सक्दिनँ र, मेरो **मुखमा दही जमाएको** छ?

**मुखमा दूधभात परोस्!**—आफूलाइ असल हुने कुरा बोल्दा आसीक दिने बोली। तिम्रो **मुखमा दूधभात परोस्**, तिमीले भने जस्तै गरी म तीर्थ जान पाऊँ!

**मुखमा पानी आउनु**—(१)=(प्रायः अमिलो पिरो देख्ता) मुखमा थूक आउनु। काँक्राको अचार देख्ता मेरो **मुखमा** सरर **पानी आयो**। (२)=(वाकवाकी लाग्दा वा जूकाले) मुखमा पतला थूक निक्लनु। मेरो पेटमा जूका छ क्यारे, **मुखमा पानी आइरहन्छ**।

**मुखमा बुजो लाउनु, मार्नु**—=मुख टाल्नु (सबै अर्थमा; 'लाउनु' सित प्रयोग हुँदा १, २, अर्थमा 'मा' विभक्ति अक्सर लोप हुन्छ)। पछि मिसिनी, सुँडेनी, बाहुनी, चाकर्नीको **मुख बुजो लाउन** बरालपुत्रीलाई कत्रो सास्ति भयो!—रुद्रराज (रूपमती)। मुसलमान मात्रका धर्मगुरुबाट आफ्नो पोजिसनको कदर हुनु के थियो वैरिहरूका **मुखमा बुजो लाग्नुथियो**।



—रुद्रराज (भारतवर्षको संक्षिप्त इतिहास, भाग २)। राजाले ····जसजसले जेजे माग्यो उही उही दिएर सबका **मुखमा बुजो लाए**।—बोधविक्रम (दन्त्यकथा)।

**मुखमा बुजो हाल्नु**—(१)=मुखमा गाँस हाल्नु। **मुखमा** त्यत्रो **बुजो** हालिराखेको छ, कताबाट बोलोस्? (२)=(केही कुरा) मुखभरी कोच्नु। **मुखमा** टोपीको **बुजो** हालेर कराउनै दिएन।

**मुखमा माड लाग्नु**—=हुन सकेसम्म चुत्थो रूपमा अन्न पेटमा पर्नु। जसले यस मर्त्यलोकमा जन्म गरायो उसैले **मुखमा** पनि **माडलाई** दिन्छ।—रुद्रराज (चप्पाकाजी)। यति काम नगरीकन त त्यसको **मुखमा माडै लाग्दैन**।

**मुखमा सरस्वती बसोस्!**—=भनेको कुरो पुगोस्। तिम्रो **मुखमा सरस्वती बसोस्**, आज मैले जुवा जितिहालूं!

**मुख मिठ्याउनु**—=लोभिनु (उपमा अर्थमा पनि)। मैले खाएको देख्ता **मुख मिठ्याएर** बस्नुपर्ला।

**मुख मिलाउनु**—(१)=चोचोमोचो मिलाउनु (हेर)। अरू जस्तो दशजनासंग **मुख मिलाउन** हामीले जानेको छैन। (२)=म्वाईं खानु। (३)=परस्परको एकै बोली हुनु। उनीहरूको **मुख मिलेपछि** हामीलाई के चासो?

**मुख *मीठो* (ठीक) नहुनु**—(१)=मुखको स्वाद बिग्रेको हुनु। आज मलाइ जरो आउला जस्तो छ, उसैले मेरो **मुख ठीक छैन**। (२)=मुखबाट फोहर वा नराम्रो वचन निस्कनु। त्यसलाइ नजिस्क्याऊ त्यसको **मुख ठीक छैन**, फेरि प्याच्च एक थोक बोलिदेला।

**मुख मीठो पार्नु, गर्नु**—=(नमीठो कुरा खाएपछि) मुखबाट नमीठोपन हटाउनु। औषधी खाएपछि **मुख मिठो पार्ना**लाई डाक्टर बाजेले यो सिरप दिनुभएको छ।

**मुख मोस्नु**—=खान नदिनु। हजुर जस्तो जानिफकार मानि-

सले पनि यसरी बालबच्चाको मुख मोसेर दिनदिनै लुकीलुकि जो भएको सर्वस्व यसरी बढार्ने ? —लेखनाथ ( लक्ष्मी–पूजा ) । अर्काको सन्मुख–मुखै मुख–मोशेर आफुनै । जो खान्छ गल्गल गरी सो हो कुक्कुर सत्यनै ॥—बैजनाथ (उपदेश–शहस्री)।

**मुख रसाउनु**—( १ )=( मीठो खाद्यपदार्थ, प्रायः अमिलो पिरो देख्ता ) मुखमा थूक आउनु । कुर्मा देख्ता मेरो मुख रसायो । (२)=( भाँडाको फुक्ले-को ) मुख रसायनले जोर्नु । ढुकीको मुख रसाउनुपर्‍यो ।

**मुख लाउनु**—(१)=( विशेषण, क्रियायोगी वा सर्वनाम सित) चेहरा पार्नु । अँध्यारो मुख लायेर मेघ लग्यो जती जती । उज्यालो खेतिवालाको चित्त हुन्छ उती उती ॥—लेखनाथ ( ऋतु-विचार ) । चामेले डिच्च मुख लायो ।—गुरुप्रसाद ( कथा कुसुम) । त्यस्तो के मुख लाएको ? (२)=मुख जोर्नु । शंखको प्वालमा मुख लाऊ र बजाऊ । (३)=मुख लाग्ने गराउनु । केटाकेटीलाई धेरै मुख नलाऊ पछि बझुवा भएर निस्कलान् ।

**मुख[मुखै] लाग्नु**—=ठूलो मान्छेसित जोडका तोड गरी जवाफ भर्नु । ए पाजी मुख लाग्द्छस् कति तँता चुसूछ म तेरो रगत् ।—मोतीराम ( प्रह्लाद भक्ति कथा ) । सासू ससुरासँग कहिले कहीं मुख मुखै लाग्ने गथिन्…. ।—रुद्रराज (चप्पा-काजी) ।

**मुख लुकाउनु**—( १ )=लज्जित हुनु । केवट भै हरिले अब तार्नन् । किन मुख शम्भु लुकाउँछौ हाय! हरी ॥—शम्भुप्रसाद (शम्भु भजनमाला)। (२) साधारण अर्थ । ए, तपाईं मुख लुकाएर हाँसिरहनु भएको छ ?—खड्गमान (दर्पचूर्ण)।

**मुखले हाँक्नु**—=काम गर्दा हकीकतमा हुने अप्ठ्यारोको बिचार नगरी फर्माउनु वा उपाय बताउनु । मुखले मात्र हाँकेर न गरेर परिश्रम । हुँदैन उन्नति कबै तस्मात् गर परिश्रम ॥—



वैजनाथ (उपदेश-शहस्री) ।

**मुख सह्माल्नु**—=मुख जोगाउनु । आफ्नो मुख सह्मालेर बोल, बोल्दै न बोल कि, धेरै रहेँ, यहाँ भन्दा बढ्ता सहन शक्तिनँ ; —……..।—बालकृष्ण (ध्रुव) ।

**मुख सिउनु**—(१)=मुख बन्द गर्नु, बोल्न नसक्ने पार्नु । मत हजूरको नून खाएको छु बोल्दिनँ, तर आलम दुनियाँको मुख सिउन सकिबक्सिन्छ ? कति बकबक गर्छ, यसको मुख खापसियोले सिइदेन । (२) साधारण अर्थ । थैलीको मुख सिउन बाँकी छ ।

**मुख सुँघ्नु**—(१)=मन बुझ्नु, कुरा बुझ्नु । सोभाखरको मुख सुँघ्न के भन्दो रहेछ । (२) साधारण अर्थ । गोथेको मुख सुँघ, गाँजा खाएर आएको छ कि छैन ।

**मुख-सुक्नु**–(१)=(डरले)मुखमा थूक सुक्नु । पण्डितजीको मुख सुकेर आयो ।—रुद्रराज (प्रायश्चित्त ) । ललित बहादुरको मुख सुकेको छ, थुक्क लाउँदा थूकै आएन, उसैले यही बदमाशले चोरेको हुन बेर छैन । (२) गर्मीले वा खान नपाउँदा । के बिन्न चर्को घाम ! मेरो मुख सुक्यो, पानी खान जान्छु । बिहानभरी मुख खङ्खङ्ग सुकाएर काम गरें, खाने वेलामा नमोनास्ति ।

**मुख हेर्नु**—(१)=मुलाहिजा गर्नु। तिम्रो वा मुख हेरेर काम गर्छन् । (२)=दाम राखेर (भर्खर जन्मेको बालख, नयाँ दुलही, इत्यादिसित) पहिलो भेट गर्नु । उनका आमा बाबूले पाँच २ रूपियाँ दिएर नातीको मुख हेरे ।—रुद्रराज ( रूपमती ) । (३)=मुख देख्नु (३) (इच्छा, आग्रह, इत्यादिको अगाडि 'हेर्नु' मात्र प्रयोग हुन्छ; 'देख्नु' मा हेर) । पण्डितनी बज्यैलाई पनी बुढेसकालमा नातीको मुख हेरूँला भन्ने ठूलो धोका थियो । —रुद्रराज ( रूपमती ) । (४) =दर्जा उमेरको विचारले वा चिह्नेर उही माफिक गर्नु । भाग सट्टापट्टा पर्ला मुख हेरीकन मात्र भाग दिने गर । (५)=

अनुहार जाँच्नु। तिमीले केटीको मुख हेरेको छ र? (६)=भरोसा वा आधार लिनु। बज्यै त साह्रै मापाकी छन्, खालि बाजेको मुख हेरेर मात्र टिकिरहेकी छु। (७)=दुःख बिर्साउने कुराको रूपमा लिनु।....धैर्य गरी आफू संग रहेका बालकहरूको मुख हेरी चित्त बुझाई रहेकी थिएं।—श्री३चन्द्र (अमलेख-भाषण)। (८)=संगत गर्नु (चिढिंदा प्रयोग हुने)। राँडीकी छोरी—हाँडीमा परी उम्लेर मरी, यस्ताको मुख हेरेर बाँचिरहनु पनी धिक्कार हो।—रुद्रराज (रूपमती)। (९) अनुहारमा आँखा पार्नु (साधारण अर्थ)। पाजी, पाखण्डी कुपुत्र, तेस्ता छोराको मुख हेर्न पनि पाप लाग्छ।—रूपनारायण (भ्रमर)।

**मुखैको मात्र तरवार मार्नु**—कुरैले मात्र फूर्ति हाँक्नु। त्यति जाबो काम लाएको पनि गर्नु छैन, तिमी त मुखैको मात्र तरवार मार्छौ।

**मुखै नदेखेको जस्तो गर्नु**—(१)=हाम र झाम गर्दै हेर्न आई वा लोभ गरी पाखेपन झल्काउनु। किन दामको मुखै नदेखेको जस्तो गरी हूल गर्छौ। (२)=चिन्दै नचिह्ने झैं गर्नु। के मुखै नदेखे झैँ गर्छौ, यो उही त हो नि।

**मुगलान पस्नु**—=केही कसूर गरेर वा टिक्की नलागेर विदेशमा बस्न जानु। त्यो साइँदुवा मुगलान पसेछ, कहीं फेला परेन।

**मुगलान भास्नु**—=अर्कै मुलुकमा गएर बेपत्ता हुनु (प्रायः सजा छल्न)।

**मुगलानी हुनु**—(१)=यहाँको ऐन सवाललाई नटेरी मनपरी गर्नु। ओहो, यस्तो बदमाशी गर्ने तँ त मुगलानी भइसकिछस्! (२) साधारण अर्थ।

**मुटु काम्नु (काँप्नु)**—(१)=डराउनु। ढोका खोलेर हेर्दा तिनले जे देखे त्यसले उनको मुटु काँप्यो,....।—बोधविक्रम (दन्त्यकथा)। (२) साधारण अर्थ (जाडो वा रोगले)। आज बिहानको जाडोले मेरो मुटु



काम्यो। यो लिए मर्दछौं हामी, मुटु कामेर फुट्तछ, बरु हामीहरूलाई यसको बदला लग!—बालकृष्ण (प्रह्लाद)।

**मुटुको रगत खानु**—अरूलाइ प्रेरणा गर्न किरिया हाल्दा प्रयोग हुने। तिम्रो मुटुको रगत खाने। अब पनि पत्याएनौ?—ग्रन्थकार(कथा कुसुम)। (२)=ज्यादै पीडा दिनु। यस दुश्मनले मेरो मुटुको रगत खाइसक्यो।

**मुटु खानु**—=मुटु दुख्नु। फेरि खायो मुटु खायो।—भीमनिधि (सहनशीला सुशीला)। उता जङ्गलमा शिकार खेल्दा खेल्दै राजाको मुटु खान थाल्यो।—बोधविक्रम (दन्त्यकथा)।

**मुटु चुँडिनु**—=मायाले विह्वल हुनु। छोरालाइ माष्टरले पिटेको सुन्दा आमाचाहिंको मुटु नै चुँडियो।

**मुटु छेड्नु**—(१)=तीखो वचन गर्नु, बिझ्ने गर्नु। उनीहरूका मुटु छेड्ने वचन सुन्नु पर्ने छैन।—रुद्रराज (रूपमती)। (२)=साह्रै अफसोस गराउनु। मेनका रोएको सुन्दा मेरो मुटु छेडियो। (३)=(चिसोको बारे) भित्रसम्म जाडो तुल्याउनु। चित्लाङको मुटु छेड्ने हावाले त हामीलाई आखिरी खेलायो। (४) साधारण अर्थ। तिम्रो गोली ले जरायोको मुटु नै छेडेछ।... यो मानसको शर त्यहाँ गजूरको साथ लागी बादलको मुटु छेडी आकाशको माथि एकवार त पुग्दछ,....।—बालकृष्ण (मुटुको व्यथा)।

**मुटु ठेगान (ठाउँ)मा नहुनु**—=डरले कायल हुनु। जर्साब रिसानी भएको सुन्दा मेरो मुटु ठेगानमा थिएन।

**मुटु ढुकढुक गर्नु**—(१)=भयभीत हुनु, त्रासले थरहरी हुनु। ....भित्र पस्ता खेरि युवराजको मुटु ढुक् ढुक् गर्न थाल्यो, साथसाथै काँप्न पनी थाले।—शिवप्रताप (दुर्गेशनन्दिनी)। (२)=चिन्ताग्रस्त हुनु। गला ढुक्क भयो औ मुटु ढुक् ढुक गर्न लाग्यो।—रूपनारायण (भ्रमर)। (३)=अजीर्ण इत्या-

दिले मुटु काम्नु, असाधारणसंग मुटु भ्व्याक भ्व्याक गर्नु । आजकल मेरो मुटु ढुकढुक गर्ने बेथा भइरहेछ । (४) साधारण अर्थ । गुनसिङ मेरेको छैन, छाम त, मुटु ढुकढुक गर्दै छ ।

**मुटु थर्कनु**—=डराउनु ।······· प्रभावशाली आर्काका मुटु थर्काउन शक्ने सद्विचार फिजाउने सामर्थ्य भएको महापुरुष सँग सहवास हुनशक्यो····भने मात्र तर लाग्यो ;····।—रुद्रराज (रूपमती) ।

**मुटु दुख्नु**—(१)=डाहाले जल्नु । सौताले राम्रो फरिया लाएको देख्ता तिम्रो मुटु दुख्यो होला । (२)=पेटको गोलमालले मुटुनेर दुख्नु । तिम्रो मुटु दुख्यो, नत्र खुम्चिन्थ्यौ यसरी किन ? तिम्रो मुटु दुखेकोले मेरो मुटु पनी दुख्यो ।—बालकृष्ण ( मुटुको व्यथा ) ।

**मुटु नभएको**—=एकजात डर नभएको । यो मान्छेको मुटु छैन, हेर, छानामा कस्तो निस्फिक्रीसँग हिंडेको !

**मुटुमा गाँठो पार्नु, पर्नु**—=भकानु पार्नु, पर्नु । उनको मुटुमा एक दम गाँठो परेर आयो, आँसु बर्बर खस्यो । —रुद्रराज (प्रायश्चित्त) । मुटुमा गाँठो पारेर हेर्छौं ! नजर फिर्योनि ! नछाड आमा ! फर्क न फर्क, टुहुरो मर्‍यो नि !—लक्ष्मीप्रसाद (मुनामदन) । केही सीप नलाग्दा राजारानीले मुटुमा गाँठो पारी आफ्ना आँखाको नानीलाई आशीर्वाद दिई बिदा गरे ।—बोधविक्रम ( दन्त्यकथा ) ।

**मुटु मिच्नु**—=डाहले जल्नु । आफ्नो रिस परेको मानिसलाई भाग्य-जुद्ध चिट्ठा पर्दा श्यामबदनले मुटु मिची होली ।

**मुटुले ठाउँ छोड्नु**—=डरले खङ्ग्रङ्ग हुनु । मूर्छा परे भन्दा मेरो त मुटुले ठाउँ छोड़ेको थियो ।—श्री अर्जुन (स्वप्नवासवदत्ता) । परन्तु जब सानी बुहारीको व्यवहार देख्तथिन् उनको मुटुले ठाउँ छोड्-



दथ्यो—....।—रुद्रराज (रूपमती) । माँगको यस्तो निर्दयता देखेर एथेन्जका मानिसहरू हताश भएका थिए, बर्सौंनि सबका मुटुले ठाउँ छोड्दथ्यो,....। —खड्गमान ( ग्रीस र रोमको दन्त्यकथासंग्रह ) ।

**मुटुले(मा) ढ्याङ्ग्रो ठोक्नु (ठटाउनु)**—=डरले मुटु ढुकढुक गर्नु । घोडाले टिपेर लाँदा त मेरो मुटुले ढ्याङ्ग्रो ठोकेको थियो । तैपनी सौता भने पछि आइमाईको मुटुमा ढ्याङ्ग्रो ठटाउन लागिहाल्द छ।—रुद्रराज (रूपमती) । झन् पंकाउ खाए पछि त तेरो मुटुले चाइने ढ्याङ्ग्रो ठोक्न थालिहाल्यो—अनि त किन चाइयो र—यो पनि होइन, त्यो पनि होइन भन्न लागिस् ।—ग्रन्थकार (कथा कुसुम) ।

**मुट्ठी कस्नु**—(१)=दिनामा वा खर्च गर्नामा किफायती हुनु वा लोभ गर्नु ।....यसको प्रायश्चित्तको निमित्त हाल जे मिलेका हातपारी मुट्ठी कसी तपाईको निमित्त राखेकीछु ।—भवानी ( यौवनको आँधी ) । (२)=मुक्का जमाउनु । लालेलाई एक मुट्ठी कसेको त ढुनमुनिइहाल्यो । (३) साधारण अर्थ । भुकेलाइ साह्रै बल परेछ क्यारे, बेसरी मुट्ठी कस्यो ।

**मुट्ठीको *माखो* (झिंगा)**—(१)=पूरा अधीनको मान्छे । काजी बिलकुल बिजुली प्रसादको मुट्ठीको माखो बनिसकेका थिए ।—रुद्रराज ( चप्पा काजी ) । (२) साधारण अर्थ ।

**मुट्ठी गरम गर्नु**—=बकसपात वा घूस दिनु । पहिले मुट्ठी गरम गर, अनि तिम्रो काम बन्छ ।

**मुट्ठी फुकाउनु, खुकुलो गर्नु**—(१)=खर्च गर्नु, दाम पैसा उडाउनु, दानी हुनु । पोइ त किफायती हो, स्वास्नीचाहिं मुट्ठी फुकाउँछे (वा खुकुलो गर्छे) । अहिले तैंले मुठी फुकाउनु के छ आफ्नू बेइमानीपना देखाउनू छ ।—लेखनाथ (लक्ष्मी-पूजा) । (२) साधारण अर्थ । मान्छे जन्मँदा मुट्ठी कसेको हुन्छ, मर्दा मुट्ठी फुका-

उँछ । अलिकति मुट्ठी खुकुलो गर्‍यौ कि सानी छोरीले तिम्रो सुपारी खोस्न सक्छे ।

**मुट्ठी बाँध्नु**—=मुट्ठी कस्नु ।····मुठी बाँधी यहाँ आयो मुठी खोलेर जानु छ, न छन् मुकुन्द-का कोही न कसैको मुकुन्द छ ! —बालकृष्ण (मुकुन्द इन्दिरा)। ····मुखको आकार भारी क्लेश गराउने हुनलाग्यो; हातमा बलियो मुठो बाँधियो ।—शिवप्रताप (दुर्गेशनन्दिनी) ।

**मुट्ठीमा हुनु**—=वशमा हुनु । कहाँ जालान् हजुरकै मुठीमा त छन् ।—भीमनिधि (सहनशीला सुशीला) । (२) साधारण अर्थ । मेरो मुट्ठीमा के छ, भन्न सक्छौ ?

**मुट्ठी साह्रो हुनु**—(१)=दिनु भनेपछि पटक्कै मन नउठ्नु । भूइँचालो जानुअगाडि मेरो मुट्ठी साह्रो थियो, पछि त जिन्दगी के रहेछ जस्तो लाग्यो —अब साह्रो गर्ने मन लागेन । (२) साधारण अर्थ । ठूली छोरीको मुट्ठी चौपट्टै साह्रो छ, तिमी फुकाउन सक्तिनौ ।

**मुडुली माऊ माखा पोली खाऊ, सिस्नाको झाङमा लडीबडी जाऊ**—कपाल काटेर मुडुलो भएको केटाकेटीलाई गिज्याउने बोली ।

**मुडुलो र ठुडुलो**—= टोपी नलाएको र अर्धनाङ्गो ( प्रायः आमाबाबु खस्ता) । म मर्दा यी छोराहरूले पनि एक पटक मुडुलो र ठुँडुलो हुनुपर्छ ।

**मुडे बल**—=शरीरको बल । मुडे बलले यो गारो लड्दैन, अलिकति अक्कल लडाउनुपर्छ ।

**मुढा जोर्नु, जोत्नु**—=दुइटा मुढा जोरी आगो बाल्नु । जाडो भयो, मुढा जोर्नुपर्‍यो ।

**मुद्दा चलाउनु**—=इनसाफको निमित्त अड्डामा झगडा पेश गर्नु । वेलले त्यो कम्पनीको नाउँमा मुद्दा चलायो ।—जितेन्द्र (आधुनिक आविष्कार) ।

**मुद्दा लड्नु**—=वादी प्रतिवादी गरी झगडा गर्नु । मुद्दा लड्दा कति हानि हुन्छ तिमीलाइ थाहा छ ?

**मुन्टे ठिंगुरो**—=घाँटी र गर्धनभरको भाग । अस्ति गुह्येश्वरी



पूजा गरेको बोकेको मुण्टे ठिंगुरो मीठो थियो ।

**मुन्टो बटार्नु**—=रिसले वा बढेर लक्ष्यबाट टाउको मोड्नु । तिमीलाई भने पोथीको मायाले यहाँ सम्मको छुटिएर वस्नुपर्ला भन्ने डर, विह्वल भएको म माथि भने पचादिन पनी मन्टो बटार्ने कस्तो (हो ए) यो बानी ? —श्री केसर (विक्रमोर्वशी) ।

**मुन्टोले टेक्नु**—=लोट्नु, टाउकाको भर परेर पछारिनु । अनि चिच्याउँदै पहाडको टुप्पामा चढिन् र जानी जानी समुद्रका फिंजै फिंज भएका छालमा मुण्टोले टेक्न पुगिन् ।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथा-संग्रह) ।

**मुर्दा घाटको मशान झैँ**—सिनै सिनाको रास लागेको ठाउँलाई दृष्टान्त दिने । भगवतीको मन्दिर यस पालोको दसैंमा मुर्दा घाटको मसान झैं देखिन्थ्यो ।

**मुर्दा घाटको मूसा झैं**—आशाले ढुकना थापेर बस्नेलाई भन्ने [कुन वेला मुर्दा पोलिसकेर चिता पिण्ड दिन्छ र सो पिंड (चावल) खाउँला भनी मूसो ढुकिरहन्छ] ।

**मुलुक घुम्नु**—(१)=धेरै ठाउँमा खोज्नु वा जानु (को अत्युक्ति) । मुलुक घुमिसकें द्वारे दीलाई भेट्टाइनँ । (२) साधारण अर्थ । उहाँले त धेरै मुलुक घुमिसक्नुभएको छ, यो कुरा जरूर थाहा होला ।

**मुलुक मार्नु**—(१)=धेरै जनाको पैसा हडप गर्नु । जगजित लामाले मुलुकै मार्‍यो, हुँदा हुँदा मेरो सानी छोरीको समेत पैसा परेछ । (२) ठूलो बहादुरी कामको दृष्टान्त दिंदा । त्यति जाबो काम गरेको उसलाइ मुलुकै मारे जत्तिको भइरहेछ । (३)=मुलुक जित्नु । मुकुन्दसेनले मुलुक मार्न नजानेको र तँ फुस्राले खिर खान नजानेको (उखान) ।

**मुस्मुसे गन्ध**—=टाढैदेखि थाहा हुने मीठो गन्ध (प्रायः दन्त्यकथामा राक्षसले मान्छेको गन्ध पाउँदा भन्ने) ।

**मुस्लो छुट्नु, उठ्नु**—=जोडदार प्रवाह निस्कनु (अक्सर धूवाँ, पानी, रगतको; 'धूवाँ' मा

मात्र उठ्नु पनि प्रयोग हुन्छ)। डाक्टरले चक्कु जोरेको मात्र थियो खटिराबाट रगत र पीपको **मुस्लो** छुट्यो। पोली दिये रिस गरी, सहसा धुवांको। **मुस्लो** उठ्यो, सब उड्यो उसमा वहाँको ॥—लेखनाथ (सत्यकलिसम्वाद)।

**मूतको न्यानो**— = क्षणिक आनन्द (निद्रामा पिसाप खुस्काउने मान्छेलाइ चाँडै नै चिसाले डाम्ने हुनाले)। अघि मारेको त्यतिका दाम त **मुतको न्यानो** मात्र भयो, सबै गइहाल्यो। धन् संपती सकल चिज् **मुतको नियानू** ।—राजीवलोचन (केदारकल्प)।

**मूर्छा आउनु**— = मूर्च्छा पर्ने रोगले आक्रमण गर्नु। बाटमा **मूर्छा आयो** भने, आजको दिनमा कस्तो जात्रा होला ! —बालकृष्ण (अन्धवेग)।

**मूर्छा खानु, पर्नु**—(१) = गश खानु, छक्क पर्नु। सानुछोराले घोडा चढेको देख्ता जङ्गवीर लामाले **मूर्छा खायो**। (२) साधारण अर्थ। मेरी भदैको **मुर्छा खाने** बेथा छ। म ऐले **मूर्छा परें** भने के गर्न आँटेको छ ?—बालकृष्ण (अन्धवेग)।

**मूल फुट्नु**— = पानीको मूल जमीनबाट निस्कनु (भल बगेकोलाइ दृष्टान्त दिंदा पनि)। शिवमायाको घाउ निचोर्दा त **मूल फुटे** जस्तो गरी पीप र रगत आयो।

**मूला काटे झैं**—छट्ट काट्ने कामलाइ दृष्टान्त दिने। भोटको लडाइँमा पनि उनले भोटेहरूलाई **मुला काटे झैं** काटेर श्यावासी लुटेका थिए।—रुद्रराज (चप्पाकाजी)।""आफ्ना बाबुको तेज तरवारले आफूमाथि आइलाग्ने जङ्गली जानवरहरूलाई **मूला काटे झैं** गरी सखाप पारे। —खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)।

**मूसाले धान ओसारे जस्तो**— अलि अलि गरेर धेरै माल लाँदा दृष्टान्त दिने। तिम्रो घरबाट गोथेले **मूसाले धान ओसारे झैं** गर्दै आफ्नो घर भरिसक्यो।

**मूसाले बोडी घिस्याए जस्तो** —केही माल लतारेर लाँदा



दृष्टान्त दिने।

**मूसो छिर्न नदिनु**— = कसैलाई पनि पस्न वा निस्कन नदिनु। बाहरू प्राइभेट गर्न लाग्नुभएको छ, यहाँ **मूसो छिर्न नदेऊ**। (साधारण अर्थ पनि)।

**मूसो पनि नहुनु, नआउनु,** *इत्यादि*— = एउटा मान्छे पनि नहुनु, नआउनु, इत्यादि (लाई जोड दिंदा)। साहिंलीदीको घरमा गएको त **मूसो पनि** रहेनछ। हाम्रा त खोई एउटा **मुसो पनी आउँदैन** भन्ने कतिलाई पीर थियो।—रुद्रराज (रूपमती)।

**मूसो बनाउनु**—(१) = कायममा ल्याउनु, कायल कायल पार्नु। उनकी धर्म पत्नीमा के छ र त्यसरी उनलाई **मुसो बनाएर** राख्न शकेको होला ? —रुद्रराज (रूपमती)। (२) साधारण अर्थ। बा, मलाइ मैनको **मूसो बनाइदेऊ**।

**मूसो रुझे (चुटिए) जस्तो**— निथ्रुक्क भिज्दा दृष्टान्त दिने। आज छाता नलिएर गएको त मुसलधारे झरीले **मूसो रुझे (चुटिए) जस्तो** रुझें (चुटिएँ)।

**मेख मार्नु**— = (१) = शेखी झार्नु, ईख फेर्नु, ठक्कर दिएर चेताउनु (मेख = कीलो; यो साधारण अर्थ प्रयोग हुँदैन)। मेरो **मेख मार्न** ल्यायो होला नाइँ एउटा ठिटी।—ग्रन्थकार (कथा कुसुम)। रागको द्वेषको **मेखमारी** दिनाऽस्, सात्विकी भावको प्रेम फैलाउनोऽस्,......।—धरणीधर (नैवेद्य)। अनी नानीको **मेख मर्ने** थियो।—रुद्रराज (रूपमती)। (२) = हदै पुऱ्याउनु, धितै मर्ने गर्नु। गंजसिङले त **मेखै मारेर** दुइ डोको चाक्सी पठाइदिएछ।

**मेजो पुऱ्याउनु**—(१) = पलेसा पार्नु (असल खराब दुवै कुरामा)। श्यामाले धेरै माल चढाएकी छ, त्यसको **मेजो पुऱ्याएर** खर्च दिनुपर्छ। (२) = भित्तैसम्म पुऱ्याएर नाजवाब पार्नु। जितमानलाई **मेजो पुऱ्याएर** लप्टन साहेबले जवाफ दिनुभयो (पहिले यसको अर्थ 'संतुष्ट पार्नु' थियो)।

**मेरो गर्धन माथि तिम्रो गर्धन तल**— = मेरो प्राण रहेसम्म

तिमी निर्विघ्न छौ ।

**मेरो गोरुको बाह्रै टक्का भन्नु** —=आफ्नो कुरालाइ रैनभर फरक हुन नदिनु । रफादफा मिलाउनुपर्छ, तिमीले पनि मेरो गोरुको बाह्रै टक्का भन्नु हुँदैन, उनले पनि ।

**मेलामेसाले आइपुग्नु**—=संजोगवश आगमन हुनु । मेलामेसाले आइपुगेको वेलामा एक हात ताश खेलौंन ।

**मेला लाग्नु**—(१)=तीर्थयात्रा, उत्सव, आदिमा मान्छेको भीड लाग्नु । धार्मिक जोश फैलियो—हिन्दुहरूको मेला लाग्यो ।—रुद्रराज (भारतवर्षको संक्षिप्त इतिहास, भाग २) । (२)=किसान मजदूरहरूले लिइने काममा लाग्नु । अब त पल्लो घरमा मेला लाग्ने वेला भयो ।

**मेलो न मेसो**—=डोको न डालो । मेलो न मेसाको कुरा गर्‍यो, पुग्यो ।

**मेलो (मेसो वा मेलोमेसो) पाउनु**—(१)=थाहा पाउनु । मालिक भित्र हो कि बाहिर हो, मैले केही मेलो पाइनँ । (२)=जान्नु । लौ, हजुर ! त्यस्तो भए हजुरले सब मेलो पाउनु भएकै राछौ ।—प्रेमराज (ससुराली) ।

**मैतालु मैयाँ**—=माइत धेरै बसेकी दुलही । ओहो, मैतालु मैयाँ बल्ल आइछन् !

**मै मत्ता**—=अहंकार । तिमीमा साह्रै मै मत्ता छ, एक दिन धोखा नखाई छोड्दैनौ ।

**मै हुँ भन्नु**—=म एक हुँ भन्नु । मै हूँ भनी कडकने बलिया विवेकी । बाँकी नरेशहरुका शिरमाथि टेकी ॥—लेखनाथ (सत्यकलिसम्वाद) ।

**मोज काट्नु, मार्नु, उडाउनु**—(१)=सोख गर्नु । यस पाला गोसाइँकुण्ड जाँदा खूब मोज काट्यौं । जे भए पनि अहिले मोज उडाएकै छन् ।—रुद्रराज (पायश्चित्त) ।

**मोल गर्नु, राख्नु**—यसको यति रुपियाँ हो भन्नु । यो साहूले मलाई ठग्न लाग्यो तिमीले मोल गरिदेऊन । 'यो आफ्नो मोल आफै गर्दछ'—बोधविक्रम (दस्यकथा) ।



**मोहनी लाउनु**—(१)=तन्त्र-मन्त्रद्वारा आफूपट्टि फर्काउनु वा आसक्त पार्नु । मोहनी हो भने—जानी नलाएको भए पनि—आफै लागेर उम्रेको झार जस्तै भए पनि—यो उल्टाइदिए हुन्थ्यो उल्टाउन हुने भए !—बालकृष्ण (अन्धवेग) । झन् पर जान्छु झन् माया लाग्छ मोहनी लायौ कि (झ्याउरे) । (२)=प्रेमासक्त पार्नु । मोतीका दाँत, हीराको जात हजुर्ले हाँसेको ! मोहनि लाग्छ, विछनै छ राम्रो हजुर्ले हाँसेको !—लक्ष्मीप्रसाद ( मुना-मदन ) । तिम्रो दाँतले मलाई मोहनी लायो ।

**मोहनी हराए जस्तो**—=टोलाएर बसिरहने मान्छेलाई दृष्टान्त दिने बोली । साहिंली आजकल मोहनी हराए जस्ती भैरहिछन्, छोरीचाहिं बिरामी भएर हो कि ?

**मोह पर्नु**—=मोहित हुनु । त्यसको आँखा देखे भने जङ्गलका पक्षी जनावर पनि मोह पर्छन् ।—भीमनिधि (सहनशीला सुशीला) ।

**मौका खोज्नु, ताक्नु**—=मौका हेर्नु । त्यस वेला यता काठमाण्डुका राजा जयप्रकाशमल्ल पनी मौका ताकी रहेकाथिए ।—अम्बिकाप्रसाद (नेपालको इतिहास) ।

**मौका गुमाउनु, चुक्नु**—=औसरमा भन्न, काम गर्न, इत्यादि नसक्नु, औसर खुस्काउनु । महारानीका गाथमा प्राण-बाधा परी सके पछी यो कुरा झूटो हो भन्ने ता जाहेर गर्‍यो तर च्यूँती वक्सियेन मौका चुक्यो ।—लेखनाथ (भर्तृहरिनिर्वेद) ।

**मौका छोप्नु**—=औसर आउनासाथ गरिहाल्नु । "यो मौका छोपी जान हामी शक्तैनौं, माफ रहोस्, जान नपरोस्"—श्री ३ चन्द्र (अमलेख—भाषण) ।···स्वार्थी सूदखोरहरूले···ऋणीलाई संकष्ट परेको मौका छोपी वेढब ब्याज घ्युखानी खोज्ने भई दुःखीहरू माथी झन दुःख थपिन जाने ···।—श्री ३ जुद्ध (भूकम्प-भाषण) । पण्डितजीले मौका छोपिहाले ।

—रुद्रराज (रूपमती) । यही मौका छोपेर स्वास्नीले पनि खोपामा नरिवल छ सिलौटामा फोरेर खा भनिहालिछ ।—बोध-विक्रम (दन्त्यकथा) ।

**मौका पर्नु, पाउनु**—=संजोग पर्नु । जब फतेहजंग महामात्य भएथे अनी महाराजलाई मनोरथ सिद्ध गर्ने मौका पर्न आयो । —अम्बिकाप्रसाद (नेपालको इतिहास) । त्यत्ति मौका पाएर त्यस दानवले एकापट्टि पाङ्ग्राको धुरा बङ्गाइसकेको थियो,'''।—बालकृष्ण (कथा कुसुम) ।

**मौका मिल्नु**—=संजोग मिल्नु । त्यो प्रस्ताव मिली सुमित्र र सती सुग्रीव सीता बने; को भन्दा म कमी थिएं यदि कुनै मौका मलाई मिले ।—बालकृष्ण (मटुको व्यथा) । मौका मिले दृढ भयङ्कर खोरबाट । गर्दैन सिंह किन डंकनलाइ आँट ॥ —लेखनाथ (सत्यकलिसम्वाद)।

**मौका हेर्नु**—=संजोग पर्नासाथ (केही काम) गर्नालाई पर्खिरहनु। मौका हेरिरहेछु, ठाउँ खाली हुनासाथ मालिककहाँ कराउँछु । तस्मात् कुरा र सल्लाह आवश्यक बुझीकन । गर्नू-पर्दछ आफ्नैमा मौका हेरी बुझीकन ॥—बैजनाथ (उपदेश-शहस्री) ।

**म्याद गुजार्नु**—(१)=अवधि नाघ्नु (ऐनको बोली; प्रायः 'टायममा प्रतिवादी दिन वा अड्डामा हाजिर हुन नसक्नु' भन्ने अर्थमा प्रयोग हुन्छ) । यो मुद्दाको झगडियाले म्याद गुजार्‍यो ।

**म्याद पुग्नु**—(१)=मर्नु, मर्ने वेला हुनु । बिचरा मकरध्वजको म्याद पुगेछ । (२) साधारण अर्थ ।

**म्याद भुक्तान हुनु** (अदालतको बोली)—(१)=तोकेको अवधि भोगेर सिद्धिनु । यो कैदीको हिजो म्याद भुक्तान भएछ । (२)=अवधि खतम हुनु, भाका पुग्नु (कागत पत्रको बारे) । तिम्रो तमसूकको म्याद भुक्तान भएछ ।

**म्वाइँ खानु**—=चुम्बन गर्नु । दुलहीले छोरीहरुलाई म्वाइँ खाँदा खाँदा त्यसै आधा दिन



बिताई ।—बालकृष्ण (कथा कुसुम)।

**म्वाइँ दिनु**—=म्वाइँ खानु (प्रायः केटाकेटीलाई भन्ने) । "म्वाइँ देउन त," झटकले आग्रह गरे ।—विश्वेश्वर (कथा कुसुम) ।

## य्

**यताउता गर्नु**—(१)=जेतेमेते काम गर्नु ('यताउता गर्नु' मा 'हिंड्नु' को अर्थ छ; 'यसोउसो गर्नु' ले चाहिं 'एकै ठाउँमा बसी' भन्ने अर्थ दिन्छ)। एउटा मान्छे दिनुभए यताउता गर्न सजिलो हुन्थ्यो । (२)=हिनामिना गर्नु, ख्वाकब्वाक गर्नु । भोजनको सर्दाम चनखलाई जिम्मा लाइदिएपछि यताउता गर्ला भन्नुपर्दैन । (३)=आलेटाले गर्नु, लरखर गर्नु । दश बजिसक्यो, अझ तिमी त यताउता गरिरहन्छौ । (४)=यताको कुरा उता उताको कुरा यता ओसार्नु । अरू कुरा त त्यस्तै हो हरिमायाको यताउता गर्ने बानी त छैन ।

**यताउति (ता) नहुनु**—(१)=चलाक वा छक्कापञ्जा भएको नहुनु । बल्नेत यताउति छैन, एकहरो काम मात्र गर्छ, के गर्नु! (२)=आमदानी, आधार दिने, इत्यादि नहुनु । माइज्यूको यताउति छैन, तिमीले नहेरी कसले हेर्छ? (३)=यताउति लागेको (१हेर) नहुनु । अहिलेसम्म त मेरो छोरा यताउति छैन, पछि कस्तो हुन्छ । (४) साधारण अर्थ । भने जस्तो बाबरलेट यताउति छैन, सहरै जानुपर्छ ।

**यताउति लाग्नु**—(१)=स्त्रीसंबन्धी कुलतमा लाग्नु । दुग पट्ठो भइसक्यो, यताउति लाग्ला याद राख । (२) साधारण अर्थ । गिलासको यताउति लागेको ओखती पनि औंलाले सोहोरेर खाऊ, नत्र मात्रा पुग्दैन ।

**यताको उता उताको यता गर्नु**—(१)=यताको कुरा उता उताको कुरा यता लाउनु । यताको उता उताको यता गर्न लागिस् भने आखिरमा तेरो जीउले दुःख नपाई छोड्दैन ।

(२)=ल्वाकब्वाक पार्नु। तैंले थन्क्याउँदा यी कागतहरू यताको उता उताको यता गरिदिइछस्।

**यता न उता**—(१)=अलपत्र। उहाँले छाडेर जानुभयो मत यता न उता भएँ। (२)=यस पक्ष वा कामतिर पनि छैन उस पक्ष वा कामतिर पनि छैन। धनसिङ यता न उता कतैतिर पनि छैन।

**यति...उति...**—असंख्य भन्ने जनाउँदा प्रयोग हुने। यति मरे उति मरे डुबिकन भन्छन्। गङ्गाजिमा भएको, हौरा सबै गर्छन् ॥—शिखरनाथ (गंगा-माहात्म्यको सवाई)।

**यत्रो छत्तीस मासको दिन**—यति लामो दिन। ए, बिहान त मैले पर्खी भनेछु, अँ, यत्रो छत्तीस मासको दिन कता गयो ?—बालकृष्ण (कथा कुसुम)।

**यत्रो मुख लाउनु**—=साह्रै अँध्यारो मुख गर्नु (यो वाक्यांशको साथसाथै औंलाले सानो भन्ने भाउ लाउछौं)। सान्चा खेलेर बसिरहेको थियो, पढ् भनेको त यत्रो मुख लायो।

**यमपुरीको वास**—=मृत्यु।

**यमराजका दूत (यमदूत) जस्ता**—धरपकड गर्न आउने सिपाहीहरूलाई दृष्टान्त दिने। म्याद पुगेपछि यमराजका दूत जस्ता सिपाहीहरू आएर घेरा दिनेछन्, सापटी पाउँदैमा किन फुर्फुरिन्छौ ?

**यमराजको पाहुना बन्नु**—=मर्नु। जसले मलाई यहाँ मार्न ल्याएथ्यो उ आँफै यमराजको पाहुना बन्न गयो।—बोधविक्रम (दन्त्यकथा)।

**यश कमाउनु, लुट्नु**—=सुविख्यात हुनु। यो श्लोक लेखेर तिमीले ठूलो यश कमायौ।

**यश गाउनु**—=तारीफ गर्नु। प्रह्लाद, अब देवता बस्छन् निर्धक्क भै तिम्रा यश गाई।—बालकृष्ण (प्रह्लाद)।

**यसै छैन (भएन) उसै छैन (भएन)**—जे गर्दाखेरि पनि खुशी तुल्याउन नसकेकोमा विरक्त भई केही कुरा आँट्ता प्रयोग हुने। यसरी जातै लिन-लागे पछि यसै छैन उसै छैन किन चूप लागेर बस्थें भकुरि



दिएँ।—रुद्रराज (रूपमती)।

**यसो उसो गर्नु**—=यता उता गर्नु (१)। अब भैहाल्यो भैहाल्यो यताबाट घुमेर गुजेश्वरी जाऔं, अनि उतैबाट घर जाऔं, यसो उसो गर्दा अबेर भइसक्यो, यहाँ कति बेर उभिइरहने, अरूले के भनिठाने होलान्!—बालकृष्ण (अन्धवेग)।

**यहाँ कि त्यह हुनु**—=खुशीले फुर्फुरिनु। आज सानीको लोग्ने आइपुग्ने हुनाले उसलाई यहाँ कि त्यहाँ भइरहेछ।

**यहाँ (यता) पनि छैन उहाँ (उता) पनि छैन**—(१)=वरत्र पनि छैन परत्र पनि छैन। यस्ता अधर्मी पापीलाई यहाँ पनि छैन उहाँ पनि छैन। (२)=दुवै पक्षमा मिलेको छैन। मैना भने यहाँ पनि छैन उहाँ पनि छैन।

**यहींको त्यहीं**—(१)=खोजे वा हेरेको ठाउँको ज्यादै नजीक (वरको कुरा नदेख्ता वा नपाउँदा प्रयोग हुने बोली)। चश्मा मैले भनेको ठावैंमा त रहेछ नि, कस्तो आँखा, यहींको त्यहीं पनि नदेख्ने! (२)=नजीक। फिस्टुको घर यहींको त्यहीं त छ नि, पानबट्टा ल्याउन कति बेर लाग्छ र ?

**यही सही**—=भइगयो हुन्छ (असल कुरा संझाउँदा पनि आफ्नो कुरा नछाडिदिंदा बेवास्तासंग मञ्जूर गर्न पनि प्रयोग हुने)। मैले तिम्रै असलको निंति भनेको हुँ, ढिपी गर्छौ भने यही सही।

**याँ त्याँ (यै तैँ) भन्नु, गर्नु**—=बथुवाइ वा बेमञ्जूरी गर्नु। खेल्ने वेलामा सबै मिलेर खेल्ने, अहिले सिद्धि बहादुरकहाँ गएर याँ त्याँ भन्ने ?

**यिन ताक**—(१)=आजकल। यिन ताक हरियो कांक्रो पाइँदैन ? (२)=यस समयमा। इन ताक यौटा देश देखी अर्को देशमा माल लगी वेच्ने काम एक थरीका गोसाईंहरू र काश्मिरी मुसलमानहरू गर्थे।—सूर्य्यविक्रम (पृथ्वीनारायण शाह)।

र्

**रक्तको (रगतको) हाँडी पिया-उनु**—=अति गोता खुवाउनु। जुवा खेलेर जेठो छोरोले मलाई **रक्तको हाँडी पियायो।**

**रगतको अक्षरले लेख्नु**—ज्यादै दुःखदायी घटना वा कुराको बारे प्रयोग हुने। रात परे पछि उसले आफ्नो काम संझी···· सेतो हिउँको पातामा रातो **रगतको अक्षरले लेख्न** लायकको आफ्नो इतिहास मूर्ख भएर संझी।—बालकृष्ण (कथा कुसुम)।

**रगतको आँसु चुहाउनु**—=साह्रै सुर्ता मान्नु (प्रायः अन्यायमा पर्दा)। केवल घरको एक कुनामा एउटी अवला स्त्री **रगतको आँसु चुहाइरहेकी** थिइन्।–रुद्रराज (चप्पाकाजी)।

**रगतको** *खोलो* **(धारा) बग्नु**—(१)=खूब मारकाट हुनु। दुइ थरीको घोर घमसान पर्‍यो, **रगतको खोलो बग्न** थाल्यो। (२)=खूब रगत निस्कनु। **बग्यो प्यारो रगतको धारा!**—बालकृष्ण (प्रह्लाद)। सेतेको घाउबाट **रगतको खोलो बगिरहेछ।** (३)=रगत मिसिएको पानीको कुलो बग्नु।

**रगतको छापा लाउनु, मार्नु**—राँगोबोको छिन्न नसकेकामा मार हान्नेलाइ लज्जित पार्न उसको आङमा रगतमा चोपेको हातले धाप दिनु। थुक! त्यत्रो बोको पनि छिन्न नसक्ने, **रगतको छापा लाइदेओन ए!**

**रगतको नाता**—प्रायः बाबुआमा र छोराछोरीको वा सहोदरको साहिनुलाइ प्रयोग हुन्छ।···· त्यो भाग्यवन्त को होला, **नाता** धोएर रक्तको शुद्ध सेतो लुगा लाइ दियो वेदाग देहमा, बन्यो आफू सुखी, पार्‍यो आफ्नोलाई पनी सुखी!—बालकृष्ण (मुटुको व्यथा)।

**रगतको पसीना चुहुनु**—=मरी मरी परिश्रम गर्नु। मालिकले **रगतको पसिना चुहाइ** २ कन कमाएको पैसा यसरी सक्न पाइँदैन।—रुद्रराज (रूपमती)।



**रगत चढ्नु**—(१)=(मुख, नङ, गाला, इत्यादिमा) लाली देखिनु, भित्रपट्टि रगत बढ्नाले वा सर्नाले गुलाफी हुनु। रसादिले फाइदा भएछ, अब त तिम्रो गालामा **रगत चढ्यो।** (२)=रगत अर्पण गरिनु। "महारानी, तिमी त सज्ज रहिछयौ, हिंड, बढ, सत्य **रगत चढाइन** योग्य छ, बाजा, बाजा!" —बालकृष्ण (कथा कुसुम)।

**रगत चुस्नु**—(१)=(गरीबले) दुःख गरी कमाएको पैसा लिनु। (२)=(धामीले) दुखेको ठाउँमा सियोले गोपी हाड वा सीङमा मुख लाएर त्यस ठाउँबाट रगत थुत्नु। तिमीले भनेको झाँकीलाइ **रगत चुस्न** लाएपछि मेरो गोलीगाँठामा दुखेको हरायो। (३) साधारण अर्थ (प्रायः रिसाउँदा प्रयोग हुन्छ)। भोकको रापले त्यस्तो शुकेको **रक्त चुस्तथे** लामखुट्टेहरू आई तीखो जिब्रो घुसाउँदै,····।—बालकृष्ण (मुटुको व्यथा)।

**रगत चुहुला जस्तो**—रगत सरी वा चढी ज्यादै रातो भएको गाला, हतकेला, आदिलाई दृष्टान्त दिंदा प्रयोग हुने। हेर, **रगत चुहुला जस्तो गाला!** —यस्तो घाममा दगुर्नु हुन्थ्यो?

**रगत पिउनु**—=रिसमा प्रयोग हुने। मेरा छोराछोरीलाई हात हालिस् भने तेरो **रगत नपिई** छोड्दिनँ।

**रगतमा चोप्नु**—(१)=काट्नु, मार्नु। तेरो जीवनको लीला समाप्त अब गर्दछु, तेरै **रगतमा चोपी** म यही तलवारले सरासर गई काट्छु इन्द्रलाई र देवता सारालाई,·········।—बालकृष्ण (प्रह्लाद)। (२) साधारण अर्थ। संह्लाद, रक्तहीरा यो, हो, मलाई सुहाउँछ शत्रुको **रक्तमा चोपी** ल्याएको होस् भने!—बालकृष्ण (प्रह्लाद)।

**रगत सुक्नु, सुकाउनु**-(१)=रजस्वला हुन छाड्नु, छुटाउनु। बयसट्ठी वर्ष लागेदेखि धामाको **रगत सुक्यो।** (२)=दुब्लाउनु, परिश्रम गरेर जीउ खियाउनु। मेरो गालाको **रगत**

पनि शुकिशक्यो ।—बालकृष्ण (सुटुको व्यथा) । मात पिता सुत धन् जन भन्दा । बाँकि नराखि सुकाइस् रगत् ॥ —शम्भुप्रसाद ( शम्भु भजन-माला) । (३)=डर वा घृणाको आवेगले ज्यादै असर गर्नु । तपाईंको निःश्वासले मेरो रगत सुक्तै गएको छ ।—खड्गमान (अँध्यारोमा उज्यालो) ।

**रङ उड्नु**—( १ )=उत्सव आदिमा खुशियाली फैलनु । आज रामुको घरमा गानबजानको खूब रङ उडिरहेको थियो । (२)=उज्यालो वा घामले खुइलिनु । यो फरियाको कति चांडो रङ उडेको !

**रङ खानु**—(१)=दाँजिदा अर्को रङलाई फीका पार्नु । मेरो नीरले तिम्रो नीरको रङ कस्तरो खाइदियो, हेर ! (२)=(पासा पच्चीसको खेलमा) मुख्य रङको गोटी खानु । त्यसै पनि माथ हुन्छ भने रङ किन खानू ? (३) साधारण अर्थ । मूसाले यो जडारी रङ खाइदियो भने मरिहाल्छ नि ।

**रङ खेल्नु**—(१)=फागुमा रङ घोलेको पानी पचका वा अरू भाँडाले हालाहाल गर्नु । यस पाला दूबे चोकमा बेसरी रङ खेल्यौं । ( २ )=( पच्चीस, पासा, आदिमा ) मुख्य रङको गोटी मात्र चाल्नु । (३)=ताशको खेलविशेष खेल्नु । तिमी रङ खेल्न जान्दछौ ? (४) साधारण अर्थ । टेबिलमा राखेको रङ खेलेर नानीले लुगा छुटछाट पारेछ ।

**रङ चढ्नु**—(१)=नसा लाग्नु । गोथेलाई अलि अलि रङ चढिसक्यो । (२)=रञ्जित हुनु । नकली रङ्ग चढाएको मणि पारखीको दिलमा घुस्न नशके झैं भिन्न रस नभए पछि प्याराको····परिपाठ पनी स्वास्नी मानिसको मनले खाँदैन ।—श्री केसर ( विक्रमोर्वशी ) । जती हेर्‍यो उती राम्रो रङ्ग आकाशमा चढ्यो । मेघको विजुली-रूप झण्डा विजयको गड्यो ॥ —लेखनाथ (ऋतु-विचार) । (३)=बोट बिरुवाहरू हरिया भरिला हुनु । अब वसन्त आयो, बगैंचाको रङ चढिसक्यो ।

**रङ चोर्नु**—(१)=(हेर्ने ऐनाले) चेहराको अर्कै रङ देखाउनु । यो ऐनाले रङ चोर्दो रहेछ, कस्तो पहेंलो देखिएको ! (२) साधारण अर्थ ।

**रङ हाल्नु**—(१)=( फागुमा ) रङ घोलेको पानीले भिजाउनु । राधिकाले कृष्णलाई रङ हालेको तस्वीरमनि यो टेबिल राख । (२) साधारण अर्थ । अस्ति रङ हालेको बट्टा कहां छ ?

**रङ्ग ढङ्ग नदेख्नु**—=हुने वा सक्ने छाँट नदेख्नु । म त जसवीरको रङ्गढङ्ग देखिनँ, यस पाला कसरी पास होला !

**रङ्ग न ढङ्ग**—(१)=वाहियात, सित्तैं (एक्लै वा, 'को, सँग, सित' जोडिएर प्रयोग हुन्छ) । रङ्ग न ढङ्गको कुरा गर्ने ! रङ्ग न ढङ्ग-सँग अर्कालाई कुटेर गएपछि त्यस्तै हुन्छ त । सतरञ्जामा थुक्ने हो ?—कस्तो रङ्ग न ढङ्गको मान्छे ! हो त, उसै फतफत गरिरहने, रङ्ग न ढङ्ग ? (२)=(साधारण अर्थ) रूप न सीप । रङ्ग न ढङ्गको मान्छे किन अघि सर्नुपर्‍यो ?

**रङ्गमा भङ्ग**—=सुख शान्तिमा बाधा । कस्तो रमाइलो खेल भइरहेको थियो, यसले झगडा गरेर रङ्गमा भङ्ग पारिदियो ।

**रटना लिनु**—=ध्याउन्न गर्नु । रातदिन त्यही कुराको रटना लिइरहेपछि चाँडै नै पारङ्गत हुन्छौ ।

**रत्न बन्नु, हुनु**—=असल बन्नु, हुनु । यहाँ मात्र यो यस्ती चण्डाल्नी छ, सासूको अगाडि गएपछि त किन चाहियो र; रत्न बनिहाल्छे नि ।

**रनाहा छुट्नु, लाग्नु**—(१) =रिसले अन्धो हुनु । (२) =रन्थनिनु, ढुनमुनिनु (शारीरिक वा मानसिक आघातले) । दलिनले निधारमा लाग्दा रनाहा लागेर तीन फन्का घुमें ।

**रनाहा लागे जस्तो हुनु**—असह्य शोक सन्ताप वा फसादमा पर्नु । छोरी हराउनाले रनाहा लागे जस्तो भएर कालु दौडिरहेको थियो ।

**रन्का छुट्नु**—=रिसले अन्धो

हुनु । जति सम्झ्यो उति रन्का छुटेर आउँछ ।—रुद्रराज (रूपमती) ।

**रप्फू भर्नु**—(१)=(कुरा) बढाउनु, (कुरामा) बुट्टा भर्नु । तिमीले यो कुरामा रप्फू भरेको रहेनछौ भने म जे भने पनि सक्छु । (२)=सियोले खुटी धागैधागोले जेलेर मात्र प्वाल टाल्नु (यस अर्थमा 'गर्नु' पनि प्रयोग हुन्छ) । मेरो लुगामा कहाँबाट कुर्येत्रो लागेछ, नदेखिने गरी रप्फू भरिदेऊ ।

**रमरम पिरो**—=अलि अलि पिरो । सानीले बनाएको अचारमा रमरम पीरो थियो ।

**रवाफ राख्नु**—(१)=प्रभाव बढाउनु ।....तिमी अफिसर पगरीहरू सबैले....आफ्नो प्यारी जन्म-भूमि र सरकारको रोबरवाफ राखनु-पर्दछ, राखन्यै-छौ ।—श्री३भीम (नगर-प्रदक्षिणोत्सवको वक्तृता) । (२)=धाक देखाउनु । हाम्रो अगाडि त्यसले रवाफ राखेको पो त ।

**रस न बसको**—=नीरस, रूखो, (मानिसको बारे) । यिनी त के चुपो लागेर बसेकी, छिः रस न बसको मान्छे ?

**रसबस जानु, हराउनु**—=(पहिको) चाख वा रउस हट्नु । ....अब यो दुनियाँ बाट मेरो रसबसै गयो, पवित्र स्वादमा पल्की जे पनी न मिठो भयो । —बालकृष्ण (ध्रुव) ।

**रसबस हुनु**—=हिमचिम हुनु । सेतेसित मेरो रसबसै छैन, कहाँ कोदालो माग्न जानु !

**रस बस्नु**—=लत लाग्नु, चाख लाग्नु । एक दुइ हात पासा खेलेदेखि अम्बर बहादुरलाई त्यसैमा रस बस्यो ।

**रस लिनु, चुस्नु**—(१)=मजा वा सार लिनु । मैले यो कितापको रस लिइसकें । (२) साधारण अर्थ । सागरी, हेर मालामा भमरा, फूलको रस चुस्ता चुस्तै उसैमाथि निंदाएछ, उसैसित उनिएछ संगै हेर मालामा ।—बालकृष्ण (प्रह्लाद) । भमराले फूलको रस लिइरहेछ ।

**रहँदा बस्ता**—=बस्ताबस्ता



केही कालमा । रहँदा बस्ता.... कुनै देवताले तिनको मनलाई सान्त्वना दिन दुइटा राम्रा जम्ल्याहा पठाइदिए ।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह) ।

**रहमा डुङ्गो हाले झैं**—अति धेरै वा ठूलो कुरामा मिसिई बेपत्ता हुने वा जति गरे पनि असर नदेखिनेमा दृष्टान्त दिने बोली ।

**रहरेको खहरे पुऱ्याउनु**—=आग्रह गरेकोमा स्वाद चखाउनु (स्वभावतः हुने खराब परिणामको) । मसित कुश्ती खेल्न राधे जमजमाएको थियो, मैले रहरेको खहरे पुऱ्याएर तीन बल्ड्याङ खुवाइदिएँ ।

**राँके भूत**—=दलदले इत्यादिको माथि राती आगो हिंडेको जस्तो देखिने ग्याँस, मिथ्याग्नि,(कोही-कोही यसलाई भूतै संझन्छन्) । पिशाच चतुर्दशीका दिन मसान घाटमा राती राँके भूत हिंड्छन् भनेको हो त ?

**राँको छुट्नु**—(१)=ठूलो पीर पर्नु । विवेक-शील-जन हो ! गर चिन्तन चित्तमा । खोका हृदयमा कस्तो राँको छुट्ला उ कालमा ?—बैजनाथ (उपदेशशङ्खो) । (२)=कडा दुर्गन्ध निक्लनु । त्यहाँ गूको राँको छुटिरहेछ, अहिले नजाऊ । (३)=आगोको मुस्लो निस्कनु । त्यो अघिसम्म पिलपिल गरिरहेको थियो एक छिनमै राँको छुटेर बल्न थाल्यो ।

**राँगाको गोठ पसे जस्तो**—हुरुरु थुप्रै भई पसेर भाङभुङ गर्दा दृष्टान्त दिने । त्यतिका मान्छे राँगाको गोठ पसे जस्तो गरी आइलागेपछि हामी दुइ जनाको के लाग्थ्यो ?

**राँगो ब्याई पाडो ब्या(पा)उनु**—असंभव कुरालाइ जनाउँदा प्रयोग हुने । तिमीले आँटेको कुरा पुग्नु त राँगो ब्याई पाडा ब्याउनु जस्तै हो ।

**राँडले पालेको साँढ**—=विधवाले पुलपुल्याएर पालेको छोरो, हत्तपत्त कसैले तह लाउन नसकिने । राँडले पालेको साँढ, त्यो सेते उसै मिजासमा आउँछ र ?

**राँडाको छोरा (बाघु)**—कहिले ठट्टा कहिले रिसमा नाउँ जस्तो

गरी प्रयोग हुने । घर घरै डुल्न पाए त अलिकति गुठिल पनि जम्मा गर्न पाइन्छ, जुवामा लक्कुका लक्कु थाप्न पाइन्छ, **राँड़ाका छोरा हो !**–रुद्रराज (प्रायश्चित्त) । राणाको छोरो अहिले मोर्ने थाहा पाएको भए त किन अवि झगडा गर्थ्यो ।—ग्रन्थकार (कथा कुसुम) ।

**राँड़ी( डे ) मासु**—पोइ मरेको वर्षभित्र विधवा मोटाउँछे भन्ने विश्वासबाट । साहिला गुरुङकी स्वास्नीलाई **राँडी मासु** लागेछ ।

**राँडी[मगर्नी]ले पालेको सुँगुर जस्तो**–मोटाएको मान्छेलाई हेला गरी दृष्टान्त दिंदा प्रयोग हुने । ओहो ! आजकल त जसे घर्ती पनि **राँडीले पालेको सुँगुर झैं मोटाएछ** ।

**राग ढाल्नु**—=गीत गाउनु (प्रायः गिज्याउँदा प्रयोग हुने) । सेरबहादुरले हिजो खूब **राग ढालिरहेको** सुनेथें ।

**राग लिनु**—(१)=तान छोड्नु । भर्खर अलि अलि **राग लिन** सिकिरहेंछु । (२)=( घोडा चढ्दा ) जाँघले च्याप्नु । राओसंग **राग लिन** त जानेको छैन, यस्ता मान्छे सवार !

***राजकाज* (राज्य) चलाउनु**—=शासन गर्नु, राज्यको भार थाम्नु । अहिले आफ्नो **राजकाज चलाएर** प्रजा-मण्डललाई खुशीराजी राखी राज्यगरिबक्सेको छ ।—श्री केसर (विक्रमोर्वशी) । तसर्थ चाँडो उठ, कीर्ति पाऊ, वैरी जिती, **राज्य ठुलो चलाऊ** ;····। कोमलनाथ (कोमलगीता) ।

**राज गर्नु, गरिबक्सनु, हुनु**—=बस्नु (आदरको बोली) । भाग्यले महाराजको उहीं **राज** भयो ।—श्री अर्जुन (स्वप्नवासवदत्ता)। हामी दुवै जब जान्छौं उत्तमले पाओस् पुरा तातो छँदाछँदै त्यो **राज गरिबक्सेको** प्रभुको ठाउँ, पुत्रकी वामाङ्गीले पनी मेरो ठाउँ पाओस् ! —बालकृष्ण ( ध्रुव ) । पहिले मलाई छोडेर हजुर एकछिन पनी अन्त **राज हुँदैन** थ्यो ।—लेखनाथ (भर्तृहरिनिर्वेद) ।

**राजाको राँगो फुके झैं**—बन्दे-



जमा रहेको मानिस एकदम फुका वा स्वतन्त्र हुँदा दृष्टान्त दिने बोली । मीनपचासको बिदामा विद्यार्थीहरू **राजाको राँगो फुके जस्ता** हुन्छन् ।

**राजाभन्दा धनी**—आग्रह गरेको कुरा वा कुनै कुरा धेरै पाउँदा खुशी भएर भन्ने बोली । संधिनीले एक डालो मस्यौरा ल्याइदिनुभएछ म त **राजाभन्दा धनी भएं** ।

**राजाले कुकुरको बच्चा हेर्न पठाए जस्तो**—जति अह्रायो उति मात्र गर्ने, आफ्नो बुद्धि खेलाएर त्यसभन्दा बढ्ता काम गर्न नसक्ने मान्छेलाई दृष्टान्त दिंदा प्रयोग हुने (राजाले एउटा नोकरलाई कुकुरको बच्चा हेर्न पठाउँदा एकै चोटि सबै कुरा बुझेर आउने बुद्धि नपुगी—कति ओटा बच्चा ? भाले कति, पोथी कति ? कुनकुन रङ्को ? इत्यादि सोध्न कैयन् पटक त्यस नोकरले जानुपरेको कथाबाट) ।

**राज्य दिनु**—(१)=राजा बनाउनु । उहिलेका **राजा** उमेर पुगेपछि आफ्नो छोरालाई **राज्य दिई** वानप्रस्थाश्रममा जान्थे । (२) साधारण अर्थ । भूलको बदला **दिन्छु** ध्रुवलाई म **राज्य** यो,—····!—बालकृष्ण (ध्रुव)।

**राडो मचाउनु**—=दङ्गा गर्नु । देवरानीले **राडो मचाएको** किन कानमा पुऱ्याउँ—····।—रुद्रराज (रूपमती) ।

**रात काट्नु**—=रात बिताउनु । हो, रातमा भने सँधै फुरसत नै जस्तो हुन्छ, हेर्छु कथाहरू कहिले, कहिले बत्ति कातेरै **रात काट्छु**,····।—बालकृष्ण (मुकुन्द इन्दिरा)। आउ उस्तो रुख मनि बसूँ र **रात काटूँ** ।—गम्भीर ध्वज (चन्द्रशेखर) ।

**रात छर्लङ्ग बित्नु, जानु**—=छर्लङ्ग रात····*इत्यादि हेर* ।

**रात पर्नु**—=रात्रिको समय हुनु । एक् दुइ फूल थियो त्यती पनि असल् पाजा भनो त्यो वस्यो । जस्सै **रात पऱ्यो** तहीं थुँनिन गो यस्तो विलौना गऱ्यो ॥—मोतीराम (मनोद्वेग प्रवाह) । घाम लागिरहेकोछ टण्टलापुर बाहिर कालो **रात पऱ्यो** भित्र, आस अस्ताउँदै डुब्यो,···।—

बालकृष्ण (मुकुन्द इन्दिरा)। रात पर्‍यो, तैपनि त्यो सानो डुङ्गा कालो पानीमा बेरोकटोक बगिरह्यो।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)।

**रात, राती**—('राती'को अर्को अर्थ 'रातो वर्णकी वा रङ्गकी' छाडेर) यी दुवै पदको उही अर्थ 'रात्रि' देखिन्छ तापनि प्रयोगमा केही फरक छ। 'राती'मा सप्तमी विभक्तिको अर्थ छ, 'रात'मा छैन; अर्थात्—राती=रातमा। मलाई राती निद्रा परेन ('मलाई रात निद्रा परेन' हुँदैन; 'मलाई रातमा निद्रा परेन' हुन्छ तापनि पहिलो जत्तिको राम्रो सुनिंदैन)। रात पर्‍यो ('राती पर्‍यो' हुँदैन)।

तर यो नियमका अपवाद पनि छन्:—**रातब्याल** एक्लै नहिंड। *दिनरात* (रातदिन) जूवामा लठ छौ। **राती** भइसक्यो, घर नजाने? **रात** बस्तै गरी गोदावरी जान्छु।

**राता रात गरेर**—=रात्रिको समयमा पनि काम गरेर। कहाँ राता रात गरेर आएं, हिजो भक्तपुरबाट दिउँसो ३ बजे हिंडेथें अहिले बिहान ७ बजे त यहाँ पुगिहालें।—रुद्रराज (प्रायश्चित्त)।

**रातो दिन**—=दिन पनि रात पनि (यही वाक्यांशमा मात्र 'रात' को 'रातो' हुन्छ)। रातो दिन महाराजलाई हर तरह टहल गरिरहेका छन्।—श्री अर्जुन (स्वप्नवासवदत्ता)। ····मलाई रातो दिन तिनकै मात्तै ध्याउन्न भइरहने हुनाले तिनको पत्ता नलागे सम्म पृथ्वीको वास्ता गर्न सक्तिन।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)।

**रातो मुख**—(१)=लाज मान्दाको अनुहार। मैले यो शब्द सोधेको रामुले भन्न सकेन—बिचराले रातो मुख लायो। (२)=रिसाएको अनुहार। अघि नै त्यति गरिदिए त भइहाल्थ्यो नि, तिमीहरूलाई रातो मुख नगरी नहुने! (३) साधारण अर्थ। यो पान खाऊ त, मुख रातो हुन्छ।

**रानु हराएको माउरी जस्तो**—मुख्य व्यक्ति, नेता वा टाउके नहुँदा अलमल्ल परेका अधीनस्थ



व्यक्तिहरूलाई दृष्टान्त दिंदा प्रयोग हुने। आजकल पण्डितजीका सारा परिवारै रानु हराएका माउरी जस्ता भइरहेछन्।

**रापतीको बाम पिटे जस्तो**—=खूब चुटाइलाई दृष्टान्त दिने बोली।

**रामकी दुहाई**—यो हिन्दी वाक्यांश 'हरे राम' को सट्टा हाम्रो भाषामा पनि प्रयोग हुन्छ।

**राम जाने**—(१)=मलाई थाहा छैन।····रामजाने फेरि कति दिन यस्तै हुनेछ।—भवानी (यौवनको आँधी) (२)=भगवान् साक्षी छन्। राम जाने मैले यस कुरामा बिराएको छैन।

**राम नाम जपे झैँ जप्नु**—(१)=आफ्ना उपर कसैले गरेको भलाईको बारेमा उसको नाम बराबर लिने गर्नु। काजीसाहबले मेरो छोरालाई जागीरे गराइदिनुभएकोले उहाँको नाम राम नाम जपे झैँ जपिरहेछु। (२) एउटै कुरा दोहोर्‍याइरहँदा भन्ने बोली। एउटा सोडापानीको शीशी फुटालेको हुत्ते रामनाम जपे झैँ जपिरहेछ।

**राममाझी** (जी वा बाबाजी) **ले पालेको बिरालो जस्तो**—ज्यादै खाँ खाँ गर्ने वा दुब्लाएर किंम्रिङ्ङ परेको मान्छेलाइ दृष्टान्त दिने बोली। किन भाइ! त्यति दुःख पर्दैमा रामबाबाजीले पालेको बिरालो जस्तो भयौ?

**रामरगेडा पर्नु**—=खूब परिश्रम पर्नु। आजकल हामीलाई रामरगेडा परिरहेछ।

**रामराज्य हुनु**—(१)=निस्फिक्री वा आनन्दमा हुनु। सबै जना उर्दीमा पुगिसके तिमीलाई त रामराज्य छ, हैन? (२)=सुख शांतिको राज्य हुनु। यो लडाइँको अन्त्य भएपछि संसारभरमा रामराज्य हुन्छ भन्ने कसैकसैको विचार छ।

**राम(मो)राम हुनु, गर्नु**—=आवत जावत वा बोलचाल बन्द हुनु, गर्नु, संबन्ध टुट्नु। हरिलालले त्यसो भनेदेखि हाम्रो राम राम भयो।····यति सबै गरी सके पछि म मिर कासिम

सित रामो राम गर्ने छु। —गम्भीरध्वज (चन्द्रशेखर)।

रामो(मा) राम—किरिया हाल्दा प्रयोग हुन्छ। रामो राम, भोलि म तिमीकहाँ आउँछु!

राम्रो मुख—(१) = मीठो वा नरम बोली वचन, सोझो मुख। ज्वर आएर निकै सारो भएको दिनमा दुलहीसित बोल्न आइन्, ता पनि सासूको अझ राम्रो मुख थिएन,....।—बालकृष्ण (कथा कुसुम)। आफूलाई कहिल्यै राम्रो मुख नगर्ने मैयाँले त्यत्रो सन्मान गरेको देख्ता राक्षस फुरुङ्ग परिहाल्यो र खानेकुरा खान थाल्यो।—बोधविक्रम (दन्त्यकथा)। के प्रभा तपाईंसित राम्रो मुखले बोलचाल पनि गर्दिन ?—काशीबहादुर (उषा)। राम्रा मुखले बोल्यो भने पनि बाङ्गा—बाङ्गा कुरा झिकेर निउँ खोज्थी।—गुरुप्रसाद (कथा कुसुम)। (२) = सुन्दर चेहरा। राम्रो मुख भएकालाई विशेष दया गरिन्छ।

राय कायम हुनु, गर्नु—=निर्णय वा अनुमानको ठेगान बस्नु, गर्नु, (प्रायः अदालतमा प्रयोग हुने)। यस मुद्दामा हिजोकै राय कायम भयो।

रायोको पर्वत (कुभिण्डो) बनाउनु—=सानो कुरालाई ठूलो तुल्याउनु। तिमी त रायोको पर्वत बनाउँछ्यौ ब्यारे—एक थोपा मसी चुहाएकोलाई कोठाभरी मसी पोखियो भन्ने ?

राल काढनु, चुहाउनु—(१) =लोभ गर्नु। मुख च्यातूँ कमारा तँ, आठ घण्टा कुरे पनी, के भयो ? एउटा पैसा देखे राल चुहाउँछस्!—बालकृष्ण (मुटुको व्यथा)। (२) साधारण अर्थ। यो कुकुर त ठीक छैन क्यारे, राल काढेर हिंडिरहेछ।

राल [र] सिंगान गर्नु—(१) = राल [र] सिंगान हुनु (१ हेर)। बरु बूढो भई एकै ठाउँमा राल र सिंगान गरेर बाँच्न मञ्जूर छ—बाँचे के देखिन्न! (२) = राल सिंगान सफा गरेर सुसार गर्नु। रातदिनको रालसिंगान गरेर



त्यति थोरै पैसामा को बस्छ ?

राल [र] सिंगान हुनु—(१) = ज्यादै वृद्ध हुनु। राल सिंगान भएर के बाच्नु! (२) साधारण अर्थ। तिम्रो अचार आगो रहेछ, दुइचोटि चाटेको त राल र सिंगान भयो।

रिकार्ड भर्नु—=रिकार्डमा (गीत) हाल्नु। यो गीत रिकार्डमा भर्न लायकको छ।

रिट्ठा गाडेको जस्तो—ज्यादै कालो आँखालाई दृष्टान्त दिने।

रिट्ठे भुमरी—=हल गर्न नसक्ने रहस्य। न यसो न उसो, क्या रिट्ठे भुमरीमा परियो।

रिन काढ्नु—=सापटी लिनु। ऋण काढना तिर लागुन् भने स्वार्थी सूदखारहरूले पहिले त्यस्तो अवस्थामा पत्यारै नगर्ने,....। श्री ३ जुद्ध (भूकम्पभाषण)।

रिन चुकाउनु—(१) = गुनको बदला गुनैले तिर्नु। टुट्थ्यो फलामको सिक्री, पाश टुट्तैन वाहुको; ऋण चुक्तैन कहिल्यै पनी यो प्रेम साहुको।—बालकृष्ण (ध्रुव)। ती जन्म्याहा बालखहरू जसका निम्ति तिनले त्यस्तो दुःख सहेकी थिइन्, तिनको ऋण चुकाउन सक्ने भएर बढे।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)। (२) = जम्मै कर्जा तिर्नु।

रिन धन बेहोर्नु—=बचेको धन पनि लिनु रिन पनि सकार्नु (अंश अपुतालीसंबन्धी प्रयोग हुने)। रिन धन बेहोर्ने हकवाला परमानन्द खड छ।

रिन बोकाउनु, लाउनु—= आफूले रिन काढेर सो रिन अर्कोले बेहोर्ने पार्नु। नरेन्द्रका पिता प्रशस्त ऋण लगाएर स्वर्ग भएका छन्।—खड्गमान (दर्पचूर्ण)।

रिनमा गाडिनु, गड्नु—= तिर्न नसक्नेसम्मको धेरै रिन लाग्नु। तपाईंको ऋणमा यो घरै गड्यो, जसरी गड्छ पृथ्वीमा फैलेर रूखको जरा,....। बालकृष्ण (मुकुन्द इन्दिरा)।

रिन लाग्नु, पर्नु—=रिन काढ्नपर्नु। यस पाला छोराको बिहामा रिन लाग्यो।

रिस उठ्नु—=क्रोध आउनु। घाऊ श्री हनुमानका शरिरमा देख्नू भयेथ्यो जसै। साह्रै रिस् उठि काल रुद्र सरिका ठाकुर् हुनू भे तसै॥—भानुभक्त (रामायण)। आज्ञा बमोजिम कसै चल्दैन पक्का। भन्ने उठ्यो रिस, दियें उसलाइ धक्का॥—लेखनाथ (सत्यकलिसम्वाद)। के तिमीलाई वाघदेखी साह्रै रीस उठ्यो?—लेखनाथ (भर्तृहरिनिर्वेद)। महारानी, सद्यालेर सबैले बोल्नु पर्दछ, म कत्थक भए देखि व्यर्थैं रिस उठाउँथें किन?—बालकृष्ण (ध्रुव)। यस्ता बात् सुनि भूतका रिस उठी नाग् भन्दछन् फेरि यो; पैले ज्यापुकनै दिन्ना त मन्जिले फर्काउनू व्यर्थ हो।—चक्रपाणि (श्री मछिन्द्र नाथको कथा)। जब मलाई प्रभाको सम्झना हुन्छ त्यसबेला जंगली माथि साह्रै रीस उठ्दछ।—काशीबहादुर (उषा)।

रिसको झोकमा पर्नु—क्रोधले अन्धो भएको वेलामा सन्मुख पर्नु।....मालिकका रीसको झोकमा पर्नु चाहीं बरु बिरानै देशमा जेनकेन गरी कालक्षेपण गर्नपाऊँ भन्ने रहेछन् भन्ने बुझियो।—श्री ३ चन्द्र (अमलेख-भाषण)।

रिसको पोको—=चाँड चाँडै रिसाउने, रिसाहा। भैगो त्यो रिसको पोकालाई नजिस्काऊ।

रिस गर्नु—=डाहा गर्नु ('क्रोधित हुनु, रिसाउनु'को अर्थमा प्रयोग हुँदैन)। सौताको रिस जो गर्छन् पतिकै निंति त्यो पनि प्रेमको पुष्पमा आफ्नो टेक्न आई अरू भनी,.......।—बालकृष्ण (मुकुन्द इन्दिरा)।

रिस थाम्नु—=क्रोध दमन गर्नु। उनले रिस थाम्न सकेनन्, भनि पनि हाले।—रुद्रराज (चप्पा काजी)।

रिस पर्नु—=इबी पर्नु। मासुको कुरादेखि जयन्तीको ममाथि रिस परेको छ।

रिस पोख्नु —=रिसको असर पार्नु (प्रायः एउटाको रिस अर्कामा)। कुनहीं जनका माथी पनी रीश उठ्यो यदि। हजार गर्न्नू र अनी रीश पोख्नू बुझी अति॥—बैजनाथ (उपदेश-शहस्री)। कालुको रिस ममाथि पोख्ने?

रिस फेर्नु—=बदला वा सजा दिएर रिस साम्य गर्नु। अबीर घस्ने निहुँ पारेर तिमीले अस्तिको रिस फेर्‍यौ।

रिस मर्नु, मार्नु—=रिस हराउनु, साम्य पार्नु। कुन् मलम् दले रीस मर्द छ? लेप कुन् दिये डाह हर्द छ?—धरणीधर (नैवेद्य)।

रिस लाग्नु—डाहा लाग्नु। कति राम्रो मान्छे! मलाई त तिम्रो रिस लाग्यो।

रिस लिनु—=इबी लिनु। त्यस्तो अदना मानिसमाथि पनि तिमीले रिस लिनु हुन्छ?

रिसले आँखा नदेख्नु—=ज्यादै क्रोधले बेहोश हुनु। जयचन्द्रले रीसले आँखा देखेनन्।—रुद्रराज (भारतवर्षको संक्षिप्त इतिहास, दोस्रो भाग)।

रिसले चूर हुनु, चुरिनु—=रिसले भुतुक्क हुनु, ज्यादै क्रोधित हुनु। पत्नीले केही बोलिनन् भनेर रिसले चूर भयो।—रुद्रराज (रूपमती)। अनि पुलिसहरुले रिसले चूर भई एक डण्डा ज्ञान कुमारको पिठ्यूमा खूब मच्चाएर हाने।—भवानी (यौवनको आँधी)।

रिसले जल्नु—=रिसले आगो हुनु।

रिसानी माफ हुनु—=नरिसाउनु (आदरको बोली)। रिसानी माफ हुन्छ भने ताबेदारले देखेको कुरा जाहेर गर्छु।

रुघा लाग्नु—रोग लाग्नु (मा हेर)।

रुझेको बिरालो काखी च्यापेर ठिमी जाने बाटो कता हो भन्ला जस्तो—=मरेको बिरालो....इत्यादि हेर।

रुद्रघण्टी नभएको—(१)=मनमा कुरा राख्न नसक्ने। रुद्रघण्टी नभएको मान्छेसंग के कुरा गर्नु! (२) साधारण अर्थ। मलाइ त रुद्रघण्टी नभएको (=नदेखिने) मान्छे मन पर्छ।

रुद्री लाउनु—=रुद्री पाठ गर्ने

लाउनु । रुद्री लगाउनु र कष्ट छुटेर जानन् ; साह्रा प्रजाहरु पनी सुख पाउन्याछन् ॥—चक्रपाणि (श्री मछिन्द्रनाथको कथा) ।

**रुन मत्तै नसक्नु**—=ज्यादै हण्डर पाउनु । जति फुके पनि आगो पटक्कै नबलेर **रुन मात्तै सकिनँ** ।

**रुनु न हाँस्नु**—=मर्मान्तिक अक्कडमा पर्नु । ससुराको अगाडि सानी नन्दले चिमटेर **रुनु न हाँस्नु** भयो ।

**रुने रुवाउने कोही नहुनु**—=संसारमा आफ्नो भन्नु कोही नहुनु । सरलाको **रुने रुवाउने** पनि त **कोही थिएन** नि ।

**रुन्चे स्वर**-=रुवाइ रोकी बोल्दा निस्कने गिडगिडे अवाज । तर ती सब व्यर्थ नै भए जब **रुञ्चे स्वरमै** मिली गए !—गोपाल पाँडे (सुनीति-विरह) ।

**रुन्चे हाँसो**—=रुवाइ रोक्न वा ढाक्न निमित्तको हाँसो ।—लीलेले पनि **रुन्चे हाँसो** हाँस्यो ।—रुद्रराज (चप्पा काजी)।

**रुवा जस्तो**—(१) नरम वस्तुलाइ दृष्टान्त दिने । तिनले फरर परेअनुसार **रुवा जस्तो** नरम भुजा तयार पारेछन् । (२) आगाले सजिलैसंग टिप्ने कुरालाई दृष्टान्त दिंदा पनि । सूर्य, वज्र बनी चड्क ! चर्की आकाश ! बादल **रुवा** झैँ भस्भसी सल्की ! —बालकृष्ण (प्रह्लाद) ।

**रूई दुइ फुई**—=दोलाई, साथी, आगो (जाडोका आवश्यक कुराको रूपमा) । **रूइ दुइ** कि **फूइ** येति तिन थोक् चाहिन्छ जाडामहाँ । दुःखीछू **रुइ फूइ** छन्त पनिता दूई न हुँदामहाँ ॥ —मोतीराम (सूक्तिसिन्धु) ।

**रूख चढी फेद काट्ने**—=साह्रै हलम्बु मान्छेलाई भन्ने । रूघामा दही खाए बिगार हुन्छ भन्ने जान्दा जान्दै पनि गाईको एकराते दहीमा मरी मेट्ने कस्तो **रूख चढी फेद काट्ने** मान्छे रहेछ ।

**रूप चाट्नु हुँदैन**—हकीकतमा सीप वा जाँगर नै काम लाग्छ भन्ने उक्ति । सानी मैयाँ जस्ती राम्री घरभरीमा कोही छैन, तर के गर्नु **रूप चाट्नु हुँदैन** सीप पनि भए पो ।



**रेखी हाल्नु**—=चामलको फुको पीठो वा अबिरले डोरो लाउनु (धार्मिक विधिमा) । **रेखी हालिसक्कासाथ** पण्डितजीहरूलाई खबर देऊ ।

**रेजोले मेजो खुवाउनु**—=मेख मारेर जवाफ वा पेच लाउनु। अघि मलाई उल्टा खुवाएका थियौ नि, अहिले कत्तिको **रेजोले मेजो खुवाइदिएं** त?

**रेत्ने हान्नु**—=(खोपीको खेलमा) जमीनमा घिस्रिएर जाने गरी दाम वा पैसा फ्याँक्नु ।

**रेफ लाउनु**—(१)=दोष लाउनु । कालले मर्छ, डाक्टरवैद्यहरू एकएक थोकलाई **रेफ लाउँछन्**। (२)=घच्का हान्नु । तिमी जस्तो अर्कालाई **रेफ लाएर** कुरा गर्न हामी जान्दैनौं । (३) साधारण अर्थ । 'भरखर' **रेफ लाएर** लेख्ने ठहरियो ।

**रोग लाग्नु**—=व्याधिले आक्रमण गर्नु । भिन्न भिन्न किसिमको रोगमा भिन्न भिन्न किसिमको क्रियापद (लाग्नु, आउनु, हुनु, पर्नु, दुख्नु, उछ्रनु, इत्यादि) प्रयोग हुन्छः—

बेथा, रुघा, खोकी, पखला, झाडा, हैजा ,वाकवाकी, रिङ्टा, औलो, बान लाग्नु; दादुरा, ठेउला, बिफर, लूतो, पिलो, दण्डिफोर, खटिरा, मुसा, जरो आउनु; भाउन्न, अजीर्ण, शूल, अतिसार, दम, पत्थरी, बाथ, वायु, क्षय, महारोग, ब्रङ्काइटिस, निमोनिया, टाइफ्वाइड (आदि अंग्रेजी नाउँ भएका) हुनु; दंको, कुचायाँ, चायाँ (कपालको), आउँ, रगतमासी, फूलो, मूर्छा पर्नु ; आँखा, कान, छाती, मुटु, दाँत, कपाल, आङ दुख्नु ; पेट घोच्नु, निमठ्नु, दुख्नु, पोल्नु, काट्नु, कुटुकुटु खानु, ढुस्स हुनु, पेटमा सोला दिनु ; बिमिरा, घमौरा उछ्रनु ; फोका, डाबर उठ्नु ; चायाँ (मुखको), खटिरा (डण्डिफोर, पिलो, आदि), बेर्हु निस्कनु वा आउनु ; हुप, गानु जानु ; आन्द्रा, पाठेघर खस्नु; इत्यादि, इत्यादि । यस्तो **रोग लाग्यो** भनेको पनि कैल्यै सुनिएन यो बौलाहालाई ।—बालकृष्ण (अन्धवेग) ।

**रोज कुरा**—=खूब असल कुरा

(वक्रोक्तिमा प्रयोग हुने)। अर्काको जुत्ता लुकाएर खूब रोज कुरा गरेछौ !

**रोज रोजको कोटी कोटी**—=चिठ्ठीको मन्तिर आफ्नो नाम-पछि दण्डवत्, कुर्णेस इत्यादिको अगाडि रहने।

**रोटी पथार्नु, बेल्नु**—=मुछेको पीठाको डल्लालाई लोहोरीले पेलेर चेप्टयाउनु। तिमी रोटी पथार, म पकाउँछु।

**रो[हो]टे पीङ**—=घेरामा मान्छे बस्ने ठाउँहरू भएको घुम्ने ठूलो पाङ्गो। कमलातीमा यस पाली दसैंमा रोहोटे पीङ खेलेनौ ?

**रोल मिच्नु**–(१)=पालो नाघ्नु। पालैपालोसँग पो आउनुपर्छ, पछाडिको मान्छे रोल मिचेर किन अगाड़ि बढेको ? (२)=दर्जा, उमेर, इत्यादिअनुसारको क्रम लङ्घन गर्नु। रोल मिचेर काकाभन्दा माथि नबस।

**रोसी खोला दुक्नु**—पूर्वियालाई गिज्याउने बोली (रोसी खोला तर्दा मान्छे काटेर त्यसको लट्टी-पट्टी लुट्ने चलनलाई सूचन गरी)। तिमीहरू जस्तो रोसी खोला दुक्केसित हामीलाई त कुरा गर्न पनि डर लाग्छ।

**रोह पक्रनु, मिलाउनु**—=पद्धतीको अनुसरण गर्नु। रोह पक्रेर काम गरे अरूको भन्ने बाटो हुँदैन।

**रौँ जत्ति(बराबर) पनि नगन्नु, नसंझनु**—=ज्यादै तुच्छ ठान्नु, केही जत्ति पनि नमान्नु। माइतिको यत्रो धाक थियो कि कसैलाई रौँ बराबर गन्न पनी छाड़ेकी थिइन्।—रुद्रराज (रूपमती)।

**रौँ ठाडठाडो हुनु**—=सिरिङ्ङ हुनु, रोमाञ्चित हुनु, (डरले)। अँध्यारोमा जाँदा सेतो छायाँ देखेर मुरलीको रौँ ठाडठाडो भयो रे।

**रौँ प्रमाणले**—=हद कम अवकाशले। त्यो कमरले मार हान्दा रौँ प्रमाणले राँगो छिन्न सकेन।

**रौँ रौँमा तेज हुनु**—=ज्यादै तुजुक हुनु। आजकलका केटाकेटीहरू रौँ रौँमा तेज भएका छन्।

**रौँले टोक्नु**—=रौँले बिझाएर





चिलिचिलाउनु। यो मान्छे साह्रै सोखी छ, भोटोभित्रको एउटा रौँले टोकेर धेरै बेरसम्म निद्रा परेनछ।

**ल्याङ[को] ठ्याङ मिल्नु**—=सल्लाह, बन्दोबस्त, वा तारतम्य मिल्नु (बालकको चिन्हा ट्वाक मिलोस् भनी जन्मने बित्तिकै थाल बजाउनासाथ घड़ी हेर्न सुत्केरीको कोठाबाहिर ज्योतिषी राखी चिन्हा बनाइयो। तैपनि पछि ग्रहफल मिल्न नआउँदा ती ज्योतिषीले जवाफ दिए, ल्याङ र ठ्याङको बीचमा केही समय बित्छ, थाल ठ्याङ्ङ गर्दैमा घड़ी नहेरी ल्याङ्ङ गर्दा पो हेरियो। उसैले चिन्हा मिलेन। यही कथाबाट)। तिमी घोड़ामा जान्छु भन्छौ, हामी हिँडेर जाने—ल्याङ ठ्याङै मिलेन। उसै देश जान तम्सिएर हुन्छ, ल्याङको ठ्याङ मिल्नुपर्छ, नानी !

## ल्

**लँगौटिया यार**—=पक्का, बचपनको मित्र। भोजराज त उसको लँगौटिया यारै हो नि।

**लँगौटी कस्नु**–(१)=ब्रह्मचर्यमा बस्नु। पख, अलि दिन लँगौटी कसूँ अनि तिमीसित कुश्ती लड़ुँला। (२)=कम्मर कस्नु। हामीहरूले लँगौटी कस्यौँ भने पन्ध्र दिनैमा हामी यो काम उतार्न सक्छौं।

**लकडी हात खेल्नु**—=लामो लट्ठीले पट्टा खेल्नु। त्यो डाँकूले लकडी हात खेल्न जानेको रहेछ, हामी सबलाई हटाएर भाग्यो।

**लक्का जवान हुनु**—=अग्लो वा ठूलो पट्ठो हुनु (परेवाको पट्ठो भालेलाई लक्का भन्ने हुनाले चलेको)। हजुरका छोरा छन् कस्ता लक्का जवान क्या राम्रा ! —रुद्रराज (रूपमती)। यतिञ्जेलमा आर्कस पनि एउटा लक्का जवान भइसकेका थिए। —खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)।

**लक्ष्मीले वास गर्नु, लक्ष्मी-बस्नु**—=सबै कुराको पौल हुनु, प्रशस्त धन हुनु। लक्ष्मीले पनी बास गरेकी थिइन्।—रुद्रराज (रूपमती)। निश्चयै छ जहाँ लक्ष्मी बसेकी-छिन्,जहाँ सुखी दम्पती हेर्दछन्, हाँस्तै नाच्छन् आँगनमा दुइ बलभद्र सुभद्रा झैं केटाकेटीहरू मिली।—बालकृष्ण (अन्धवेग)

**लख काट्नु**—=अनुमान गर्नु। सुखको लख काटेर काटि नशकिने स्वर्गलाई कसरी बिर्साउन शकिएला ?—श्री केसर (विक्रमोर्वशी)।

**लगत काट्नु**—(१)=दरबन्दी झिकिनु। तैंले हामीलाई टेर्न छोडिस् उसैले तेरो दसैंखर्चको लगत काटियो। (२)= फिरिस्तमा लिनुपर्ने भनी चढाइ-राखेको कुरामा असूल वा नलिने भनी जनाउनु। त्यो किताबको त लगत काट्न लाइबक्ससनुपर्छ, मैले अस्तिनै बुझाइसकेको छु।

**लगन जोर्नु**—=दुलहा दुलहीको पूर्वाङ्गको साइत एउटै पार्नु।

**लगन बिरला जस्तो**—=आतुरी लाएको मन नपर्दा भन्ने बोली। एक छिनमा दिइहाल्छु नि के लगन बिरला जस्तो गरेको !

**लगाम खुकुलो गर्नु**—(१)= कायममा राखेकोमा केही फुका गर्नु। नोकरको जातलाई लगाम खुकुलो गर्‍यौ कि हेप्न थाल्छन्। (२) साधारण अर्थ। यो घोड़ा बड़ो तेजी छ लगाम खुकुलो गर्‍यो कि सुइँकि-हाल्छ।

**लग्गू जुवाड़े जस्तो**—=सबै कुरा बिर्सी एउटै कुरामा एकोहरो लाग्दा दृष्टान्त दिने बोली। जुवाको रङ्गमा भुल्दाभुल्दै भोक प्यास, निद्रा थकाई, दिसा सूचि गैह्र कुरा बिर्सने कुनै लग्गू जुवाड़े जस्तो।—लेखनाथ (लक्ष्मी-पूजा)।

**लङ खानु**—=(घोड़ाको बारे) अगाड़िको खुट्टा कमजोर भई हिंड्दा हिंड्दै ठक्कर खाए जस्तो गरी अघिल्तिर घोप्टिनु। त्यस्तो लङ खाने घोड़ामा चढेपछि पनि नलड़ी छोड़िन्छ ?

**लङ्का हाँक्नु**—=(मुखैले मात्र)



यसो गर्छु उसो गर्छु भन्नु। अहिले मुखले लङ्का हाँकेर हुन्छ ? काम गरेर पो देखाउनु पर्दछ।—रुद्रराज (प्रायश्चित्त)।

**लछारपाटो लाउनु**—=ठूलो काम गर्नु (केही नगरेकोमा पेच लाएर भन्ने)। अस्ति त्यो किताप खोजेर ल्याइदिन्छु भनेको होइन ? खूब लछारपाटो लायौ !

**लटक्क जम्नु**—=प्रशस्त बाक्लिएर जम्नु। हिजो जमाएको दही त लटक्क जम्यो।

**लट्टा पर्नु**—(१)=(ठट्टा गर्दा) झगड़ा उठ्नु। रिसाउने मानिससँग ठट्टा गर्दा लट्टा पर्छ। (२)=रौं जोल्टिएर गुजुल्टो पर्नु।....माथमा लट्टा परि-रहेको छ, माटोले बाहुली दुवै दुवै पाउ फुटेका छन्, गाथ शुक्कै गई सब पोशाक खोल जस्तोछ।—बालकृष्ण (ध्रुव)। कसैका जिङ्ग्रिङ्ग परेका र मानिस र पशुको रगत बोसोले कटकटिदा लट्टा परी ठाडा ठाडा परेका कपाल छन्।—बोधविक्रम (दन्त्यकथा)।

**लट्ट लिनु**—=धाइरहनु, खुरुन्धार लाग्नु। ताशमा लट्ट लिइरहेछ, यस्ता मान्छेले के पढ्ला !

**लट्टू हुनु**—=खूब आसक्त हुनु, मोहित हुनु। तिम्रो भदा त मोहनमायामा लट्टू भइरहेछ।

**लट्ठी भाँच्नु**—(१)=बेसरी कुट्नु। लट्ठी नभाँची केटा-केटी तर लाग्दैनन्। (२) साधारण अर्थ। लट्ठी नभाँच्ने गरी सर्प मार।

**लड़ीबड़ी खेल्नु, गर्नु**—= भुइँमा लम्पसार परी पुल्टुङ-पुल्टुङ गरी गुड्नु। त्यस पछि भूइँमा लडीबडी खेली फुस्रो भएका राजा एकाएक उठेर....बिलौना गर्न थाले।—श्री अर्जुन (स्वप्नवासवदत्ता)। ....मरेर पडिरहेको जरायोनेर भूइँमा लड़ीबुड़ी खेल्थे,.... अनि डाँको छोड़ी छोड़ी रुन्थे।—खड्गमान (ग्रीस र रोमको दन्त्य-कथासंग्रह)। धानी मखमली झार माथि गर्दा लडीवडी कुनैं अमृतगङ्गामा नुहायौं भनि ठान्दथ्यौं।—बालकृष्ण (सुटुको

व्यथा)।

**लड़ीबड़ी लाउनु, लाग्नु**—=लछारपाटो लाउनु, लाग्नु (हेर)। दाज्यूलाई चिठी लेख्छु भनेको लड़ीबड़ी लाएनौ के?

**लड्डू खानु**—(१)=शून्य नम्बर पाउनु, फेलो खानु। घिसिरेले त व्याकरणमा लड्डू खाएछ। (२)=नाफा खानु। मैले भोटेसँग घोड़ा किन्दा मूसे बूढ़ाले पो बीचमा लड्डू खाएछ। (३)=लाभ उठाउनु। यो किताप छपाउँदा तिमीले कति लड्डू खायौ? (४) साधारण अर्थ।

**लड्डू देखाउनु**—=लोभ देखाउनु। रामुलाई लड्डू देखाएर पञ्चामा पार्न सके त काम बनिहाल्छ नि!

**लत बस्नु**—=बानी लाग्नु। बाह्रमासेको लत बसे पछि पक्का जुवाड़े भएर निस्कन्छन्। —रुद्रराज (रूपमती)।

**लत्त छोड़्नु**—=वास्ता गर्न वा ध्यान दिन छोड्नु (लत्तो=जोश, चाख)। भोको कुरा कहाँ सुन्थ्यो बहिरो अनिकालले लत्ता छोड़्दै गएकीछ्यौ यिनलाई समेत!—बालकृष्ण (अन्धवेग)। 'हुँदैन यो काम' भनी लत छाड़े कदा पनी। कुनै काम पनी हुन्न यो जान्नू 'सत्य हो' भनी॥—बैजनाथ (उपदेश-शहस्री)।

**लम्पट कस्नु**—=धर्ना कस्नु। लम्पट कसेर बह्लतछ दशवटा रुपियाँ हात पारें।

**लम्पट पर्नु**—(१)=अशक्त बिरामी हुनु। अस्तिदेखि कान्छा बा जरोले लम्पट पर्नु भयो। (२)=धर्ना कस्नु। काबुली आएर जितेको ढोकामा लम्पट परिरहेछ।

**लम्पट लिनु**—=लेटन लिनु।

**लम्पट (मेच, इत्यादि) हालिदिनु**—=बस्नालाई लम्पट (मेच, इत्यादि) राखिदिनु। ज्वाइँ आउनुभएछ लम्पट हालिदेऊन।

**लम्पट हुनु**—=आसक्त हुनु, भुतुक हुनु। राधिकामा तिमी किन यति बिन्न लम्पट छौ?

**लम्बे चौडे कुरा गर्नु**—=लामो कुरा गर्नु। लम्बे चौड़े कुरा



किन गर्नुपर्‍यो, दिन्न भने त भइहाल्यो नि!

**लय लाग्नु, बस्नु**—=चाख लाग्नु, बस्नु। मलाइ अझ यो कामको लय बसेको छैन।

**ललहरी गाउनु**—=सानो कुरालाई ठूलो देखी आत्तिएर कराउनु। हाँगा मात्रै भाँचिएको रेहेछ, रूख ढल्यो भनी उसै ललहरी गाउने। (२)=सानो कुरामा पनि दुःख पुकारा गर्नु। सात दिनलाई पुग्ने रसद बाँकी नै रेहेछ, उसै छाक अड्क्यो भनेर ललहरी गाउने?

**लस्सा छुट्नु**—(१)=बाक्लिएर लरर लरर हुनु। यो पाक लस्सा छुट्ने गरी पकाएर ल्याऊ।

**लहनामा लाउनु**—=ब्याज लिने गरी सापटीमा दिनु। अलिकति रुपियाँ लहनामा लाएकी थिएँ, बिग्रयो।

**लहै लहैमा(लैलैमा) लाग्नु, हिंड्नु**—=राम्ररी कुरा नबुझी अर्काको हल्ला वा भनाइमा भर परी काम गर्नु। लहै लहैमा हिड्ने मनुष्यको स्वभाव—बुढी दङ्ग पर्दथिन्।—रुद्रराज (रूपमती)। अरुको लैलैमा लागी गुरुज्यूकहाँबाट निस्केर घर जाने साथी खोज्दैथिई, केही दिन पछि वानेश्वरमा रनेसंग उसको भेट भयो।—ग्रन्थकार (कथा कुसुम)।

**लाख गर्नु**—=धेरै काम वा उपकार गर्नु। लाख गरें मति बूरधरें, मतिले गति झन् अकढ्यायो॥—शम्भुप्रसाद (शम्भु भजनमाला)।

**लाख बत्ती बाल्नु**—कुनै देउतालाइ आह्वान गरी वा मन्दिरमा गई हातले कातेको एक लाख बत्ती विधिपूर्वक सल्काई सो देउतालाई चढ़ाउनु। एक पल्ट शाशूले बुढ़ानीलकण्ठमा लाख बत्ती बाल्ने इच्छा गरिन्।—रुद्रराज (रूपमती)।

**लाख रुपियाँको वचन, जीऊ**—=बहुमूल्य बोली, शरीर, (खेर जाला भनी सोच गर्दा वा खेर गएकोमा थकथकाउँदा प्रयोग हुने)। आफ्नो लाख रूपैंको जिउ त तम्रो भैसक्यो भने त्यो जाबोको के कुरो।—भीमनिधि (सहनशीला सुशीला)।

**लाख हुनु**—=यथेष्ट वा प्रशस्त हुनु (प्रायः थोरै पाएमा सन्तोष देखाउँदा प्रयोग हुने)। जे भए पनि तपाईंले संझेर पठाउनु भएछ मलाई लाख छ।

**लागे लगनी**—=लागेको बानी (हिन्दीको उखान 'लागे लगनी छुटे नहीं' को टुक्रा)।

**लाग्नु**—मन लागेको अर्थमा क्रियापदसँग यो आउँदा त्यो क्रियापद दोहोरिन्छ, जस्तो :—खाऊँ खाऊँ लाग्नु, भनूँ भनूँ लाग्नु, जाऊँ जाऊँ लाग्नु, इत्यादि। खाऊँ लाग्नु, भनूँ लाग्नु, इत्यादि हुँदैन।

**लाजगालले पनि**—=इज्जत र बदनाम बचाउनालाई करैले पनि। लाजगालले पनि दशौटा रुपियाँ त ठूली आमाले कसो नदिनुहोला ए!

**लाज [घिन] पचाउनु, पच्नु**—=लाज [घिन] लाग्ने कुरामा लाज [घिन] नमान्नु वा लुकाउनु, हराउनु। म जस्तो लाज पचेको पुरुष संसारमा विरलै होला।—रूपनारायण (भ्रमर)। लाज पचाईपचाई कान्छा काजीसँग रेशमी रुमाल मागेको पनि दिनुभएन, छिः!

**लाटाको कान**—रोटी बाक्लो वा ढेब्रो भई नराम्रो वा नमीठो हुँदा भन्ने।

**लाटाको खुट्टा बाटोमा पर्नु**—=संजोगले मूर्खको कुरा ठाउँमा पर्नु वा बुद्धि पुग्नु। कहिले लाटोको खुट्टा बाटोमा पर्‍यो भने निको भइहाल्यो नत्र धेरै जसाको फजूलमा प्राण जान्छ ....।—रुद्रराज (चप्पाकाजी)।

**लाटा(टी)ले बाबु भन्न नपाए (नजाने) जस्तो**—एकतारै उही कुरा दोहोर्‍याइरहँदा दृष्टान्त दिने।

**लाटीको गाला चड्काए झैँ**—प्रहारको केही असर नहुँदा दृष्टान्त दिने बोली।

**लाटीको स्वाईं खाए झैँ**—स्वाद नब्यादको कामलाई दृष्टान्त दिने बोली।

**लाटीको साल जस्तो**—लुगा लतारेर वा फ्याल्ल पारेर हिँड्दा दृष्टान्त दिने।

**लाटीको हातको कनिका**—बोकेको वस्तु बेहोशीसँग जतातते पोखी पोखी हिँड्दा दृष्टान्त दिने बोली।



**लाटी डंकिनी माई**—=बौलाहा पार्ने देवी।

**लाटी(टा)ले केरो हेरे झैँ**—वाल्ल परेर हेरिरहँदा दृष्टान्त दिने। नानी लडिसक्यो, लाटाले केरो हेरे जस्तो के हेरिरहेको?

**लाटो कीरा जस्तो**—साह्रै सुधो मान्छेलाई दृष्टान्त दिने। हनुमानप्रसाद लाटो कीरा जस्तो थियो, जे लाइदियो त्यही खुरुखुरु गर्थ्यो।

**लात खाँद्नु, गोद्नु**—=कुटिने मान्छेलाई पछारी वा बसाली खुट्टाले थिचे जस्तो गरी दनादन हान्नु ('लातले हान्नु' मा हेर)। ज्यादा बढ्रेर बोलिस् भने लात खाँद्नेछु।

**लात दिनु, मार्नु**—(१)=बेगुनी भई छाडेर जानु वा अपकार गर्नु। 'रोजी' छ नाम नै उसको भन्दथ्यो 'रोजी, तिमी मेरी भयौ भने लात मार्छु भयो पृथ्वीभरका सुखलाइ नै, अनि लात दियो आफैलाइ, बज्यो परन्तु त्यो तिमीमाथि।—बालकृष्ण (मुकुन्द इन्दिरा)। चिरञ्जिवीलाई मैले पालें पोसें अहिले मलाई लात दिएर गयो। (२) साधारण अर्थ (प्रायः घोडाको बारे प्रयोग हुन्छ)। त्यो घोडाको नजीक नजाऊ, लात मार्ला।

**लातले हान्नु, लात हान्नु**—मानिसको बारे प्रयोग हुँदा प्रायः 'लातले' लेखिए तापनि उच्चारण 'लात्तले' हुन्छ। 'लातले गोद्नु, खाँद्नु' मा पनि त्यस्तै। घोडा, गाई, आदिको बारे प्रयोग हुँदा विभक्ति हराउँछ, उच्चारण 'लात' नै रहन्छ। कोही भए यहाँ सहानुभव गर्दो हो, जसमाथि म मर्दछु त्यो आज लातले हान्नी मलाई वर फाल्दछे।—बालकृष्ण (मुटुको व्यथा)। यो घोडाले लात हान्छ।

**लात्ते भकुण्डो खेलाउनु**—=खुट्टाले उछिट्याउनेसम्मको जोड्ले हान्नु। छोराले चोरेछ, बाबुचाहिंले लात्ते भकुण्डो खेलायो।

**लाथ्रो हान्नु**—=एक हातमा

हरियो हाँगा लिएर अर्को हातले छट्ट छिन्ने गरी खुकुरीले छड्के पारी हान्नु (मोटो हाँगा छिन्न सके तारीफ छ)। लाथ्रो हान्नामा बुढाथोकीलाई कसैले भेट्न सक्तैन।

**लादी काढ्नु, कढाउनु**-(१)=ज्यादै परिश्रम पर्नु, पार्नु। आज लप्टन साहेबले काम लाउँदा लाउँदा लादी कढाउनुभयो। (२)=(कुट्ता) गु निक्लने हुनु, पार्नु। तँ बदमाशलाई कुन दिन लादी काढ्ने गरी खाँद्छु।

**लाद्रो भर्नु**—=भुडी भर्नु (होच्याउँदा प्रयोग हुने)। अन्यायमा लाद्रो भर्नेको अन्त्यमा यही गति हुन्छ।

**लापलाप र लिपलिप गर्नु**—=ज्यादै खाँ खाँ गरी चाटचुट गर्नु। घरमा त्यतिको खाएर पनि यहाँ लापलाप र लिपलिप गर्ने, कस्तो खन्चुवा!

**ला बाघ (कुकुर)! खुट्टो भने झैँ**—हानि गर्न खोजेकै मानिसलाई झन् जिस्क्याएर निहुँ वा मौका दिंदा दृष्टान्त दिने। उसै त बलेले तँलाई बिताउन खोजिरहेछ, झन् ला बाघ! खुट्टो भने झैँ यतिका दिन गयल परिदिइस्।

**लाभ उठाउनु**—=फाइदा निकाल्नु, नाफा झिक्नु। जहाँसम्म हिलियम बनाउनालाई कुनै सस्तो उपाय निक्लँदैन, यसबाट लाभ उठाउने सम्भव छैन।—जितेन्द्र(आधुनिक आविष्कार)।

**लाम मिल्नु, बाँध्नु**—=लहर बन्नु। अफिसरहरू बैठकका दुइपट्टि लाम मिलेर बसेका थिए।

**लामो सर्को**—=गाँजा खाने काम (लाई गिज्याउने नाउँ)। दिले लामो सर्कोमा पनि लागेको थियो।—रुद्रराज (चप्पाकाजी)।

**लामो सास फेर्नु**—(१)=पीर पर्दा सुस्केरा हाल्नु। तेस्पछि एक चोटि लामो सास फेरेर बाहिरपट्टि हेऱ्यो।—रूपनारायण (भ्रमर)। पानी खाई सके पछि प्रभाले लामो सास फेरेर भनी "आमा, आँखालाई धोका भएको त होइन?"—गुरुप्रसाद (कथा कुसुम)। रनेको मनमा लाहुरे



मरेको पक्का भए पछि टुकुक्क बसेको बाट लामो सास फेरेर त्यो उठ्यो।—ग्रन्थकार (कथा कुसुम)। होइन, मैले जैलेसुकै जे गर्न खोजे पनि तपाईं यसरी लामो सास किन फेर्नुहुन्छ?—खड्गमान (दर्पचूर्ण)। (२)=ठूलो बोझ मनबाट हट्ता लम्बे स्वास निकाल्नु। सुन्दरीले ज्ञानकुमारको आवाज र रूप राम्रै चिन्ही लामो सास फेरेर केही भन्न खोजेकी के थिई, एकदम जिब्रो लर्वरिन गयो,…।—भवानी (यौवनको आँधी)।

**लामो हात गर्नु**—(१)=चोर्नु, टापटिप गर्नु। ढुकुटीबाट एउटा हीराको औंठी, २ यारिङ्ग, एकजोर टप पनि लामो हात गरेर ल्याइन्।—रुद्रराज (रूपमती)। (२) साधारण अर्थ (=लामो गरेर हात पसार्नु)। खोइ पुगिन, अलि लामो हात गरन!

**लाल बुझक्कड**—खूब बुझक्क हुनुपर्ने मूर्ख मान्छेलाई प्रयोग हुन्छ। यस्ता लाल बुझक्कडका फेला परेपछि के काम बाँकी रहन्थ्यो र?

**लालाको गुलाम जस्तो**—जसजसले दिन्छ उतै उतै लाग्ने मान्छेलाई दृष्टान्त दिने। दुनियाँमा लालाका गुलाम जस्ता मान्छेको पनि कमी छैन।

**लाली चढ्नु**—(१)=रगत चढेर रातो हुनु। चक्कर बहादुर काजीको चेहरामा लाली चढ्दै आयो, हतास हुनु पर्ने कुरा केही भएन।—रुद्रराज (चप्पाकाजी)। (२)=आकाश रातो रङ्गको हुनु (सुर्योदय हुँदा)। चरा कराउन थाले, पूर्व दिशामा लाली चढ्दै आयो।

**लाहुरे फूल**—यसमा 'लाहुरेको फूल' हुँदैन ('फूल' हेर)। केशको शङ्खे जूरोमा लाहुरे फूल लाऊ रे।—भीमनिधि ('मेरी' बयासी गजल)।

**लाहुरे सिपाही**—=हिन्दुस्थानमा जागीर खाएको गोरखाली सिपाही (लाहोरसित सम्बन्ध छैन)।

**लिँडे ढिपी लिनु, लाग्नु, वा गर्नु**—=एकोहोरो जिद्दी गर्नु।

रुघा लागेको हुनाले बाहिर जान हुन्न भनेर कति संझाएँ, प्यान्टीले लिँड़े ढिपी लिइरहिछ लिइरहिछ ।

**लिखा टिपाइ**—थोरथोरै पाउँदा भन्ने । दुइचोटि मार्दा च्यांखेहरू सुकिसके, तीन तालदेखि त तिमीलाई लिखा टिपाइ पो भयो ।

**लिखे टट्टु**—=दुब्लो लुरे घोडा (लाई भन्ने हेलाको नाउँ) । एउटा लिखे टट्टु चढ्न पाउँदा धनसिङ फुलेको हेरन !

**लिङ्गे पीङ**—=चारवटा बाँस गाड़ेर हालेको पीङ । तिम्रो चोकमा लिङ्गे पीङ हालेको छ ?

**लित्ती कस्नु**—=बेसरी बल वा परिश्रम गर्नु । लित्तो कसेर अठाह त झिकिछोड़ेँ ।

**लिद्दी कढाउनु, काढ्नु**—(१) =बेसरी कुट्नु । मेरो सुन्तला चोरिस् भने तेरो लिद्दी नकाढ़ी छोड्दिनँ । (२) =बेसरी थाक्ने गरी चढ्नु वा फेर्नु (घोड़ा) । तिम्रो घोड़ालाई लिद्दी कढ़ाएर ल्याएको छु, अब बदमाशी गर्नेछैन ।

**लिपि बस्नु**—=हात बस्नु, अक्षर नराम्रो भए तापनि एकनाससँग हार मिलेको हुनु । तिम्रो अक्षर राम्रो भएतापनि अझ लिपि बसेको छैन ।

**लिसो थाप्नु**—=चरा पक्रनालाई रूख इत्यादिमा लिसो लाएर राख्नु । कति पटक लिसो थापेँ चरै पर्दैन ।

**लिसो पर्नु**—=(प्रायः स्वास्नीमान्छेको कपालमा) मयल परी च्याट च्याट लाग्ने हुनु । तिम्रो कपालमा त लिसो परेछ, भोलि बुधवार छ नुहाऊ ।

**लिसो लाग्नु**—(१) =धर्नो हाल्नु । हिजोको माग्ने दुइ पैसा नदिएसम्म लिसो लागेर बसिरह्यो । (२) =घाँडो लाग्नु (२ हेर) । अस्तिदेखि घर्तिनीको छोरी लिसो लागिरहिछ । (३) साधारण अर्थ । मेरो कोटमा कहाँबाट लिसो लागेछ ।

**लुँड़े धन्दा**—=कमारे काम । दुक्खी कर्मलाई लुँडे धन्दाले कहिले छोड्थ्यो र !

**लुँडो लाग्नु**—=हूलै पछि लाग्नु ।



दामोदरले के भित्र खुट्टा हालेको थियो, सारा विद्यार्थी लुँडो लागेर हुरुरु पसे ।

**लुकी चोरी गर्नु**—=छलछाम गर्नु । हावा खान जान्छु भने त म पठाइदिहाल्छु नि, किन लुकी चोरी गरेर जानुपर्‍यो ?

**लुकुवा मासु**—=लुगा लाउँदा छरितो देखिने फुकाल्दा निकै मोटो । हाम्रो माहिला दाइको लुकुवा मासु छ, बाहिरी लुगा कोट लाउनुहुँदा एक जात भुड़ी देखिँदैन ।

**लुगा छोड़ाउनु, काढ्नु**—=लुगा फुकाल्नु (मध्य कक्षामा चलेको) । भान्सा गर्ने वेला भयो, लुगा छोड़ाउनुहोस् ।

**लुगा फेर्नु**—यसको अर्थ 'लुगा बदल्नु' छँदै छ, त्यसबाहेक 'लुगा लाउनु' को अर्थमा समेत प्रयोग हुन्छ ।····तिनले येन केन छिटो छिटो लुगा फेरेर त्यहाँबाट प्रस्थान गरे ।—खड्गमान (अँध्यारोमा उज्यालो) ।

**लूते कुकुर जस्तो**—भाउ नभएको चुत्थो मान्छेलाई दृष्टान्त दिने । जुन घरमा उनको रोब रवाफ थियो त्यही त्यही घरमा लुते कुकुर जस्तो भएर खुम्चिएर बस्नुपर्दा खेरी उनलाई कत्रो पीर पर्‍यो होला ।—रुद्रराज (रूपमती) ।

**लूतो न कन्याइ**—हर्ष न विस्मात, काम पनि छैन माम पनि छैन, इत्यादि विपरीत अर्थ जताउन प्रयोग हुने । हाम्रो त छोराछोरी भएर यो झमेला गर्नुपर्‍यो, तिम्रा त छैनन् लूतो न कन्याइ ।

**लूतो पन्छाउनु, पन्छनु**—=मन नपरेको मान्छे वा काम कुरो हटाउनु, हट्नु । अस्तिको पाहुना बसिन्ज्याल त कहिले लूतो पन्छेला जस्तो भयो ।

**लूतो फ्याँक्नु**—=साउने संक्रान्तिमा कण्डारकपूजा गरी सल्लाको छेस्काको बत्ती बालेर चढाई त्यो अगुल्टो दश दिशातिर लूतो खटिराहरूको बिमारी नहोस् भन्ने उद्देश्यले फ्याँक्नु । भरे जजमानकहाँ लूतो फ्याँक्न जानुपर्छ ।

**लूतो लाग्नु**—=लिसो लाग्नु (१, २ हेर) । एकलै आएको भए कति सजिलो हुन्थ्यो, कहाँबाट सानी छोरी लूतो

लाग्न आइपुगी ।

लेक्चर झाड्नु—=लम्बे शिक्षा दिनु (होच्याउँदा वा मन नपर्दा प्रयोग हुने) ।....उत झन गुण्डा समाजका एक प्रतिष्ठित अनुभवी, महापुरुष, लेक्चर झाड्न बिजुली, ज्ञानका कुरा गर्न पास;....।—रुद्रराज (रूपमती)।

लेग्रो तान्नु, पसार्नु—(१)= चेपारे पार्नु । अस्ति त तिमी माहिली सासूसित खूब लेग्रो तानी तानी कुरा गर्न लागेकी थियौ नि, कति झर्को ?(२)= अक्षरको अवाज लम्ब्याई उच्चारण गर्नु । तिम्रो बाको भगभगे लुकाउनालाई लेग्रो पसार्ने बानी थियो ।

लेटन पर्नु—=लम्पट पर्नु ।

लेटन लिनु—=धर्ना कस्नु वा जिद्दी गर्नु । आलु नपाई भातै खान्न भनेर सानो छोरा लेटन लिइरहेछ ।

लोका(क)चार पार्नु—=चापलुसी वा देखौवा व्यवहार गर्नु । तिमीले लोकाचार पारेको र दिलैदेखि भनेको म थाहा पाउँदिनँ र !

लोकाभार चलाउनु—रैतीले आफ्नो थरी, मुखिया, वा द्वारे आदि आफैले रोज्नु । यिनीहरू लोकाभार चलाउन पाऊँ भन्छन् ।

लोग्ने छोरो—=लोग्नेमान्छे (को महत्त्व देखाउँदा प्रयोग हुने) । लोग्ने छोरो भएर पनि त्यस्तो काममा पछि हट्न हुन्छ ?

लोते कान लाउनु—=लुत्रुक्क पर्नु, एकदम लज्जित हुनु । रघुनाथ पहिले निकै दुइँफुइँ गर्थ्यो, मैले पछारेपछि त लोते कान लगाएर गयो ।

लोप्पा खुवाउनु—(१)=सँजाको रूपमा अर्द्धचन्द्राकार हस्तमुद्रा मुखमा लोपर्नु वा टाढाबाट लोपरे जस्तो गर्नु ।....तेरी आमाले सम्पत्ति सबै थुतेर लगिसकिन् अब त के छ र खान्छेस्, भुत्रो खा ! भन्दै लोप्पा खुवाउँदै गर्थे ।—रुद्रराज (रूपमती) । (२) हराउनु, निराश पार्नु, हिस्याउनु, इत्यादिको भाव जाहेर गर्न प्रयोग हुन्छ । चाकरीमा जान कप्तान दाइले मोटर ल्याउनुहुन्छ भनेर



पर्खिरहेको त लोप्पा खुवाइदिनुभयो ।

लोभानी पापानी—=लोभ लालच र त्यसबाट हुने अधर्म विचार । अर्काको धनको लोभानी पापानी थिएन ।—रुद्रराज (चप्पा काजी) ।

लोली मिलाउनु—=हाँमा हाँ मिलाउनु, मनमा जे भए पनि सहमत देखाउनु । मालिकको कुरा काट्न ठीक भएन, लोली मिलाउनैपर्‍यो ।

लोलोपोतो पार्नु—=मुखले ठिक पार्नु, चेपारो पार्नु ।....तेस्तो फोस्रो प्रेमले पतीलाई लोलोपोतो पारने स्वास्नीलाई त म हजारौं वार धिकार दिन्छू । —लेखनाथ (भर्तृहरिनिर्वेद) ।

लौ खा—(१)=ज्या । लौ खा ! आज कमलपोखरी जानुपर्थ्यो भुसुकै बिर्सेछु । (२)=ल दिएँ, खा । चारौटा आँप खान्छु भनेको होइन ? लौ खा, पुगेन भने फेरि माग् ।

लौ[त] भने (भनूँ भने)–(१)= साँची भनूँ भने । आफू त नउ वर्षकी थिएँ, लौ भनूँ भने पापी केटाको अनुहार पनि राम्रोसित देखेकी छैनँ ।— बालकृष्ण (कथा कुसुम) । (२)=हुन्छ भने (भनूँ भने) । हुन्न भनूँ भने रिसाउने भयो, लौ भनूँ भने आफूलाई सन्धिसर्पन पर्छ ।

लौ भन्न हुने—=कामसरो को, काम चल्ने । त्यसले बनाएको मेच उस्तो बेस त होइन लौ भन्न हुने छ ।

ल्यासे मैजू—=तरुनी नेवार्नी (नेवारी भाषाबाट) । आज ल्यासे मैजू कताबाट आइछन् नि ।

## व्

वचन खानु—=भनाइ सुन्नु, दुर्वचन सहनु । वराल पुत्रीको वचन खाँदा र चमेलीको ओड लिएर बोलन पनी छाडिन् । —रुद्रराज (रूपमती) ।

वचन खेर फाल्नु, जानु—= आफूले भनेको कुरा लङ्घन हुन दिनु, व्यर्थ हुनु । तिमीले भनेको

त्यसले मान्दैन, किन सित्तैमा **वचन खेर फाल्छौ** ?

**वचन दिनु**—=जवान दिनु, बोलकबूल गर्नु, हुन्छ भन्नु। राजकुमारीले पनि खुशीसाथ 'हुन्छ' भन्ने थिइन् तर तिनका बुवाले एउटा नदीको देवतालाई दिन करीब करीब **वचन दिइसकेका** थिए।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथा-संग्रह)।

**वचन (कुरा) भूइँमा खस्नु (झर्नु)**—=मुखबाट बोली निस्कनु। एक **वचन भूइँमा खस्न** दिंदैन, टपटपी टिप्छ (=जवाफ लाउँछ)। **वचन भूइँमा झर्न** पाएको हुँदैन, दलेले त्यो काम पुऱ्याइहाल्छ (=साह्रै खातीरजामा गर्छ)।

**वचन राख्नु, रहनु**—=भनेको मान्नु, भनेको कुरा उल्लंघन नहुनु। मलाई नाच हेर्न मन थिएन, तिम्रो **वचन राख्ना**लाई मात्र आएको।....**वचन नरहँदा** मुख अलपत्र पारेको देख्न नसक्ने हुनाले साहिंलीलाइ एउटा अफिसर देखाउन कर लाग्यो।—ग्रन्थकार (कथा कुसुम)।

**वचन लाउनु**—=चित्त दुखाउने गरी भन्नु। यस्तो मुटु छेड्ने **वचन न लाऊ न**।—रुद्रराज (चप्पाकाजी)।

**वचन हार्नु**—=नाइँ नास्ति गर्नु (प्रायः 'नसक्नु' सँग आउँछ)। ठूलो मान्छेले भनेको हुनाले **वचन हार्न** नसकेर मात्र दिएको, नत्र त्यो कुकुर मलाई चौपट्ट मन परेको थियो।

**वचन हाल्नु**—=माग्नु (माग्ने कामलाई नराम्रो संझँदा)। **वचन हालेअनुसार** कोट त गतिलै पाइयोसून नि!

**वज्र जस्तो**—ज्यादा साह्रो कुरा (मन, चीज, इत्यादि) लाई दृष्टान्त दिंदा प्रयोग हुने। विना मनलाई **वज्रजस्तो** कडा नपारी ई विषयहरू जितनालाई कसको के ताकत ?—लेखनाथ (भर्तृहरिनिर्वेद)।

**वज्र पर्नु**—(१)=वज्रपात पर्नु। (२)=आकाशबिजुली पर्नु। बेहोशी आ, म पल्टिन्छु, मेरो आङ अँठ्या, अनि घाँटी अँठ्या,



अनी घाँटी निचरी वास सुत्न दे! **वज्र पर्! वज्र पर्!**—बालकृष्ण (मुटुको व्यथा)।

**वज्रपात पर्नु, हुनु**—=अधिबाट केही सूचनै नपाई अकस्मात् दुःख वा विपत् आइपर्नु। बेसै थियो सब कुरा, तर एक बात। फेरी भयेछ विनु बादल **वज्रपात**॥—लेखनाथ (सत्यकलिसंवाद)। अब हामी कस्का अधारमा रहुँला हादैव! तैंले किन यस्तो **वज्र पात पारिस्** ?—ऐजन (भर्तृहरिनिर्वेद)।

**वर पर देखाउनु, हेर्नु**—(१)=संझाउनु बुझाउनु (प्रायः अरूहरूको दृष्टान्त दिएर), अरूहरूको विचार गर्नु वा दृष्टान्त लिनु। आमाले पनि **वरपर** सबै कुरा **देखाउनु** भयो।—ग्रन्थकार (कथा कुसुम)। (२) साधारण अर्थ।

**वर राखेको सिन्का पर सार्नु**—हद हलुका कामको रूपमा (अकरण भई प्रयोग हुन्छ)। घरको काम धन्दा गर्नु भनेको एउटा **वर राखेको सिनका पर सार्नें** होइन।—रुद्रराज (रूपमती)।

**वर्कै पनि—फर्कै पनि**—=जे गर्दा पनि। **वर्कै पनि** चण्डाल्नी **फर्कै पनि** चण्डाल्नी, कति सहनु त ?

**वर्त बस्नु, लिनु**—=बर्त बस्नु, लिनु (हेर)। यसैले पो आकाशको रसको चाह गर्ने भएर चातकको **वर्त लिइबक्सेको** रहेछ।—मैले रीस राग छोडिदिएर **वर्त बस्ना**लाई निपुणिकाको हात महाराजलाई बक्साई पठाएकी छु,''''।—श्री केसर (विक्रमोर्वशी)।

**वर्ष खानु, टोक्नु**—=बर्खको उमेर हुनु। रनेले गधापचिसी पनि नाघेको थिएन, भर्खर २२ **वर्ष** मात्र **टोकेको** थियो।—ग्रन्थकार (कथा कुसुम)।

**वर्ष दिन**—'महीना दिन' मा हेर। **वर्ष दिन** कतै पर एकलै भाउज्यूलाई न लिएर जानु भएन भने तपाईंलाई म आफैंसित लैजानेछु।—बालकृष्ण (कथा कुसुम)।

**वर्ष लाग्नु**—=बर्खको उमेरमा टेक्नु वा छुनु। महाजनको

छोरो पनि पाँच वर्ष लाग्यो, बुवाले पनि शिक्षाको आरम्भ गऱ्यो ।—बोधविक्रम (दन्त्य-कथा)। यो आउने मङ्सिरमा छयासी लाग्छु, अब त क-सिङ्गर जस्तै कुनामा थुप्रिने वेला भयो ।—बालकृष्ण (मुकुन्द इन्दिरा)।

**वर्षौंको**—=वर्ष दिनको (यस-भन्दा बढ़ी वर्षमा अर्थात् २,३ सित वर्षा प्रयोग हुँदैन)। यो ठुली पाँच वर्षकी भई, छोरो वर्षौंको ।—बालकृष्ण (मुटुको व्यथा)।

**वर्षौं झुल्नु**—=धेरै दिन धाउने पार्नु, आसमा फसाउनु । काजी-ले एउटा बाइस्कल दिनालाई म-लाई वर्षौं झुलाउनुभयो ।

**वल्लो गालाको पल्लो गाला, पल्लो गालाको वल्लो गाला पुऱ्याइ-दिनु**—=बेसरी गाला फोड्नु ।

**वश चल्नु**—=हुन सक्नु, अधि-कारमा हुनु । कहासम्म भनू सकिन्न इ कथा लामिन्छ भन्छु जती । वस् केही नचलेर दुःखि भइयो झोक् उठ्छ ऐछे अती ॥—मोतीराम (उषा चरित्र)।

**वाकवाक(की) लाग्नु**—=वमन हुन खोज्नु । काँचो मासु देखे-देखि वाकवाकी लागिरहेछ।

**वाक आउनु, लाग्नु, हुनु**—(१)=घृणा पैदा हुनु, विरक्त हुनु, आजीत हुनु । यस्तो चाल छ, उसैले त्योदेखि म वाक भइसकें । केटाकेटीहरू करा-एको सुन्दा पनि मलाई त वाक लागिसक्यो । रमिता ? अँ हँ म त मर्दछु बाजाले,....असा-ध्य नै छन त्यो, देख्नु पर्दैन संझँदै वाक आउँछ;....।—बालकृष्ण (मुकुन्द इन्दिरा)। (२)=घिन लाग्नु । मलाई त बँदेलको मासु देख्ता वाक आउँछ (यस अर्थमा 'लाग्नु, हुनु' प्रयोग हुँदैन)। (३)=ज्यादै अघाउनु । वाक आउन्जेल खान्छौ, उसैले त चाँडचाँडै अजीर्ण हुन्छ । (४)=वमन हुन खोज्नु (साधारण अर्थ; यसमा 'आउनु' मात्र प्रयोग हुन्छ)। वैद्यदाइ, आजकल मलाई दूध खाँदा पनि वाक आउँछ ।

**वाकव्याक लाग्नु, हुनु**—=



वाक लाग्नु, हुनु(१)। तिमी देखेर म वाकव्याक भइसकें ।

**वाके (वाक्य) फुट्नु**—=बक्के फुट्नु (हेर)। लामुखुट्टे उपिया उडुस जउँरा कोमल् सरिर्मा अती। टोक्छन् भन्न सकोन्न वाक्य भ्रकुटी चल्दैन केही गती ॥—डिल्ली शम्शेर (यूरोपयात्रा)। त्यो हेरिसके पछि हजुरको वाक्यै फुट्ने छैन ।—प्रेमराज (ससुराली)।

**वाग्लेको जन्तीबाखो खुवाइ**—एउटाको निमित्त पठाएको माल अर्कोले भूल गरी खाने वा लिने कामलाई दृष्टान्त दिने (एक पटक वाग्ले थरका बाहुनले त्यसै गरी अर्काको जन्तीबाखो खाइ-दिएका हुनाले)।

**वाग्लेको ढिकी लड़े झैँ लड्नु**—बेकाममा पडिरहेको चीज वा लेटिरहेको मान्छेको बारे प्रयोग हुने। दश बजिसक्ता पनि वाग्लेको ढिकी लड़े झैँ लड़िरहन्छौ ।

**वाङ खानु**—=फेलो खानु । नाफा गरुँला भनी बेपार गरेको त वाङ खानुपऱ्यो !

**वाचक चल्नु**—=परर वा राम्ररी बाँच्न सक्नु । रामबहा-दुरको अझ वाचक चलेको छैन, अध्यात्म रामायण पढाऊ ।

**वाचा बाँध्नु**—=प्रतिज्ञा गर्नु । "वाचा बाँध—कबूल गर" —शिवप्रताप (दुर्गेशनन्दिनी)।

**वाद्यै छ**—सन्जोग नपरी नछोड्ने हुन्छ । चाड़को वेलामा कृष्णा-वती विरामी हुने वाद्यै छ ।

**वायु छाड्नु, जानु**—=अपा-नवायु गर्नु, हुनु (कोमल रूप)।

**वाल्ल (वात्त) पर्नु**—=बिलख-बन्द वा जिल्ल पर्नु (प्रायः मुख बाएर)। सानु घरमा मात्र बाठो छ, धेरै मान्छे देख्यो कि वाल्ल पर्छ ।

**वास उठाउनु**—=स्ववासी घर-बाट निकाल्नु । प्रभु, साहूले मेरो वासै उठाइदियो !

**वास चल्नु**—=हावामा बास्ना फैलनु । इन्को वास मिठो छ वायु वहन्या वास् चल्छ मग्मग् पनी ॥—राजीवलोचन (केदारकल्प)।

**वासना छुट्नु**—(१)=बास्ना चल्नु । तिमीले हालेको अत्तरको

वासना छुटिरहेछ । (२) =विषयभोगको इच्छा हराउनु । वासना नछुटेपछि, तेस अबस्थामा पनि दुःखसुखको भोगगर्नुपर्छ ।—जयपृथ्वी बहादुर (तत्त्वप्रशंसा) ।

**वास बस्नु**—(१)=केही दिनको बाटो हिंड्दा राती सुत्नु वा विश्राम गर्नु । यता अहिले चरा चुरुङ्गोहरू पनि **वास बस्न** लागे ; ऋषिमुनिहरू पानीमा पसे ; आगो बलिरहेछ ; तपोवनभरी धूवाँ रङमगिइरहेछ । —श्री अर्जुन (स्वप्नवासवदत्ता)। बाबू ! गईकन कहाँ **वसुला** म **वास** । यै बातले हृदय केहि भयो उदास ॥—लेखनाथ (सत्यकलिसंवाद) । (२)=राती-विश्राम गर्नु वा सुत्नु । उसो भए सँधै माधवकहाँ जान दिनु होस् त, म चराहरू जस्तै खान अन्त गए पनी **वास वस्न** आफ्नै घरमा आउँला ।—बालकृष्ण (मुटुको व्यथा) । (३)= बिरामी भई वा सवारी बिग्री बीच बाटोमा कुर्चो खानु । यस्तो थोत्रो मोटर रहेछ, बीचैमा **वास बस्ला** नि ।

**वास हुनु**—(१)=धेरै बेरसम्म नदेख्ता प्रयोग हुने । अहिलेसम्म तेरो **वास** कहाँ थियो, बिरामी भएको देखेपछि आउनुपर्दैन ? (२)=वास बस्ने काम हुनु । सुन्दर् बृक्ष थियो ठुलो तिर विषे एक् शिंशपाको तहाँ । दोश्रो **वास्** रघुनाथको तहिं भयो त्यै बृक्षका तल् महाँ ॥—भानुभक्त (रामायण)। (३)=बस्नु, रहनु, हुनु । दुःखीको घरमा मात्र तेरो **वास हुने** भए हे ईश्वर, दया राखी मलाई अझ दुःख दे !— बालकृष्ण (सुकुन्द इन्दिरा) । कहाँ थियो **वास**, अघी म को थियें, कसो हुँदा यो पिंजरा लिंदो भयें ;....।—लेखनाथ (बुद्धिविनोद) ।

**वास्ता राख्नु**—=टेर लाउनु, संबन्ध वा मेल राख्नु । तिम्रो बाबुले हाम्रो त **वास्तै राखे**नन् ए !

**विचार उठ्नु**—=खयाल पैदा हुनु । भैगो, हुने भइ-शक्यो, अवलाइ खाली । लिन्छौं स्वयं सकल शासनको प्रणाली ॥ भन्ने सुयोग्य उनका मनमा **विचार**। भाई ! **उठेनछ** तहाँ किन एकवार ? ॥—लेखनाथ (सत्यकलिसंवाद)। यो **विचार उठे** पछि काजी बाहिर आए ।—रुद्रराज (चप्पाकाजी) । उनीहरूको मगजमा जगत्‌को उत्पत्तिको विषयमा अनेकौं **विचार उठ्न** लाग्यो,....।—जितेन्द्र (आधुनिक आविष्कार) ।



**विचार पठाउनु**—=आशौचवालाहरूले मृतकको घरमा घिउ, चिनी, चामल, इत्यादि पठाउनु । तिमीले घिमिरेकहाँ **विचार पठायो** ?

**विचार पुग्नु, पुऱ्याउनु**—= दृष्टि पुग्नु, पुऱ्याउनु ।....मालिकहरूले **विचार पुऱ्याई** काम गर्दै गई करियालाई....लाग्ने खर्च क्रमैसँग ज्याला मजुरीमा लाउने गर्दै गए भने....करिया नभए कठिन पर्न आउला कि भन्ने खाली मनैमनको शङ्का धेरै त्यसै अवश्य विलाउन जानेछ। - श्री ३ चन्द्र (अमलेख-भाषण) । लाखौं प्रजा-प्राणीका सुख-दुःखको याद-**विचार पुऱ्याउने** ठुलो भार ममाथी आई परेको छ,....। —श्री ३ भीम (नगर-प्रदक्षिणोत्सवको वक्तृता) ।

**विचार राख्नु**—=ख्याल वा ध्यान राख्नु । रोगीको रोग कम हुँदै गयेको, दब्दै गयेको, बढ्दै गयेको इत्यादि सब कुरामा नर्सले पूरा **विचार राख्नू** पर्छ ।— राममणि (सह्यार-सुसार-संभार)।

**विजय**—संस्कृतमा यसको अर्थ 'जित' छ तापनि हाम्रो भाषामा यसको अर्थ 'हानि, खराबी, कुभलो' हुन्छ । मैले जय **विजय** केही बोलिनँ ।

**विन(ना)सित्तीको झर्को, विन(ना)सित्तीमा**—=व्यर्थको झंझट, व्यर्थमा । घर्मा कोहि छ छैन केहि नबुझी बस्छौ त क्या सित्तिमा अन्तर्यामि भनेर भन्छ दुनिञा धिक्कार्‌**बिना सित्तिमा** ॥ —मोतीराम (उषा चरित्र) ।

**विनाआँसुको रुवाइ**—(१)= शोकले अति विह्वल हुँदा छाती फुट्ला जस्तो भई वा रुँदारुँदा आँसु सिद्धिई आँसु नआउने अवस्था । **विनाआँसुको रुवाइ**ले सीता लड़ीबड़ी खेलेको

देख्ता हामीले पनि मन थाम्न सकेनौं। (२) साधारण अर्थ। विनाआँसुको रुवाइले म डराउँछु र?—ढाँचा पारेको कसले बुझेको छैन!

विनाटीकाको राजा—रैतीले नथापेका वा नमानेका राजा।

विनादौराको बगली—=आधारविनाको चीजलाई भन्ने (प्राय: विधवा स्त्रीलाई)। म जाबो विनादौराको बगलीले गरेर के हुन्छ र?

विनापीठे[को] ढिंड़ो ओड़ाल्नु—=सर्दाम नजोड़ी काम गर्न तम्सिदा प्रयोग हुने। पूँजी न सूँजी छोराको विहा—विनापिठाको ढिंड़ो ओड़ाल्ना जस्तो मान्छे।

विनाबाबुको छोरो—=बाबुको ठेगान नभएको छोरो। त्यसलाई विनाबाबुको छोरा भन्यो कि औधि जाग्छ।

विनामियाको हात्ती—बन्देज गर्ने वा राख्ने ठाउँविनाको बहुमूल्य कुरालाई दृष्टान्त दिने (मियो=बाँध्ने थाम)।

विनाराजाको देश हुनु—=सँजा नपाईकन मनपरी वा जथाभावीको अत्याचार अनाचार हुनु। उसै मलाई काट्छु भन्ने; यो विनाराजाको देश हो र?

विरोध खानु—=विरुद्ध हुनु, (सित) बाझ्नु। कौनै मुलुकमा पनी रहन अयोग्य भएको साह्रै निर्धिन यो चलन रहनाले मनुष्यका मन बुद्धिमा बिलकूल विरोध खाने भई रहेको छ।—श्री३चन्द्र (अमलेख-भाषण)।

विवरण खोल्नु—फोँट खोल्नु। अस्तिको कुराको विवरण खोलेर बयान लेख।

विश्वास खोल्नु—=कसैलाई भन्दैन भन्ने पत्यार गरी भनेको गुप्ती कुरा प्रकट गर्नु। अर्काको विश्वास खोलिदियौ, त्यसको पाप तिमीले भोग्नुपर्छ।

विश्वास पार्नु, दिलाउनु—(१)=(मालिकलाई) असल छ अथवा काम गर्छ वा गर्न सक्छ भन्ने पार्नु (यस अर्थमा 'दिलाउनु' हुँदैन)। तिमीले मालिकलाई विश्वास पारेका छौ, त्यत्ति कोट किन नबक्सनु! (२)=पत्याउने पार्नु। यो बट्टा



त्यति सस्तोमा पाइन्छ भन्ने ठानेको थिइनँ, अस्ति कोते दाइले विश्वास पारे।

विश्वास राख्नु—(१)=अर्कोले पत्यार गरेर भनेको गुह्य कुरा कसैलाइ नभन्नु। सन्ते चौपट्ट विश्वास राख्न सक्छ, उसले थाहा पाएकोमा डराउनुपर्दैन। (२)=पत्याउनु। जोडियो ओठमा जान जब मन्त्र पनी सुन्यौ, दृढ विश्वास राखेर श्वासले थुत्नु बाँकि छ।—बालकृष्ण (ध्रुव)।

विश्वास लिनु—=(अर्काको) गुह्य कुरा थुत्नु। अर्काको विश्वास लिएर खोलिदिनु हुँदैन।

विष्णु, विष्णु!—खुट्टा लाग्न नहुने मान्छेलाई खुट्टा लाग्दा वा त्यस्तो मान्छेले खुट्टा छुँदा पाप काट्नालाई भन्ने विस्मयादिबोधक। आच्चे! भानिजलाई पो कुल्चिएछ—विष्णु, विष्णु!

वृत्ति चलाउनु—=जीवननिर्वाह गर्नु।''''परमेश्वर यस्ताछन् भनि, आफ्नु वृत्ति चलाएर पनि हिड्दछन्।—जयपृथ्वी बहादुर (तत्त्वप्रशंसा)।

वेग उड्नु—=(चराको बारे) एक पटक जोड़ गर्दा उड्न सक्ने गतिले उड्नु। छर्राले लागे पनि ढुकुर अकसर एक वेग उड़ेर मात्र खस्छ।

वेग हान्नु—(१)=जोडसँग दौडनु। कहाँबाट धिनीले वेग हान्दै आएर दही घोप्ट्याइदिई। (२)=(चराको बारे) पूरा जोडसँग उड्नु। त्यो कालिज वेग हानेर कता पुग्यो कता, यहाँ खोजेर हुन्छ?

वेला आइपुग्नु-(१)=मर्ने वेला हुनु। तिम्रो बाको वेला आइपुगेको नानी, डाक्टरवैद्यलाई दोष नलाऊ। (२) साधारण अर्थ। आँप आउने वेला पनि आइपुग्यो, अब त।

वैकुण्ठवास हुनु—मरेको देख्ता मरेको जीवको माया गरी शुभेच्छा प्रकट गर्दा प्रयोग हुने। हरे नारायण, वैकुण्ठ वास होस्! अर्कोले भनेको कत्ति नमान्ने छि!—ग्रन्थकार (कथा कुसुम)।

व्यवहार चलाउनु—गृहस्थीको चल्दोमिल्दो कामकाज गर्नु।

गृहस्थीमा बसेपछि व्यवहार चलाउनु पर्नै—चाड़बाड़ आयो कि पं० श्रीरामशर्माको रिस बढ़दै जान्थ्यो ; सानो कुरामा पनि प्रचण्ड हुन्थे, बातन पिछे झोकिन्थे ।—रुद्रराज (प्रायश्चित्त) ।

**व्यवहार बढ़ाउनु**—=रीतभाँत थप्नु, नयाँ दस्तूर झिक्नु, विषय-प्रपञ्चको कक्षा बढ़ाउनु । लुँइटेलहरुले त्यसरी ओइरिएर व्यवहार बढ़ाए—पाँच पाँच रूपैया दिएर किन मुख हेर्नु पर्थ्यो ?—रुद्रराज (रूपमती) ।

## श्

**शङ्का उठ्नु**—=सन्देह उब्जनु, चिसो पस्नु । तेस पछीका वैद्यले निकालेका रहेछन् कि भन्ने शङ्का पनि उठ्दछ····।—राममणि (सह्यार-सुसार-संभार)।

**शङ्का निवारण गर्नु**—=सन्देह दूर गर्नु । आखिर्मा अनिरुद्ध हेरि मनमा शङ्का निवारण् गरिन् ।—मोतीराम (उषा चरित्र) ।

**शङ्का मेट्नु, मेटिनु**—=मनबाट शङ्का हट्नु, हटाउनु ।···· आफ्नी नयाँ दुलहीले गाला जोरी····कानेखुसी गर्दा तिनका सब शङ्का मेटिए ।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)।

**शङ्का लिनु**—=सन्देह गर्नु । विश्वासघात गर्ला कि भन्ने शङ्का कुनै तिमी नलेऊ ;····!—बालकृष्ण (अन्धवेग)।

**शत्रु कमाउनु, बढ़ाउनु**—=वैरी तुल्याउनु, वैरीको संख्या थप्नु । अर्काको कुरामा बोल्न गएर किन शत्रु कमाउँछौ ?

**शत्रु बन्नु**—=शत्रु हुनु । ४५ वर्षको यत्रो लामो जीवनमा तिनले कसैलाई आफ्नो शत्रु बनायेनन् ।—विश्वेश्वर (कथा कुसुम) ।

**शत्रुलाई पनि नपरोस्**—ज्यादा ठूलो विपद् वा अप्ठ्यारो पर्दा प्रयोग हुने । यस्तो दुःख त शत्रुलाई पनि नपरोस् !

**शरणको मरण पार्नु, गर्नु**—=पीछा पर्न आएको मानिसलाई हानि गर्नु । तिमीले बचाइ-



देलाउ भनेर श्यामवदनले त्यो कुरा भनेकी होलो झन् तिमीले त मालिककहाँ झोसेर शरणको मरण पार्‍यौ ।

**शरण[मा] पर्नु**—=पीछा पर्नु । ····तिम्रो शरणमा पर्छु अब जे गर्दछौ गर ! जो गर्नेछौ सबै भन्दा मेरो प्यारो हुनेछ त्यै !—बालकृष्ण (अन्धवेग) । मेरो आज शरण् पर्‍यो भनि दया आयो उ कागमा पनी । मै माथी त दया कसो हुन गयो भन्थिन् भन्या यो पनी ॥—भानुभक्त (रामायण) । तर उनी भागी नुवाकोटमा पृथ्वीनारायण शाहको शरण पर्न गयेका हुनाले जयप्रकाश मल्लले उनलाई केही दण्ड दिन पायेनन् ।—सूर्यविक्रम (पृथ्वीनारायण शाह) । अबला शरणै परे पछि पनि हेरी रहलान् र ती बसी ?—गोपाल पाँडे (सुनीति-विरह) ।

**शरण लिनु**—=रक्षा गर्नु । मलाई अब स्वामी उपदेश दिनूहोस. पाउ परछु प्रभुका म सँधै नाथ शरण लिनूहोस ॥—लेखनाथ (भर्तृहरिनिर्वेद) ।

**शालको पात फर्के जस्तो**—=कुरा फरक फरक फर्काउँदा दृष्टान्त दिने बोली । अघि मात्रै माइत जान्छु भन्थ्यौ, अहिले माइतीलाई हेला गर्छ्यौ, तिमी त शालको पात फर्के जस्तो कुरा फर्काउन खूब जान्दछ्यौ ब्यारे ।

**शिकार खेल्नु**—=प्रायः जङ्गलमा गई बन्दूक इत्यादिले पशु पंछी मार्नु ।····तिम्रो मंजुर भये आज म ६।७ घण्टा जङ्गलमा शिकार खेलेर दिललाई केही ठण्डा गरने थियें ।—लेखनाथ (भर्तृहरिनिर्वेद) ।

**शिकार गर्नु**—=मार्नु, पक्रनु । यस जङ्गलमा घूमदा घूमदै बूढालाई झन्नै बाघले शिकार गरेथ्यो····!—लेखनाथ (भर्तृहरिनिर्वेद) । हिजो राती मूसाले सुत्नै दिएन, आज त्यसको शिकार गर्नुपर्‍यो । भोलि चोरको शिकार गर्नुपर्‍यो । (२)=स्वार्थ खूब साध्नु, चोर्नु, हात लाउनु । हिजो शिकार गरेर घर कति ल्यायौ ?

**शिकार बन्नु, हुनु**—(१)=

फैलापर्नु, वशमा आउनु । चोरको चलाकीको म पनि शिकार बनेछु ।—बोधविक्रम (दन्त्यकथा) । (२)=प्रेममा फस्नु । अस्ति हामीले भेटेकी ठिटीको त तिमी शिकार बन्यौ रे ? (३)=द्वारा मर्नु ।....चक्रवर्ती छ जो सोही पनि केवल मृत्युको शिकार बन्न चाहन्छ रोजी खोजी रुँदै रुँदै बाणलाई लखेटेर छाती थापी खुशी हुँदै ।—बालकृष्ण (मुकुन्द इन्दिरा) । यदि त्यो त शिकार भै शक्यो भनि थाहा हुन गो भने पुग्यो !—गोपाल पाँडे (सुनीति-विरह)।

शिखा पार्नु—=टुपी सुर्कोउने पार्नु । मेरो त टुपी झरेर शिखा पार्ने पनि नहुने भयो ।

शिर चढ़ाउनु—(१)=सानो मान्छेलाई बढ़ाउनु । केटीलाई शिर चढ़ाएपछि त्यस्तो मुख खानुपर्छ । (२)चिट्ठी पाउँदा प्रयोग हुने आदरको बोली । वैशाख १ गतेको शिक्षापत्रको दर्शन पाई हरफ हरफ पढ़ी शिर चढ़ाएँ ।

शिर चढ़नु—(१)=रिस उठ्नु । कालीलाई शिर चढ़ेको छ, नबोलाऊ । (२)=मात्तिनु । यो स्वास्नीलाई सोझो सुखले बोलायो कि शिर चढ़िहाल्छे ।

शिर ठाडो गर्नु—(१)=इज्जत राख्नु, अरूसँग नदब्नु । तिनीहरूले शिर ठाडो गर्न पाउँदैन थे ।—रुद्रराज (रूपमती) । तर मूर्ख एस्याक्लीले आफ्नो शिर ठाढै गरिरह्यो, कत्ति पनि डर अथवा आदरभाउ देखाइन ।—खड्गमान (ग्रीस र रोमको दन्तेकथासंग्रह) ।

शिरपाउ पाउनु, दिनु—=टाउकोदेखि खुट्टासम्मको गहनालुगाहरू पाउनु, दिनु । ठूल्ठूलाको घरमा नानीचाहिंको बिहामा ददा धाईलाई शिरपाउ दिने चलन छ ।

शिर हान्नु—(१)=प्राण जानु, केही अगाडि हिक्का लागेर टाउको चल्नु । शिर हानिसक्यो अब बूढ़ाको धेरै बेर छैन । (२)=(घोड़ाको बारे) टाउको माथितिर उफारेर सवारको अकसर नाकमा बजाउनु । यो घोडाको अरू उलेली छैन कहिलेकहीं शिर



हान्छ ।

शिला खोज्नु—=धनीले बाली उठाएर लगेपछि खेत वा बारीमा झरेपरेको टिपटाप गर्नु । उहिलेका धेरैजसो ब्राह्मण शिला खोजेर जीवननिर्वाह गर्थे । यसबाट (२)=जे कुराको पनि रहेपहेको शेष टिपटाप वा खोजखाज गरी बटुल्नु । हामीले शिला खोजेर यत्ति पोते जम्मा गरेका छौं, बाबै ! आलुको शिला खोजी खान मन लागेको थियो फुर्सतै पाइनँ ।

शीत पर्नु—=शीत झर्नु ।....धेरै गर्मी भयो भने शीत देशबाट उत्पन्न हुने रुखहरू ओइलाउँछन् ; विशेष शीत पर्‍यो भने उष्ण देशका बुटीहरूका जरा मर्दछन् ; ........।—जितेन्द्र (आधुनेक आविष्कार) ।

शीतल ताप्नु—=(गर्मीमा) चिसो हावा वा ठाउँको आनन्द लिनु ।

शुद्ध बुद्ध—=मूर्ख वा गल्ब्याङ्ग्रो । संयोगवश शुद्ध बुद्ध बुधे घरैमा थियो ।—रुद्रराज (प्रायश्चित्त) ।

शेखी झार्नु, तोड़्नु—=गर्व खर्व गर्नु । तिमी शेखी झार्नामा खलिपा, विस्तुर नजाने हतियार (ह्रौं) मीठो बोल्ने कोइली !—श्री केसर (विक्रमोर्वशी)। लङ्का पोलेर सब खाक् गरि कन सहजै वैरिको सेखि झार्‍याँ ॥—भानुभक्त (रामायण) । म यो सेखी नझारीकन छोड्दिन, टुना गरेर 'मे मैं' र 'रो रो' भन्दै घिसार्दछु जसरी बलि गर्नेले बोकोलाई घिसार्दछ ।—बालकृष्ण (मुकुन्द इन्दिरा) । यस्ता रिस्सित सेखि झारि गुरुको साथि समेत् साथ् गरी ।—मोतीराम (प्रह्लाद भक्तिकथा) । पापीको सेखि तोडी बिपत्तिकन हरी फेरी यै सुक्ख दीनन् ॥—ऐजन (उषा चरित्र) । उनको पनि शेखी झारें—अब मलाई कसले छुन शक्तछ भन्ने थियो ।—ईश्वरले उसको शेखि पनी कसरी तोडिदियो ?—रुद्रराज (रूपमती) ।

शेष (सेख) पछि—=मरेपछि । तपाईंको शेषपछि मेरो के दशा होला ?—बोधविक्रम (दन्त्यकथा) । मेरो शेष पछि उनको

के हाल हुनेछ कुन्नि ?—भवानी (यौवनको आँधी)।....यो पर्वते दलले जयप्रकाशका बाबू जगज्जय मल्लसंग हामी तपाईंका शेष पछी जयप्रकाश मल्ललाई राजा तुल्याउन राजी छैनौं....भन्ने साहस गरेथ्यो।—सूर्य विक्रम (पृथ्वीनारायण शाहा)।

## स्

**सँगै रहन दिनु**—काम नलाग्दा वा असर नगर्दा प्रयोग हुने। तिम्रो माफ तिमी सँगै रहन द्यौ चाहिन्न कत्ती पनी।—मोतीराम (प्रल्हाद भक्ति कथा) (२) साधारण अर्थ। उसको घड़ी उसैसँग रहन दिएँ, मैले अर्को किनेर ल्याएँ।

**संसार चिन्नु**—=लौकिक व्यवहारको सारा दुक्ख सुक्ख इत्यादिको अनुभव हुनु, भुक्त-वैरागी हुनु। तिमी जस्तो सन्सार चिनेको मान्छेले त्यस कुराको शोक लिन हुँदैन।

**संसार डुब्नु**—=प्रलय हुनु (प्रायः आदर्शव्यक्तिबाट खराब कामको संभावनामा प्रयोग हुने)। उहांबाट पनि त्यस्तो काम हुन लाग्यो भने सन्सारै डुब्छ।

**संसार तर्नु**—=मुक्त हुनु। राम राम जपे सन्सार तरिन्छ भन्ने पनि यिनीहरूलाई थाह छ।—प्रेमराज (ससुराली)।

**संसार त्याग्नु**—(१)=मर्नु। उहाँले पनि कमै उमेरमा संसार त्याग्नुभयो। (२)=जोगी हुनु, वानप्रस्थाश्रम लिनु। उहिलेका मानिसहरू बुढेसकाल भएपछि छोरालाई घरबार सुम्पी संसार त्यागेर वन पस्थे।

**सगर (अकास) खस्नु**—असंभव कुरा जताउनालाई प्रयोग हुने। यो हातमा तिमीले मलाई जित्नु र सगर खस्नु बराबर हो।

**सगर डढ्नु**—=सूर्यास्तमा टाढ़ा टाढासम्मको बादल गाढ़ा राता हुनु। दक्खिनपट्टि सगर डढ्यो भने पानी पर्छ भन्छन्।

**सगरले *थिचेको* ( मिचेको ) जस्तो**—ठूलो आपद्ले घेर्दा दृष्टान्त दिने बोली। हिन्दुस्थानमा पोइ मरेको सुन्दा रामकी आमालाई सगरले थिचे जस्तो भयो।



**सघाइ लाग्नु**—=मद्दत दिनु। तिमीले सघाइ लागेको हुनाले यो काम चाँड़ै सिद्धियो।

**सङ्गतगुनाको फल**—=कुनै (प्रायः खराब) मानिससँग मेल गर्दाको परिणाम। आखिर कान्ते पनि झ्यालखान परेछ, सङ्गतगुनाको फल त्यस्तो हुन्छ।

**संग्रहै नगर्नु**—(१)=सङ्गतै नगर्नु। अब त्यस्ता मान्छेसँग संग्रहै नगर। (२)=लाटलुटै नगर्नु। तिमीलाई खोकी लाग्यो, तेलको संग्रहै नगर।

**सतीको सराप [लागे] जस्तो ( जत्तिको )**—कुनै (प्रायः खराब) कुराको बाधै हुँदा वा फेलो नखाँदा दृष्टान्त दिने (सतीको सराप कहिल्यै फेलो खाँदैन भन्ने चलेकोले)। दिउँसो म सुतें कि एउटा न एउटाले उठाइदिइहाल्छ, सतीको सराप जस्तो छ।

**सतीको सराप लाग्नु**—सोझो गर्दा उल्टो आइलाग्दा प्रयोग हुने (एउटी सतीले सरापेको कुरालाई लिई ; सोझाले खान... *इत्यादि उखान हेर*)। मैले तिम्रो कत्रो आमदानी गरिदिएँ, झन् मलाई यस्तो दोष लायौ—अरू केही होइन, सतीको सराप लागेको।

**सती जानु**—=पतिको मृतदेहसित चितामा जिउँदै पोलिई खरानी हुनु।....वैरीभाव बिर्सी दुवै पक्षले किल्ला बाहिर निःशस्त्र निस्केर मैदानको बीचमा सो मृत शरीरको साथमा निजकी स्त्री सती गई हिन्दू नारीको निडर पतिव्रताको उदाहरण दिएको हेरे....।—श्री मृगेन्द्र(भानुभक्त स्मारक ग्रन्थ)। हाम्रा मैयाँमहारानीहरू अगि सती गए, काल अकैं भयो, हाम्रो यो नवीन समाजमा त्यही नायक मानिन्छ समानअधिकार जो स्त्रीलाई दिन्छ—....! —बालकृष्ण(अन्धवेग)। सरकार! यौटी पतिव्रता स्त्री सती जान लागेकी रहीछन तेसैको खलबली रेहेछ।—लेखनाथ (भर्तृहरि-निर्वेद)। बलदेवजीकी रानी पनी सती गइन्।—होमनाथ (श्रीमद्भागवत कृष्णचरित्र)। स्त्रीहरू

पतिव्रता हुन्थे र कोही कोही पति मरे पछी सती पनी जान्थे।—वासुदेव (भारतवर्षको इतिहास)। पतिको देहान्त पछि पतिसङ्गै सती जानु सबै भन्दा उत्तम धर्म गनिएको छ।—भवानी (यौवनको आँधी)।

सत् छोड्नु—(१)=काम दिन छोड्नु, भत्कनु, मर्नु। यो घड़ीले पनि अब त सत् छोड्यो। जति औषधी गरे पनि निको हुँदैन, यो घोड़ाले सत् छोड्न लाग्यो क्यारे। (२)=सत्यबाट विचलित हुनु। अरूले जे गरे पनि कृष्णमायाले त सत् छोड्नेछैन।

सत्ते रामेराम—किरिया हाल्न प्रायः आइमाईले प्रयोग गर्ने बोली। सत्ते रामेराम, मलाई सबभन्दा तपाईंकै माया लाग्छ।

सतमा रहनु, बस्नु—=एउटै लोग्ने वा स्वास्नी भनेर बस्नु, पतिव्रता वा एकनारी हुनु। पोइको सतमा बस्नु आइमाईको मुख्य धर्म हो।

सत्य (सत्) डग्नु—=सतीत्व वा कुमारीत्व हरण हुनु। कमला मुखले जोसित पनि ठट्टा गर्न अघि सर्छे, तर उसको सत्य डगेको छैन।

सत्र पर्नु—(१)=सजिलो वा सव्य पर्नु, मनमाफिक संजोग पर्नु (दोस्रो अर्थबाट आएको)। ....मदनका उनै पाँच बाण मनलाई सत्र परिरहेछन्।—श्री केसर (विक्रमोर्वशी)। हेर लुच्चो, आफ्नो दाइलाई सत्र परोस् भनेर मलाई रोकेको। —बालकृष्ण (मुटको व्यथा)। (२)=(नकसको खेलमा) दाउ पर्नु। म बादशाह सोहमा बसेको थिएँ, के गर्नु, तिम्रो सत्रै परिदियो!

सधैं [को] आधा दिन र आधा रात—नित्यकर्ममा वा सुत्ता उठ्ता खाँदा इत्यादि ढीलो गरेकोमा मन नपर्दा प्रयोग हुने ('आधा दिन' यही अर्थमा मात्र प्रयोग हुन्छ)। खान लाग्यो सधैं आधा दिन र आधा रात छ, कताबाट पेट सप्रोस् नाइँ!

सधैं एकनासको दिन नरहनु, नहुनु—अहङ्कार गर्दा वा शोक गर्दा सुक्ख दुःख सधैं कायम रहँदैन भन्ने जताउँदा प्रयोग हुने। ज्यादा फूर्ति नगर सधैं एकनासको दिन रहँदैन, मेरो पनि त पालो आउला नि।



सनक चढ्नु, सवार हुनु—=मनको आवेग आउनु, धुन सवार हुनु। किन्नरी अविलम्ब यहीं थिई, अहिले के सनक चढ़ेर पर्खालमा उक्ली लड्न पुगिछ।

सन्तानले डाँड़ा काँड़ा भरून् (ढाकून्)!—आसीक दिंदा प्रयोग हुने।

सन्तोष मान्नु—=आफ्नो चित्त बुझाउनु, सन्तुष्ट हुनु। .... पेंसनको पनि बन्दोबस्त गर्ने धेरै दिन देखिको हाम्रो अभिलाषा आज श्रीपशुपतिनाथको इच्छाले पूरा भएकोमा सन्तोष मानेकोछु।—श्री ३ जुद्ध (१९९८ जन्मोत्सवको स्पीच)। धनाढ्य छु, धनी जस्तै असन्तोषी पनी म छु, कपिलाको सबै माया पाए सन्तोष-मान्दछु।—बालकृष्ण (मुटुको व्यथा)। यतिले सन्तोष मानेर जाऊ है, थोरै भयो नभन!

सपनाको कुरा विपनामा खोज्नु—गए दिनको सुक्ख वा वैभवको आग्रह गर्ने कुरालाई दृष्टान्त दिने। उहिले कालै बेग्लै थियो, सपनाको कुरा विपनामा खोजेर पुग्दैन।

सपनाको घोडा चढ्नु—=काल्पनिक कुरामा भर परेर फूर्ति गर्नु वा दङ्ग पर्नु। तिमीले त सपनाको घोडा चढ्नु मात्र भयो, बेपार त बिग्रयो रे, हैन?

सपना जस्तो—=झूटो वा क्षणिक कुरालाई र पत्याइनसक्नुको कुरालाई दृष्टान्त दिंदा प्रयोग हुने। स्वप्न जस्ता लोक सारा जान एकैनास छन् छैन वास्ता केही तिन्को चल्दछ्छ बाँधेर मन्॥—लेखनाथ (भर्तृहरिनिर्वेद)।

सपनामा देख्नु, भन्नु, सुन्नु, आदि—(१)=देखेको, भनेको, सुनेको, आदि छैन भन्ने कुरालाई जोड़ दिन प्रयोग हुने। त्यो टोपी धोबीलाई धुन दिएको

आज पाँच दिन भयो तिमीले कसरी कोठामा देख्यौ ?—सपनामा देख्यौ होला । (२) साधारण अर्थ । आज मैले बालाई सपनामा देखेँ ।

**सपना [को कुरा] हुनु**—(१) =देख्न दुर्लभ हुनु । ती गए दिनका कुरा सपना भइसक्यो। (२)=अलमल्ल वा होश गुम हुनु । उसले अस्ति राख्न दिएको दश रुपियाँ ल्याऊ भन्दा त मलाई सपनाको कुरा भयो । (३) साधारण अर्थ (=सपनामा प्रकाशित हुनु, प्रायः देवताद्वारा; यस अर्थमा 'सपना हुनु' मात्र)। रत्नकुमारीलाई सपना भएछ, अनि भोकटेको बोटनेर खनेर हेर्दा इनार भेटियो रे ।

**सपना हो कि विपना हो जस्तो**—=अबझटमा केही कुरा आइपर्दा दृष्टान्त दिने बोली । देख्ता देख्तैको त्यस्तो मोटोघाटो मान्छे हिजो मर्‍यो भनेको सुन्दा मलाई सपना हो कि विपना हो जस्तो लागिरहेछ ।

**सप्को मार्नु, हाल्नु**—=ओढ्ने कुराको एक छेउ शरीरलाई थोर बहुत बेर्हें गरी कुममाथि चढ़ाउनु । तिम्रो खास्टो लत्रिरहेछ, के सप्को मारेर पनि ओढ्न नसकेको ! (२)= सप्प्याक्क आवाज आउने गरी खानु । आज ता जजमानकहाँ श्राद्ध हुनाले खीरको सप्को मार्न पाउँछौ ।

**सप्को लाग्नु**—=लुगाको टुप्पाले फ्याट्ट शरीरमा लाग्नु (जसलाई लाग्छ त्यो मान्छेले त्यस लुगाको धागो चुँडी त्यसमा थुकी फाल्छ, नत्र त्यो मानिस सुकेर जान्छ भन्ने चलन छ)। कान्छी छोरीको खाष्टोको सप्को लाग्दा आमा चाहिले झर्की त्यो खाष्टोबाट एक टुक्रा धागो चुँडेर 'थू, थू' गरी फ्याँकेको चतुरेलाइ चित्त बुझेन ।—ग्रन्थकार (कथा कुसुम)।

**सप्ताह लाउनु**—=निष्ठामा रही एक हप्ताभित्रैमा श्रीमद्भागवत पुराण सुनिसक्नु। छोरो चिरञ्जीवी होस भनेर सप्ताह पनि लगाए.....।—रुद्रराज(चप्पाकाजी)। हाम्री बज्यै परलोक हुनुभएको ठाउँमा सप्ताह लाउनुपर्छ ।



**सप्रेको मूला जस्तो**—खूब फस्टाएको मान्छेलाई दृष्टान्त दिने बोली । कान्छा ससुराको छोरा त सप्रेको मूला जस्तो भएछन् ।

**सफाइ लिनु, पाउनु, दिनु**—=कसूर रहेनछ भन्ने ठहरिनु, ठहर्‍याउनु । खोइ तिमीले सफाइ लिन सकेनौ, के भन्छौ ?

**सबै (अरू) कुरा पर जाओस्, रहोस्, राख्नु, इत्यादि**—एउटै कुरालाई प्राधान्य दिंदा प्रयोग हुने । जे भये पनी त्यस्तो सबै कुरा परजावस् अले तेस्तो कुरा गर्नेबेला छैन ।—गम्भीरध्वज (चन्द्रशेखर) ।

**सबैको दिन आउनु, फिर्नु**—सबै कुराको फलिफाप वा उन्नति हुने संजोग पर्नु । सबैको दिन आउँदो रहेछ, यो चौर कस्तो थियो अहिले तिम्रो जेठा दाइको पालामा कस्तो भयो ! सब कुरालाई दिन आउनु पर्दो रहेछ, कुकुरपूजाको पनि त दिन आउँछ, मूर्छापूजाको दिन किन नआओस् !—बालकृष्ण (अन्धवेग) ।

**सबै समुद्र हुनु**—=सबै एकछत्त हुनु (छातछूत, लसपसको बारे)। सानु कान्छाले जतातते छोएर सबै समुद्र भइसक्यो, अब त्यसको बारना गरेर साध्यै छैन। (साधारण अर्थमा पनि) ।

*सब्य* **(सब्बे) पर्नु**—=असल मौका, मनमाफिकको संजोग पर्नु । त्यसलाई सब्य परेर आएको छ ।

**समझ लिनु**—=बुद्धि पुर्‍याउनु, कमाउनु । "बाबा, केही नगर घरैमा चूपचाप लागेर बस्, यो बाबू बाजेको नाम नबिका" भनेर हात जोर्दा खेरी पनि समझ लिएन ।—रुद्रराज (रूपमती) ।

*समय* **(संवत्) फिराउनु**—= सबै दुनियाँको रिन तिरेर नयाँ संवत शुरू गर्नु(प्रायः राजाले)....। उहाँ मुनीहरू त समय फिराउने राजा भनी भन्दछन् किन मैले यो वर्षा समयलाई नफिराउनु ?—श्री केसर ( विक्रमोर्वशी ) ।

**समाधि चढ़ाउनु, लाउनु**—=प्राणायाम गरेर प्राणलाई शिरमा पुऱ्याउनु । आसन बाँधी लाई समाधी रहनू परने खास भिखारी ॥—लेखनाथ (भर्तृहरिनिर्वेद) । स्वामीले समाधि चढ़ाउनु भएको वेलामा हामी वरपर जानु हुँदैन ।

**संझना राख्नु**—(१)=चिन्हु राख्नु । हजूरले त्यस वेला बक्सेको संझना अझसम्म राखिछोडेकै छु । (२)=नबिर्सनु । रहोस् यो संझना माता, विष्णुलाई चढ़ाइएँ, मेरो सट्टा भयो नाम विष्णुको अनि भैगयो ।—बालकृष्ण (प्रह्लाद) । आज बाले भन्नुभएको सबै कुराको संझना राखिछोड़ ।

**संझाउने बिर्साउने**—छुट्टिने वेलामा संझौटोको निमित्त दिएको चीज वा गरेको कामलाई प्रयोग हुने । भोलि त बाटो लागिहाल्छु मेरो संझाउने बिर्साउने चिन्हु यही माला भयो है ? संझाउने बिर्साउने हाँसिद्यौन माहिली (गाइने गीत) ।

**सरकार लाग्नु**—=सरकारद्वारा जफत हुनु । सरकार लागेका जग्गाहरू जसजसको हुन् उस उसलाई फिर्ता गरिदिए ।—रुद्रराज ( भारतवर्षको संक्षिप्त इतिहास, भाग २) ।

**सर गर्नु**—=फाइदा गर्नु (औषधीले) । वैद्यले सोध्यो—'अगिको औषधि पस्यो ?' बूढ़ाले जवाब दियो—'खै, त्यसले त उस्तो सर गरेन ।'—बालकृष्ण (कथा कुसुम) ।

**सर पर्नु**—=सब्य पर्नु । कालु खारिज भएको त बल्नेतलाई पो सर पस्यो ।

**सराप पर्नु**—(१)फेल नखाने वा वाधै हुने कुरालाई दृष्टान्त दिंदा प्रयोग हुने । बालक कालको प्रेममा शराप परे झैं मान्छु ।—गंभीरध्वज (चन्द्रशेखर) । (२)=सरापिनु । अहल्यालाई सराप परी शिला भएर बस्नुपरेको थियो ।

**सराप लाग्नु**—=सरापेको कुरा पुग्नु । पतिव्रताको सराप लागेर विष्णुलाई तुलसी भएर बस्नुपस्यो !—रुद्रराज (चप्पाकाजी) ।



**सर्किनीको कण्ठस्री**—=कमिनीको कण्ठस्री (हेर) ।

**सर्केको माझी झैँ**—टुप्पिएर मनपरी गर्ने मान्छेलाई दृष्टान्त दिने । त्यहाँको हाकिमी पाउनासाथ चन्द्रमान सर्केको माझी जस्तो भयो ।

**सर्को तान्नु**—=(अंकसित) तमाखु, चुरोट, आदि स्वासले भित्र तान्नु । पर्खन एक सर्को त तानूँ ।—प्रेमराज (ससुराली) ।

**सर्दी लाग्नु, घुस्नु**—=शरीरमा चिसोको बेफाइदा देखिनु । मलाइ सर्दी लागेछ—आँखामा चिप्रा पनि लाग्छ, पिरपिर झाड़ा पनि भइरहेछ ।

**सर्दो पर्नु**—=सजिलो पर्नु, मनमाफिकको संजोग हुनु । हाम्रो अड्डामा फत्ते सरेदेखि मलाई सर्दो पर्थ्यो ।

**सर्पले छुचुन्द्रो देखे झैँ**—=हच्केर एकै डल्लो पर्दा दृष्टान्त दिने । बाबुको अगाडि पर्नेसाथ त्यो ठिटो त सर्पले छुचुन्द्रो देखे जस्तो भैहाल्यो ।

**सर्व पूँजी**—=भएभरको जम्मा । सर्व पूँजी एउटा नाती, आफू गल्दै गएका, यसैले हतपत संग मानेचौरकी घर्ती कप्तानकी छोरीसंग नातीको विवाह गरिदिए ।—रुद्रराज (चप्पाकाजी) ।

**सर्व रकम**—=गादीमुबारक, गोड़धुवा, चुहाउन, इत्यादि सरकारलाई तिर्नुपर्ने यावत् दैदस्तूर ('गुठी रकम' को उल्टा) । सर्व रकम माफ गरी मलाई भोगचलन गरी खान बक्सेको जग्गामा तिम्रो हक छैन ।

**सल भने सल बल भने बल**—मिल्ने भए मिल्छु झगड़ा गर्ने वा जुध्ने भए पनि तयार छु भन्ने दर्साउन प्रयोग हुने ।

**सलहको जस्तो भुँड़ी**—=खायो कि झाड़ा भएर पेटबाट जाइहाल्ने । कान्छी नानीको त सलहको जस्तो भुँड़ी छ, जति खाए पनि अटाउँछ ।

**सलाम गरेर जानु, हिंड्नु**—(१)=चिढ़िएर जानु । यस्तो झेल गर्न लाग्यौ भने के खेल्नु, म त सलाम गरेर जान्छु । (२) साधारण अर्थ । नामी,

माइज्यूलाई **सलाम** गरेर जाऊ ।

**सलाम ठोक्नु**—=दङ्ग पर्नु, अहोभाग्य ठान्नु । यस्तीलाई तं ठूलै ठाउँमा डोला पस्न गए पनि **सलाम ठोकेर** राख्छन् ।—बालकृष्ण (कथा कुसुम) ।

**सलाम फर्काउनु**—=सलामको जवाफमा सलाम गर्नु । आजकल सुब्बा साहेबले हाम्रो **सलाम** पनि **फर्काउन** छाड्नुभयो ।

**सवारी चलाउनु, चलाएर ल्याउनु वा लैजानु**—=(मानिसलाई) ल्याउनु वा लैजानु (उच्च कक्षामा चलेको आदरको बोली) । झटपट बन्धन फुकाई पोशाक पहिराई उनीहरूले राजाको **सवारी** खोपीतिर **चलाए** ।—बोधविक्रम (दन्त्य-कथा) । जाऊ बाबु, मुमाको **सवारी चलाएर** यहाँ **ल्याऊ** ।

**सहनु न कहनु**—=सहन पनि नसक्ने अरूलाई भन्न पनि नहुने । पोइले सलाई साह्रै दुःख दिइ-रहेछन्, ती जोडीहरूको मुखि-ज्जेल **सहनु न कहनु** भइ-रहेछ ।

**सही थाप्नु**—=अरूले गरेको कुरामा हो भन्नु, सकार्नु । त्यस्तो शंका लिनु आफूले आफैंलाई हामी छोटा हौं भनी **सही थापे** जस्तो हुन जानेछ ।—श्री ३ चन्द्र (अमलेख-भाषण) । श्यामेको कुरामा **सही थाप्यो** ।—रुद्रराज (चप्पाकाजी) । रविलालले के बोलोस्—ह्वाल्नीको कुरामा **सहि थापोस्** भने आमालाई ज्यानमारा ठहराउनु पर्‍यो ।—ऐजन (रूपमती) ।

**साँगाको पानी**—मीठो पानीको बयानमा । हिन्दुस्थानको गर्मी-मा धापिएको वेलामा **साँगा-को पानो** संझन्थ्यौं ।

**साँघी(गी) लाग्नु**—=बीचमा रहेको तृणादि वा मान्छेद्वारा अर्कोसँग छोइनु । नछो, नछो, नछो ! **साँगी लाग्ला** तँसित व्यर्थमो भनेर भयले मैले नमारे-को तँलाइ !—बालकृष्ण (अन्ध-वेग) ।

**साँचोमा ढाले जस्तो**—मानिसको ज्यादै राम्रो शरीर, अङ्ग, इत्यादिलाई दृष्टान्त दिने ।



**साँझ पर्नु**—=सायंकाल हुनु । फेरी **साँझ पर्‍यो** न दिन्छ न त रात् नङ् देख्छु यस्का जवर ।—मोतीराम(प्रह्लाद भक्ति कथा)। झमक्क **साँझ पर्‍यो** ।—गुरु-प्रसाद (कथा कुसुम) ।

**साँढे डुक्रे जस्तो**—ठूलो स्वरले कराएको मन नपर्दो दृष्टान्त दिने हेलाको बोली । यो मान्छे यहाँ नौनी जस्तो छ, घरमा पुग्यो कि **साँढे डुक्रे जस्तो** गरी कराइरहन्छ ।

**साइत हेर्नु, देखाउनु**—=मुहूर्त कुन वेला असल छ भनी गणना गर्नु, गर्न लाउनु । मैले कलकत्ता जाने बिदा पाएँ, एउटा असल **साइत हेरिदिनुहोस्** ।

**साउँ अक्षर**—=क ख ग आदि वर्णमाला ।···· इनले **साउँ अक्षर** चिन्हे पछी चाणक्यनीति पढे औ दुर्गाकवच वा दुर्गा सप्तशती कण्ठस्थ पारे ।—सूर्य्य विक्रम (पृथ्वीनारायण शाह) ।

**साउने झरी**—=लगातारको वर्षा, यसबाट जुनसुकै कुराको छेलो खेलोलाई प्रयोग हुन्छ । क्याहो, **साउने झरी** जस्तो एकनास-सँग पानी परिरहेछ ए !

**साउने फागु**—रैतीले सरकार-लाई बुझाउनुपर्ने धुरीपीछे लाग्ने रकम, यो रकम पहाडतिर मात्र लाग्छ ।

**साउने सूतक**—=सानो सूतक (को अर्को रूप ; 'साउने' भन्दा 'सानो' को बढ्ता चल्ती छ) ।

**साउन्या ताउलो**—भात पकाउन नपाई भाँडा खाली रहँदा दृष्टान्त दिने ( पहाडतिर साउनमा चामलको अनिकाल पर्ने हुनाले ) ।

**साक्षी बक्नु**—गुहाले अनुकूल बयान दिनु । विमला यस्तो **साछी बक्तीन** ।—शिवप्रताप (दुर्गेशनन्दिनी) ।

**साक्षी राख्नु, बस्नु**—(१)=परेको घरीमा मैले देखें वा सुनें भनी बकिदिनालाई (कुनै मानि-सलाई केही कुरा वा वचन) देखाउनु वा सुनाउनु, हेरि वा सुनिदिनु । (२)=माथिको कुरा-लाई लक्ष्य गरी (कुनै देवतालाई) पुकार्नु वा आह्वान गर्नु (यस

अर्थमा 'बस्नु' हुँदैन) । रोहिणी-चन्द्र दम्पति देवतालाई साक्षी राखेर यहाँ म, मेरो हजूरलाई खुशी तुल्याउँछु ।—श्री केसर (विक्रमोर्वशी) ।

**सागको मूठा उचाले जस्तो**— दुब्लाएर हलुको भएको मान्छे (प्रायः केटाकेटीलाई) दृष्टान्त दिने बोली ।

**साटो फेर्नु**—=बदला दिनु । राजा माइनसले.....एथेन्जका राजामाथि साटो नफेरी छोड्दिन भन्ने प्रतिज्ञा गरे । —खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह) ।

**साढे सात[को दशा] लाग्नु,** ले घुमाउनु, इत्यादि—= आफ्नो राशिबाट बाह राशि, आफ्नो राशि, त्यसबाट अर्को राशिसंम शनैश्चर रहँदा, अर्थात् सात वर्ष छ महीना यो ठूलो दशा लाग्छ । एक्काईस एक्काईस वर्षमा यो दोहोरिन्छ । यसबाट जुनसुकै ठूलो अनिष्ट पर्दा पनि यो प्रयोग हुन्छ । साढे सात-को दशा लागेर त्यो घरमा खुट्टा हालेंछु, त्यहाँ नगएको भए आज झ्यालखानको वास हुँदैनथ्यो ।

**सात(अठार) गाँठा पार्नु**—(१) =हराउला भनी खूब जतन गरेर राख्नु । आज आफैंलाई सात गाँठा पारेर कम्मरमा बाँधेको रुपियाँको तङ्गी सपना हुन आयो ।—लेखनाथ (लक्ष्मी-पूजा) । (२)=धेरै जनासित मेल राखी खुसखुस गर्नु । तिमी जस्तो दशतिर गएर सात (वा अठार) गाँठा पार्न सकेको भए त यो आपतै किन पर्थ्यो र!

**सात ठाउँमा टालेको**—ज्यादा झुत्रो, ठाउँठाउँमा टालेको । अलि बेर पछि छोरीहरू आइ पुगे—.....झुत्रे झाम्रे पहिरन, सात ठाममा टालेको चोलो, .....उनीहरूलाई देख्तैमा उनको छाती चिरियो, आँखाले देख्न-छाड्यो, श्वास फुलेर आयो, बोल्नू के बोल्नू ।—रुद्रराज (रूपमती) ।

**सात ताल्चाभित्र राख्नु**—= बडो हिफाजतसँग राख्नु । बुढ़ि-याले त्यो तमसूकलाई सात ताल्चाभित्र राखेको छ,



भेट्टाउन सकिन्न ।

**सात पुस्ता देखाइदिनु**— =जात्रा देखाउनु (१ हेर) । तैंले चोरेको माल ल्याउने भए ले, नत्र सात पुस्ता देखाइ-दिन्छु ।

**सात बाबुले जन्माएको**—= शक्ति देखाई घमण्ड देखाउँदा प्रयोग हुने । यस्तो कपट गरेर जिते कि, मत त्यो जित्नेलाई नै समातेर निमठ नामठ पारिदिइन भने ७ बाबुले जन्माएको । —रुद्रराज (चप्पाकाजी) ।

**साता दिन**—'महीना दिन' मा हेर ।

**सातो [पुत्लो] उड्नु, सातो पुत्लो हिंड्नु**—=डरले कायल कायल हुनु वा होश गुम हुनु । यो तातो भत्भते मशानले आकाश पाताल गराएर उचाल्दा र पछार्दा हाम्रो सातो पुतुलो उडीशक्यो ।—लेखनाथ (ल-क्ष्मीपूजा) । नाम गङ्गा सप्तमी, ताहा देखि भैगो । तमासे हरूको ता, सातो उडि गैगो ।— शिखरनाथ (गंगामाहात्म्यको सवाई) । पहरादारहरूलाई एक झंटा दिएर सातो पुतूलो उडाइदिए ।—रुद्रराज (भारत-वर्षको संक्षिप्त इतिहास, भाग २) । उनीहरूको सातो पुतूलो उड्यो ।—ऐजन (चप्पा काजी) । यसप्रकारसित दुवै लडाईमा आफ्नु पराजय भएको देखेर तिब्बतीहरूको सातो उड्यो ।—अम्बिकाप्रसाद (ने-पालको इतिहास) । परन्तु जब घर भित्र खुट्टो पनि हाले उनको सातो पुतूलो हिंडथ्यो.....। —रुद्रराज (रूपमती) ।

**सातो खानु**—(१)=बेसरी हप्काउनु । बल्देवले सातो खाएर पो डोलेहरू कायममा आए । (२)=तर्साउनु, झस्का-उनु । तिमीले ध्वान्द्रयाङ्ग ढोका खोलेर मेरो सातो खाइदियौ ।

**सातो जानु**—=डराएर वा झस्केर होश हराउनु (झस्कँदा हंस उडेर जान्छ भन्ने चलनबाट) । उनी संग संगै पुरवासी बूढ़ीहरुको सातो गयो ।—बालकृष्ण (कथा कुसुम) । भयो, कोला, कोला, सातो पनी गयो ।—ऐजन

(मुटुको व्यथा)। यो देखेर अरू यताउता रहने बागीहरूको पनी सातो गयो।—अम्बिका-प्रसाद (नेपालको इतिहास)। एही रित्सित एक् मुहुर्त भरि तक् सङ्ग्राम् भयङ्कर् भयो। देखन्या प्राणिहरू तहाँ जति थिया सातो सबैको गयो॥ —होमनाथ (महाभारत विराटपर्व)।

**सातो बोलाउनु**—('सातो जानु' पनि हेर्) झस्कँदा उडेर गएको हंसलाई केही विधि गरी ठाऊँमा फर्काउनु (प्रायः केटाकेटीको बारे)।....बटुवाहरु दौडेर घर घरको आड लिन पुगे, रस्ता साफ भयो, बूढीहरु ओढ्ने भित्रबाट केटाकेटीहरुको सातो बोलाउन लागे।—बालकृष्ण (कथा कुसुम)।

**सातो लिनु**—=सातो खानु (दुवै अर्थ)। काम सातो लिने मात्र नाम सातो-दिने झरी। कति राम्रो मिलेकोछ बाहिरी शब्द-माधुरी॥—लेखनाथ (ऋतु-विचार)। चूँ गरेर बोल्यो कि सातो लिन्थ्यो।—रुद्रराज (रूपमती)। दुनियाँहरुको, सातो जब लीये। दरबार बाट ता, निकालि पो दीये॥—शिखरनाथ (गंगामाहात्म्यको सवाई)।

**सातो हराउनु**—=सातो जानु। ए सातो हराएको मन! ढुक हो ढुक हो।—श्री केसर (विक्रमोर्वशी)।

**साथ दिनु**—(१)=सहायता दिनु। सुखमा सब छन् मजा लिने! अब दुःखीकन साथ को दिने?—गोपाल पाँडे (सुनीति-विरह)। यस काममा साथ दियौ भने मलाई पनि सजिलो पर्छ, तिमीलाई पनि आमदानी हुन्छ। (२)=साथसाथै जानु। म सुन्दरीजल जान्छु तिमी पनि साथ दिन्छौ?

**साध्य हुनु**—(१)=निर्वाह वा काम चल्ने हुनु। प्राणपियारी! मैले देखे गजब सती जसको बयान अहिले गरि साध्य छैन रती॥—लेखनाथ (भर्तृहरि-निर्वेद)। मोरङ्मा गएपछि त्यहाँको पानी नखाएर साध्य हुन्छ र? (२)=ओखती लाग्ने वा निको पार्न सकिने हुनु। रोग त साध्यै हो, तर वैद्यले मौकामा हात हाल्न पाएन। देख्तामा यत्नसाध्य थियो हिजो कष्टसाध्य भयो आज, अहिले त असाध्य भो।—बालकृष्ण (मुकुन्द इन्दिरा)।



**सानो काठले डढ्ने**—=लड-तरो, सजिलोसंग वशमा आउने (मान्छेको बारे)। विष्णुकुमार सानो काठले डढ्ने मान्छे हो र? हजूरले मर्जी भएको छ नभनेसम्म डेग चलेन।

**सानो चित्त**—=कंजूस मिजास, संकीर्ण दिल, ('ठूलो चित्त' प्रयोग हुँदैन)। एक्लै कोठामा पकाएर कसरी खान शकेको होला? कस्तो सानो चित्त?—रुद्रराज (रूपमती)।

**सानो मुखले ठूलो भाग खोज्नु**—=आफूनखुल्दो ठूलो कुरा ताक्नु वा माग्नु।

**सानो मुखले ठूलो मुख बाउनु**—=आफ्नो हैसियत, औकात नाघी बढ्ता भएर बोल्नु। के गर्नु, सानो मुखले ठूलो मुख बाउनु भएन, यो बन्दोबस्त त मलाई ठीक लागेन।

**सानो मुड्कीले ठूलो मुड्की खोज्नु**—कम उमेरको मान्छेले बढ्ता उमेरको मान्छेसित जोरी खोज्दा वा चल्दा प्रयोग हुने। नजिक्की भन्दा मान्दैनस्, सानो मुड्कीले ठूलो मुड्-को खोजेको होला।

**सानो विचार**—=क्षुद्र बुद्धि।....मेरो सानो विचारमा, मेनेजर लेखन्दास, तहविलदार र अरु कर्मचारीहरूको नाउँ किटी काम नगरे पनि हुन्छ।—भवानी (यौवनको आँधी)।

**सानो सूतक**—=बालक जन्म-नुअगाडि पानीफोका फुटेर पानी निस्कनु। सानो सूतक भइसक्यो अब बालक जन्मन धेरै ढाढा जानेछैन।

**[गाइनेको] सारङ्गी जस्तो पेट**—=भोकले वा दुब्लाएर ख्याप्प भएको पेट। हाः हाः हाः हेरूँ, अब यो अँध्यारो रातमा शुकेका ओठ मुख चाटदै सारङ्गी जस्तो पेट लिएर कुन बाटो लाग्छन्?—लेखनाथ (लक्ष्मी-पूजा)। घाँस खान न पाएर

भैंसीको पेट गाइनेको सारंगी जस्तो भै रहेछ, रांड यहाँ बसेर वन रन्काउँछे ।—गुरुप्रसाद (कथा कुसुम) ।

**सार मिल्नु**—(१) = टाइम मिल्नु । घोड़ा र गोडाको पनि कहीं सार मिल्छ ?—प्रेमराज (ससुराली) । (२) = कुरा मिल्नु । वैद्य जुलाफ दिन्छु भन्छन्, म अहिले नदिऊँ भन्छु उनीसंग मेरो सारै मिल्दैन ।

**सारौं [को जहान] बास्ने जस्तो**—धेरै जनाको झ्याउँझ्याउँ वा कल्याङमल्याङ लाई दृष्टान्त दिने । पालै पालोसंग तिमिहरू सबैको कुरा सुनिहाल्छु नि, के सारौं बास्ने जस्तो एकै चोटि कराएको ?

**सारौँ वास बसे जस्तो**—माथिकै जस्तो ।

**सार्कीको खिस्सा फाटे जस्तो**—किचकिच हाँसिरहेको मन नपर्दो मुखलाई दृष्टान्त दिने । काम न काज के हाँसिरहेको ? सार्कीको खिस्सा फाटे जस्तो मुख, छिः !

**सालनाल गाडेको ठाउँ**— = आफू जन्मेको वासस्थान (नाल बेडाएपछि सालनाल बारीतिर गाड्ने चलनबाट) । जे भए पनि यो मेरो सालनाल गाडेको ठाउँ हो, खान नपाए पनि बेच्तिनँ ।

**सासको टेको, सास मात्र झुरिङएको**—(१) = सत्त्व केही नभएको नाजुक, फुकी ढल्नु, (प्राणिको बारे) । तिम्री बज्यैको त सासको टेको मात्र रहेछ, एउटा बेथा लागिदियो भने छैन । (२) = (चीजको बारे) कच्चा ; बिग्रनै, फुट्नै, वा भाँचिनै लागेको । अहिले जोडेको फूलदानको सासको टेको मात्र छ, नछोऊ गाल पर्ला । धमिराले खाएर यो दलिनको सास मात्र झुरिङएको छ, कुन दिन सत्त्व छोड्छ ।

**सास छाड्नु**— = सास फेर्छे फेर्दैन भनी जाँच्नु । सास छामिन्न, दब्दोछ ओठको रक्त बादल नीलो आकाश छोडेर ।—बालकृष्ण (प्रह्लाद) ।

**सास जानु**—(१) = मर्नु, प्राण जानु । गयो यसको सास !



के हाम्रो सास जाँदैन बाहिर ?—बालकृष्ण (प्रह्लाद) । (२) = (भकुंडो इत्यादिमा) हावा फुस्कनु । भकुंडाको सास गएछ भर्नुपर्‍यो ।

**सास झुण्डयाइराख्नु**— = जेनतेन प्राण धान्नु । तर केही गरे पनि म त मर्ने छैन महाराजको दर्शन पाउँला भन्ने आसले म अभागिनी सास झुण्डयाइराख्दछु ।—श्री अर्जुन (स्वप्नवासवदत्ता) ।

**सास पस्नु, हाल्नु**—(१) = केही चीज देखेर खूब लोभिनु, उत्कट आग्रह गर्नु । यो केरामा रोल्दोको सास पसिरहेछ, दुइ कोसा दिनुहुन्छ कि ? ठूलेले यो रोटीमा सास हालिरहेछ, कराएर छुट्टी ! (२) = (भकुण्डो इत्यादिमा) हावा पस्नु, भर्नु । जब सम्म यो सास भित्र पनी पस्छ जति निस्कन्छ बाहिर—बालकृष्ण (ध्रुव) । यो भकुण्डोमा सास हालूँ भनेको पस्तै पसेन ।

**सास फुल्नु**— = दम बढ्नु, स्वाँ स्वाँ हुनु ।·········उनीहरूलाई देख्तैमा उनको छाती चिरीयो, आँखाले देखनछाडयो, शास फुलेर आयो, बोल्छन् के बोल्छन् ।—रुद्रराज (रूपमती) ।

**सास फेर्ने फुर्सत नपाउनु**— = कामको ज्यादै भीड़ पर्नु, कामको मिचामिच हुनु । घरका कामले शास फेर्ने फुर्सत पनी नपाएको देखेर शर्माजीको मन साह्रै पग्ल्यो ।—रुद्रराज (रूपमती) ।

**सास फेर्न बिर्सनु**— = मर्नु (को ठट्यौली वाक्यांश) । श्यामवदनको बाबुले त सास फेर्न बिर्सेछ, सुन्यौ ?

**सास फेर्नु**—(१) = थकाइ मार्नु । काम गर्दा गर्दा हैरान भइसकें, एक छिन सास फेर्न त देऊ । (२) = फोक्साले हावा तान्दै छोड्दै गर्नु, प्रश्वासनिःश्वास गर्नु । शास फेरेकोले मात्रै जिउँदैछन् भन्नुपर्ने अझ पनी होश पाएकी छैनन् ।—श्री केसर (विक्रमोर्वशी) । पुग्ने बित्तिकै पैंतीस ओटा बाणले वायुको मुख टालि राखेको घाउथुतेर लिए—फेरि सब देवता निश्चि-

न्तसित सास फेर्न लागे ।—बालकृष्ण (कथा कुसुम)। के यिनी जिउँदी ता छन् ? खोइ, सास फेरेकी देखिदैन, टाढाबाट न देखिएको होकि ?—बोधविक्रम (दन्त्यकथा)। डियानाले राती आकाशमा आफ्नो चाँदीझैं सेतो रथ हाँक्ता ती बिचरा नार्सिसस आफ्नो चेहराको सुन्दरतामा लट्ठ परेर साससमेत फेर्न सक्तैनथे ।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)।

**सास लिनु**—(१) =थकाइ मार्नु। अर्काले एक छिन सास लिन त पाएको छैन, तिम्रो किताप कहाँ खोज्न पाउनु ! (२) =श्वास भित्र तान्नु । गुरु, सास लिंदा पनि, या पानी पिउँदा, यद्वा गर्दा झिंझिम नेत्रले, अथवा कुल्चदा ढुङ्गालाई लाग्दछ पाप त,....।—बालकृष्ण (प्रह्लाद)। यो ओखती नाकनेर राखेर सास लिनासाथ तिम्रो कपाल दुखेको कम हुन्छ । (साधारण अर्थमा प्रायः प्रयोग हुँदैन)।

**सासै नफेरेर, नफेरी**—=ज्यादै छिटो, एकसासले । सासै न फेरी यति भनेर ललित सिंहले प्यालाको चिया पट्टि मनोयोग दिए ।—रूपनारायण (भ्रमर)।

**सासैले तान्नु, थुत्नु**—(१) =निजी ग्रहले आकर्षण गर्नु (चिट्ठा, खेल, इत्यादिमा)। यिनीहरूसँग कोट खेलेको नसकिने, ट्रम जति सासैले तान्दा रहेछन् । (२) साधारण अर्थ । जोडियो ओठमा जान जब मन्त्र पनी सुन्यौं, दृढ विश्वास राखेर श्वासले थुत्नु बाँकि छ ।—बालकृष्ण (ध्रुव)।

**सासैले निल्ला जस्तो**—खाने कुरा देखेर ज्यादै हाम र झाम गर्दा दृष्टान्त दिने बोली । संधिनीले घरमा बनाएको बर्फी पठाउनुभएको रहेछ, भुण्टीले सासैले निल्ला जस्तो गरी ।

**सास्ती खानु**—=यन्त्रणा भोग्नु । अब वरालपुत्रीले हुन सम्म सास्ती खानलागिन् ।—रुद्रराज (रूपमती)।

**साहिनु न सपनु**—नाता पनि नपर्ने चिह्नाजानी पनि नभएको मानिसको बारे प्रयोग हुने । चण्डोल बस्ने कान्छा कार्की भनेको त मैले कहिल्यै सुनेकी छैन, साहिनु न सपनुको मान्छे !



**साहिनु पर्नु**—=जन्म वा विवाहद्वारा नजीकको हुनु । नर बहादुर खत्रीसित हाम्रो साहिनु पर्छ ।

**साहू काढ्नु**—=रिन लिनु । आज सम्म जुनजुन सज्जनहरुले आफ्नै परिश्रमको कमाइले होवस् वा साहु काडेर होवस् सोध बुझाउन ल्याएकाछन्....।—श्री३जुद्ध (भूकम्प-भाषण)।

**साहूको डोको**—=साहूलाई तिर्नुपर्ने दाम वा बुझाउनुपर्ने अरू कुरा । भिरबाट घच्याइ दिउँ भने साहुको डोको ।—गुरुप्रसाद (कथा कुसुम)।

**साहू तिर्नु**—=सापट दिने धनीलाई रिन बुझाउनु । अझ धेरै नै पुगेकाले साहू तिरेर लम्बोदरलाई हात लिने उद्योग पनि छाडिदिए ।—रुद्रराज (प्रायश्चित्त)।

**साहू मार्नु**—(१) =सापटी दिने धनीको पैसा पच पार्नु । ब्याज तिर्छु भनेकै छु, मले साहू मार्ने नियत गरेको होइन । (२) =बेपारीको माल लिई त्यसको मोल नतिर्नु । जतासुकै साहु मारेर बाहिर निक्लनै नहुने भइसकेछ ।—रुद्रराज (रूपमती)। (३) =साहूको प्राण लिनु (प्रायः यसमा 'लाई' विभक्ति जोडिन्छ)।

**साह्रो गाह्रो**—=खट्टापट्टा वा खनखाँचोमा परी भएको दुःख वा संधिसर्पन । हामीलाई त्यस्तो वचन नलाऊ, कोही दिनवारमा तिमीलाई पनि साह्रो गाह्रो पर्ला ।

**साह्रो वचन**—=कडा बोली । सन्ती साह्रै असल थिई, साह्रो वचन कसैलाई थिएन ।

**साह्रो हुनु**—(१) =शिकिस्त हुनु । निको भयो रे, बरु जुवाइँको भाइलाई साह्रै छ रे ।—बालकृष्ण (मुकुन्द इन्दिरा)। (२) साधारण अर्थ ।

**सिंगार पार्नु, गर्नु**—'गर्नु' भन्दा 'पार्नु' प्रयोग गर्दा बढ्ता नेपाली वाक्पद्धतिमय हुन्छ । मुख धोइसकें भन्छ्यौ, भान्छामा जान्छु भन्दछ्यौ, कैले कपाल

कोरेर कैले, शृङ्गार पार्दछ्यौ? —बालकृष्ण (मुकुन्द इन्दिरा)।

**सिँगौरी खेल्नु**—=सिङौरी खेल्नु (हेर)।....आफ्नू शिङको चिलाई मारनाका निमित्त निःशङ्क भयेर मृगहरू कुन दिन सिँगौरी खेलन आउलान भन्ने तेही शुभ दिनको फिक्री मात्र अब बाँकी छ।—लेखनाथ (भर्तृहरि-निर्वेद)।

**सिंघानको लत्को, मूठो**—=सिंघानको झुण्डिरहेको रास। गोविन्देको सिंघानको मूठो देख्ता मैले भातै खान सकिनँ।

**सिंदूर हाल्नु**—=विवाहको मुख्य विधिको रूपमा दुलहीको टाउकोदेखि कलशसम्म तन्काएको कपडामा (दुलहाले) सिंदूर छर्नु, (उसैले 'विवाह गर्नु' को अर्थमा पनि)। बाहुनहरूमा त यति ठुली भए पछि उनलाई सिंधुर हाल्न को अघि सर्ला खोइ? —रुद्रराज (रूपमती)।....तल्तिर पहेंलो धोती लाएको पलाँसको टाउकोमाथि माकुराले ठूलो टालो फैलाएको छ, त्यसमा माथ्तिरबाट दारिमको रातो फूलले आफ्नो मूठीभित्रको सिन्दूर हालिरहेछ—यो के होला?—बालकृष्ण (प्रह्लाद)।

**सिंदूरे बट्टा**—माथिको वाक्यांशमा लेखिएको सिंदूर हाल्ने डिब्बा। आइमाईहरू आफ्नो सिंदूरे बट्टा हतपति मास्तैनन्।

**सिँदूरे रोग**—=सिंदूरे कीरा लाग्दा बोटमा हुने रोग। सिंदूरे रोग लागेको आँप को खान्छ?

**सिउँदो काट्नु, चिर्नु**—=बीचमा छालाको सीधा डोरो देखिने गरी कपाल दुइतिर फर्काएर पन्छाउनु। ल, दिदी सोझो गरेर सिउँदो चिरिदेऊ।

**सिउसिउ(ङ) राजाको पालो**—=अर्काले गर्छु भनेको कुरा नपत्याउँदा प्रयोग हुने (शिवसिंह राजाको अपभ्रंश)। हजूरले मलाई हीराको औंठी दिनु त सिउसिउ राजाको पालामा!

**सिको सिक्नु**—=देखासिकी गर्नु। शैवलिनीले नवाबलाई सलाम गर्दा त्यो हिजडाको सिको सिकी हातले भैं छोई पछिल्तिर हट्दै गइन्।—



गम्भीरध्वज (चन्द्रशेखर)।

**सिखा लाग्नु**—=पन्छिनु, पाखा लाग्नु। भात सिखा लागिसक्यो, अझ भान्छा गर्नुहुने सुरसारै छैन।

**सिङौ(सिंगौ)री खेल्नु**—=सीङ गाडेर भूईं भित्तो आदि उधिन्नु, सीङ सीङ भिडाएर खेल्नु, (साँढे, भेंडा, इत्यादिको बारे)। बालक ठूलो संसारमा तेजी पाठा जस्तै यता उति सिंगौरी फ्रफँदै खेली हावासँग उसै पनि दौडी घुमेर ती फेरि आउँछन माउकै मनि।—बालकृष्ण (प्रह्लाद)। साँढेले सिङौरी खेलेको हेरिरहेको थिएँ, टाइम गएको पत्तै पाइनँ। यसबाट (२)=निहुँ खोज्नु। सिङौरी खेलन आउनेको सीङ भाँचिएला।

**सिङ्गै खसी [काटेर] पाकने बेला हुनु**—काममा पठाएको मान्छेले ज्यादै बियाँलो गर्दा प्रयोग हुने। सिङ्गै खसी काटेर पाकने बेला भइसक्यो त्यत्ति पात किन्न पठाएको मान्छे अझ आएन।

**सिंघ हुनु**—=रिसले आगो हुनु, जाग्नु। छोराहरूको उपद्रो सुनेर बाबुचाहिं घरमा आएर सिंघ भयो।

**सिटा (सिट्ठा) हुनु**—=ज्यादै दुब्लाउनु। गोविन्ददास त सुकेर सिट्ठा भइसकेछ, एक फेरा छाती जँचाउनुपर्‍यो। उहाँ अझ सिट्ठि सिट्ठि भएको छ।—बालकृष्ण (मुकुन्द इन्दिरा)।

**सित्तै[मा] पाए तीन माना चुक खानु**—=पैसा वा परिश्रमविना पाए जत्ति पनि लिनु वा खानु। यिनी त सित्तैंमा पाए तीन माना चुक खाउँला जस्तो गर्दा रहेछन्, पैसा तिर्नुपर्छ साहेब!

**सिन्काको सूत**—हद कम किमती मालको रूपमा (अकरणमा प्रयोग हुन्छ)।....यताबाट एउटा सिन्काको सूत पनी चोरेर लईजान शक्तैनौं, जस्तो मुसाफिर ले शक्नु पर्ने।—बालकृष्ण (मुटुको व्यथा)।

**सिन्काको सून नसार्नु, नभाँच्नु**—एउटा (हद सजिलो वा

सानो) काम पनि नगर्नु, नछुनु। साह्रानीको बिहामा तिम्री बुहारी कपाल दुख्यो भनेर लडिरही, सिन्काको सूत पनि भाँचिन।

**सिन्का भाँच्नु, सिन्का सुतरी**—हद सजिलो कामको रूपमा (अकरणमा प्रयोग हुन्छ)। सानी दुलही बज्यैले सिन्का नभाँचि दिने। बुढ़ी बज्यैले कसरी खप्नु ?—रुद्रराज (रूपमती)।

**सिन्की खाँदे जस्तो**—(१) धेरै कुरा एकै ठाउँमा बेकदरसँग कोचेको मन नपर्दा दृष्टान्त दिने। मेरो रेशमी लुगा, मोजा, मैलो लुगासँग सिन्की खाँदे जस्तो त्यो ब्यागमा खाँद्ने हो ? (२) बेसरी लातैलातको गोदाइलाई दृष्टान्त दिने। धेरै मुख नचला, अहिले सिन्की खाँदे जस्तो खाँदुँला !

**सिपालुको पखालो**—जान्ने ठहरिएर वा भई अघिसरी फेलो खाँदा प्रयोग हुने। कृष्णमान बिजुली बनाउन खप्पू छ भनेको होइन ? सिपालुको पखालो लागेन के ?

**सिमकुखुरो जस्तो**—जिंग्रिङ्ग परेको मान्छेलाई दृष्टान्त दिने। पाहुना आउने वेला भइसक्यो के सिमकुखुरा जस्तो भएर हिँडिरहेको ?

**सिमासिमे राजाको पालो**—=सिउसिउ राजाको पालो (हेर)।

**सिमेभूमे देउता**—=पानी र जमीनका देउता (झाँक्रीको बोली)। सिमेभूमे देउता नपन्छाईकन यो रोग निको हुने देखिएन।

**सिलोक हाल्नु**—=लय हालेर श्लोक भन्नु। हिजो वेलुका त खूब सिलोक हाल्न लागेका थियौ नि !

**सिल्टिमूर खानु**—(१)=मर्नु (हेला वा ठट्टामा)। जुन पायो उही झार मुखमा नहाल, सिल्टिमूर खालौ। (२) साधारण अर्थ। बिरेनून र सिल्टिमूर खाऊन, एकदम वायु सोस्छ।

**सिस्नाले मुताउनु**—=बेसरी सिस्नु लाएर कायल पार्नु। अब दाइको कोठामा गएर एक माल त चोर्, तँलाई सिस्नाले कत्तिको मुताउँदो रहेंछु !



**सिस्ने दूध**—=पोस नलाग्ने दूध (आइमाईको)। यो धाईको सिस्ने दूध रहेछ, नानी फस्टाउँदै फस्टाएन।

**सीँढी चढ्नु**—(१)=क्रमशः उन्नति गर्नु। यो रुवाको कारखानाले सीँढी चढ्दै गयो भने अलि वर्षमा कलमा हालेको पैसा उपर हुन्छ। (२)=जातमा उक्लनु। आफूमिल्दो बिहा गर्‍यौ भने तिम्रा सन्तान सीँढी चढ्छन्। (३) साधारण अर्थ। ....बादली सिंढीमा चढी चढी हिंड्दै, चन्द्र र तारा घुमी घुमी सारा खेलूँ खेलूँ उठिजाऊ न ! —बालकृष्ण (अन्धवेग)। अपरेशनको घाउ त पुरियो, अझ अलिक दिन डाक्टरले सीँढी नचढ्नू भनेको छ।

**सीङ खुर गर्नु**—=मिर्ग, चित्तल, आदिको सीङसहितको हाड भएको टाउको र खुर राखेरः छाला काढ्नु ('हाड खुर गर्नु' हेर)।

**सीङ जुरो आउनु, हुनु**—=विशेष कुरा देखिनु, हुनु, (अकरणसित प्रयोग हुन्छ)। डाक्टरको सीङ जुरो आउँछ र, हामी जस्तै प्रकृति हेरेर रोगको अन्दाज गर्ने त हो नि !

**सीङ जुरो उम्रनु**—(१)=सीङ जुरो आउनु। (२)=(प्रायः 'भातमा' सित प्रयोग हुन्छ) चिसो भएर कक्रिसक्नु। उस वेला पाकेको—अहिलेसम्म खान पाएको छैन, भातमा पनि सीङ जुरो उम्रिसक्यो होला।

**सीङ थाप्नु**—=जोरी खोज्नु। पहिले सीङ थाप्न आउने तैं होस्, मैले तँलाई जिस्क्याउन गएको थिइनँ। (साधारण अर्थमा पनि)।

**सीङ न पुच्छर [को कीरो]**—=एकदम भाउ नभएको मान्छे। म त सबहरु जस्ती सिङ् न पुच्छर् न जूरो। —मोतीराम (मृगनयनी मनोहर बाक्य)। म ढाक्रे मान्छेलाई अड्डामा कसले टेर लाउँछ र—सीङ न पुच्छरको कीरो !

**सीङ भाँच्नु, भाँचिनु**—(१)=

शेखी झार्नु झर्नु। हनुमान्प्रसादले खूब शेखी गरेका थिए, तिनको सीङ भाँच्ने तिमी नै भयौ। (२) साधारण अर्थ। हिजो जुद्धाखेरि माले गोरुको सीङ भाँचिएछ।

**सीटी दिनु**—(१) = सीटी बजाउनु। रेफ्रीले सीटी दिनेसाथ तिमीहरूले खेल्न थाम्नुपर्छ। (२) साधारण अर्थ। अरूलाई आफ्नो सीटी दिन हुँदैन, जूठो हालिदिन्छन्।

**सीता गन्नु, टिप्नु**— = खाऊँ कि नखाऊँ वा आलेटाले गरी भात खानु। खान मन छैन भने उठे भइहाल्यो नि, के सीता गनिरहेका?

**सीताराम हुनु**—'सिद्धिनु, मर्नु' को सट्टा प्रयोग हुन्छ। दश बजेदेखि बिक्री भएको तिमी आएनौ, अहिले त सप्पै किताप सीताराम भइसक्यो। तिमीले पालेको भँगेराको बचा चिम्सीले कुल्चिदिइछ, सीताराम भयो।

**सीधा रस्ता**— = सोझो बाटो (हेर)। बाल यो मन्त्रले बत्ति जो पाई सूर्य्य चन्द्रमा अनन्त तारका हिंड्छन् सिधा रस्ता निरन्तर,....।–बालकृष्ण(ध्रुव)।

**सीपमाथि टिप लाउनु**–अर्कोले गरेकोमा जानपत्याइँ लाई काम बिगार्दा प्रयोग हुने। मैले गोलभेंडाको अचार बनाउन लागेको थिएँ, बिनसिंत्ति कजडीले सीपमाथि टिप लाएर रद्दी पारिदिई।

**सीप लाउनु**— = जानपत्याइँ लाउनु, जान्दछु भन्ने देखाउनु। हो, हो सिपलाउनु पर्दैन; हामीलाई पनि थाहा छ।—प्रेमराज (ससुराली)।

**सीमा नरहनु**— = (प्रायः हर्ष, खुशी, आश्चर्य, आदिसँग आउँछ) ज्यादै हुनु। त्यहाँ पानीमा आफ्ना सीङको छाया देख्ता त झन् तिनको आश्चर्यको सीमा रहेन।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)। (२) साधारण अर्थ। तिम्रो जग्गाको सीमा रहेन, यहाँनेर एउटा ढुङ्गा गाड्नुपर्‍यो।

**सुँघ्न नपाउनु**— = (केही चीज) पाउन वा खान त परै रहोस्



सुँघ्नसम्म पनि नपाउनु, अर्थात् खानु वा पाउनु नाममा निमित्यान्न हुनु। फेरि अरू बखतको झरल परल त परै जाओस् अब बिजुलीको पञ्जामा परेर केही सुँघ्न नपाउने भइसकेका थिए।—रुद्रराज (चप्पाकाजी)।

**सुइँकुच्चा ठोक्नु**—(१) = बेतोडसँग दगुर्नु वा दगुरेर जानु। सुइँकुच्चा ठोकेर यो चिठी लालेलाई दे, त्यो त्यहीं सडकमा मात्र पुग्यो होला। (२) = भाग्नु वा भागेर जानु। गुण्डाहरू पनि आफ्ना आफ्ना ज्यान हत्केलामा लिएर भ्वाक्क भुरुक्क फाल हालेर सुइँकुच्चा ठोक्छन्।—बोधविक्रम (दन्त्यकथा)। (३) = जानु (को अत्युक्ति)। ....एका घरका जहान भइसकेकी चमेलीले त टिक्न नशकेर सुइँकुच्चा ठोक्नु पर्‍यो भने नौला चाकर वाकर के अड्दथे?—रुद्रराज (रूपमती)।....परन्तु जब चञ्चलता कमला (लक्ष्मी) चलेर गइन् अनि विस्तार विस्तार एक-एक गरेर सबले सुइँकुच्चा ठोके।—चन्द्रलाल (विष-वृक्ष)।

**सुइँको लाउनु, पाउनु**— = (कुराको) संक्षेप वा इशारा पत्ता लाउनु, पाउनु। दिन भनिएन, रात भनिएन, भोक भोकै हिंडियो, रुखमुनि सुतियो, कत्रो युक्ति बुद्धिसंग सुइँको लाइयो, कत्रो आडम्बर गरेर फुत्काइयो।—रुद्रराज (प्रायश्चित्त)। हिजै सुइँको नपाएको भए आज मलाई यसले बिताइहाल्ने रहेछ।—बोधविक्रम (दन्त्यकथा)। सीरीजले यस कामको सुइँको नपाउँदै प्रोसर्पाइनलाई लिएर बेपत्ता हुनु पर्छ भन्ने विचार गेरेर खूबसित रथ हाँके।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथा-संग्रह)। धेरै घोरिंदा तिनलाई यस रहस्यको सुइँको पायेको जस्तो लाग्यो।—विश्वेश्वर (कथा कुसुम)।

**सुकबारे काँठे**— = सुकबार बिहानको कवायद छुट्नेसाथ बाटो लागी काँठको आफ्नो घरमा पुगी एक दिन बसेर आइतवार बेलुकाको कवायद भेट्न आउने सिपाही।

**सुकबारे पाहुना**—=ज्यादा कचकच गरी झिज्याउँदा दृष्टान्त दिने।

**सुकुलको वास हुनु**—=खाली सुकुलमा सुत्न पर्नु, यसबाट साह्रै गरीबी हालतमा हुनु। विश्वनाथले सारा माल दानपत्ता लायो, अहिले सुकुलको वास भइरहेछ।

**सुकुल गुन्डा**—=घरमा सारै गरीबी अवस्थाको बाहिर भने भडक देखाएर हिंड्ने मान्छे (घरमा सुकुल बेह्रेर सुत्ने बाहिर निस्कँदा चुनिचुनाउ हुने धजी पट्टोबाट)। तिम्लाइ मोरा सुकुल गुन्डा हो!—भीमनिधि (सहनशीला सुशीला)।

**सुक्ख काट्नु**—=सुखभोग गर्नु, आनन्दमा जीवन बिताउनु। ठूलो ठूलो राज्यमा राज गर्ने भयेका अति धर्मात्मा राजाहरूले भर जन्म दुख काटे कैले काहीं मात्र सुख काटे भन्ने उनले देखाये।—गम्भीरध्वज (चन्द्रशेखर)।

**सुक्खको निद्रा सुत्नु**—=आनन्द तथा सन्तोषमा रहनु। दश हजार जितेदेखि सुक्खको निद्रा सुतिन्थ्यो। (२)=निर्धक्कसँग सुत्नु। भोलिदेखि त जाँच सिद्धिन्छ, सुक्खको निद्रा सुत्न पाइन्छ, बा!

**सुक्खको मानु**—=खाइसकेर काम गर्न नपर्ने हुनाले बेलुकाको खाना। लौ दिदी, सुक्खको मानु खाइयो—अब सुतौं।

**सुक्ख दुःखको साथी**—साथसाथै दुःख भोगेको साथी (सुक्ख भोग्दा मात्र साथ रहेको साथीलाई प्रायः प्रयोग हुँदैन)। सुख दुःखको साथी जस्तो प्यारो अरू कोही हुँदैन।—रुद्रराज (चप्पाकाजी)।

**सुक्खा पर्नु, लाग्नु**—=पानी नपरेर खडेरी पर्नु (यसबाट उपमा अर्थमा पनि प्रयोग हुन्छ)। बाली नाली सब बिग्रे, जताततै जमीन बाँझो रहेर सुक्खा पर्‍यो।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथा संग्रह)। उद्योगलाई के खुवाऊँ, मेरो आशाको खेतमा सुक्खा लागेकोछ,……।—बालकृष्ण (अन्धवेग)। खोइ, आजकल त मालिकहरूबाट पाउनु खानुमा सुक्खा लागिहाल्यो, कताबाट पैसा आउँछ र?



**सुघा (गा) पढाइ**—=अर्थ न बुझेर कण्ठ गरेको। सुघा पढाइले काम लाग्दैन, राम्ररी बुझाएर पढाउनुपर्छ।

**सुघा (गा) लाई पढाए जस्तो**—माथिको पढाइलाई दृष्टान्त दिने। यस उमेरमा सुघालाई पढाए जस्तो गरेर भए पनि अमरकोष कण्ठ पार्न लाऊ, पछि बहुतै काम लाग्छ।

**सु(छु)ट्टी साह्रो**—=अचाक्लि भन्न गर्ने पनि एउटा भाँति हुन्छ नि, सुट्टी साह्रो त नगर्नू क्यारे!

**सुतेको बाघलाई उठाउनु**—=चुप लागेको जण्ड मान्छेलाई जिस्काउनु। सुतेको बाघलाई नउठाऊ, फेरि अहिले भाम्लो मचाउला।

**सुत्लो च्याप्नु, हाल्नु**—(१)=मकैको घोगा हुनुअगाडिको कलिलो गुभो लाग्नु। हामीले मकै ढीलो छर्‍यौं, अझसम्म सुत्लो पनि च्यापेको (वा हालेको) छैन। (२)=घाउभित्र घुसार्ने कपडाको बुजो समाउनु, हाल्नु। रत्नवदनको घाउमा सुत्लो हालिराखेको छ।

**सुदामाको कनिका, तण्डुल**—(प्रायः थोरै) कोसेली ल्याँदा दीनता जताउने विनयको बोली (कृष्ण र सुदामाको कथाबाट)। खाली हातले कसरी दर्शन गरूँ भनेर मात्रै हो—सुदामाको कनिका, प्रभुलायकको केही छैन।

**सुदिन फिर्नु**—=दुःखपछि सुक्ख पाउनु। बल्ल यस उमेरमा हामीहरूको सुदिन फिर्‍यो, हगि?

**सुध न बुध (सूझ न बूझ)को कुरा**—=थाहा नपाएको नबुझेको कुरा। मलाई कितापं ल्याएको पनि थाहा छैन, त्यहाँ राखेको पनि थाहा छैन—सुध न बुधको कुरामा उसै अर्कालाइ दोष लाउने!

**सुनको अक्षरमा लेख्नु**—ज्यादै प्रशंसनीय घटना वा कुराको बारे प्रयोग हुने।

**सुनको** *चिडिया* **(चरो)**—(१) =खूब लाभ हुने वा लाभको कुरा। त्यो खेत बडो असल थियो, **सुनको चिडिया** हातबाट उम्क्यो। (२)=राम्रो वा धनी मान्छे। यो **सुनको चरा** उम्किहाल्यो त ?—रुद्रराज (चप्पाकाजी)।

**सुनको टुक्रा**—प्रायः छोराछोरी नातिनातिनालाई प्रयोग हुने प्रियवाक्य। मेरो **सुनको टुक्रा**लाई लौ छो त !

**सुनको ढुकुर**—=मन परेको हुनाले खूब कदर गरेर राखेको माल। तिमीले दिएको सिंगारको कन्तुर बहिनीले खूब जतन गरेर राखेकी छ—**सुनको ढुकुर** न हो।

**सुनमाथि सुगन्ध**—=असलमाथिको असल, दुर्लभ कुरा। जस्तो काजी सच्चरित्र भएको धर्मात्मा हुनुहुन्छ त्यस्तै सुखिनी भइन् भने **सुनमा सुगन्ध** भयो।—रुद्रराज (चप्पकाजी)। उनलाई सुन्दरी दिन पाए त **सुनमाथि सुगन्ध** झैं हुने थियो।—भवानी (यौवनको आँधी)।

**सुनाइ हुनु**—=सुन्नु, ध्यान दिनु, (आदरको बोली)। मैले त वर्षदिनअगाडि नै जाहेर गरेको हुँ, उस बेला मेरो कुराको **सुनाइ** भएन।

**सुन्नेलाई सुनको माला, भन्नेलाई फूलको माला,** [बोक्सीलाई *काउसो* (खुसानी)को माला, बौलाहालाई रोटीको माला,] यो कथा वैकुण्ठ जाला, भन्ने वेलामा झट्ट (खुरुक्क वा तातातातै) आउला।—कथा भन्ने मान्छेले कथा सिद्ध्याएपछि भन्ने।

**सुर चढ़ाउनु, चढ्नु**—(१)= हौसला बढ़ाउनु, बढ्नु, हौसिनु। तिम्रो कुरा सुनेर मैले **सुर चढाएँ** (वा मेरो **सुर चढ्यो**)। (३)=(बाजाको) आवाज तीव्र पार्नु, हुनु। यो गितारको **सुर चढाउन** पुगेन। (२)=अमल (प्रायः रक्सी) लगाउनु, लाग्नु। गोथेको **सुर चढिसकेको** छ नबोलाऊ।

**सुर फिर्नु, फर्कनु**—=होश आउनु (बेहोश भएको मानिसको बारे)। आमाको बल्ल **सुर फिरेको** छ, धेर कुरा सोधेर परिश्रम नपारिदेऊ।



**सुराक लाउनु**—=गुप्ती तवरले पत्ता लाउनु। फेरि वत्सरारम्भको दिन मस्त भएका दुश्मनको **सुराक लगाई** रातमा छापा मारी....मुख्य जर्नेललाई दुम लुकाई सुइँकुचा ठोक्ने....अत्यास कसरी वीर नेपाली फौजले पारे....।—श्रीमृगेन्द्र (भानुभक्त स्मारक ग्रन्थ)।

**सुरुङ खन्नु, लाउनु**—(१)= जमीनमनि खोतलेर दुलो पारी बाटो बनाउनु (यस अर्थमा 'लाउनु' प्रयोग हुँदैन)। समय रहे त **शुरुङ खने** पनि हुन्थ्यो ! —बालकृष्ण (प्रह्लाद)। जमीनभित्र भित्रै **सुरुङ्ग खनेर** मूसा हाम्रो छिंडीमा आइसकेछ। (२)=घरको भित्तामा प्वाल पार्नु (चोरको बारे)। हिजो राती गरुडध्वजको घरमा **सुरुङ खनेर** चोर पसेछ।

**सुरेली खेल्नु**—=दुइतिर पैतालाले च्यापेर हातले अँगालो हाली रूखमा, वा हातले समाती बाँस, डोरीमा चढ्नु, ओर्लनु। यज्ञरथले पनि 'लौ हुन्छ' भनी रूखमा टाँस्सिएर **सुरेली खेल्दै** गएर बडो चलाकी साथ एउटा फुल चोरेर ल्याई सरदारको हातमा राखिदियो।—बोधविक्रम (दन्त्यकथा)। जसको आधारमा आज हामी यसरी **सुरेली खेल्दछौं** उसैको त्यो गति भएको देख्दा मन साह्रै रुन्छ।—रुद्रराज (चप्पाकाजी)।

**सुर्के चन्दन, टीका**—=आँखिभूइँको जोर्नीदेखि कपाल छुनेसम्मको ठाडो लामो। वैष्णवहरू **सुर्के चन्दन** लाउँछन्।

**सुर्ता लिनु**—=फिक्री मान्नु, दिक्कको कुरा संझिरहनु। सन्तान नहुनु बाहेक यहाँको **सुर्ता लिनुपर्ने** कुरा केही पनी छैन।—श्री केसर ( विक्रमोर्वशी )। महाराज **सुर्ता** मात्र कति **लिइबक्सिन्छ** ?—श्री अर्जुन (स्वप्नवासवदत्ता)।

**सुसे धन्दा**—=घरको मसिनो काम धन्दा। अब खानपिनको **सुसे धन्दा** चल्यो।—बोधविक्रम (दन्त्यकथा)।

**सुसेलो हाल्नु**—=सुसेल्नु। स्वास्नीमान्छेले घरभित्र सुसेलो हाले अलच्छिन लाग्छ भन्छन्।

**सुस्केरा हाल्नु**—=दिक्क वा थकाइमा सुइय्य गरेर लामो सास फेर्नु। हाली अनन्त सुस्केरा हिंडदा हिंडदा जल। जब पायो अनी आयो नवीन बल-मङ्गल॥ —लेखनाथ (ऋतु-विचार)। रातमा मन्त्री आफ्ना घरमा फर्केर लामो सुस्केरा हालेर बसे।—बोधविक्रम (दन्त्यकथा)। "....म आफ्नो निम्ति, आफ्नो र हजुरको समेत—दुबैको नैतिक हानि गर्न चाहन्न!" यति भनि कृष्णलालले सुस्केरा हाल्यो। —काशीबहादुर (उषा)।

**सूझ न बूझको कुरा**—=थाहा नपाएको नबुझेको कुरा। तिम्रो ज्यादै हाहामा लाग्ने बानी रहेछ, नत्र सूझ न बूझको कुरा किन गर्दथ्यौ!

**सूर कस्नु**—आँट गर्नु। युवक लाइ सारै झोक चल्यो र हान्दछु लात्तै लात्तले र फुकाल्छु ढोका सोका भन्ने सूर कसे।—शिवप्रताप (दुर्गेशनन्दिनी)।

**सूर चढाउनु**—(१)=हिकमत बढाउनु, उत्साहित हुनु।....कोही कोही "वाह! वाह! श्यावास! क्या मधुर बोल!" भन्दै लाल पडीको सूर चढाउनलागे।—रुद्रराज (रूपमती)। (२)= अम्मल खाएर सूरो वा निडर हुनु। बिस्नु बहादुर अधि भट्टीमा पसेको देखेथें, सूर चढिसकेछ —नबोलाऊ। (३)=चढीमा लानु, तीव्र पार्नु, (संगीतमा)। तिम्रो गितारको सूर चढाऊ, अलि ओह्लर्यो।

**सूरो मुट्ठु गर्नु**—=डराउन छाड्नु, मन बलियो गर्नु। तिमी अँध्यारामा किन यति डराउँछौ? सूरो मुट्ठु गर्‍यौ भने भूतप्रेत कता भाग्छन् कता।

**सूर्य्य उदाए**—आगो वायुहरूलाई पनि सूर्यचन्द्रसरह देवता मानेका छौं तापनि यस्तो आदरको क्रियापद सूर्य्य र चन्द्रमासित मात्र प्रयोग गर्छौं।

**सूर्य्यको अगाडि बत्तीको तेज (जूनकीरी)**—ज्यादै फरक गुण भएको मान्छेसित दाँज्दा प्रयोग



हुने। त्यो देशमा अतिथि-पूजनको बयान। हो सूर्यका नगिच जुन्किरिको समान॥—लेखनाथ (सत्यकलिसम्बाद)। कालिदास कविसँग मलाई किन दाँज्छौ, सूर्य्यको अगाडि बत्तीको तेजको के पत्ता?

**सूर्य्यपाक लाउनु**—=घाममा राखी राखी पाक्ने तुल्याउनु। सूर्य्यपाक लाएको कुइके पकाएको भन्दा कताकता मीठो हुन्छ।

**सूर्य्यलाई बत्ती देखाउनु**—= सिपालु मान्छेलाई प्रारम्भिक वा मामूली कुरा सिकाउनु। उहाँ नेपालको प्रख्यात कवि हुनुहुन्छ, उहाँलाई तिमीले सिकाउनु सूर्य्यलाई बत्ती देखाउनु हो, कान्छा काजी।

**सूली हाल्नु**—(१)=सुइरामा उन्नु (यस अर्थमा 'चढाउनु' पनि हुन्छ)। मुसलमान बादशाहहरूले सूली हाल्ने (वा चढाउने) सजा दिन्थे। यसबाट (२)=अनिष्ट गर्नु, बिताउनु। त्यसले मेरो हुँदो कहिले गर्थ्यो, पाएसम्म सूली त हाल्छ!

**सेँध मार्नु, खन्नु**—=(चोरले) घरको गारोमा प्वाल पार्नु। हाम्रो मौजाको कारिन्दाको घरमा चोरले सेँध मारेछ, तर उसले रुपियाँ चलान गरिसकेको थियो।

**सेखपछि**—=शेषपछि (हेर)।

**सेठ हुनु**—(१)=हैकमवाला वा मुख्य मान्छे हुनु। आफू आनन्दे हार्मो जत्ति कालीगड़ काम जान्ने होइन, तैपनि बिजुलीको कारखानामा सेठ भएर खाइरहेछ। (२)=साधारण अर्थ। अस्ति हामीले कुरा गरेको मान्छे त भादगाउँको सेठ पो रहेछ।

**सेन खन्नु**—=सेँध खन्नु (को चल्तीको रूप)।

**सोचे न संझेको**—=मनमा खयालै नचढेको। बरु सोचे नसम्झेको परचक्रीबाट बखत मौकामा कत्रो मर मद्दत मिल्न सक्तछ, यी आफन्त भनाउँदाबाट त हँसी र थपडी बजाइ सिवाय अरू केही मिल्दैन।—रुद्रराज (प्रायश्चित्त)।

**सोझे(जे)री काटनु**—=लख

काट्नु, अनुमान गर्नु (सदरिया बोलीमा उस्तो प्रयोग हुँदैन)। मैले सोझेरी काटेर भनेको कत्तिको मिल्यो त, सानुबाबु त्यही घरमा त राछन् नि !

**सोझो कुरा**—=भएको साँचो कुरा। सब जान तिमी बाङ्गो कुरा, सोझो कुरा म त रूपलाई सबै थाहा दिन जान्दछु।—बालकृष्ण (मुकुन्द इन्दिरा)। अघि नै सोझो कुरा भनेको भए तेरो जीउले यति दुःखै पाउने थिएन।

**सोझो गर्नु**—=सफा नियतले काम गर्नु, ईमानदारीसंग काम गर्नु। उही बरबन्दीको चंखे जस्तो छ भने त हुन्छ, नत्र मालिकको सोझो गर्नु पर्छ भने त बितायो।—रुद्रराज (प्रायश्चित्त)।

**सोझो चिताउनु**—=(मालिकको) असल गर्छु भन्ने मनमा लिनु। ···सबैले यस्मा पुरा ध्यान दी निमक संझी हाम्रो सोझो चिताई काम गरी मुलुकको बल ऐश्वर्य बढाई आफ्नी प्यारी जन्म-भूमि र सरकारको रोबखाफ राखनु-पर्दछ, राखन्यै-छौ। —श्री ३ भीम (नगर-प्रदक्षिणोत्सवको वक्तृता)। सोझो चिताइ जति काम्कन गर्छ जस्ले। क्या वात् कहाइ जस खुपूसित लुट्छ तस्ले॥—मोतीराम (मनोद्वेग प्रवाह)।

**सोझो, बाङ्गो हात**—(१)= ताकेको ठाउँमा लाग्ने, नलाग्ने हात। ओहो, तिम्रो खूब सोझो हात रेहेछ—त्यति टाढाको चरालाई खुत्रुक्कै पार्‍यौ ! (२) साधारण अर्थ। तिम्रो बाङ्गो हात रेहेछ, केटाकेटीमा लडेर भाँचिएको थियो ?

**सोझो बाटो**—(१)=असल आचरण। पद्मनाथ सोझो बाटामा लागेको भए अहिलेसम्म मालिकको खासी भइसक्ने थियो। (२) साधारण अर्थ। मलाई त यही सोझो बाटो पर्छ, डिल्लीबजारबाट जाँदा त निकै घुमाउरो पर्दो रेहेछ।

**सोझो मनले**—(१)=असल नियतले। मैले त त्यो कुरा सोझै मनले भनेको हुँ, तिमी बाङ्गो अर्थ लाएर रिसाएँछौ भने के त। (२)=राजी खुशीसँग।



हेर, तिमीले दिएको सुपारी त भइँमा खस्यो, सोझो मनले दिएकी रहिनछौ।

**सोझो मुख**—=नरिसाएको वा नझर्केको वचन। जाऊ जाने भए सोझो मुखले, नत्र दुःखको घना जङ्गलमा आज सम्मनूको क्रोध सल्किदै डढेलो लाग्न पुग्नेछ, ज्यानमारा हुनेछु म, ज्यान जानेछ तिम्रो त।—बालकृष्ण (मुकुन्द इन्दिरा)। एक फेरा बोलिदेऊ सोझो मुखले माइली ! एक फेरा हेरिदेऊ सोझो मुखले माइली !—ऐजन (अन्धवेग)। शाशूनै चपरचण्ड थिइन्; उनीहरू सँग सोझो मुख गरेको दिनै थिएन।—रुद्रराज (रूपमती)।

**सोतेरो भर्नु**—=गुप्त हिसाबले खुसुखुसु दिइरहनु। छोरीलाई सोतेरो भर्दैमा हरिबदनको पैसा उडिसक्यो, छोराचाहिंले कति भेट्टाउला र ?

**सोधेको छ भन्नु**—(१) बिरामीलाई सोधिपठाउँदा प्रयोग हुने। तपाईंको दाइलाइ जरो आएको कस्तो भयो, मैले सोधेको छ भन्नोस् है ? (२) खालि संझना जाहेर गरेर पठाउँदा पनि प्रयोग हुन्छ। तिम्री आमालाई नदेखेको धेरै भयो, मैले सोधेको छ भन है।

**सोमत पाउनु**—=सभ्य आचरण सिकाइनु। सोमत पाइसकेको मान्छेको त यो चाला छ, हिजो मात्र पहाडबाट आएको बिचराले के जानोस् !

**सोलाकी सती**—=मसक्क आंटेकी (को)। कान्छी नानी माइत जान सोलाकी सती भैसकेकी छन्, अब उनलाई संझाउनु बुझाउनु व्यर्थ छ।

**सोला दिनु, हान्नु**—(१)—डाहा हुनु, रिस उठ्नु। आपसमा खेल्दा ती बालकहरूले कराएको आवाजले पनि उनलाई सोला दिन्थ्यो।—बोधविक्रम (दन्त्यकथा)। (२)=सियोले रोपे जस्तो गरी दुख्नु। अघि अलिकता बदाम खाइदिएको थिएं, पेटमा सोला दिन थालिहाल्यो।

**सोह्रमा तान्दा सत्रै पर्नु**—=फलिफाप भइरहेकैमा झर्न सो-

भाग्यको संजोग पर्नु (नकसको खेलबाट)।....हाँसदै एक बोतल "अम्ल—कडाविष" लेखिराखे-को औषधि निकालेर मनमनै भनी—सोह्रमा तान्दा सत्रै परेछ।—भवानी (यौवनको आँधी)।

**सोह्रै आना**—=सरासर, पूरा मात्रामा। सरला—के यो कुरा हजुरको शुद्ध मनले पनि सत्य मानेको छ त? भोला—सोह्रै आना।—लेखनाथ (लक्ष्मी-पूजा)।....म आफ्नो सम्मानको रक्षा सोह्रैआना गर्न सक्ने थिएँ।—खड्गमान (दर्पचूर्ण)। रसिक होइन, साँच्चै नै भित्र दिलै-देखिको सोह्रै आना साँचो कुरा हो।—भवानी (यौवनको आँधी)।

**सौताको छोरा झैँ**—(१) दिन खान पनपक्ष गरी छुट्याउँदा दृष्टान्त दिने बोली। सबैलाई आँप दिएर, हेर, मलाई सौता-को छोरो जस्तो गरेर छुट्या-एको!

**सौता जस्तो गर्नु**—=देखिन-सहनु, डाहा गर्नु। मलाई किन सौता जस्तो गर्छ्यौ, मैले तिम्रो के बिगार गरें?

**सौता फर्काउनु**—कपाल बाटिस-केपछि बाट्नेले कपाल सम्याई 'तिमी शिरमा, तिम्रो सौता भीरमा' भन्ने चलन छ, यसलाई सौता फर्काएको भन्छन्। म त तिम्रो कपाल बाटेर उसै जान लागे छु, सौता फर्काउन त बिर्सिराकी।

**सौता हाल्नु**—=एउटा स्वास्नी हुँदा हुँदै अर्की स्वास्नी ल्याउनु। ....उ मरी यो थाहा न पाएर कि मानिस माया गर्दै सौता हाल्दै गर्न शक्तछ।—बालकृष्ण (मुटुको व्यथा)। सन्तान भएन भनेर सौता हाल्ने पो हो कि?—हुन त उनले खूब रिझाएकी थिइन्; त्यतिको डर थिएन।—रुद्रराज (रूपमती)।

**सौतिनी आमा**—=आफ्नी आमाकी सौता (सौतिने भाइ, सौतिनी बहिनी=त्यतापट्टिका)। क़स्तो निष्ठुर, यो शीत मेरो मुटु हिलाउँछ! के सौतिनी मुमा बाट पठाएको तं दूत होस्?—बालकृष्ण (ध्रुव)। आमा खस्नु भएदेखि सौतिनी आमाले पनि निकै माया गर्नुहुन्छ।



**सौतिने ग्रह**—=आफूमाथि सौता नल्याई नछोड्ने। मैयाँनानीको सौतिने ग्रह परेको छ रे ज्वाई बाजेले अर्को बिहा नगरी छोड्नु-हुनेछैन।

**सौतिने डाह**—=सौतामाथिको वा हद मात्रमा पुगेको डाह (आइमाईको बारे)। त्यति बिघ्न माया बसेको पोइलाइ समेत केमराले छाडेर गई—सौतिने डाह भनेको यस्तो हुन्छ।

**सौतिने पेच**—सौतासौताको पेचा-पेच वा जालझेल। तिमी पनि सौतिने पेचमा परेछौ, दुबै जनालाई खुशी तुल्याउँछु भनेर कहिले हुन्थ्यो!

**सौतिने मामलो**—=सौता, सौ-ताका छोराछोरी, वा सौतिनी सासू भएको अवस्था। गुमान-सिङकहाँ त सौतिने मामलो छ, त्यस्तोमा पनि के छोरी दिन आँटेको?

**सौतिने हाड**—=सौतिनी आमा-पट्टिबाट परेको हाडनाता। कार्की त सौतिने हाडमा परेछ, उसको मुद्दा भारादारी अड्डामा हेरिन लागेको छ रे।

**स्थिति बाँध्नु**—=नियम स्थापित गर्नु।....गन्धमादनको काछमा आसन बसाईं स्थिति पनी बाँध्नु भएको थियो।—श्री केसर (विक्रमोर्वशी)। सृष्टि गर्ने उही हो, स्थिति बाँध्ने उही हो, प्रलय मचाउने उही हो।—बालकृष्ण (ध्रुव)।

**स्याखु दोब्याए झैँ दोब्याउनु**—भाँचिने गरी चेप्ट्याएर दोब्याउँदा दृष्टान्त दिने (स्याखु=छेउ तिखारिँदै गएको घुम)। मलाई धेरै झोक नचला, अहिले स्याखु दोब्याए झैं दोब्या-उँला।

**स्याप्प बस्नु**—=सेप्रिनु। हेर, यो भकुण्डोमा त प्वाल पर्‍यो क्यारे, हावा गएर स्याप्प बसेछ।

**स्यालको हुइया**—एउटाको पछि लागी अरूहरू पनि रुँदा वा कराउँदा दृष्टान्त दिने बोली (एउटाको अबाज सुन्यो कि भएभरको सबै कराउने स्यालको बानीबाट)। बुझ्नु न सुझ्नु,

स्यालको हुइया जस्तो एक जना रोयो कि भएभरका सबै रुने !

स्याल भाषा नमिलाउनु—=नेवारे बोली नघुसाउनु (पर्वतेले नेवारलाई गिज्याउँदा प्रयोग हुने)। हाम्रो बोलीलाई स्याल भाषा नमिलाऊ भन्छौ, तिम्रो भाषाको के नाउँ राखूँ नि ?

स्वर बस्नु—=घाँटीबाट साबिकको अबाज नआउनु। हिजो राती जुवामा कराएको स्वर बस्यो।

स्वर सुक्नु—=(प्रायः कराउँदा कराउँदा) अबाज क्षीण हुनु (कमजोरीले)। चोरले धनूलाइ चोर्‍यो, खोरमा झन् मैं परें। शोर सुक्यो आशा लुक्यो, कस्ले भनोस् कस्ले गरोस् ॥—शम्भुप्रसाद (शम्भुभजनमाला)।

स्वर्गले मिचे जस्तो—=सगरले थिचेको जस्तो (हेर)।

स्वर्गवास हुनु-(१)=वैकुण्ठवास हुनु (हेर)। (२)=(आदरार्थी) मर्नु (को सट्टामा पनि प्रायः लेख, श्लोकहरूमा प्रयोग हुन्छ)।.... उस्ती परम-पतिव्रता महारानीको आज अकालमा स्वर्ग-वास भयो हा !!! लेखनाथ (भर्तृहरिनिर्वेद)।

स्वर्ग हुनु—=मर्नु (उच्च कक्षाको आदरको बोली)। हरे ! वासवदत्ता ! कहाँ वासवदत्ता ! उहाँ स्वर्ग भएको त धेरै दिन भइसक्यो।—श्री अर्जुन (स्वप्नवासवदत्ता)। उहाँहरूको स्वर्ग भए पछि केही दिन सुख संग बितेथ्यो।—रुद्रराज (चप्पाकाजी)। १२६६ ए० डी० मा नासिरुद्दीन स्वर्ग्य भए।—ऐजन (भारतवर्षको संक्षिप्त इतिहास, भाग २)। नरेन्द्रका पिता प्रशस्त ऋण लगाएर स्वर्ग भएका छन्।—खड्गमान (दर्पचूर्ण)।

स्वस्ति श्री—खाम वा चिट्ठीमा नाउँको अगाडि प्रयोग हुने। स्वस्ति श्री ६ बाबाज्यूका पास पहुँचे।

स्वाङ गर्नु—=नाटीकुटी, सुकुमारीपन, चोखीनिती, वा नैष्टिकता देखाउनु। तिमी अचाक्लि स्वाङ गर्छौ ब्यारे, गैं पर्दैमा भात छोडिदिने !



स्वाङ झिक्नु—(१)=बहाना वा अनुकरण गर्नु। पढ्नुपर्छ भनेर तिमीले स्वाङ झिकेको मात्रै हो, तिम्रो कपालै दुखेको छैन। अस्तिको नाचमा गोथेले विदूषकको स्वाङ झिकेको कति राम्रो थियो। (२)=(नयाँ) ढाँचा वा काइदा ल्याउनु, खडा गर्नु। अनेक किसिमको स्वाङ झिक्छौ, सँधै भाँडाहरू तातो पानीमा उमालेर निर्वाह हुन्छ ?

स्वाङ पार्नु—(१)=छाल पार्नु, ढाँचा वा नकल पार्नु। मोतीलालसँग स्वाङ पार्न तँलाई त्यहाँ कल्ले जानू भन्यो ? (२)=बहाना गर्नु। तिम्रो खुट्टा दुखेकै छैन, स्वाङ पारेर खोच्याएको कह्लाई थाहा छैन र !

स्वाद गड्नु—=स्वाद संझिरहनु। तिमीले हालेको खल्पीको अचारको जिब्रैमा स्वाद गडिरहेछ।

स्वाद पाउनु—(१)=नतीजा भोग्नु, बदला वा सँजा पाउनु। पायो स्वाद् अब पक्‌डियेर थुनियो साह्रै म खूसी भज्ञा ॥ —मोतीराम (उषाचरित्र)। पाइन् स्वाद बुढियाले—पहिले त्यस्ती रत्न ठुली बुहारीलाई देखि नसहेर रातदिन रगतका आँशू चुहाउन लाएको पनी पाप नलागी छाड्दछ ?—रुद्रराज (रूपमती)। (२). साधारण अर्थ। त्यो मूर्ति जब देख्नेछौ अनी पो स्वाद पाउँछौ, पिउँछौ जति त्यो रूप तिर्खा बढ्दछ यो उति,....।—बालकृष्ण (ध्रुव)। सान्छोरा त आँपको स्वाद पाएर पल्केछ ए !

स्वाद फेर्नु—(१)=आफ्नो चित्त बुझ्ने गरी गर्नु (बदला वा सँजा दिंदा)। मलाई धनेले गिज्याइर्‍यो, मेरो पालो स्वादै फेरेर गाला पड्काइदिएँ। (२)=मनमाफिकको गर्नु (केही भन्दा वा जवाफ दिंदा)। मैले अस्ति तिम्रो दाइलाई स्वादै फेरेर भनें। (३)=एकदम तिर्सना मर्ने गर्नु (तिर्सना लागेको काम गर्दा)। काँक्रो खान साह्रै मन लागेको थियो, हिजो स्वादै फेरेर दुइटा काँक्रा खाएँ। (४) साधारण अर्थ। गर्मीमा एउटै कुरा खाइरहन

सकिन्न स्वाद फेरीफेरी खाए मात्र भात रुच्छ ।

**स्वाद लिनु, मान्नु**—(१)=मजा लिनु, चाख मान्नु । सान्चा खूब स्वाद लिएर नाच हेरिरहेछ । (२)=मीठो मान्नु । तिमी त यो अचार खूब स्वाद लिएर खाइरहेछौ, मलाइ त बडे मीठो लागेन ।

**स्वास्नीको फरियामा लुक्नु, स्वास्नीको फरियाको फेटा गुथ्नु**—=फरियाको फेटा गुथिदिनु *इत्यादि* हेर ।

**स्वाहा हुनु**—(१)=नाश हुनु । जुन जुवाको ज्वालामा पाण्डवको ऐश्वर्य, द्रौपदीको इज्जत, धृतराष्ट्रको वंश र भारतवर्षको गौरव स्वाहा भयो, उही जूवा तेरो विचारमा मामुली ठहर्‍यो ?—लेखनाथ (लक्ष्मी-पूजा) । सानी बुहारीको चिच्याहटले छिमेकका माष्टर साहेब न ब्यूँझेको भए स्वाहा नै हुने रहेछ भनेर रविलालैले हौडा मचायो ।—रुद्रराज (रूपमती) ।

## ह

**हँसिया जस्तो (भन्दा पनि) सोझो**—=छलकपट गर्ने मान्छेलाई प्रयोग हुने वक्रोक्ति । हँसिया जस्तो सोझो बोली हामीलाई बाङ्गो लाग्दछ ।—बालकृष्ण (मुटुको व्यथा) ।

**हँसी उड़ाउनु**—=गिल्ला गर्नु । अरूहरूका छोरी बेटीलाई सौताको लात चखाउने काममा पनी तिनै अघि सर्दछन्, अर्काको विजोग देखेर थपडी मार्दछन्, हस्सी उडाउँछन् ,····।—रुद्रराज (रूपमती) ।

**हँसीमा उडाउनु**—=ठट्टामा लानु । मैले डाँक राख्नुपर्छ भन्दा हँसीमा उडाइदिनुभयो, अहिले यो घोडाले काम दिन नसक्ने भयो ।

**हंस उड्नु**—=प्राण जानु । हंस उड्यो, सब कर्म बुड्यो, जिउ अंश गएन बचाई ।—शम्भुप्रसाद (शम्भु भजनमाला) ।

**हंसले ठाउँ छोड्नु**—=डरले खंग्रयाङ्खुंग्रुङ्ग पर्नु, मुटुले ठाउँ छोड्नु । अब बिचरा बाहुनको हंसले ठाउ छोड्यो ।—बोधविक्रम (दन्त्यकथा) ।

**हक इनसाफ**—=यथार्थ न्याय । हक इन्साफ पाउनाले दुनियाँलाई सुखसुबिस्ता हुने हुनाले यस्मा पनी हाम्रो पुरा ध्यान लागी-रहने छ····।—श्री ३ भीम (नगरप्रदक्षिणोत्सवको वक्तृता) ।

**हड्ड बस्ता पनि नाउँ नलिनु**—=नीच संझेर नाउँ गोतै नलिनु वा सरोकारै नराख्नु । त्या उल्लूको त म हड्ड बस्ता पनि नाउँ लिन्न, किन धर्मसित त्यस्तो कुरा गर्थें !

**हड्ड बस्ता बाह्र हातको टाङ्गोले पनि नछुनु**—=यस्तो नीच संझनु कि झाडा फेर्न लाग्दा पनि त्यति लामो घोचाले समेत नछुनु, साह्रै हेय ठान्नु । तँलाई त क्या, तँलाई त, हड्ड बस्ता बाह्र हातको टाङ्गोले पनि छुन्न, बुझिस् ?

**हङ्सले मङ्स देखे जस्तो**—=मासु खान हाँ हाँ गरेकोमा दृष्टान्त दिंदा प्रयोग हुने (हङ्स=आत्मा) । क्या हो, हङ्सले मङ्स देखे जस्तो गरेको, यति भाँडा थन्क्याएपछि त भाग लाइदिहाल्छु नि !

**हण्डर खानु, पाउनु**—=दुःखदायी अनुभवद्वारा सिक्नु, त्यस्तो अनुभव भोग्नु । यस पाला बूढी आमालाई तीन धाम लाँदा ठूलो हण्डर खाएँ ।

**हतकेला चिलाउनु**—यसो हुनु 'प्राप्तिको सूचना पाउनु' हो भन्छन्; यसो हुँदा हतकेलामा सात चोटि म्वाईं खान्छन् । मेरो त हतकेला चिलायो वा, कताबाट दाम आउँछ !

**हतकेलामा नचाइराख्नु**—=बाफबाफमा राख्नु, खूब रिझाइराख्नु । तिम्रो जस्तो सासू मेरी भए हतकेलामा नचाइराख्थें, के गर्नु, आफूले त सासू देख्नै पाइनँ ।

**हतकेलामा राख्नु**—=(प्राणको बारे) परवाह नगर्नु, माया नराख्नु । हरहमेशा तिनले आफ्नो जीवनलाई हतकेलामा राखेर हिंड्नुपर्थ्यो ।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथा-संग्रह) ।

**हतार (हतपत) लाउनु**—=चाँडै गर्न लाउनु । उर्वशीलाई हतार लाउ ।—श्री केसर (विक्रमोर्वशी) ।

**हत्ते देखाउनु**—=सासना देखाउनु (प्रायः अरूको दिल पगाल्न) । यो सानीले हत्ते देखाई देखाई मलाई कज्याउन जानेकी छ ।

**हत्ते प्राण गर्नु, हाल्नु**—=मागेको नदिए वा भनेको नमाने प्राणै फयाँक्ला जस्तो गर्नु, हत्ते हाल्नु । आज किरीमिरी सुब्बाले आफ्ना छोरालाई भनेर हत्ते प्राण गर्दा सुम्पिदिएको भए किन यो भुक्कमान सहेर बस्नु पर्दथ्यो ?—रुद्रराज (रूपमती) ।

**हत्ते हाल्नु**—=प्राणै हुरुक्क फाल्ला जस्तो गरी निवेदन गर्नु, आफूले भनेको मनाउन खुरुन्धार लाग्नु । मुसे प्याकुराले हत्ते हालेको होइन ?-बाबू बाज्येको सम्पत्ति अडाउन शकेनन्—घरान त कम होइनन् ।—रुद्रराज (रूपमती) ।

**हद दर्जाको**—=अति, ज्यादै । तिम्रो छोरो हद दर्जाको बदमाश भएछ । तिमीले हिजो किनिदिएको आँप हद दर्जाको मीठो रहेछ ।

**हद बाँध्नु**—=यतिसम्म भन्ने रूल कायम गर्नु । तेसो हुनाले अघी नोकरीमा उमेरको हद बाँधी बक्सदा सो हद, लडाइँ नपरुञ्जेल सम्मलाई हो भनि सुनाई बक्सेको संझेकै होलाऊ।—श्री ३ जुद्ध (१९९८ जन्मोत्सवको स्पीच) ।

**हपहप बाफ उठ्नु, आउनु**—तातो वा ज्यादा चिसो मालबाट धूवाँ जस्तो बाष्प निक्लनु । हपहप बाफ उठेको गोलभेंडाको छुरुवा देख्ता भोलाले थूक निल्यो ।

**हप्प टिप्नु**—=उकुसमुकुस गरी गर्मी हुनु । ओहो, के बिद्दन हप्प टिपेका ! चिसो छिंडीमा जाऔं ।

**हफ्ता दिन**—'महीना दिन' मा हेर । अब हफ्ता दिनमा त ठाहिला भाइ पनि आइपुग्छन् ।

**हब्बे न कब्बे**—=कत्ति पनि हुती नभएको । जब पुग्यो नब्बे, हब्बे न कब्बे ।



**हर तरह गर्नु**—=संभव भएसम्म सबै यत्न गर्नु । सानी छोरीलाई मुख बराउन हर तरह गरें, केही लागेन अहिले ओछ्यान परिहाली ।

**हरताल लाउनु**—=रद्दी गर्नु, नहुने पार्नु । के यो लम्बरको ऐनमा हरताल लागेको छ र यसरी अन्याय गर्न पाउला ?

**हरफ हरफ पढी शिर चढाएँ**—=चिट्ठी पाएँ भनी लेख्ता उच्च कक्षामा चलेको आदरको बोली । हजूरबाट निगाह भएको शिक्षार्ती पत्रको दर्शन पाई हरफ हरफ पढी शिर चढाएं ।

**हर बस्नु**—(१)=शरीरको एक पाखा नचल्नु, पक्षवात हुनु । मेनकाको त अस्ति बान लागेदेखि हरै बसेको छ रे । (२)=थला पर्नु, ओच्छ्यान पर्नु । अस्ति प्रेमबहादुरले स्वास्नीचाहिंलाई हरै बस्ने गरी कुटेछ । (३)=ठूलो नोक्सानमा पर्नु । चामेले २ सय जुवा हारेछ, बिचराको हरै बस्यो ।

**हरल जुवाडे**—चित्तवृत्ति ठेगानमा नभएको वा परिणामको ख्याल नराखी होम्मिने मानिसलाई दृष्टान्त दिने । देख्यौ ? खाली चिन्ताले गर्दा इनी हरल जुवाडेको भन्दा पनि खराब हालतमा पुगीशकीन् ।—लेखनाथ (लक्ष्मी-पूजा) ।

**हरिपाँडेको पंजनी**—चिनजान भएको मान्छिसलाई खोस्ने वा सेट्ने कामलाइ दृष्टान्त दिने (हरिपाँडेले पजनी गर्दा जानपहिचान भएको मानिसलाई छानी छानी खोसेछन् । खोसिनेहरूले 'हामी चिह्नारीलाई किन खोस्नुभएको ?' भन्दा 'नचिह्नेको मानिसको बारेमा केही थाहा हुँदैन, कसरी खोसूँ ? तिमीहरूको आनीबानी थाहा पाएको हुनाले तिमीहरूलाई खोसें' भन्ने उनले जवाफ दिएकोबाट) । परचक्रीलाई भने रुपियाँ रुपियाँ, हामी सधैं चाकडी गनलाई भने आठआठ पैसा बाँडिबक्सने—यो त हरिपाँडेको पजनी जस्तो भयो, हजूर ।

**हरियो बाँसमा बाँध्नु**—=घाटमा लाँदा लासलाई हरिया

बाँसमा टन्काउनु (सराप्ता प्रयोग हुने)। 'त्यसलाई हरियो बाँसमा बाँधेर लगेको कहिले देख्न पाउँला' भनेर मुनियाँले डिट्ठालाई सरापी।

**हरुवा परुवा गुहुको मच्याङ्ग्रा पारुवा, हाम्रो पाम्रो गुहुको मट्याङ्ग्रा पाम्रो** —हार्ने मानिसलाई गिज्याउने केटाकेटीको बोली। हा! दुइ गोल हारेर भाग्यो, **हरुवा परुवा गुहुको मच्याङ्ग्रा पारुवा!**

**हरे** *राम राम* **(शिव शिव)**— अफसोस वा विरक्ति जताउँदा, पछुताउँदा, माया देखाउँदा, प्रयोग हुने विस्मयादिबोधक। **हरे राम राम,** यस्तो बूढो मानिसलाई पनि यस्तो कुराको शङ्का गर्ने! **हरे राम राम,** तिमीले गर्दा बाको मुख पनि देख्न पाइनँ! **हरे शिव शिव!** त्यो झिङालाई किन मारेको?

**हरेस खानु**— = निराश हुनु, हिकमत हार्नु।....घरहरू धेर भत्के बिग्रेका थिए ता पनि सबै दुनियाँहरूले **हरेस नखाई** क्रमै सँग उद्योग गर्दै जाँदा आफ्नै महतले ६।७ वर्ष भित्रमा फेरि शहर उस्तै पारेको कुरा इतिहासबाट देखिन्छ। —श्री ३ जुद्ध (भूकम्प-भाषण)। **हरेस नखाएरै** भला कुरा पाइन्छन्।—श्री केसर (विक्रमोर्वशी)।....हिजो आज त औषधिको सट्टा **हरेस पो खान** लागेको छु।—बालकृष्ण (मुकुन्द इन्दिरा)। भोक प्यासले पनि सतायो ; तर राजकुमारको मनले कत्ति पनि **हरेस खाएन**।—बोधविक्रम (दन्त्यकथा)। यी कामहरू सुनेर जेस्नको मनले अलि **हरेस खायो**।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)।

**हर्रो हगाउनु**— = कायल कायल पार्नु (हर्रोले कडा जुलाफको काम दिने हुनाले)। अहिले जोरी खोज्छस्, भोलि सिपाही लाएर तँलाइ **हर्रो हगाउँछु**।

**हर्ष विस्मात हुनु**— = पहिले खुशी भई अनि दिक्क मान्नुपर्नु। पुष्प बहादुरलाई **हर्ष विस्मात**



भयो—छोरो त पाएकै थियो, तर दुइ घण्टासम्म मात्र बाँचेर गयो।

**हलक्क बढ्नु**— = थोरै दिनभित्रै एकदम अग्लो हुनु। कस्तो **हलक्क बढ़िछन्!** चिन्ह्यौ मलाई?—बालकृष्ण (मुकुन्द इन्दिरा)। ती अरू देव-बालक झैं **हलक्क बढेनन्**।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथा-संग्रह)।

**हलो जोत्नु, दाउनु**— = हलोले जमीन उधिन्नु। एक दिन बेलुका चामे **हलो जोतेर** घर आएको गौंथली दैलो अगल्थायेर गाउँमा बिहा हेर्न गएकी रहीछ। —गुरुप्रसाद (कथा कुसुम)।

**हल्कारो बन्नु**— = कुरा ओसार्नु। आफ्नो काम अलपत्र छोडेर के खान तिनीहरूको **हल्कारो बन्न** जानुपर्‍यो?

**हल्लेर हिंड्नु**—(१) = बेकाममा रल्लिएर यताउता घुम्नु। एउटा जागिरको बन्दोबस्त न गरेर कति दिन **हल्लेर हिंड्ने** हो? —रुद्रराज (रूपमती)। (२) साधारण अर्थ। के बिन्न **हल्लेर हिंडेको**, बाटो हिंड्ने मान्छेले पनि के भन्लान्?

**हवलाका माल**— = उच्च कक्षाको बिहा व्रतबन्धमा सरकारिया (प्रायः कुमारी चोकका) कारिन्दाहरूले बोक्ने श्रीकुमारीलाई चढाइराखेका चमर पंखा इत्यादि।....वर्षाकालका चिह्नहरू नै अहिले मेरो **हवलाका माल** भइरहेका छन्।—श्री केसर (विक्रमोर्वशी)।

**हविष्य बस्नु**— = आमिष भोजन नगरी चोखो एक छाक खानु।.... त्यही कुरा मैले विन्ति चढाएको भनी जाहेर गरिदेऊ भनेर **हविष्य राज भएका** काशीराजका शाहज्यादीबाट मलाई अह्राइबक्सेको छ।— श्री केसर (विक्रमोर्वशी)।

**हसक्क गह्राउनु**— = दुर्गन्धको राँको आउनु। पोडेले नाल चलाए छ क्यारे **हसक्क गह्रायो**।

**हस्स न फस्सको**— = छक्का पंजा नभएको, बेहोशी वा हुस्सू। **हस्स न फस्सको** मान्छेलाई ब्याग बोक्न दिएपछि

नहराई छाड्छ ?

**हाँक दिनु**—=जोरी खोजेर घोषणा गर्नु। उल्टै मिनर्भालाई 'लौ परीक्षा देऊ' भनेर हाँक दिई।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)।

**हाँमा हाँ मिलाउनु**—=सत्य कुराको वास्ता नगरी अरूलाई खुशी तुल्याउन 'हो' भने 'हो', 'होइन' भने 'होइन' भनी साथ दिनु (हिन्दी वाक्यांशबाट)। सबैले ठीक भन्नु भयो भनेर **हाँ मा हाँ मिलाए**।—रुद्रराज (रूपमती)।

**हाँसको जस्तो हिंडाइ**—उहिले बयान भएको हिंडाइ, आजकाल त्यस्तो हिंडाइलाई खुनमा लान्छन्। सुन, चन्द्र जस्तो सुख, **हंसको जस्तो हिँडाई** छ त्यही चिह्नले पहिचान्नेछौ मैले तिमीलाई बताएँ है।—श्री केसर (विक्रमोर्वशी)।

**हाँसको फुल**—=शून्य (प्रायः विद्यार्थीहरूले परीक्षामा पाउँदा)। के? अब, हिसाबमा **हाँसको फूल**····—रुद्रराज (प्रायश्चित्त)।

**हाँसको बथानमा बकुल्ला बसे जस्तो**—पंडितको हूलमा मूर्ख बस्ता दृष्टान्त दिने। यतिका विद्वानै विद्वान् बसेका ठाउँमा एउटा मूर्ख बस्न जाँदा त **हाँसको बथानमा बकुल्लो बसे जस्तो** हुन्छ, उसैले म त्यहाँ जान्न।

*हाँसी हाँसी* **(हाँसोमा) उडाउनु**—हाँसोमा उडाउनु, ध्यान नदिनु। छोराहरूलाई पढाइ पुगेन भनेर मैले अस्ति नै बिन्ति गर्दा **हाँसी हाँसी उडाउनु-भयो**, अहिले मलाई के भन्नुहुन्छ ?

**हाँसी हाँसी पेटको कीरा मार्नु**—=ठट्टा गरे जस्तो गरी मेजो पुर्‍याउनु, मर्म पार्नु। तिमी सूधो भन्थ्यौ नि, यिनी सक्काका छन्—**हाँसी हाँसी अर्काको पेटको कीरा मार्छन्**।

**हाँसो उठ्नु**—=हाँसो आउनु। मकन त अति **हाँसो उठ्छ** सूनेर कुरो॥—मोतीराम (मृगनयनी मनोहर वाक्य)।···· तेस्ता प्रकारले अर्थनवर्थ सङ आफुले लेखेको देखेर तिन्लाई आँफैं **हाँसो उठ्यो**,····।—शिवप्रताप (दुर्गेशनन्दिनी)। हामीहरूको ज्ञान कस्तो अपूर्ण छ यो सम्झेर आफू माथि आफैलाई **हाँसो उठ्तछ**।—जितेन्द्र (आधुनिक आविष्कार)।

**हाँसोमा उडाउनु**—=हाँसी हाँसी उडाउनु (मा हेर)।



**हाइ संचो, सुक्ख**—(१)=संकोच नमानेर, आज्ञा नलिएर (गर्न नहुने कुरा गर्‍यो भन्ने ठान्दा प्रयोग हुने; प्रायः यसमा 'सित' लाग्छ)। **हाइ सञ्चोसित** मलाई त्याग्यौ ए?—श्री केसर (विक्रमोर्वशी)। **हाइ सुक्ख** उ त डसनामा बसिरहेको, ए! (२)=खोजेको जस्तो आनन्द, ज्यादै मोज। काजीलाई **हाई सुख** भयो।—रुद्रराज (चप्पा काजी)।

*हा(ह्रा)ङ्ग्रा*(हाँग्रायो)ले *पाङ्ग्रा* **(पाँग्रा) निले जस्तो**—=हस्याङ फस्याङ गरी खाँदा दृष्टान्त दिने (हाङ्ग्रा वा हाँग्रायो=धनेस चराको किसिम; त्यो चराले लेखपाङ्ग्रो त्यही किसिमसित निल्छ भन्ने लोकोक्तिबाट)। बिस्तारै खान, सर्केलास्, के **हाङ्ग्राले पाङ्ग्रा निले जस्तो** गरेको ?

**हाजिर गराउनु**—=ल्याउनु (उच्च कक्षाको आदरको बोली)। यस्तैमा सिपाहीहरू मरेको बाघ राजाका अगाडी **हाजीर गरायेर** सलाम गरी खडा रहन्छन।—लेखनाथ (भर्तृहरिनिर्वेद)।

**हाजिर हुनु**—(१)=(ठूलो मानिसकहाँ) जानु, आउनु, (प्रायः निजैसंग कुरा गर्दा प्रयोग हुने)।····महाराज महासेनबाट पठाइबक्सेको रैभ्यगोत्रको डिट्ठा र महारानी अङ्गारवतीबाट पठाइबक्सेकी वसुन्धरा भन्ने महारानी वासवदत्ताकी धाई ढोकामा **हाजिर भएका छन्** भनेर बिन्ति चढाइदिनु पर्‍यो।—श्री अर्जुन (स्वप्नवासवदत्ता)। (२) साधारण अर्थ। हिजो म अड्डामा **हाजिर थिएं**, तिमीले किन भेटेनौ ?

**हाजिरी जवान**—=अहिले हाजिर रहेका मानिस। **हाजिरी जवान** कति छन्, झट्ट नाउँ

टिपेर मलाई देऊ ।

**हाजिरी जवाफ**—=सोध्नेसाथ-को तुरुन्त जवाफ । आज कर्साहेबकहाँ केही बिन्ति चढाऊँ भनेर गएको त ढोकैबाट **हाजिरी जवाफ** पाइयो ।

**हाड खुर गर्नु**—=बाघ,चितुवा, आदिको टाउकोको हाड, पञ्जा राखेर छाला काढ्नु (शिर खुर गर्नु *पनि हेर* ।

**हाडखोड [बाँकी] नराख्नु**—(१)=सत्यानाश पार्नु, बेसरी चुट्नु । यो कुरा थाहा पायो भने बलेले तिम्रो सन्तानको **हाड खोड राख्नेछैन** । त्यसले तिमीलाई भेट्टायो भने **हाडखोड बाँकी नराखेर** चुट्नेछ । (२)=सिनित्क पारेर मासु खानु । बिरामीलाई आधा चरा दिएको त **हाडखोड नराखेर** खाएछ ।

**हाडखोड बिसाउनु**—=मर्नु (प्रायः लास गाड्ने रीत भएका-हरूमा) । हाम्रो त **हाडखोड बिसाउने** वेला भइसक्यो, बाबु हो ! तिमीहरूले यसबाट शिक्षा लिई नियत सपार्नुपर्छ ।

**हाड चोखो गर्नु**—= पार लिनु (कमाराकमारीको बारे) ।··· यी बेचिएका करियाहरूका ज्यूमा परेका रुपैयाँ तिरी ती दुःखियाहरूको **हाड चोखो गरिदिने** काम भयो ।—श्री३चन्द्र (अमलेख-भाषण) ।

**हाड छामी छामी कुट्नु**—=ज्यादै दुख्ने गरी चुट्नु (हाडमा पर्दा दुख्ने हुनाले) । केटाकेटी-हरूलाई उल्काएर बिगार्ने बदमाशलाई **हाड छामी छामी कुट्नुपर्छ** ।

**हाड नभएको जिब्रो लटपटिन्छ**—कुरा गर्दा बिराई एक थोकको अर्को थोक हुँदा दोष घटाउने । लालबहादुर र आठ-पहरिया भनेको त लाठपहरिया भन्न आएछ—त्यस्तै हो **हाड नभएको जिब्रो लटपटिन्छ** ।

**हाड र छाला हुनु**—=दुब्लाएर किंम्रिङ्ग पर्नु । तिनीहरू ता मौका पाउनासाथ फुत्की दौडी घर फर्की आउँदा **हाड र छाला** मात्र बाँकी रहेको दुब्लो शरीर लिई आई हिन्दुस्थानमा पाएको भुक्तमानको रात्ररी ज-



नाउ दिने हुन्छन्,·····।—श्री ३ चन्द्र (अमलेखभाषण) ।

**हाड़े ओखर**—=फोर्न कठिन थोरै गुदी भएको तर मीठो । मलाई त दाँतेभन्दा **हाड़े ओखर** मन पर्छ ।

**हात आउनु**—(१)=वशमा आउनु, भनेको मान्नु वा सल्लाहमा मिल्नु । तिमीले जति फकाए पनि त्यो **हात आउने** मान्छे होइन, बरु उसको भाइलाइ भनौं । (२)=(हिसाबमा) अघिल्लोमा थपिने अङ्क निस्कनु, हात लाग्नु । १२ र ८ बीसको शून्य राखेपछि २ **हात आउँछ** । (३)=(अंकसित) हात लमाइको (कपडा) किनिनु । एक मोहरको नैनसूत त तीन **हात आयो** ।

**हात उठ्नु**—(१)=[सलाम गर्न] मन लाग्नु । खै, कर्साब मुखैमा हेर्नु हुँदैन, वास्ता गर्नुहुँदैन—मेरो त [सलाम गर्न] **हातै उठ्तैन** । (२)=दिऊँ भन्ने मनमा लाग्नु । दिन खान भनेपछि मुनियाँको **हातै उठ्तैन** । (३)=दया नलागेर [कुट्न] मन उठ्नु । त्यस्ती रोगी बूढी स्वास्नीलाई कुट्न तँ निर्दयीको कसरी **हात उठ्यो** ? (४) साधारण अर्थ (=हात माथि जानु) । नाऊको मालिस गर्दा गर्दा बल्ल मेरो **हात यति उठ्ने** भयो ।

**हात कलम गर्नु**—=हात काट्नु (कीर्ते इत्यादि गरेमा उहिलेको सँजाको रूपमा) । स्याहास्नेस्ता खुर्कने काम नगर्, तेरो **हात कलम गरिदेलान्** ।

**हातको खेलौना**—(१)=जसो भन्यो उसो गराउन सकिने मान्छे । अब तिनीहरू उनका **हातका खेलौना** बनेका छन् ।—खड्गमान (दर्पचूर्ण) । (२) साधारण अ ।

**हातको मयल**—=हातमा केही बेर रहेर जाने तुच्छ कुरा (दाम पैसाको बारे प्रयोग हुने) । रुपियाँको के कुरा, **हातको मयल न हो** ?—रुद्रराज (चप्पा काजी) ।

**हातको लोहोटा**—यसो उसो काम लाउनालाई सजिलो मान्छे-लाई प्रयोग हुने । किन्नरी मेरी

हातको लोहोटा थिई, त्यो पनि अस्तिदेखि बिरामी भएर खाँचै भइरहेछ ।

**हातको सफाइ**—(१)=(चटकमा) अरूको आँखा छल्ने हातको छिटोपन । त्यो ताशको चटकमा जादूटुना केही छैन, खालि हातको सफाइ मात्र हो । (२)=आँखा छलेर गरेको चोरी वा ठगी । सेते काम त बेस गर्छ, तर अलि हातको सफाइपट्टि लागेको छ ।

**हात खाली हुनु**—(१)=फुर्सत हुनु । अहिले मेरो हात खाली छैन, पर्सि तिम्रो तस्वीर तयार पारिदिउँला । (२)=खर्च नपाएको हुनु । हजूरको ढोकामा आएर पनि हात खाली भयो, थोरबहुत निगाह भए हुने थियो । (३)=हतियार नहुनु । मेरो हात खाली छ, तरवार लिएर लड्न खोज्न तँलाइ लाज छैन ? (४)=साधारण अर्थ । हेर, मेरो दुइ हात खाली छ, गुज्जा कता गयो ?

**हात *खुट्टा* (गोडा) चल्नु**—(१)=हिंड्ने वा काम गर्ने सामर्थ्य हुनु । तीर्थ भनेको हात *खुट्टा* चल्दैमा गर्नुपर्छ । (२)=हात खुट्टाले केही न केही चलाइरहनु । फेरि खुट्टाले त्यो गलैंचा किन दलिरहेको, तिम्रो त कुरा गर्दा हातखुट्टा चलिरहन्छ । (३)=हात खुट्टाले जथाभावी कुट्नु । सानेलाई रिस उठ्यो भने कति चाँडो हात खुट्टा चल्छ भने, अरूले एक चोटि हान्दा उसले दश चोटि हानिसक्छ । (४) साधारण अर्थ । तिम्रो निद्रामा हात खुट्टा खूब चल्दो रहेछ ।

**हात *खुट्टा* (गोडा) छोड्नु**—=हरेस खानु, सक्तिनँ भनेर पंछिनु । अहिले हारको खार जब त्यो नाकमा घुस्यो हात खुट्टाहरू छोड़ी गालीको कविता अनि घोक्न लाग्नु भयो ?—बालकृष्ण (मुकुन्द इन्दिरा) । कैय्यन पल्ट दिक्क भएर हताश हुन्थे—हात खट्टा छाडिदिन्थे—मरी २ काम गर्थ्यो ; जश छैन ।—रुद्रराज (रूपमती) । न परेका कष्ट-बिच जनता थोर दुःखमै । छाड़ीदिन्छन् हात-खुट्टा डरले आँतिईकनै ॥—बैजनाथ (उपदेश-शहस्री) ।

**हात खुट्टा (गोडा) बस्नु**—=हिंड्न वा काम गर्न नसक्नु । आफ्नो हात खुट्टा बसिसक्यो, अर्काको खटन खानुपर्छ—के गर्नु ।

**हात *खुट्टा* (गोडा)मा लाग्नु**—=निन्यानी वा गलानी हुनु । हिजोको निलाहार, आज भात खानेसाथ हात खुट्टामा लागेर चल्नै मन लागेन ।

**हात *खुट्टा* (गोडा) लाग्नु**—=हिंड्न काम गर्न सक्ने हुनु (बिरामी वा केटाकेटीको बारे) । मेरो हात खुट्टा लाग्न छाडि हाल्यो ; केही कुराको होशै पाउन्न ;....।—रुद्रराज (रूपमती) ।

**हात *खुट्टा* (गोडा) सेलाउनु**—=हरेस खानु, निराश हुनु । सरकार हात खुट्टा नसेलाइबक्सियोस्, सरकारमा उर्वशी पक्का साहै गरी लीन भएकी छन् ।—श्री केसर (विक्रमोर्वशी) ।



**हात चटाउनु, चाट्नु**—=कायममा ल्याउनु, नीच भावको आशामुखी हुनु । हेरिरहलास्, अलि दिनमा म त्यसलाई हात चटाई छोड्छु ।....जब भोजन सिद्धिन्छ यहाँ ध्रुव कहाँ उडी, जानेछस् गुलियो हात चाट्नलाई सुनीतिको ।—बालकृष्ण (ध्रुव) । (२) साधारण अर्थ । कुकुरलाई भात खाएको हात चटाए रत्तिन्छ ।

**हात चिलाउनु**—(१)=हतकेला-चिलाउनु (हेर) । (२)=कुट्न मन लाग्नु । हेर है । मेरो हात चिलाइरहेछ, कुनबाहिंले थप्पड पाउने हो ।

**हात छोड्नु**—(१)=कुट्नु (प्रायः झगडामा) । को देखेर, हात छोडेको ए डङ्किनी ! कसको बाबूको एक पैसा खाएको छ र पिटाइखानलाई ।—रुद्रराज (रूपमती) । (२)=(बाइस्कल चढ्दा) ह्याण्डल नसमात्नु । म त हात छोडेर बाइस्कल चढ्न सक्छु, खालि तौल मिलाउन पर्दो रहेछ । (३)=(अङ्कसिंत) हात लमाइको

(कपडा) सित्तैं दिनु । मेरो दौरा सुरुवाल दश हातले पुग्छ, तिमीलाई एक हात छोडिदिएं । (४) साधारण अर्थ । मेरो हात छोडिदिनुहोस्, मलाई घर जान बेर भयो ।

**हात जोर्नु (ड्नु)**—( १ )= नम्रतापूर्वक निवेदन गर्नु ।.... हात जोडेर अनी त्यो कपिला सँग छोरा मागी लिई आऊ दयासाथ दिने भए, या यो प्राण उनीलाई बुझाएं न दिने भए । —बालकृष्ण (सुटुको व्यथा) । लौन बा, म हात जोड्छु, यति दही लिएर कान्छी आमा-कहाँ जाइदेऊ । (२) = प्रणाममा वा विन्ति गर्दा) दुइ हतकेला जोड्नु । पी, पी, पी, पी, मजाले हृदय तर बनोस् एक थोपा नछोडौं । टाढा टाढा रहेका अब बलसित यी हात व्यर्थै नजोडौं ॥—बालकृष्ण (प्रह्लाद) । म जान्छु ! हात यो जोड्छु, क्षमा पाऊँ म, बिन्ति छ ।—ऐजन (अन्धवेग) । कैकेयी र भरत् मिलेर रघुनाथ्ज्यूका चरण्मा परी । हात् जोरी कन राज्य अर्पण गऱ्या बिन्ती बहूतै गरी ॥— भानुभक्त (रामायण) । साम्ने द्रोणजिलाइ अर्जुनजिले देखी लियाथ्या जसै । हात् जोरी गुरु हुन् भनेर इ कुरा बिन्ती चढाया तसै ॥—होमनाथ (महाभारत विराटपर्व) । सम्वाद सत्यकलिको दुइ चार बार । हेरी सहर्ष उसको लिनुहोस सार॥ भन्दै बडो प्रणय-पूर्वक जोडि हात । लम्रन्छ सज्जनहरूसँग लेखनाथ ॥—लेखनाथ ( सत्य-कलिसम्वाद) ।....लाखौं फेरा हात जोरी सकें तै पनी पछि नलागी सुख पाउँदिन हा ! —ऐजन ( भर्तृहरिनिर्वेद ) । साहसी वीर हरूको सहायताको निम्ति दिव्यशक्ति हात जोडेर उभिइरहेको हुन्छ ।—जितेन्द्र (आधुनिक आविष्कार) ।

**हात झिक्नु**—(१) = (कामबाट) हट्नु, गर्न छाड्नु । यिन्नै हवाई जहाजको गोला बर्साइबाट जेप्लिनहरूलाई हानि भयो र जर्मनीलाई आकाशयुद्धबाट हात झिक्नु पऱ्यो ।—जितेन्द्र (आ-



धुनिक आविष्कार ) । (२) साधारण अर्थ । खै हात झिक, म उता जान्छु ।

**हात देखाउनु**—( १ ) = (रेखा हेरी शुभाशुभ बताउनालाई ) हतकेला देखाउनु । इन्दिरा यता आऊ, लौ हात देखाऊ ।— बालकृष्ण (मुकुन्द इन्दिरा) । (२) ब्राह्मणले क्षत्रियादि बडे आदमीहरूलाई स्वस्ति गर्नु । आजकल त रामुले जर्साहेबलाई हात देखाउन पनि छाडेछ, कसरी बढेको हेरन । (३) = साधारण अर्थ । खै, हात देखा, के बिम्न फोहोर !

**हात परेको *चिडिया*(को चरा) उम्काउनु, गुमाउनु**— = आफ्नो हुन लागेको वा भइसकेको लाभदायक वस्तु वा व्यक्ति वा सुन्दर व्यक्ति नपाउने हुनु । धत् ! तिमीले त हात परेको चिडिया उम्काएछौ, त्यो कन्या त साह्रै अवल थिई— यसो त रूपमा, उसो त धनमा । हातको चरालाई उम्काऊँ, आकाशको चरालाई सान गरूँ ? —बालकृष्ण (ध्रुव) ।

**हात पर्नु**—( १ ) = हातमा पर्नु (यहाँ र तल '२' अर्थमा विभक्ति लोप भएकाले 'त' को उच्चारण हलन्त हुँदैन) । माणवक बाजेको बेहोशियारीले हाम्रो हात-परेको हुनुपर्छ ।—श्री केसर (विक्रमोर्वशी) । (२) = आफ्नो हुनु, वश वा अधिकारमा पर्नु । तालीम पाइसकेको छोरो हात-पर्ने बित्तिकै स्वर्ग तिर जान-लाग्नाले काम कुरा सिध्याएर छुट्टिन पछि लागेकी भन्ने म अभागिनीलाई महाराजले ठानिबक्सिनेछ ।—श्री केसर (विक्रमोर्वशी) । यस पछी रायगढ़ पनी मुसलमानहरूका हात पऱ्यो ।—वासुदेव (भारतवर्षको इतिहास) । (३) = कुनै काम गर्नालाई हात चलाउन सजिलो हुनु, चल्ने हातलाई सुगम पर्ने गरी रहनु, (यहाँ र तलका सबै अर्थमा विभक्ति लोप नहुनाले 'त' को उच्चारण हलन्त हुन्छ) । नानीलाई भात खुवाउन मेरो हात परेन, यता बस । (४) = चलन गर्नु वा चलाउन पाउनु । यो मसलामा

नुरीको हात पर्‍यो भने दुइ दिन पनि हुँदैन, त्यसले फारो गर्न सक्तिन । (५)=छुनु, समात्नु । यो टेबिलमा भर्खर पालिश लाएको छ, कसैको हात पर्‍यो कि डाम बसिहाल्छ । तिम्रो गर्धनमा त्यो पहलमानको हात पर्‍यो कि तिमी जमीन-ध्वज हुन्छौ, याद गर । माथिका सबै अर्थमा 'हातै परेन, हुन्छ, त्यसो हुँदा फरक उच्चारणको कुरै उठ्तैन ।

**हात पसार्नु**—(१)=माग्नु । एउटा बौलाहा माग्ने पछिल्तिरबाट आएर पंफानेर हात पसार्छ ।—बालकृष्ण (अन्धवेग) । दश जनासित हात पसारेपछि तिम्रो के भाउ रहन्छ र ? (२) साधारण अर्थ । हात पसारे त त्यो साबुन भेटिहाल्छौ नि, तिमी सारै नवाफी छौ ब्यारे !

**हात पार्नु**—(१) 'हात पर्नु' को प्रेरणार्थक भएर प्रयोग हुन्छ । आफ्नो अंश हात पारे पछि मधुवनले लगानी पातमा गाँउ भरी रुपैयाँ फिजाएर पैसा निक्कै थुपारिसकेका थिए ।—रुद्रराज (रूपमती) । (२)=शुरू गर्नु (यसमा 'त' को उच्चारण हलन्त हुन्छ; यो अर्थको यहाँ उस्तो चल्ती छैन) । काममा हात पारे पछि सिद्धिन कति बेर लाग्छ र ।

**हात फर्काउनु**—(१)=आफूलाई हिर्काएको बदलामा हिर्काउनु (प्रायः आफूभन्दा ठूलो मान्छेलाई) । एक दुइ लपेटा नानीले सहनुपर्छ, दाज्यूलाई हात फर्काउन हुँदैन । (२) साधारण अर्थ । खोइ, हात फर्काऊ, तिम्रो औंलामा के कालो लागेछ ।

**हात फुक्का गर्नु, फुकाउनु**—(१)=दानी हुनु (अनुमोदन, निषेध दुवैमा प्रयोग हुन्छ) । अब पनी हजुरले पहिलेका जस्तो हात फुक्का गर्न हुन्छ ?—रुद्रराज (रूपमती) । (२) (मर्दीखेरिको उक्तिमा प्रयोग हुँदा) हात फुकाउनु=मूठी खुकुलो गर्नु, (उसैले लाक्षणिक अर्थ) सबै त्याग्नु । शम्भु बुझेस् सब छोडि पछाडी, जानु छ हात फुकाई ॥—शम्भुप्रसाद (शम्भु



भजनमाला) । (३) साधारण अर्थ ('फुकाउनु' को हकमा मात्र) ।

**हात फेर्नु**—(१)=साबिकमा गर्नेले होइन अर्कोले पकाउनु (तर्कारी, रोटी, आदि) वा पार्नु (अचार) । बज्यैले जति म कहिले पकाउन जान्थें, हात फेरेको हुनाले तपाईंलाई तर्कारी मीठो लागेको होला । (२)=(रिङ टेनिस, क्यारोम, इत्यादि खेलमा) हात (दायाँ बायाँ) वा साथी बदलेर हान्नु । बायाँ हातले रिङ समातेपछि किन दाहिने हातले हान्यौ ?—हात फेर्न त पाइँदैन । वाः हात फेरी फेरी हान्न पाइन्छ ? बड आफ्नो हात बिग्रयो भनेर दुर्गादासलाई हान् रे ! (३)=(ताशको खेलमा) बाँड्नालाई साथी बदल्नु । तिमी नै बाँडन हात फेर्‍यो भने झन् कोट लाग्छ भन्छन् । (४)=अर्काको आँखा छल्ने गरी धोखाबाजी चलाउनु । आजकल सेतेको मुद्दामा फटाहाहरू खूब हात फेर्न लागिरहेछन् ।

**हात फैलाउनु**—=हात पसार्नु (अंकमाल इत्यादि गर्न आऊ भन्ने जताउँदा बाहेक 'हात पसार्नु' बढ्ता प्रचलित छ) । ····पात प्रेम भनी दिन्छ, हात फैलाउँदै बढ़ी वृक्षलाई अँगालेर लहरा प्रेम जनछ,····। —बालकृष्ण (अन्धवेग) ।

**हात बढाउनु**—(१)=(काममा) लाग्नु, हात हाल्नु । फेरि एक बाजि ज्वहारातको व्यापारमा हात बढाए ।—जितेन्द्र (आधुनिक आविष्कार) । (२)=पसारेको हात बढ्ता तन्काउनु । अलि हात बढाएर थापन, चुहियो भने लुगामा पर्छ । (३)=(अंकसित) हात लमाइको, (कपडा) थपिदिनु । मन्दाकिनीको लुगा सानो भएर छुट्टि, बरु एक दुइ हात बढाइदिउँला ठूलठूला सिएर ल्याएस् ।

**हात बस्नु, जम्नु**—(१)=लिपी बस्नु, अक्षर राम्रो हुनु । अझ तिम्रो हात बसिसकेको छैन, यहाँसम्म सानो अक्षर छ, यहाँदेखि ठूलो हुँदै गएको छ ।

(२) = ताकेको ठाउँमा लगाउने अभ्यास हुनु (खेलमा, बन्दूक हान्दा, इत्यादि)। तिम्रो हात त *बसि*(जमि) सकेछ, एक ताल पनि बिरिंदैन।

**हात बाँध्नु**—(१) = काम नगर्नु निरुद्यम रहनु।....एकाबर बसे पछि **हात बाँधेर** बस्न पनी त अर्काले देख्ता खेरी अलि नराम्रो नै हुने भयो।—रुद्रराज (रूपमती)। जातिप्रेम न गरी कन हुन्न। **हात बाँधि** यसरी अब हुन्न॥—धरणीधर (नैवेद्य)। ....मोटो र महङ्गो भएता पनि, काम केही नपाई बेकारी भई **हात बाँधी** बसिरहनुपर्ने सबै दुनियाले काम पाएकोले र चल्दा-चल्दा अरू देशका कपडाहरूलाई समेत ठक्कर दिने भयो,....।—भवानी (यौवनको आँधी)। (२) = पलेँटी मार्दा खुट्टा रहने किसिमले दुइ पाखुरा जोल्या-उनु। मैले गालि गर्दा शंकरे **हात बाँधेर** घोसे मुन्टो लाई उभिइरह्यो, केही बोलेन। (३) = सजाको रूपमा हातमा बाँध्नु। ल, यो बदमाशको **हात बाँध**; ऊ त्यहाँ डोरी छ।

**हातबाट** *माखो*(झिङो) **मर्नु**—सबभन्दा सजिलो कामको रूपमा 'सिन्को भाँच्नु' जस्तै प्रयोग हुन्छ। जसका **हातबाट माखो मर्दैन** उसैको त्यत्रो ठस्सा ! —रुद्रराज (रूपमती)।

**हातबाट हुनु**— = द्वारा गरिनु। चुँइया बूढोलेपनि संसार छाडेछ हेर, कुकुर मरे जस्तो मर्‍यो, धर्म कर्म भनेको त्यसका **हातबाट भएन**।—रुद्रराज (रूपमती)।

**हात भाँचिनु**—(१) = खाँचै हुनु, हर्जा हुनु। आनन्द दाइ भएन भने त हाम्रो **हातै भाँचिन्छ**। (२) काम नगर्दा गालि गर्ने बोली। त्यति दउराको भारी उचालेर त्यहाँ राख्न तेरो **हात भाँचिएन** ? (३) साधारण अर्थ। साइकलबाट लडेर बुढाथोकीको **हातै भाँचिएछ**।

**हात मल्नु**—(१) = नीचता संग बिन्तिभाउ गर्नु। दश जनासँग **हात मलन** गएको होइनस् के कति खर्च जम्मा भयो त ? (२) = पछुताउनु। बखत चुके पछि



हुन्न कसै पनि **हात मली** मले रोई ॥—शम्भुप्रसाद (शम्भु भजनमाला)। दिले, लीले, श्यामेदाइ जति कुरा सुन्दै जान्थे, उति उनीहरू छातीमा मुड्की हान्थे, दाह्रा किट्दथे, **हात मल्दथे**। (३) साधारण अर्थ ( = हात-माड्नु) मा उस्तो प्रयोग हुँदैन।

**हातमा आउनु**—(१) = हात आउनु (१ हेर), हात पर्नु (२ हेर)। अब वत्सदेश पनि हजूरकै **हातमा आइसक्यो** भन्ने संझिबक्सियोस्।—श्री अर्जुन (स्वप्नवासवदत्ता)।

**हातमा जन्मनु**—(१) = सामुन्नेमा जन्म हुनु। हाम्रो **हातमा जन्मेको** मान्छे अहिले हामीलाई उल्लीबिल्ली खेलाउने भयो। (२) साधारण अर्थ ( = जन्मिँदा साँच्चिकै थापेका हातमा खस्नु)।

**हात माथि, तल पर्नु**—(१) = अर्का आफ्नो पंजामा परेको हुनु, आफू अर्काको पंजामा-पर्नु; दाउ वा पेच माथि पर्नु, तल पर्नु। अहिले उसको **हात माथि परेको** छ, हामीले बोलेर साध्य छैन। (२) = दिनु लिनु गर्नु। साहूलाई दाम दिइ-सकिछौ—तिम्रो **हात तल** उसको **हात माथि पर्‍यो**, अब या माल फर्कनु मुश्किल छ। (२) साधारण अर्थ। खै, **मेरो हात तल परेर** च्यापिन आँख्यो, सँन्दूस अलिकति उठाऊ।

**हातमा दही जमाएको हुनु**— = कुट्न नसक्ने गरी हात बाँधिएको हुनु। मेरो **हातमा दही जमाएको** छ र तैंले पिटुन्ज्याल म चुप लागेर बस्छु ?

**हातमा पर्नु**—(१) = वश वा अधिकारमा पर्नु। बा मधेस जानुभएपछि तँ मेरो **हातमा परिहाल्छस्**, अनि थाहा पाउलास्। (२) = तालीम संगत, वा कदरमा पर्नु।....मनोविज्ञान बुझेका बुजुर्गहरूका **हातमा पर्‍यो** भने मात्र तर लाग्यो; हइन भने त्यस्ता मानिस सप्रन साह्रैनै कठिन हुन्छ।—रुद्रराज (रूपमती)। (३) = हस्तगत

हुनु । भर्खर त चिठी हातमा पर्‍यो, अब १।२ दिनमा बाटो लाग्छु ।

**हातमा मासी नभएको**—समातेको वा बोकेको मालताल फुस्काउँदा वा खसाल्दा दृष्टान्त दिने । कस्तो हातमा मासी नभएको ! त्यति राम्रो भाँडा खसालेर फुटाइदिई ।

**हातमा हुनु**—(१)=चंजापंजा वा खटनमा हुनु । पृथ्वीलाई प्रशस्त अन्नपातले परिपूर्ण गराउनु अथवा त्यसै बाँझो राखिदिनु तिनको आफ्नो हातमा थियो ।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह) । (२) साधारण अर्थ । ठूलो चक्की मेरो हातमा थिएन उसैले ट्रुम नलाएको ।

**हात मिलाउनु**—(१)=अंग्रेजी सलामको रूपमा हात समातेर हल्लाउनु । अंग्रेजहरूको हात मिलाउने चलन हिन्दू ठिटाहरूले पनि टिपेका छन् । (२) =कुरा मिलेको, घत लागेको, वा खुशी जताउँदा त्यसो गर्नु । सात हात त जित्यौं बा, ले हात मिलाऔं ! (३) झगडा परेको मान्छेलाई मेल गराउँदा दुइ जनाको हात जोल्टयाउनु । त्यति सानो कुरामा नबोलेर हुन्छ ! लौ यी दुइ जनाको हात मिलाइदेऔ ।

**हात मुख जोर्नु**—=प्राण धान्न-सम्मलाई खानु । उहाँ आफूलाई हातमुख जोर्न कत्रो मुश्किल छ, यता यो कुरो भएन उ कुरो ल्याइदिएन भन्ने घुर्की नसुनेको दिनै छैन ।—रुद्रराज (प्रायश्चित्त) ।

**हात रोक्नु**—(१)=खर्च कस्नु । हात रोक्न सकेनौ, अहिले रसदलाई पनि नपुग्ने देखियो । (२)=कुट्ने इच्छा दमन गर्नु । अस्ति त्योदेखि असाध्य रिस उठेर कुट्न लागिसकेको थिएँ, एक चोटिलाई किन भनेर हात रोकें र पो ।

**हात लस्काउनु**—(१)—लामो हात गर्नु (हेर) । त्यसको हात लस्काउने बानी छ, उ आउँदा होश गर । (२)=(हिंड्दा) हात तल छोडेर आलोपालोसंग अगाडि पछाडि



झुलाउनु । लामिछाने खूब हात लस्काएर हिंड्छन् । (३) साधारण अर्थ । हात लस्काएदेखि भेटिने ठाउँमा आलूबखडा फलेको छ, यिनीहरूले कहिले बाँकी राख्थे ।

**हात लाग्नु, लाउनु**—(१)= लाभ हुनु, गर्नु । मलाइ बिगारेर कति हात लायौ ? (२)= आफ्नो हुनु तुल्याउनु । लिलाम्मा लिनेले भर्सख किफायतैमा हातलाउन खोज्ने भई···तो घरवालाहरू फेरी विना वासस्थानका हुन जाने छाँट देखिन आयो ।—श्री ३ जुद्ध (भूकम्पभाषण) । लौ ध्याउन्ना गरेको कुरा हात लाग्नालेय स्तरी जम्मै कुरा सुल्टाएर खन्याउँदो रहेछ । —श्री केसर (विक्रमोर्वशी) । उहाँको यो मधुर वचन ता, सयकड़ौं राज्य हात लागेको भन्दा पनि बढता कदर गर्दछु । —श्री अर्जुन (स्वप्नवासवदत्ता) । बाबू-बराज्यूका द्रव्य हातलगाएर मत्त भै । अभिमानलिई हिंड्ने जन नाशिन्छ झट्पटै ॥—बैजनाथ (उपदेशसहस्री) । यो सुनको चरा उम्किहाल्यो त ? हात नलाग्ने नै भयो त ?—रुद्रराज (चप्पाकाजी) । (३)=(हिसाबमा) हात आउनु (यो अर्थमा 'लाउनु' कहिल्यै प्रयोग हुँदैन) । पचीसको पाँच हात लाग्यो दुइ । (४) साधारण अर्थ । तिम्रो लुगामा चिल्लो हात लाग्ला होश गर ।

**हात लामो गर्नु, हुनु**—=लामो हात गर्नु, हुनु (भन्दा '१' अर्थमा कम '२' अर्थमा बढ्ता प्रचलित छ) । त्यो टोपी उस्तो टाढा छैन, अलि हात लामो गरे त पुगिहाल्छौ नि ।

**हात[मा] लिनु**—(१)=रिझाई, खुशी पारी आफ्नो हुँदो गर्ने वा भनेको मान्ने पार्नु । दोस्तभाइहरूलाई हात न लिई काम न हुने ।—रुद्रराज (चप्पाकाजी) । हुन त पहिले बलबनलाई कमारे काम गर्नुपर्‍यो, परन्तु उ बिछ्नै बाठो थियो—मान्छे हात लिन जान्दथ्यो, ····।—ऐजन (भारतवर्षको संक्षिप्त इतिहास, भाग २) ।

(२) 'हातमा' हुंदा मात्र साधारण अर्थमा प्रयोग हुन्छ। गर्मी छ, टोपी हातमा लिएर हिंडौं।

**हातले पुगोस् न पातले पुगोस्**—हातहातमा दिऊँ भने पनि, पातपातमा दिऊँ भने पनि साध्य नहुने (माल थौरै बाँड्नुपर्ने मान्छे धेरै हुँदा प्रयोग हुने)। यति माल छ, मान्छे यतिका छन्, कसरी बाँड्ने !—हातले पुगोस् न पातले पुगोस्।

**हात सप्रनु, बिग्रनु**—(१)=हात प्रयोग हुने खेल, काम, आदिमा वा तकाइमा उत्तम वा भने जस्तो परिणाम निक्लनु, खराब परिणाम निक्लनु। आजकल त तिम्रो हात खूब सप्रेछ, गाह्रो गाह्रो बल पनि मजैसंग फर्कन्छ। आजकल त बाहुनी नानीको हात बिग्रेछ, तर्कारी मीठो हुँदैन। (२) साधारण अर्थ। शिवदासको भाँचिएको हात त बिग्रेछ, डाक्टरलाई काम्रो बाँध्न ला भनेको मानेन।

**हात सफाइ गर्नु** (यो वाक्यांशको उस्तो चल्ती छैन।)—(१)=आँखा छलेर ठग्नु, चोर्नु।····बाबु, बाज्ये, काका, मामा, भनेर आएका हात सफाइ गर्ने धेरै मानिसहरूलाई हामीले फेला पारिसकेका छौं।—भवानी (यौवनको आँधी)। (२)=आँखाले पक्रन नसक्नेसम्मको छिटो हात चलाई चटक गर्नु। उनले ताशमा हात सफाइ गरेको हेरें, खूब रमाइलो लाग्यो।

**हात हल्लाउनु**—(१)=सलाम गर्नु। बिहान बेलुका मालिककहाँ गएर हात हल्लाउन पनि कति गाह्रो भएको ए ! (२)=भाउ लाउनु। हाम्रो बाको हात हल्लाई हल्लाई कुरा गर्ने बानी छ। (३)=हात झुलाउनु। उहिले कवायदमा हात हल्लाएर हिंड्यो भने सजा पाइन्थ्यो। (४)=हातको इशाराले आइज, जा, नाइँ, इत्यादि (प्रकरणबमोजिम) भन्नु। मैले हिजोको चिठी लिएर आएकी थिएँ, तपाईंले हात हल्लाउनुभएको हुनाले फर्काएर लगें।



**हातहातमा हुर्कनु**—=बाफबाफमा पालन-पोषण भएर ठूलो हुनु। हाम्रो ठूलो छोरो रहरैमा जन्मेको हुनाले हातहातैमा हुर्क्यो, हामीलाई केही दुःखै भएन।

**हातहातै बिक्नु**—=खूब चाँडो बिक्री हुनु। यो उपन्यास एक हजार कापी छापेको थिएँ हातहातै बिक्यो।

**हात हाल्नु**—(१)=कुट्नु, हात छोड्नु। आज सम्म बाबू आमाले त कहिले हात हाल्न शकेको छैन, यो थोत्रो जुत्ताको यत्रो घमण्ड ?—रुद्रराज (रूपमती)। (२)=(काम), गर्न थाल्नु, गरिहेर्नु। नोकरी-चाकरी, व्यापार आदि धेरै रकमको काममा पनि हाथ हालिसकें, मैले नगरेको उद्योग पनि कुनै होओइन ;····।—भवानी (यौवनको आँधी)। (३)=सतीत्व हरण गर्नु। कुरा पैले नगरी हात हाल्दिन, नडराऊ।—बालकृष्ण (मुकुन्द इन्दिरा)। त्यो खर्च भयो भन्दैमा जाँच बूझ नगरी उसै कहां जेमा पायो उसैमा हात हाल्न हुन्छ र ?—रुद्रराज (रूपमती)। (४)=हस्तक्षेप गर्नु। उनको मृत्यु पछि उनका परिवारहरूले ज्यादा लाभको आशाले छापाखानाको प्रबन्धमा अनुचित सङ्ग हात हाले।—जितेन्द्र (आधुनिक आविष्कार)। (५)=हात जोड्नु। यो पुतलीको हात हालेपछि त राम्रै देखिएला। (६) साधारण अर्थ। यसको सौर छैन, खाने मालमा काच्च हात हाल्छ।

**हात हेर्नु, देखाउनु**— (१)=हतकेलाको रेखा हेरी भविष्य र भूतकालको कुरा भन्नु, भन्न लाउनु। ए ! साँच्चै उही महात्माले अस्ति यहाँको हात हेरेर धामी पनि ल्याए छौ भन्नु भएको यही प्यान्टे हो कि ?—रुद्रराज (प्रायश्चित्त)। (२) साधारण अर्थ। मेरो हात किन हेर्छौ ?—तिम्रो जस्तो राम्रो औंठी मेरा छैन।

**हात्ती बाँध्ने कीलो, डोरी**—(अत्युक्ति गर्दा) ज्यादै मोटो

सिन्का वा डोरीलाई गिज्याउँदा प्रयोग हुने । क्या हो, यो हात्ती बाँध्ने कीलो हो कि सिन्को हो—यति सिन्का चिन्ने ढङ्ग पनि छैन ? (साधारण अर्थमा प्रयोग हुने छँदैछ) ।

**हात्ती बाँध्ने खमारीमा बोको बाँध्नु**—शक्तिशाली व्यक्ति वा वस्तु रहने ठाउँमा क्षुद्र व्यक्ति वा वस्तु राख्ता प्रयोग हुने ।

**हान्ने *राँगो* (गोरू) जस्तो**—रिसले चूर भई आइलाग्न खोज्ने मान्छेलाई दृष्टान्त दिने बोली । हान्ने राँगो जस्तो न हो न हेर्पछि फर्की । राम्रो बाटो खेदि अघि हिड् न तँ न झर्की ॥—धरणीधर (नैवेद्य) । त्यही स्वरूप होइन के ? ई—हान्ने गोरु जस्तो छिः !—बालकृष्ण (अन्धवेग) ।

**हामफाल्नु**—=फाल हाल्नु (को अन्यरूप) ।....ती दुइजनाको बिछोड़को पीर खप्न नसकी महाराज पनि त्यहीं आगामा हामफाल्न आँटिबक्सेकोथियो। —श्री अर्जुन (स्वप्नवासवदत्ता)। क्षमा गर, दया गर, हाम फालेर मर्नेछु नत्र यो झ्यालबाट म ।—बालकृष्ण (मुकुन्द इन्दिरा) ।....हत्तपत्त त्रिशूल गण्डकीका किनारमा झरी पानीमा हाम फाली काल्ल जैसीले आफ्नू ज्यान जोगाये । —सूर्य्यविक्रम (पृथ्वीनारायण शाह) ।

**हाम र झाम गर्नु**—=ज्यादै उत्सुकता देखाउनु, हस्याङफस्याङ गर्नु, (प्रायः 'खानु' सित प्रयोग हुन्छ) । आँपको नाउँ सुन्नासाथ केटाकेटीहरू हाम र झाम गर्दै आइपुगे ।

**हार खानु, मान्नु**—(१)=आजीत वा हैरान हुनु । तेरा चाल चलन् भयो किन यसो हार्मान्छु मन्मा मता ॥—मोतीराम (प्रह्लाद भक्ति कथा) । सब हार खाएर फर्के ।—बोधविक्रम (दन्त्यकथा) । अनि हार मानी ज्ञानकुमारले बञ्चरो लिएर एकाग्र चित्त गरी धमाधम रुखमा प्रहार गर्न लाग्यो ।—भवानी (यौवनको आँधी) । (२)=हारेको हुँ भन्ने सकार्नु (यस अर्थमा 'खानु' प्रयोग हुँदैन)। जगत् रचि पाल्ने विष्णु, आफै बलि थीए । बृन्दा संग हार मानि, पत्थर रूप लीए॥ —शम्भुप्रसाद (शम्भु भजनमाला) । क्यारममा त मैले आफ्नो हार मानिहालें नि, ताशमा त हारेकै छैन कहिले मान्थें ।



**हाराबारा खेलाउनु**—=हैरान हैरान वा थकित पार्नु (प्रायः यताउता दगुराएर; यो वाक्यांशको मूल अर्थ करीब हराइसक्यो ; मूल अर्थ—केटाकेटीका दुवै हात समातेर फनफन घुमाउनु) । त्यस जमानामा भारतवर्ष लाई मंगोलहरूले साह्रै दुःख दिएका थिए—हाराबारा खेलाएका थिए ।—रुद्रराज (भारतवर्षको संक्षिप्त इतिहास, भाग २) । साह्रानीको लुगा फेर्न खोजेको, चलेर मलाई हाराबारा खेलाइसक्यो ।

**हारी जिती**—=सबै कुरा विचार गर्दा आखिरमा (दाँज्दा प्रयोग हुने) । हारी जिती मलाई त आफ्नै फरिया राम्रो लाग्यो ।

**हारेको कर्म**—=दुःख पाउनु भन्ने लेखेको कर्म । स्वास्नीमान्छेको जन्म कस्तो हारेको कर्म नि !!!—भीमनिधि (सहनशीला सुशीला) । तेसै हुनाले बूढा पाकाहरु छोरीको कर्मलाई हारेको कर्म भन्दछन् ।—गुरुप्रसाद (कथा कुसुम) ।

**हारे( हरि )मे सादा**—चंगा उडाउँदा हार्नेलाई गिज्याउने बोली ।

**हार्न नहुने**—(१)=नाइँनास्ति गर्न नहुने । उस्तै हार्न नहुने मान्छेले मागेको हुनाले मात्र दिएं, नत्र मलाई त्यो कलम साह्रै मन परेको थियो । (२) साधारण अर्थ । जसरी भए पनि यस पालाको जाँचमा मैले त्योसंग हार्न नहुने भएको छ ।

***हालाबाला* (हावाकावा) खेलाउनु**—=हैरानहैरान वा थकित पार्नु (प्रायः यताउता दगुराएर) ।....टाइम बेटाइममा भनेको कुरो भएन भने चिचाएर हाला-बाला खेलाउने, नाना किसिमका उट्ठयाइँ गरेर कहिले हँसाउने, कहिले रुवाउने, बालक

नामको अद्भुत व्यक्ति नभएर केही शोभा भएको थिएन ।—रुद्रराज (चप्पाकाजी) ।

**हावा कुरा**—=उडन्ता कुरा । तिमी हावा कुरा गर्छौ, के पत्त्याउनु के नपत्त्याउनु, खै ।

**हावाको भरमा कुरा गर्नु, दगुर्नु, उड्नु**—=नबुझीकन जसले जे भन्यो त्यही कुरा पत्त्याई भन्नु, काम गर्नु, हाहामा दगुर्नु । तँ त हावाको भरमा कुरा गर्छस्, केटा-केटीले ठट्टा गरेको पनि नबुझ्ने ।

**हावा खानु**–(१)=विफल हुनु । यस पालीको जाँचमा बखत बहादुरले हावा खाएछ । (२)=मर्नु, लड्नु, (हेलाको बोली) । कृष्णबहादुरको बाबुलाई घाट लगेको थियो, हिजो हावा खाएछ । ( ३ )=थुनिनु, कैद हुनु, (प्रायः झ्यालखानमा) । तिम्रो भद्राले त जेलको हावा खाइरहेछ । ( ४ )=ताजा हावाको निमित्त डुल्नु वा टहलिनु, शीतल ताप्नु ।····अब यो खहरेको डिलमा भेलको हवा खान्छु । —श्री केसर (विक्रमोर्वशी) । म पनी हावा खाने निहूँले गयेर ती सतीको पतिप्रेम हेरेर आउँछु ।—लेखनाथ (भर्तृहरि-निर्वेद) । फेरि तपाईंहरूले देख्नु भएकै छ—मोटर साइकलमा बगलमा श्रीमतीलाई राखेर हावा खान निस्कँदा कत्रो आनन्द आउँछ !—रुद्रराज (प्रायश्चित्त) । हावा खान सवारिभो प्रभुजिको, साढे छ बज्दा महाँ ।—डिल्ली शम्शेर (यूरोपयात्रा) । हावा खान झ्यालमा बसेकी हुन भनौं भने बसेकी एतिका बेर भै शक्यो····, त्योपनी कसरी भन्ने ?—शिवप्रताप (दुर्गेशनन्दिनी) ।

**हावा खुस्कनु, फुस्कनु**—(१) =सिल्ली हुनु, मगज बिग्रनु । रेग्मीको हावा खुस्केको थियो, अब त केही फाइदा भएको छ । (२) साधारण अर्थ । भकुण्डोको हावा फुस्केछ, हेर कति गिलो !

**हावा चल्नु**—(१)=नयाँ रीत-रिवाज आउनु, परिवर्तन हुनु ।



यसरी कपिला लेली मेरो सर्वस्व, खालि म परुँला एकली भन्ने मन भित्र कहाँ थियो अहिले त चल्यो आकैं हावा, लाटी रहेछु म,····।—बालकृष्ण (मुटुको व्यथा) । आजकल स्वास्नीमान्छे-हरूको अलखले कान छोप्ने हावा चलिरहेछ । (२)= वायु बहनु । दक्खिनी हावालाई कहिलेकहीं वर्षाको दूत पनि भन्दछन् किन भने यो हावा चल्ने बित्तिकै अक्सर पानी पर्दछ ।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासग्रह) ।

**हावा फर्कनु**—=बतास चल्न थाल्नु (प्रायः तेल घस्ता, नुहाउँदा प्रयोग हुने) । यो नानी तेल घसूँ भन्दा मान्दैन, हावा फर्कने वेला भइसक्यो ।

**हावा बिग्रनु**—=बौलाहा हुनु, मगज बिग्रनु । त्यसै हावा बिग्रेर गयो, कुन हबिगत पाइरहेछन् ।—रुद्रराज(प्रायश्चित्त) । हावा बिग्रेको हो भने पनि मसँग औषधि छ ।—प्रेमराज (ससुराली) ।

**हावा भएर**—(१)=खूब वेगसँग । हावा भएर अड्डामा जा र चिट्ठा पर्‍यो भनेर छोरालाई सुनाइदे । (२) साधारण अर्थ । यस्तो तातो हावा भएर के गर्नु र शीतल छैन ।

**हावामा कुरा गरे जस्तो**—आफूले कुरा गरेको अरूले नसुन्दा दृष्टान्त दिने । मैले अर्ती दिएको कसैले सुनिदिंदैनन्, हावामा कुरा गरे जस्तो छ ।

**हावा लाग्नु**—(१)=संगत वा चालचलनको प्रभाव पर्नु । हरिबहादुरलाई दिल्लीको हावा लागेछ, अनेक ढाँचा झिकेर हिंड्छ । (२)=सनक चढ्नु । आज अबिरीलाई हावा लागेछ, सोझै कुरा गरे पनि झर्किन्छे । (३) साधारण अर्थ । सानु छोरालाई रुघा लागेको छ हावा लाग्ला, झ्यालको सोझो नराख् ।

**हावाले भेट्टाउनु, पाउनु**—(१) =माथिको देउता वा भूतप्रेत हिंड्दाखेरिको हावाले मात्र छुनु (झारफुकेको बोली) । सानो बाबुसाहेबलाई माथिको हावाले

भेट्टाएछ, अरू केही होइन। (२) साधारण अर्थ। टन्सिल बढेकोमा हावाले भेट्टायो भने झन् चाप्छ।

हावाले ल्याउनु—(१) = कागले भन्नु (खबर ल्याउने मानिसलाई लुकाउँदा)। तेरो माइतीमा भएको एकेक कुरा मलाइ हावाले ल्याइ पुऱ्याउँछ, ढिलो होस् अथवा चाँडो होस्।—भीमनिधि (सहनशीला सुशीला)। (२) साधारण अर्थ। कहाँको बास्ना हावाले ल्यायो।

हावा हावामा कुरा गर्नु, दगुर्नु— = हावाको भरमा कुरा गर्नु, दगुर्नु (हेर)।

हाहामा दगुर्नु, लाग्नु— = लहै लहैमा लाग्नु, अर्काले भनेको भरमा विनाविचारी काम गर्नु। ईश्वर भनेको कहाँ छ? अर्काले जे भनिदियो त्यही हाहामा दगुर्ने।—रुद्रराज (चप्पा-काजी)। एक पल्ट अर्काको हाहामा लागेर उनलाई खारिज गरेका थिए—राजकाज चल्नै सकेन।—ऐजन (भारत-वर्षको इतिहास, भाग २)।

हिउँदे बाली— = जाडो याममा हुने फसल। यस पाला यो जग्गाको हिउँदे बाली त खान पाइन्छ।

हिकमत हार्नु— = हरेस खानु। यो काम पहिला पटक सफल भएन भन्दैमा हामीले हिकमत हार्नु हुँदैन।

हिक्का चल्नु— = अन्त्य अवस्थामा हिक्क हिक्क हुनु। जसरी हुन्छ····हिक्का चलिसकेको रोगीको घाँटीमा सुधा खस्याइदिनु, पऱ्यो, बुझ्नु भो?—रुद्रराज (प्रायश्चित्त)।

हिक्का लाग्नु— = बाडुली लाग्नु (कसैले संझ्यो भने हिक्का लाग्छ भन्छन्, उसैले यो नथामिएसम्म फलानाले संझ्यो होला, ढिस्कानाले संझ्यो होला भन्दै जान्छन्, हकीकतमा जसले संझेको छ उसको नाउँ लिंदा थामिन्छ भन्ने चलन छ; अथवा मानिस अलमल्ल पर्दा उसको हिक्का बन्द हुन्छ भनी नबिराएको कुराको अप्टी लाउँछन्)। दिदीले पिपल्मेट चोरिस् भन्दा म त अलमल्ल परेकी थिएं, मलाई हिक्का लाग्यो भनेर पो रहेछ।

हितको कुरा—(१) = मनको कुरा। जो पायो उहीसंग आफ्नो हितको कुरा नखोल। (२) = फाइदा हुने कुरा। यसले मेरो हितको कुरा गरेको हो भन्ने नसंझी उल्टो मसंग रिसाउँछौ।

हितको मान्छे— = गुप्त कुरा हुने मिलेको मान्छे। दिले मेरो हितको मान्छे हो, उसले त्यसो भन्यो भन्ने कुरा पत्याउँदिनँ।

हित खोल्नु— = गुप्त वा मनको कुरा प्रकाश गर्नु। हेर मैले तिमीलाई आफ्नो देखेर हित खोलेको छु, यो कुरा कतै नजाओस्।

*हितचित* (हित्तचित्त) मिल्नु— = ज्यादै मन मिल्नु। एउटा आफ्नो हितचित मिलेको साथी थियो, त्यो पनि कलकत्ता गयो।

हिम्मत बाँध्नु— = दृढ संकल्प गर्नु। यति काम गरी छोड्छु भन्ने हिम्मत बाँध्नुपर्छ, आखिरमा तिमी सफल हुन्छौ।

हिम्मत हार्नु— = हरेस खानु। ····अहिले हामी सबैले हिम्मत नहारी उत्साह बढाई भएको नोक्सान चाँडो मेट्ने उपायमा तन, मन, धन लगाउनु पर्दछ।—श्री ३ जुद्ध (भूकम्प-भाषण)।

हिरन हाल्नु—(१) = हत्ते हाल्नु (यस अर्थमा यहाँ उस्तो प्रयोग हुँदैन)। (२) = प्राण जाने बेलामा मुखमा पैसा (कक्षाअनुसार असरफी, सुन, आदि) हाल्नु। दिदी, एक पैसा भए हिरन हाल्नैलाई होस्!

हिरिक्क हुनु— = अतिशय आग्रह गर्नु। लानू थियो र सँगमा कुन वस्तु सार? । हुन्थ्यो हिरिक्क दुनियाँ उसमा अपार ॥—लेखनाथ (सत्यकलिसम्वाद)।

हिले फागु— = अबीर रङ्को सट्टा हिलो घस्ने छ्याप्ने खेल। जब म त्यो चञ्चल बालककालमा खेतको आलिआलि दगुरी साथीभाइ सँग जिस्की हिले फागू खेलेको सम्झन्छु मेरो मन त्यसै गद गद हुन थाल्दछ।—रुद्रराज (प्रायश्चित्त)।

हिलो हाल्ने खादो—सबैका अवगाल वा गालि खपेर बस्नुपर्ने

मान्छेलाई दृष्टान्त दिने (खादी =खस्रो कपडा)। हेरिहू, उसले बिराए पनि मैले गालि पाउँछु, हिलो हाल्ने खादी मैन छु।

**हिस्सी पर्नु, हुनु**— =बनोट नमिले तापनि चेहराको कुनै अंशमा आकर्षक सौन्दर्य्य हुनु। तेरो हिस्सी परेको थुतुनु !—भीमनिधि (सहनशीला सुशीला)। जूही नान्छे त बडे राम्री होइन, तर दाँतमा भने चौपट्टै हिस्सो छ।

**हीङ ठोक्नु**— =नथ्याउनु, कायल पार्नु। त्यसलाई सापटी दिएका रुपियाँ त्यसै छोड्छु र, हीङ ठोकेर लिन्छु।

**हीङ हाल्नु**—(१)=हीङ ठोक्नु। अब ६ दिनमा तिरेन भने हीङ हालेर नलिई छाड्नैछैन। (२) साधारण अर्थ। तिमीले यो पाचकमा हीङ हालेनौ क्यारे, खै बास्नै आउँदैन।

**हीराको टुक्रा**—प्यारो गर्दाको बोली (प्रायः छोराछोरीलाई भनिने)। मेरो हीराको टुक्रा, कताबाट आयौ ?

**हीरा फोड्नु**— =हद ठूलो खर्च गर्नु। बखतमा हीरा फोड्नुपर्छ। (साधारण अर्थमा पनि)।

**हीरै खानु हीरै हग्नु**—धेरै धनी मानिसको बारे प्रयोग हुने। अहिलेको घडीमा उसलाई के नपुग्दो छ र, हीरै खान्छु हीरै हग्छु भने पनि हुन्छ।

**हुकुम चलाउनु**—(१)=राज्य गर्नु। यस प्रकारले नरभूपाल शाह गुज्रे पछि उनैका ज्येष्ट पुत्र पृथ्वी नारायण शाह गोरखाको गद्दीमा बसेर हुकुम चलाउँन थाले।—अम्बिका प्रसाद (नेपालको इतिहास)। (२) =मर्जीको सट्टामा 'हुकुम' शब्द प्रयोग गर्नु। दरबारको सुसारे ल्याएदेखि त्यो घरमा हुकुम चलिरहेछ।

**हुकुम चोर्नु**— =नभएको कुरालाई हुकुम भयो भन्नु।

**हुकुम बजाउनु**— =(धिराज, महाराजको) आज्ञा पालन गर्नु। आज यिनको चरणको मीठो हुकूम बजाउन पाएकोले जस्तो कृतकृत्य भएको छु, त्यस्तो····रजाइ पाउँदा पनी



भइन। श्री केसर (विक्रमोर्वशी)।

**हुक्का चल्नु, मिल्नु**— =एउटाले तमाखु खाएको हुक्कामा अर्काले तमाखु खान हुनु (केही घटीबढी जातका मानिसमा)। हाम्रो बाजेले हाम्री बूढी बज्यैको हुक्का चलाउनुभएको थियो रे। सानी र मेरो हुक्का मिलिहाल्छ, मेरै हुक्कामा खान देऊन।

**हुटिट्याउँले स्वर्ग (सगर) थामे झैं**—एकदम नसक्ने कुरा सक्छु भनी कसैले गुड्डी हाँक्ता दृष्टान्त दिने बोली (हुटिट्याउँको आकाशतिर खुट्टा फर्काउने बानीबाट)। हुटिट्याउँले स्वर्ग थामे झैं तिमीले पनि एक हातले सत्तरी थाम्न सक्लौ, राम्रै गरी पत्याएँ !

**हुन न खानको मानिस**— = आहिस्ता आमदानी केही नभएको मानिस। हुन न खानको मानिसलाई कसले छोरी दिन अघि सर्छ ?

**हुना(न)सम्म[को], हुनि [बिन्न वा सम्मको]**— =ज्यादै, संभव भएसम्मको।····हुनुसम्म भो मलाई शिरमाथि वज्र परी॥—लेखनाथ (भर्तृहरिनिर्वेद)। जेसनले यो प्रतिज्ञा गरेकोले राजा हुनासम्मको खुशी भए, तर तिनले आफ्नो खुशियालि प्रगट गरेनन्।—खड्गमान (ग्रीस र रोमको दन्त्यकथासंग्रह)।

**हुनु-(ने) हुनामी [टर्नु]** =दैवको घटना [नहुनु]। बुद्धि इन्द्रिय सबै, हुनेहुनामीकै पछि पछि लाग्दछन्।—श्री केसर(विक्रमोर्वशी)। राजाको छ हुने हुनामि बलवान् टर्दैन केही गरी।—पद्मप्रसाद (श्रीमद्भागवत)।

**हुने खाने वेला**— =फलिफाप वा बनिबनाउ हुने अथवा भएको समय। हजूरलाई दुःख भएको वेलामा हामीले घुँडा घसी घसी काम गर्‍यौं, अहिले हुने खाने वेलामा हामीलाई पन्छाउने।

**हुने हार**— =भवितव्यता। पराजुलीकी छोरी त्यत्रो ठाउँमा पर्लिन् भन्ने कसले देखेको थियो !—हुने हार नभई रहन्न।

**हुन्छ [त] हुन्छ हुँदैन [त] हुँदैन**

=भए हुन्छ नभए हुन्न, खडा लेना खडा देना । मालिकले लगाइदिएको काम शुरू शुरू गर्दछौ, हुन्छ हुन्छ, हुँदैन हुँदैन । —रुद्रराज (चप्पा कार्जी) ।

**हुप जानु, पस्नु**—=करङ इत्यादिमा वायु पसी सास फेर्दा चस्कने हुनु । **हुप** गएको कुरा जति धेरै मान्छेलाई भन्यो निको हुन उति धेर समय लाग्छ भन्ने चलन छ ।

**हुरुक्क हुनु**—=हिरिक्क हुनु (हेर) । यो चुरा भन्दा ठूली **हुरुक्क हुन्छे** ।

**हुर्मत खोल्नु**—=लाज हुने कुरा प्रकाश गरिदिनु । आफ्नो घरको कुरा बाहिर नजाओस्, किन **हुर्मत खोल्नु** भन्ने होश पनी थिएन ।—रुद्रराज (रूपमती) ।

**हुर्मत फाल्नु**—=इज्जत मिल्काउनु ।यसले त स्वास्नीमान्छेको **हुर्मतै फालिदियो** ।

**हुर्मत लिनु**—=लाजै मर्नु पार्नु । जे भए पनि तिमीले अर्काको **हुर्मत लिन** हुँदैनथ्यो ।

**हूल उठ्नु**—=धेरैजनाको डफा हुनु (प्रायः कूटपीट वा झगडा-तगडा गर्न आइलाग्दा) । एउटा बाँदरलाई कुटेको त **हूलै उठेर** छोप्न आइलागे ।

**हूल बाँध्नु**—=जमात हुनु । डोरो बाँध्ने बाहुनहरू **हूलै बाँधेर** आएका रहेछन् ।

**हुस्सू दण्ड 'लाग्नु**—=बेहोशी भई माल हराउँदा वा अरू किसिमको नोक्सानी गर्दा अरूको धनमाल भए सट्टा तिर्नपर्नु, आफ्नो नै भए त्यही हराएको धनमाल टुट्टा पर्नु । मसलाको पोको जहाँ किनेको उहीं छाडिदिएछ, अब यसलाई **हुस्सू दण्ड लाग्यो** नाइँ ।

**हेर्दैमा नखाने चरा जस्तो**—ज्यादै दुब्लो मान्छेलाई दृष्टान्त दिने । ओहो, तिम्री छोरी त **हेर्दैमा नखाने चरा जस्ती** भइछ, के बिघ्न दुब्ली !

**हेर्नु**—=देख्नु (हेर) ।

**हैकले बुट्टा**—=बदामीको एक टुप्पो तिखारिँदै गई घुम्रेको, वा सरदारी चाँदको चन्द्रमाबाहेकको आकार । कलकत्ताबाट मलाई **हैकले बुट्टा** भएको मास रङ्को फरिया ल्याइदेऊ ।



**हाेँग्रायाले पाँग्रा निले जस्तो**—=हांग्राले पांग्रा निले जस्तो (हेर) ।

**होइ नसक्ने**—=हुन नसक्ने (को अशुद्ध रूप) ।

**हो कि ठट्टा हो**—=लरतरो (कुरा वा मान्छे) होइन । बिजुली **हो कि ठट्टा हो** ।

**होड राख्नु**—=शक्तिको प्रतियोगितामा पुरस्कार राख्नु । एक धार्नी रोटीको **होड राख्छु**, खान सकेनौ भने त्यसको डब्बल तिर्नुपर्छ ।

**हो न हो**—=जे भए पनि, होस् वा नहोस् । अगिल्तिर ऊ ठीक्क पारीदिन्छ, **हो न हो** साँची हो ।—भीमनिधि (सहनशीला सुशीला) । कालुले तिम्रो नाउँ लिएर एक रुपियाँ सापटी माग्यो, **हो न हो** तिमीले मागेका होलाउ भनेर पठाइदिएँ, उसले ढाँटेको म के जानूँ ?

**होश[हवास] उड्नु, गुम हुनु**—=सातो पुत्लो उड्नु । बन्दूक नामै सुन्दा सब **होस हवास गुं भयो** ।—लेखनाथ (भर्तृहरिनिर्वेद)। उनको होनहार, योग्य, सुशिक्षित, जवान युवराजको मङ्गोलहरू सितको लडाईमा मरण भएको समाचारले **होसहवास उड्यो** ।–रुद्रराज (भारतवर्षको संक्षिप्त इतिहास, भाग २) । तालचा मारेको देख्ने बित्तिकै उसको **होस उड्यो** । —गुरुप्रसाद (कथा कुसुम) । पण्डितजीको **होश गुम भइहाल्यो** ।–रुद्रराज (प्रायश्चित्त) । त्यसको ठूलो अवाज आयो त्यो बदमाशको मन चाइने हडबडायो, झन् तिमीहरु पट्टिको अवाज सुन्ने साथ त त्यसको **होशै गुम भयो** ।–ग्रन्थकार (कथाकुसुम)।

**होश[हवास] ठेगानमा नहुनु**—=विचलित हुनु (मनमा ठूलो चोट पर्दा वा मन पोलिरहँदा) । हजूर ! के हुन्थ्यो नाइँ—आज बिहान साने घर्तीले बेसरी भाङ ख्वाइदिएको थियो, त्यसैले अहिलेसम्म मेरो **होश-हवास** बडै **ठेगानमा छैन** ।—प्रेमराज (ससुराली) ।

**होशमा आउनु**—(१)=जिल्ल पर्न छोड्नु । अब दुवै जना **होशमा आउँछन्**, सुशीला

पतिको पाउमा ढोग्छिन् ।—भीमनिधि(सहनशीला सुशीला)। (२)=मूर्छाबाट बिउँतिनु । बल्ल एक घण्टापछि होशमा आएकी छन्, यिनको अगाडि त्यो कुरा नउठाऊ ।

होश राख्नु—=होश गर्नु । दाज्यै ! विनाहक उसै नरुनू-हवोस । केहो गरेर पनि राख-नुहोस होस ॥—लेखनाथ (सत्यकलिसम्वाद) ।

होशी कि झोसी—=अरूभन्दा असल भए पनि वा खराब भए पनि । अरू डराए मैले चाहिं होशी कि झोसी भनेर बिन्ति गरिहालें, आखिरमा त्यो काम उहांले मलाई नै बक्स्यो ।

होस्टेमा हैंसे मिलाउनु—=सहायता दिनु, बल दिनु । मुख्य काम गर्ने त उनी नै हुन्, हामीले त होस्टेमा हैंसे मि-लाएका मात्रै हौं ।

होस्टे वीर हैंसे–बलको काम गर्दा प्रोत्साहन दिई भट्याउने बोली ।

हो होइन–(१)=नजानिंदो, साह्रै कम । हो होइन तातो मात्रै छ, यो दूध फेरि तताएर ल्या-उनुपर्छ । (२)=साँचो हो वा होइन । कान्छाबाले खेल्नेहरूमा मेरो नाउँ लेखेको छ भन्नुहुन्छ, हो होइन ।

हौडा मचाउनु, चलाउनु—=फटाहा कुराको हल्ला उठाउनु । सानी बुहारीको चिच्याहटले छिमेकका माष्टर साहेब न ब्यूँझे-को भए स्वाहा नै हुने रहेछ भनेर रविलालले हौडा मचायो ।—रुद्रराज (रूपमती) ।

हौडामा लाग्नु—=नचाहिने कुराको हल्ला पत्याउनु वा त्यसमा सामेल हुनु । सेतेको हौडामा लागेर चिम्से पनि नाच हेर्न पुगेको थियो, ढोकामा छिर्न पाएनछ ।

ह्याकुलाले मिच्नु—=सजिलो मा-न्नु, हेप्नु । त्यति जाबो काम त म ह्याकुलाले मिचेरै उताछु ।

ह्याकुलो सेकाउनु—=आगो ताप्नु (थोरै आगो हुँदा) । ए कान्छा, यी चोइटा बटुलेर लैजाऊ, तिमीलाई ह्याकुलो सेकाउन हुन्छ । ह्याकुलो सेकाउन पनि नपुग्ने के आगो दिएको ?

॥ शुभम् ॥



# थपुवा र शुद्धाशुद्धि-पत्र ।

यो कोष छापाखानामा तयार हुँदाहुँदै ग्रन्थकारका आँखामा परेका भूलहरू र कानमा परेका उखान वाक्यांशहरू यहाँ छापिएका छन् ।

## खण्ड १ को थपुवा

अंशको बात वंशले जान्दछ ।

अघिपछिको दुश्मानेलाई दाईंमा पाँच मूठी ।

अभागीको भाइ सप्रन्छ, भाग्यमानीको छोरा सप्रन्छ ।

अर्काको आसी, वनवासी ।

अल्छी गर्ने स्वास्नी बिग्रन्छ, बल्छी खाने माछा बिग्रन्छ ।

असारको केटो, मङ्सीरकी केटी ।

असीको खसी, साठीको पाठी ।

आइनु न साइनु, मीत लाइमाग्नु ।

आई बूढी मच्चिंदै, गई बूढी थच्चिंदै ।[1]

आगाको मुखमा बर्काको बुजो ।

आधा सिकेको गीद र उठाएको नीद साह्रै चाख हुन्छ ।

आफ्नो करनी, पाउ उतर्नी ।

आहारा खाने चरी आसीकले बाँच्तैन ।

---

१. पीङको गाउँ खाने कथा पनि हो ।

उचालेको कुकुरले मिर्ग खेद्छ ?
उहाँ भने कन्ने, दशवटा गन्ने ।

एउटा आगो भए अर्को पानी हुनुपर्छ ।
एउटा भुप्रो लगल्छी, एउटा नून चखल्छी, तँलाई एक मलाई एक ।
एक डबका खायो शिरमा, दुइ डबका खायो भीरमा ।
एक हातमा चुल्ठो, एक हातमा टुपी ।

ओखलमा हात हाल्नू, मुसलको घा छल्नू ।

कङ्गालीको जात छैन, बोक्सीको गाउँ छैन ।
कमारा कुलो, काठको तुलो ।
करासाको भूतले सात पुस्ता पिर्छ ।
कलिको मान, घिच्रो तान[२] ।
काँचो माटो र उमेरको छोरो जता लायो उतै लाग्छ ।
काँधको बिरालो जुक्तिले झिक्नू ।
काकाका हुक्के नभए, भतिजा झक मार्न गए ।
काखीमनि पेरुङ्गो, फुपू भेट्न जाऊँ ।
काजीकी कजिनीलाई दशहाते गुन्यूँ ।
काटी मूसाको कान, जोगाई भकारीको धान ।
कानु आँखा हेरे पो के, चिम्ले पो के ।
काफल पाक्यो आफै आफ ।

२. तमाखु दिने सत्कार ।



कालभन्दा निहुँ ठूलो ।
काला बाहुन गोरा शुद्र, इनसे डरे महारुद्र ।
कि साटो कि *साठी* (फाँचो) ।
कुरा गरी ताक, थाम हाली चोक ।
कुराले कुरै काट्छ, छुराले रैं काट्छ ।
कुलो फुटी समुद्र, चेली भागी माइत ।
केटी नहेर्नू, केटीकी आमा हेर्नू ।

खट्टे पनि खाँदैन, बाखो पनि हेर्दैन ।
खत्री पुत्रं कभी न मित्रं, जब मित्रं च जगाजगी ।
खनी ओह्रालो, खनी उकालो ।
खसको सन्जे, भात पसङ्गे ।
खाँडी पाँगा हर ढकनी, गँड़ाई स्वास्नी दिन कटनी ।
खान रुचैन, जाँगर उठ्तैन ।
खानाले कि गानाले [ मरिन्छ ] ।
खाने वेलामा बाहुनको छोरालाई अचारविचार, दिने वेलामा भोटेको छोरालाई लछारपछार ।
खुश परे दान, रिस परे रिन ।
खेती जोगाउनू अघिबाट, चाकरी जोगाउनू पछिबाट ।

गह्राउने भए पनि मासु नै हो, अमिलो भए पनि जाँडै हो ।
गाँसमा आएको जुम्रा टोकिन्छ ।
गाई दुहुन आफ्नो सिक्नू, छाना छाउन अर्काको सिक्नू ।
गोडी चलाया बोडी मिल्छ ।

घरकी बाच्छी घरैमा ब्याई ।
घा हरायो राजा, विद्या हरायो ब्राह्मण ।
घुस नखाने हाकिम र भुस नखाने सुँगुर हुन सक्तैन ।

चखलामखला मलाई कस्ले देखला ।
चराले ज्यान दिन्छ, लस्कर अघाउँदैन ।
चाँडो सिपाही, ढीलो बेपारी [ थिनबाट बिग्रँदैन ] ।

छेरुवा कुकुर·······(=हगुवा कुकुर·······इत्यादि ) ।
छोरो पायो अनचित्त, छोरी पायो अर्काको भित्ता ।

जतन गरे रतन हुन्छ ।
जसका बात, उसका परिपाठ ।
जसको ताल, उसको द्वार ।
जसको सुन खोटी, उसको हिया ढुकढुक ( जसको सुन खोटो ·······इत्यादि हेर ) ।
जहाँ चोरको हात, उहीँ कोत्लाको मुख ।
जहाँ स्त्री, उहीँ श्री ।
जाँदा हात्तीमा, फर्कंदा रातीमा ।
जियास् पूता आफ्नै आयु ।
जीउँदो पित्र माँड नाहीँ, मरे पित्र खाँड ।
जीउँदो मारी, बल्दो निभाई ।
जे छ छ, लक्ष्मीकै बोटमा छ ।
जेबार तेबार आइतबार, खटिरापटिरा गण्डकीपार ।



झलझल तारा हमारा, पानी पीछे कमारा ।
झालेझाले मालेमाले, बूढो सक्तैन बहर लाग्दैन ।
झिँगा र डिँगा नभएको ठाउँ हुँदैन ।

टुटला हात्ती नौसीङ्गे ।
ठगको लच्छिन टोपलटापल ।
ठूलाको पेच नपर्नू, सानाको मुख नपर्नू ।
ठेस नलागी बाबु संझँदैन ।

ढाँटले खाने राजा, अल्छीले खाने खाजा ।

तरुनीको ठानठुन, बुढियाको ओखलधान ।
तृणको बैरी लाख ।

दिन जाओस्, बानी नजाओस् ।
दुःखको मानु, सुक्खको निद्रा ।
दुबासे क्या जुवा !
देखैको ऐसा, हनैको कैसा ।

धनको पखेटा हुन्छ ।
धूपै च्वाँ बत्ती च्वाँ, अब कति दुड्ग्रै च्वाँ ।

पटुकामा रुपियाँ, बटुकामा दूध ।
पालुङ्गाको साग पकाउनु छ, जेठाज्यूलाई ढोग दिनु छ ।
पूर्वियाले ढ्याक पाउँदा हात्ती चढ्छन्, कुमाईले ढ्याक पाउदा अलिनू खान्छन् ।

पडाको पोको कोठैमा राख्नू, भोटेलाई नकुटनू।

पेट भने निमठी, छाना भने झिङ्टी।

पोटले हात्ती अडयाउँछ।

बाङ्गो काठ र लुचो मान्छे कहीं पनि मिल्दैन।

बाहिर नैनसूत, भित्र भईंमा सुत्।

बाह्र हजार तेली, बाह्र हजार धोबी, बाह्र हजार नाऊ।

मसान भए मुर्दा पर्छ।

माइत जाँदा आइमाईहरू बर्सीको पोथा नाघ्दै जान्छन्।

माग्ने नकचरो, नदिने थेचरो।

यसै आ उसै आ, पेटभरी खाने भए खाजा लिएर आ।

राँडीको मुखको गाली र झरीको मुखको घाम।

राम्रो देखे भाङ्ग्रो लायो, मीठो देखे जूठो खायो।

लूतो आउँदा दशा लाग्यो भनी जान्नू, पिलो आउँदा दशा गयो भनी जान्नू।

लोग्नेमान्छेको किरिया, टाङमुनि छिरिया।

सराद्धेको सालो तिहारको ज्वाइँ, जाडोको लट्ठी बूढीको ज्वाइँ।

सिमको काठ र रिनको छोरा कहिले उत्रदैन।

सुनचाँदी पूरा धन, तरतमसूक आधा धन, ब्याजबटोल औंला गन्, दोपाया चौपाया गन्दै नगन्।



सौताको भाँडा ठूलो।

हब्बेनूं भए हात पोल्दैन।

हलो न गोरु, दाँतले कोरूँ।

हातको टिपन र आँखाको झल्को।

हेर्दा सुपारी, कुस्तै भारी।

**आँखा उघ्रनु**—(१,२)=आँखा खुल्नु( हेर ) । (३)=कुकुर, मूसो, आदिको बच्चाको जन्मेको केही दिनपछि पटल खोलिनु । तिम्रो कुकुरको बच्चाको **आँखा उघ्र्यो ?**

**आँखा पल्टाउनु**—=फुस्रो आँखा पल्टाउनु (हेर) ।

**आँसुको ढीका**—=आँसुको ठूलो थोपा ।

**आँसु पुछ्ने**—=शोकमा शान्ति दिने, चित्त बुझाउने । बिचराको **आँसु पुछ्ने** एउटो छोरी थिई, त्यही पनि मरिछ ।

**आँसुले पिर्नु, बाटो नपाउनु**—=(कसैलाई दुःख दिने मान्छेलाई) आपत् वा कष्ट पर्नु । सप्रिसकेको रघुवीर अहिले तनाहा भयो;—अरू केही होइन, उसकी स्वास्नीको **आँसुले पिरे**को । तँ जहाँ गए पनि मेरो **आँसुले बाटो पाउनेछैनस्** ।

**एक भन्नु न दुइ भन्नु हुनु**—=अलमल्ल पर्नु । भए जति रोटी बाँडिसकेपछि मीत आउँदा **म त एक भन्नु न दुइ भन्नु भएं** ।

**एका**—'पछि, तिर' जोडिंदा प्रायः, 'लाई, को, मा, इत्यादि' विभक्ति जोडिंदा कहिलेकहीं 'एक' को 'एका' हुन्छ, जस्तो :—**एकापट्टि, एकालाई, एकाको** ।

**एका घर**—यसमा पनि माथिकोमा जस्तै 'एक' को 'एका' हुन्छ (प्रायः कानूनी बोलीमा) । अबउप्रान्त अंश नभइ एकाघरसंग बसेकाले अचल गैह्र बेचबिखन गैह्र गर्दा २१ वर्ष नाघेका सबैको मन्जुरिको लिखत गरि दिएको भए मात्र पक्का ठहर्छ……। —ऐन (तेस्रो भाग) ।

**एका देशमा**—कथा हाल्दा हामी 'एका देशमा' भनेर शुरू गर्छौं, एक देशमा भन्दैनौं । **एका देशमा** चन्द्रकेतु नाम भएका एक राजा थिए ।—बोधविक्रम (दन्त्यकथा) ।

**एकान्त गर्नु, हुनु**—=गुप्तीसंग कुराकानी गर्नु, हुनु । आज बाबुछोराको **एकान्त** भयो रे ।



**औंलाले काँक्रो फर्सी देखाउनु**—बोटमा फलिरहेका काँक्रो, फर्सी, घिरौंला, कुभिण्डोहरूलाई औंलाले देखायो भने कुहुन्छ भन्ने चलन छ ।

**कठपुतली बन्नु**—=हातको खेलौना (हेर) हुनु ।

**कपालमा चढाउनु**—=शिर चढाउनु (१हेर) । छोटो मान्छेलाई **कपालमा चढाए**पछि मान्छेको अगाडि इज्जत नलिई छोड्दैन ।

**कारेरै ल्याएको जस्तो**—दुरुस्त अनुहार मिल्दा दृष्टान्त दिने बोली । हेर, यसको अनुहार आमाबाहिसित के बिझ मिलेको, **कारेरै ल्याएको जस्तो** छ !

**कानमा ठेडी हाल्नु**—=कानमा तेल हाल्नु ( हेर ) ।

**काम सर्नु**—=काम चल्नु ( हेर ) । **काम सर्‍यो**, दुःख बिसर्‍यौं (उखान) ।

**किन्नेको माल पाको बेच्नेको दाम पाको**—सुक्रीबिक्री गर्दा लेखिने बोली ।

**कीला गाड्नु**—(१)=धेरै बेरसम्म बसिरहनु । सेतीले अब **कीला गाडी गाडी** बेलुका नभईकन आउन जानेकी छ र ! (२)=चिह्नु लाउनु (मेरो ठाउँ भनी दावा गर्ने मान्छेलाई ओठे जवाफ) । तैंले यहाँ **कीला गाडेको** छ र ? बड मेरो ठाउँ भन्ने ! (३) साधारण अर्थ । यहाँ ढुङ्गा छ क्यारे, **कीला गाडेको** गड्दै गडेन ।

**कुम जुधाउनु**—=लड्नु, भिडिनु । त्यत्रा त्यत्रा बलवान्हरूसंग **कुम जुधाउन** तैंले बुद्धि पुर्‍याइनस् ।

**कुहुनु फाट्नु, धस्कनु**—=बाहुलाको कुहुनु रहने अंश च्यातिनु वा झुत्रो हुनु । पोहोर **कुहुनु धस्किसकेको** एउटा कोट बक्सेको थियो, त्यति त हो नि ।

**कोखा छेड्नु**—=मुट्ठ छेड्नु (१ र ४ मात्र) । अहिले दिएर के गर्नु र, अलिकति बिरायो कि **कोखा छेड्ने** वचन सुन्नुपर्छ ।

**कोखा हान्नु**—=कोखानेर देखिने गरी भट्याकभट्याक हुनु ।

नानीथाकी छोरी कोखा हान्ने बेथाले हिजो मरी ।

**खरी घस्नु**—=खरी घोटनु (हेर) ।

**खुट्टा कमाउनु**—(१)=आँट्न नसक्नु, डराएर थुकचुकाउनु । त्यस्तो **खुट्टा कमाएर** काम चल्दैन, आँट्नुपर्छ—भए हुन्छ नभए हुँदैन । (२) साधारण अर्थ ।

**खुट्टा भाँच्नु**—(१)=घोडा, बग्गी, आदि चढ्ने कुराले खट्टा हुनु । यो मोटर बिग्रिदियो भने त मेरो **खुट्टै भाँच्चिन्छ** । (२) =ठूलो खती भएर असमर्थ हुनु । यो घट्ट बन्द भयो भने मेरो अर्को **खुट्टा** पनि **भाँच्चिन्छ** । (३) साधारण अर्थ । यो मेचको **खुट्टा भाँचिसकेछ** ए !

**गङटाको धोती**—=गङटाको भन्तिरको सेतो पाटाको मासु (ओच्छ्यानमा मुत्ने बानी छुटाउनालाई खुवाउँछन्) ।

**गर्धनको मयल फाल्नु**—(१) =गलहत्ती लाउनु, धोक्र्याउनु । धेरै बढेर नबोल्, **गर्धनको मयल फाल्न** लाउँला ! (२) साधारण अर्थ ।

**गर्धन तेर्स्याउनु, थाप्नु**—= काटिमाग्नालाई घिच्रो पसार्नु । बरु **गर्धन तेर्स्याउन** राजी छु, म झूटो कुरा गर्दिनँ ।

**गाला जोरेर बस्नु**—=मेल गर्नु, प्रेम गर्नु । म मरेपछि यी दुइ जना दाज्यूभाइ **गाला जोरेर बस्नेछन्** ।

**गाला हाल्नु**—=मोटाउनु, फेरिनु । पहाड गएर सानी बाहुनीले त **गाला हालिछन्** ।

**गाले तकिया**—=जुनसुकै सानू तकिया (अब गालासित सम्बन्ध छैन) ।

**गाह्राको पाङ्दुर**—=दुःख पर्दा मात्र काम लिइने कुरा वा व्यक्ति (पाङ्दुर=कोदो) । **गाह्राको पाङ्दुरलाई** पनि बिर्सनु हुँदैन ।

**घाँटी फुलाउनु**—(१)=घाँटीको नसा फुलाउनु (हेर; त्यसको छोटकरी रूप) । व्यर्थै किन **घाँटी फुलाउँछौ**, छन्ने ठाउँमा गएर बोलाए पो हुन्छ । (२) =गर्धन फुलाउनु (हेर) । अस्तिदेखि सानेकी आमा म



देख्ता **घाँटी फुलाउँछे** ।

**घाँटी सुकाउनु**—(१)= थकित हुने गरी बोलाउनु वा कराउनु । **घाँटी सुकाउनु** मात्रै भयो, कसैले सुनेनन् । (२)=तिर्खा सहनु । **घाँटी सुकाएर** बल्लबल्ल फेदीमा पुग्दा धमिलो पानी मात्र भेटियो ।

**चित्त पर्नु**—=दिल बस्नु (हेर) । आफूलाई चित्त नपरेको मान्छेसित रसबसै हुँदैन ।

**चित्त लाग्नु**—=ध्यान जानु । दिनहुँ ताश खेलेपछि पढ्नामा **चित्त लाग्न** मुश्किलै हुन्छ ।

**छातीमा राख्नु**—=प्राण जाने वेलामा छातीमा पैसा (कक्षा-अनुसार सुन आदि) राख्नु (उसैले छैन भनी किरिया हाल्दा प्रयोग हुन्छ) । मसित एउटा पैसा भए **छातीमै राख्न** होस् !

**जुङा उखेल्नु**—सजाको रूपमा । यो चोर कायल भएन, अब **जुङा उखेल्** ।

**टप्पु (टक्कर) ठोक्नु**—= गिरको भकुण्डो माथि उफारेर गिर्राले हान्नु ।

**टाउको थाप्नु**—(१)=गाल परेको सहनु, जवाबदेही हुनु । जतिजति तँ बदमासी गर्लास्, म **टाउको थाप्न** सक्छु ? (२) साधारण अर्थ ।

**टुपी रिङाउनु, समात्नु**—(१) =वशमा राख्नु, उठ् भने उठ्, बस् भने बस् गराउनु । आफ्ना कारिन्दाहरूको **टुपी रिङाउन** नसक्ने यस्ता के हाकिम ! (२) साधारण अर्थ । दुइ पटक **टुपी रिङाउदैमा** त्यसको टुपी पुक्लुक्कै आयो ।

**टेक्ने हाँगो न समाउने डालो**—कुनै किसमको सहायक वा सहायता नहुँदा प्रयोग हुने । **टेक्ने हाँगो न समाउने डालो** भएको मान्छेलाई कसरी छोरी दिनु !

**ट्याम्को सिंगार्नु**—=पुछ्को मान्छेलाई अथवा चुत्थो वा काम नलाग्ने कुरालाई असल वा राम्रो पार्न व्यर्थै परिभ्राटपूर्वक मेहनत गर्नु ।

**ठूलो हात गर्नु, हुनु**—=उदार हुनु, धेरै दिनु । त्यति पैसा कमाएर पनि जगत्मानको **ठूलो हात छैन** ।

**थ्याक लाउनु**—=डण्डीले बियो जमीनमा बजारेर उफारी नजीक आएपछि ठोक्नु (डण्डीबियोको खेलमा)।

**डँडाल्नु भाँच्नु**—(१)=बेसरी चुट्नु। यस्तो उपद्रो गरेको मालिकले थाहा पाए भने तेरो डँडाल्नु भाँच्छन्। (२)=ठूलो नोक्सानी वा हानि हुनु। दुइ सयको लक्कू पंजाले झाप्प खाइदिंदा त च्याँखेको डँडाल्नै भाँचियो।

**डाँडाल्नु सोझ्याउनु**—=ढाड सोझ्याउनु (हेर)।

**तिघ्रा कमाउनु**—=खुट्टा कमाउनु (हेर)।

**तिघ्रा झार्नु**—=बेसरी पिट्नु। त्यो माल हिनामिना भयो भने तेरो तिघ्रा झार्छु। (साधारण अर्थमा पनि)।

**तोला तोला मासु घट्नु**—=पिलिएर वा परिश्रम परेर दुब्लाउनु (प्रायः वक्रोक्तिमा प्रयोग हुने)। यति काम गरे त यिनको तोला तोला मासु घटिहाल्छ नि।

**थाप्लो चढाउनु**—=शिर चढाउनु (१ हेर)।

**थूक चुहाउनु**—=राल चुहाउनु (हेर)।

**दही दूधमा डुब्नु**—=दहीदूध पौल हुनु। पहाडमा बस्ता दहीदूधमा डुबेका हुनाले यस उमेरमा पनि भँडारी बलियै छन्।

**दाँत देखाउनु**—(१)=मुस्कुराउनु। आइमाईले दाँत देखायो भने लोग्नेमान्छेले मनपेट पाउँछ। (२)=सित्तैमा हाँस्नु। खुशामदीहरू दाँत देखाइरहेका थिए, कर्साहेब चुपचाप हुनुहुन्थ्यो। (३) साधारण अर्थ। तुरुन्त डाक्टरकहाँ गएर तिम्रो दाँत देखाऊ।

**दाँत फुल्नु**—=दाँतमा सेतो टीका देखिनु (यसो भएको फाप्तैन भनी सुन ठोक्छन्)।

**दागबत्ती दिनु**—=लासलाई दाह गर्नुअगाडि मुखमा आगो झोस्नु (भए छोराले नभए किरिया बस्नेले)। किन भने तेस्को टाउको छुव्यायेर यमपुरिमा लगेको देखने र उस्को मुखमा दाग वत्ति दिने इत्यादि मेरो मन्सुवा छ।—गम्भीर ध्वज (चन्द्रशेखर)।



**नङछुरी खेल्नु**—=हातका नङ जुधाएर जसले सक्यो उसले घाउ लाउनु (यो खेलको चलन हराउँदै गएको छ)।

**नङछुरी लाग्नु**—=मानिसको नङ वा चराहरूको नङ्ग्राले घाउ हुनु। त्यो कालिजको खुट्टा रात्री समात, नङछुरो लाग्ला।

**नपाइस् रुपियाँ**—=फुस्सा, शून्य रुपियाँ (झुक्याएर भन्दा प्रयोग हुने)। यो घडी मलाई दियौ भने नपाइस् रुपियाँ दिन्छु।

**नाक खिस्याउनु**—=रुघा लाग्नुअगाडि नाकभित्र कुतकुत्याउनु। मेरो नाक खिस्याइसकेको थियो, तातो पानी खाइदिएको त हरायो।

**नाक पग्लनु, रसाउनु**—=नाकबाट पतला सिंघान चुहुनु। पिरो खाइदियौ भने त नाक पग्लिहाल्छ नि।

**पञ्च गाँस हाल्नु**—=भात खानुअगाडि प्राण, अपान, व्यान, समान, उदानलाई स्वाहा गर्दै भातका सानासाना गाँस खानु। पञ्च गाँस हालिसकेपछि बोल्नु हुँदैन।

**पाखुरा बजार्नु, बजाउनु**—(१)=काम वा परिश्रम गर्नु। अहिलेसम्म त पाखुरा बजार्न सक्छु, कसैको कमाइ खानुपर्दैन। (२) साधारण अर्थ। पहलमानहरू पाखुरा बजाउँदै अगाडि सरे।

**पाखुरा लाग्नु**—=समर्थ हुनु, काम गरेर आफ्नो जीउ पाल्न सक्ने हुनु। अब छोराहरूको पाखुरा लागिसक्यो हामी बूढाबूढीलाई पाल्छन्।

**पाखुरा स्याहार्नु**—=सुरिएको देखाउनालाई पाखुराको बाहुला माथिमाथि स्याहार्नु, उसैले सुरिनु। म कोठाभित्र पसेको देखेर पाखुरा स्याहार्नै अरू पनि निस्के।

**पाथी भात खाए जस्तो लाग्नु**—=सन्तुष्ट हुनु, सन्तोष लाग्नु। तिमी सफल भएको सुन्दा पाथी भात खाए

जस्तो लाग्यो ।

**पिंडौलाको मासु झार्नु**——बेसरी कोर्राले ठोक्नु । त्यो साइँ-दुवा पिंडौलाको मासु नझारी कहिले कायल हुन्थ्यो !

**पिंडौला फर्कनु, बटारिनु**——बटारिएको जस्तो गरी पिंडौलाको मासु दुख्नु । छ पटक झाडा हुँदैमा किन हो मेरो पिंडौला बटारियो ।

**पुर्पुरो सङ्सङै हुनु**——जहाँ गए पनि आफ्नो नसीबको भोग गर्नपर्नु । भोट जाऊ कि मदेश जाऊ, तिम्रो पुर्पुरो सङ्सङै छ ।

**पुर्पुरो सेकाउनु, सेक्नु**—(१)——टाउकामा हान्नु वा ठोकिनु । होचो बुइगलमा ननिहुरिएर हिंड्छ, कता यसले पुर्पुरो सेकाउँछ । (२)=निधारमा चर्को घाम पार्नु । किन यहाँ पुर्पुरो सेकाउँछौ, भित्र बसेर काम गरे भइहाल्छ नि ।

**पेट निमोठ्नु**——पेट हुडल्नु (भोकले वा जूका इत्यादिको प्रभावले) । भोकले पेट निमोठि-सक्यो अहिले जान्छु, बरु भरे आउँला ।

**पेटमा कुरा (गाभ) राख्नु**——मनमा गाभ राख्नु (हेर) ।

**पैताला खियाउनु**——हिंड्ने परिश्रम गर्नु । यिनलाई भेट्न कति टाढादेखि पैताला खियाएर आएं, अहिले एउटा वाससम्म पनि पाइनँ ।

**पैतालामनिको गड्यौंला जस्तो हुनु**——ज्यादै वशवर्ती हुनु, एकदम दबेर अधीनमा बस्नु । आफ्नो कार्य सिद्ध नहोउन्ज्याल पैतालामनिको गड्यौंला जस्तो हुन हाम्रो मास्टरबाजेले जान्नुभएको छ ।

**भात उम्लनु**——नोकरचाकर मात्तिनु । मैले यति गर्दागर्दै पनि हरिमोया घर जान्छु भन्छे—अरू केही होइन, भात उम्लेको ।

**मन चुँडिनु**——पीर लिनु, पिलिनु । छोरो लडाइँमा गएदेखि आमाचाहिँको मन चुँडिइरहेछ ।

**मन पाक्नु**——भुटभुटिनु । छोराछोरी बिरामी हुँदा आमा-बाबुको मन पाक्नु स्वाभाविकै हो ।

**मन बाझनु**——पेट बाझ्नु (हेर) ।

**मुखभरीको जवाफ**——मुख-तोड जवाब । मुखभरीको जवाफ दिएर मात्र हुँदैन, कामले देखाउनुपर्छ ।

**मुखले राख्नु**——मीठो वचनले खुशी राख्नु । यो हर्के मुखले राख्न औधि सिपालु छ ।

**मुटुको कीलो**——पीर पारिरहने कर्कश व्यक्ति वा वस्तु । सौताको छोरो मुटुको कीलो (उखान) ।

**रगत उम्लनु, तात्नु**——जोशले उत्तेजित हुनु । यस्तो कुरा सुन्दा आजकलको नवयुवकको रगत उम्लन्छ ।

**रङ (कुरङ) उठ्नु**——भित्र पसेको गोटी निस्कनु (पासा वा पचीसमा) । रङ उठेर खाए त लाग्छ ।

**रौंरौं थाहा पाउनु, हुनु**——एक एक गरी सप्पै कुरा सुन्नु, बुझ्नु । त्यो घरको कुरा मैले रौंरौं थाहा पाएको छु ।

**लडेको ओठ**——तल्लो ओठ धेर थोर ठूलो भई तलतिर फर्केको ।

**सगर कि बगर कि टक्कर ?**——(गिर खेल्दा) भकुण्डो माथि फ्याकूँ कि भूइँमा राखूँ कि टप्पु ठोकूँ ?

**सानो हात गर्नु**——खिच्चु गर्नु, सानो चित्त हुनु । सानो हात गरी गरी यसले यतिका सर्दाम किफायत गरेछ ।

**साँसले निल्नु, टिप्नु**——ज्यादै आग्रहसाथ लिनु, हाम र झाम गरी खानु । गीताका यति पुस्तक त सासैले निलछन्, ९०० थान नभई पत्तै लाग्दैन ।

**हाड फोडेर जरो आउनु**——बेसरी भनभनती जरो आउनु । अस्ति हाड फोडेर जरो आएदेखि बल्ल झ्वास-झ्वास जरो आउन छाड्यो ।

**हात कमाउनु**—(१)=लोभ गरीगरी दिनु, छुच्याइँ गर्नु । चार आना पैसा दिन पनि तिमी त हात कमाउँछ्यौ, बरु नदिए भइहाल्यो नि ! (२) साधारण अर्थ ।

**हात गाड्नु**—(१)=हात गाडि-

नेसम्मको अर्थात् पौल हुनु। मामाचाहिंकहाँ घिउमा हात गाड्न पाउँछ, त्यहाँ जान रामे किन पछि हट्थ्यो ! (२) साधारण अर्थ। फेरि हिलोमा हात गाड्न पुगेछ, यो बदमाश !

हात धुनु—(१)=आस मार्नु, माया मार्नु। गौरीशंकरको टिप्पामा पुग्न खोज्नु जोवनबाट हात धुनु हो। (२) साधारण अर्थ। त्यो केटाकेटीको हात धोइदे।

# शुद्धाशुद्धि-पत्र।

## खण्ड १

| पृष्ठ | पंक्ति | अशुद्ध | शुद्ध |
|---|---|---|---|
| ३ | ८ | अचछयँ | अचछयुँ |
| ११ | १० | छचल्किछ | छचल्किन्छ |
| १८ | १६ | फङ्गी | फङ्की |
| २६ | २१ | मरिजाई | मरि(मारि)जाई |
| ३३ | ७ | घाँड | घाँडै |
| ६३ | ४ | खानेमा वेला | खाने वेलामा |
| ,, | ,, | आँगरे | आँगर् |
| ७४ | २ | झ्यलबाट | झ्यालबाट |
| ७९ | २० | लया | लिया |
| ११३ | १७ | बोक्न | बोक्ने |
| ११४ | ११ | घेरै | धेरै |
| ११९ | ८ | भसीको | भैंसीको |
| १२९ | १२ | [1]राजाको | [1]राजाको |
| १३९ | १८ | पछ | पछै |
| १४० | १४ | ज्यष्ठ | ज्येष्ठ |
| १४९ | ७ | सराद्ध | [1]सराद्ध |
| १९६ | १९ | छुचुन्द्री | छुचुन्द्रो |
| ,, | २० | बग्लै | बेग्लै |

## खण्ड २

| पृष्ठ | कलम | पंक्ति | अशुद्ध | शुद्ध |
|---|---|---|---|---|
| १७१ | १ | ९ | पारस्परका | परस्परका |
| १७५ | २ | १९ | मानु | मार्नु |
| १७६ | १ | १३ | अङा | आङ |
| १८४ | ,, | ७ | नामिदेखि | नाभिदेखि |
| १८५ | २ | २० | साहोरेर लाप्पा | सोहोरेर लोप्पा |
| १९० | १ | २६ | एक स | एकसे |
| १९२ | २ | ६ | छन | छैन |
| १९६ | १ | २६ | लेखें | लेखें |
| १९८ | ,, | १३ | महंगै | महंगै |
| १९९ | २ | १२ | क र्को | कर्मको |
| २०५ | १ | २७ | क | कि |
| २२१ | २ | १३ | झ | झैं |
| २३४ | १ | २४ | गुन्नको | गुन्द्रेको |
| २४२ | ,, | २ | रूपभती | रूपमती |
| २४४ | २ | १ | आनु | आउनु |
| २४५ | ,, | १० | धैर | धेरै |
| २४८ | ,, | १६ | अखिर | आखिर |
| २५१ | ,, | १६ | निचोनु | निचोर्नु |
| २५२ | १ | १८ | गनु | गर्नु |
| २५३ | २ | ६ | छकछयौ | छर्कन्छयौ |
| ,, | ,, | ९ | दिंद | दिंदा |
| २५६ | १ | २ | भइसकें | भइसकें |
| २५९ | २ | १२ | लगाएफा | लगाएका |



| पृष्ठ | कलम | पंक्ति | अशुद्ध | शुद्ध |
|---|---|---|---|---|
| २७२ | २ | १९ | चहुने | चुहुने |
| २७६ | ,, | १० | मनिस | मानिस |
| २९३ | ,, | १ | गनापट्टि | गर्नापट्टि |
| २९४ | ,, | १४ | भम्न | भन्न |
| २९९ | १ | ५ | मित्र | भित्र |
| ,, | ,, | १३ | चाहले | चाहिंले |
| ,, | २ | २१ | फाड्कारेर | फड्कारेर |
| ३०१ | ,, | १६ | साह्यार | सह्यार |
| ३०९ | ,, | ७ | भ्रणहत्या | भ्रूणहत्या |
| ३१४ | ,, | २१ | निमाइसकें | निभाइसकें |
| ३१६ | १ | १२ | अविष्कार | आविष्कार |
| ३२२ | २ | ,, | गर्छों | गर्छौं |
| ३२६ | १ | १३ | ठोडै | ठाडै |
| ३३९ | ,, | ११ | मनिस | मानिस |
| ,, | ,, | १३ | निवेद | निर्वेद |
| ३४९ | ,, | २ | धनमाला | धनमाल |
| ३५० | २ | २१ | तल्चा | ताल्चा |
| ,, | ,, | २५ | हस्नु | हाँस्नु |
| ३५३ | ,, | ६ | हारल्योनी | हाल्योनी |
| ३५८ | ,, | ,, | लडायें | लडायें |
| ३८४ | ,, | ४ | अङको | आङको |
| ३९१ | ,, | ७ | मगायें | मगायें |
| ३९४ | १ | २२ | रहछि | रहिछ |
| ४०७ | ,, | ८ | पानी | पनी |
| ४१३ | ,, | ७ | हाल्यौ | हाल्यो |
| ४२२ | ,, | ४ | घेरै | धेरै |

| पृष्ठ | कलम | पंक्ति | अशुद्ध | शुद्ध |
|---|---|---|---|---|
| ४३३ | २ | ९ | ह्ामी | हामी |
| ४५२ | १ | २६ | आप्व्यारोमा | अप्व्यारोमा |
| ४५५ | ,, | १५ | फट्टी | फुट्टी |
| ४६६ | ,, | १ | झुडाउनु | झुण्डाउनु |
| ,, | २ | ८ | बाखी | बाखी |
| ४८६ | ,, | ३ | भापण | भाषण |
| ४९१ | १ | २१ | उतारर्नु | उतार्नु |
| ४९४ | २ | १५ | भसभीस | भसभसी |
| ४९६ | ,, | २७ | लुग | लुगा |
| ५०० | ,, | ९ | भाल्लाई | भालूलाई |
| ५०१ | ,, | १ | मानि | मानिस |
| ५११ | ,, | १० | मले | मैले |
| ५२२ | ,, | १५ | नछो्ने | नछोड्ने |
| ५३२ | १ | २० | गर्दछा | गर्दछ |
| ५४१ | २ | १५ | छैन् | छन् |
| ५५९ | ,, | १४ | दुग | दुर्गे |
| ५६० | १ | ९ | कामातिर | कामतिर |
| ५७१ | २ | ७ | बीली | बोली |
| ५७३ | १ | १९ | सूदखार- | सूदखोर- |
| ५८० | ,, | २० | लिनुपनें | लिनुपर्नें |
| ५८८ | ,, | २७ | गर्नेछैन | गर्नेछैन |
| ६०९ | ,, | १७ | अले | औले |
| ६२१ | २ | १ | मले | मैले |
| ६३० | ,, | १५ | मन्ने | भन्ने |
| ६३८ | ,, | २१ | स्वति | स्वस्ति |
| ६४३ | १ | २० | हेरै | हरै |



| पृष्ठ | कलम | पंक्ति | अशुद्ध | शुद्ध |
|---|---|---|---|---|
| ६४३ | २ | २२ | गनलाई | गर्नेलाई |
| ६४७ | ,, | १० | -निर्वद | -निर्वेद् |
| ६४९ | ,, | १८ | अ | अर्थ |
| ६५० | ,, | २३ | खट्टा | खुट्टा |
| ६५१ | १ | २२ | हनु | हुनु |
| ६५२ | २ | २३ | थिन्नै | यिनै |
| ६५६ | १ | १३ | घरणीधर | धरणीधर |
| ६६१ | ,, | १ | लगें | लगें |
| ६६८ | ,, | २० | छा्नैछैन | छाड्नेछैन |